# पुरालेखन र अभिलेख

## (Palaeography and Epigraphy)

लेखक
डा. दिनेशचन्द्र रेग्मी

हिमालय बुक स्टल
डिल्लीबजार, काठमाडौं
फोन : ४४२१६२९
इमेल : hbsbooks@ntc.net.np

| | |
|---|---|
| **पुस्तक** | **पुरालेखन र अभिलेख** |
| | **(Palaeography and Epigraphy)** |
| **लेखक** | दिनेशचन्द्र रेग्मी |
| **प्रकाशक** | **हिमालय बुक स्टल**, डिल्लीबजार, काठमाडौं, |
| | पो. ब. नं.: १०५३५, फोन : ४४२१६२९ |
| **सर्वाधिकार :** | लेखकमा सुरक्षित |
| **आवरणचित्र :** | भक्तपुर दरबार सुनढोकाको दायाँपट्टिको रणजित |
| | मल्लको अभिलेख |
| **संस्करण** | पहिलो- २०६० |
| **मूल्य** | रु. २९५/- |
| **ISBN** | 99933-662-5-0 |
| **कम्प्युटर** | सुलभ कम्प्युटर सर्भिस, काठमाडौं फोन : ४२५२९५९ |
| **मुद्रक** | **गीताञ्जलि अफसेट प्रेस** |

# मन्तव्य

दक्षिण एसियामा प्राचीन लिपि र अभिलेखशास्त्रको अध्ययनको इतिहास २२४ वर्ष अघि सुरु भएको हो। १९ सौं शताब्दीमा भारतमा ब्रिटिश राज्य सुरु भए पछि आर्कियोलोजिकल सर्भे अफ इण्डियाको स्थापना भयो र प्राचीन भारतीय इतिहासको अन्वेषणको लहर चल्यो। यसै क्रममा ऐतिहासिक र पुरातात्विक स्थलहरूको साथसाथ प्राचीन अभिलेख र मुद्राहरूको खोजी हुनथाल्यो। १८४१ वि.सं.मा चार्ल्स विल्किन्सले दशौं शताब्दीको बङ्गालको अभिलेख पढे तथा १९१३ वि.सं.मा जेम्स प्रिन्सेपले ब्राह्मीलिपि पढेर लिपिशास्त्रको जग हाले। त्यसपछि इतिहासको अध्ययनमा लिपिहरूको यथार्थ महत्त्व जानियो। नेपालमा यसको इतिहास १९३७ वि.सं.मा आरम्भ भएको हो जसको श्रेय पं. भगवानलाल इन्द्रजीलाई जान्छ। त्यसपछि ब्यालिञ्जर, बेण्डाल, लेभी, नोली, नरहरिनाथ, नयराज पन्तजस्ता अनेकौं विद्वान्हरूको प्रयासबाट हालसम्म सयौं अभिलेखहरू प्रकाशित भइसकेका छन्। यिनबाट काठमाण्डौं उपत्यकाको राजनीतिक इतिहासको ढाँचा तयार भएको छ। तथापि स्वयं लिपिशास्त्र र अभिलेखशास्त्रको अध्ययन हुन सकेको छैन। इतिहासको अध्ययनमा लिखित सामग्रीको ठूलो महत्व छ र त्यसका लागि प्राचीन लिपिहरूको ज्ञानको आवश्यकता बुझ्न सकिन्छ। प्राचीन लिपि र लिखित वस्तु निःसन्देह संस्कृतिका निधि हुन्।

मेरा मित्र डा.दिनेशचन्द्र रेग्मीले यस पुस्तकमा लिपिहरू र लिखित वस्तुहरूको अध्ययन गरेर नेपाली संस्कृतिको ठूलो सेवा गर्नुभएको छ। हुन त प्राचीन लिपिहरू पढ्न सिकाउने प्रयास हेमराज शाक्य र शङ्करमान राजवंशी जस्ता केही लेखकहरूबाट भएको छ। नेपालमा विभिन्न समयमा प्रचलित लिपिहरूको उत्पत्ति, विकास र विशेषताहरूको बारेमा अनुशीलन गर्ने यस पुस्तकका लेखक पहिलो हुनु भएको छ। विषयको परिचय, विश्वमा लेखनकलाको सुरुवात र दक्षिण एसियाका लिपिहरूको इतिहासबाट पुस्तकको आरम्भ गरिएको छ। तथापि लेखकले अनुसन्धानको मुख्य विषय भने नेपालका लिपिहरूका इतिहास र विशेषताहरूलाई नै बनाएका छन्।

विक्रमको छैठौं शताब्दीसम्मको ब्राह्मीलिपिको विकासको संक्षेपमा चर्चा गरेपछि लेखकले त्यसबेलादेखि नेपालमा प्रचलित लिपिको मूलको बारेमा विचार गर्नुभएको छ। यसैगरी उहाँले लामो कालसम्म काठमाण्डौं उपत्यकामा प्रचलित नेपालाक्षरको मूलको सम्बन्धमा सप्रमाण विचार गर्नुभएको छ। नेपालको अभिलेखविज्ञान र ग्रन्थलेखनको बारेमा पनि लेखकले कलम चलाउनु भएको छ। पुस्तकको अन्तमा पारिभाषिक शब्दावली, अनेकौं पृष्ठहरूमा ४१ वटा फलकहरू र शब्दानुक्रमणिका दिइएका छन्।

जे.पी.लोष्टीसँग सहमत हुँदै लेखकले ग्रन्थलेखनलाई कलाको संज्ञा दिई नेपालका हस्तलिखित ग्रन्थहरूका विशेषताहरूलाई रेखाङ्कित गर्नुभएको छ। लिपिहरूको अध्ययन संस्कृतिको अभिन्न अङ्गको रूपमा गरिनुपर्छ भन्ने कुरामा लेखक दृढ देखिनुहुन्छ। आफ्ना विचारमा लेखक निकै स्पष्ट हुनुहुन्छ। यस कुरामा सहमति प्रकट गर्ने काममा अरू पनि मेरो साथ दिनेछन् भन्ने आशा गर्दछु।

विद्वान् लेखकको यस पुस्तकले संस्कृतिका विद्यार्थीहरूलाई स्तरीय पाठ्यपुस्तक र जिज्ञासु शोधार्थीहरूलाई उद्धरणग्रन्थको खाँचो पूरा गर्ने कुरामा म विश्वस्त छु। यस विषयमा यस्तो सरल र विस्तृत ग्रन्थ अगाडि छापिएको थिएन। यस अर्थमा यसलाई नेपालको इतिहासमा कोशेढुङ्गो भने पनि हुन्छ। लेखकको संस्कृत भाषामा अधिकार, विषयवस्तुमा गहिरो ज्ञान र अध्यापनको लामो अनुभव पुस्तकमा प्रतिबिम्वित भएको छ। यस महान् कार्यको लागि लेखकलाई हृदयैदेखि साधुवाद दिन चाहन्छु।

**काठमाण्डौं**
**बैशाख** पूर्णिमा, २०६०

**प्रा.डा. मुकुन्दराज अर्याल,**
प्रमुख,
नेपाली इतिहास, संस्कृति र पुरातत्व केन्द्रीय विभाग,
त्रिभुवन विश्वविद्यालय

# मन्तव्य

नेपाली इतिहास, संस्कृति र पुरातत्व केन्द्रीय विभागका सह-प्राध्यापक डा. दिनेशचन्द्र रेग्मीले मेहनतपूर्वक लेख्नुभएको **पुरालेखन र अभिलेख** शीर्षकको अनुसन्धानमूलक पुस्तक मैले आद्योपान्त पढें। यसमा नेपालको अभिलेखअध्ययनको विषयसमेत समावेश गरिएको पाएं। स्नातकोत्तर तहमा विद्यार्थीहरूले अध्ययन गर्नुपर्ने यी विषयमा पुस्तक छँदै छैन भने पनि हुने अवस्थामा डा. रेग्मीको प्रस्तुत पुस्तकले रामवाणको काम गर्नेछ भन्ने कुरामा म विश्वस्त छु।

पुरालेखन विषय नै धेरै हदसम्म प्राविधिक भएको र यसबारे स्तरीय पुस्तक नभएका कारणले गर्दा विद्यार्थीहरूलाई निकै अप्ठ्यारो भइरहेकोमा प्रस्तुत पुस्तकले एउटा ठूलो खाँचो पूरा गरेको छ। लेखनको उत्पत्ति र विकास, विभिन्न समयमा विकसित लेखनका विशेषताहरू तथा अभिलेखअध्ययनसम्बन्धी सैद्धान्तिक आधारको राम्रो विवेचना गरी लेखकले नेपालमा यसको प्रयोगबारे महत्वपूर्ण जानकारी दिनुभएको छ। त्यस्तै प्रकारले नेपालको इतिहासमा प्रचलनमा रहेका ब्राह्मीलिपि, लिच्छविलिपि तथा नेवारीलिपिको स्तरयुक्त विवेचना पुस्तकमा गरिएका छन्। उपर्युक्त लिपिहरूको प्राविधिक पक्षको सरल ढङ्गबाट व्याख्या गरिएका छन् र तिनका यथार्थ स्वरूप फलकहरूमा दिइएका छन्। यसबाट पुराना लिपि पढ्न र लेख्न जान्नुपर्ने विद्यार्थीहरू पक्कै पनि लाभान्वित हुनेछन्।

प्रस्तुत पुस्तकबाट पुरालेखनसम्बन्धी शोधकार्यमा संलग्न व्यक्तिहरूले पनि फाइदा लिन सक्ने कुरामा दुई मत हुन सक्दैन। नेपालमा चलेका विभिन्न संवत्‌हरूको विश्लेषणात्मक तथ्य प्रस्तुत गर्नाको साथै लेखकले नेपालमा पुरालेखनको विकासचरणबारे पनि राम्रो प्रकाश पार्नुभएको छ। साथै दक्षिण एसियाको लेखनको प्राचीनताको बारे पनि राम्रो विवेचना गरिएको यस पुस्तकले भविष्यमा यस विषयमा शोधकार्य गर्नेहरूका लागि पनि उत्तिकै उपयोगी हुने कुरा निर्विवाद छ।

समष्टिगत रूपमा भन्ने हो भने प्रस्तुत पुस्तकले शिक्षक, विद्यार्थी, शोधकर्ता तथा सम्बन्धित विषयमा चाख राख्ने सबैको खाँचो पूरा गरेको छ। यस्तो महत्त्वपूर्ण ग्रन्थका विद्वान् लेखकलाई विशेष धन्यवाद दिन चाहन्छु।

वैशाख २१, २०६०।

**प्रा. डा. त्रिरत्न मानन्धर**

डीन, मानविकी तथा सामाजिकशास्त्र संकाय,

त्रिभुवन विश्वविद्यालय

# प्राक्कथन

धेरै अघिदेखि नेपालमा प्रचलित लेखनको साथसाथै अभिलेख र पाण्डुलिपिजस्ता लिखित वस्तुहरूको अध्ययन तलका पृष्ठहरूमा गरिएको छ। मानवको ठूलो उपलब्धि रहेको लेखनको आरम्भ कहाँ र कसरी भयो भन्ने जिज्ञासालाई अध्ययनको पृष्ठभूमि बनाइएको छ। दक्षिण एशियामा लेखनको आरम्भ र विकासको चर्चा गर्दै काठमाडौं उपत्यकामा केन्द्रित प्राचीन र मध्यकालीन नेपालमा प्रचलित लेखनको विकासको चर्चा यहाँ गरिएको छ। भारतमा झैं यहाँ पनि लेखनको इतिहास भनेको ब्राह्मीलिपिको विकासको कथा हो। लिखित वस्तुहरूमध्ये अभिलेखलाई यहाँ जोड दिइएको छ। यसअन्तर्गत अभिलेखको महत्त्व, माध्यम, वर्गीकरण, र त्यहाँ उल्लिखित संवत्हरूका बारेमा विचार गरिएको छ। पाण्डुलिपिको अध्ययन ग्रन्थलेखनकलाको रूपमा गरिएको छ। लेखन र लिखित वस्तुहरू यी सबै विषयका साझा सम्पत्ति हुन्।

विषयको रोजाईका बारेमा व्याख्या जरुरी छ। पूर्वी नेपालमा बेलाबेलामा प्रचलित किराँतलिपि, मैथिलीलिपि र पश्चिम नेपालमा कर्णालीप्रदेशका मल्लराजाहरूका पालामा चलेको लेखन र मगरलिपि जस्ता कतिपय लेखनलाई यस पुस्तकको विषय बनाइएको छैन। यसका अनेक कारणहरूमध्ये यौटा त भौतिक स्रोतसामग्रीको दुर्लभता हो। तिनको सांस्कृतिक परिवेशको अध्ययनको कमी शायद सबभन्दा ठूलो कारण हो। यस्तो अध्ययनको स्वागत हुनेछ।

काठमाडौं उपत्यकामा धेरै पहिलेदेखि सांस्कृतिक गतिविधिको भौतिक प्रमाण पाइन्छ। यस क्षेत्रमा सोह्रसय वर्षदेखि धर्म, कला, भाषा र संस्कृतिको साथसाथ लेखनको परम्पराको इतिहासका भौतिक आधारहरू प्राप्त छन्। यहाँ लेखनमा निरन्तरता छ, लामो परम्परा छ र अनेकौं प्रयोग भएका छन्। यसैगरी पुरालेखनको अध्ययनको प्रसङ्गमा अभिलेख अध्ययनको औचित्यबारे प्रश्न उठ्नसक्छ। यसो गर्नुका दुई कारण छन् : पहिलो, अभिलेख लेखनको स्रोतसामग्री हुन् अतएव यी दुईको अन्योन्याश्रित सम्बन्ध छ। अर्को, दुबैमा जिज्ञासु पाठक र विद्यार्थीहरूको रुचि देखिएको छ।

जस्तो कि विषय-सूचीबाट देखिन्छ, पुस्तक मूलतः विवरणात्मक छ। लेखन र लिखित वस्तुहरूको सार्थक अध्ययनको लागि यस्तो शैली आवश्यक सम्झिएको छ। यसैले केही कुराहरू प्रसङ्गवश दोहोरिएका पनि छन्। जरूरी सम्झिएका कतिपय प्रसङ्गहरूमा तुलनात्मक र विश्लेषणात्मक शैली अपनाइएको छ। यसो गर्दा पूर्वाग्रहरहित र वस्तुनिष्ठ हुने प्रयास गरिएको छ। जयवर्माको मूर्तिलेखको संवत् जस्ता कतिपय विषयहरूलाई स्पष्ट गर्ने आधार अझै प्राप्त भएको छैन। हालसम्म जानिएको तथ्यका आधारमा त्यस्ता विषयहरूबारे सोच बनाइएको छ। यस्ता कतिपय कुरामा अन्य लेखकहरूका विचारसँग सहमत हुन सकिएको छैन। यस्तो स्वस्थ आलोचनालाई उहाँहरूले सकारात्मक ढङ्गले लिनुहुने छ र आवश्यकता अनुभव गरेमा स्पष्टिकरण दिनुहुने छ भन्ने आशा गरिन्छ। भनिएको पनि छ : वादे वादे जायते तत्वबोधः। लेखक स्वस्थ्य आलोचनाको स्वागत गर्न तत्पर छ।

पुस्तकको महत्त्वपूर्ण पक्ष लेखनलाई संस्कृतिको अविभाज्य अङ्गका रूपमा हेर्न खोज्नु हो। अतएव लेखनको अध्ययन गर्न बेलाबेलामा विकसित सांस्कृतिक परिवेशलाई आवश्यक ठानिएको छ। यहाँ पनि संस्कृतिका विभिन्न पक्षहरूको साथ लेखनको आरम्भ भएको देखिन्छ। लेखनका विभिन्न विकासचरणमा लेखनका बाह्य स्वरूपलाई विशिष्ट बनाउन

सांस्कृतिक परिवेशले महत्वको भूमिका खेलेको छ। आफु पुरालेखनप्रतिको पुरानो पारम्परिक र साँघुरो धारणाको विरोधी रहेको कुरा भन्न लेखकलाई कुनै सङ्कोच छैन।

पुराना लेखोटहरूतर्फ लेखकहरूको ध्यान जान लागेको १६३ वर्ष बितिसकेछ। तथापि तिनको उपयोग इतिहासको घटना, कालक्रम र तथ्यको बारेमा सीमित रहेको छ। विभिन्न समयका पुराना लेखनहरू लेख्न, पढ्न सिकाउने प्रयासको इतिहास पनि आधा शताब्दीको भइसकेको छ। यस महत्वपूर्ण काममा श्री हेमराज शाक्य र स्वर्गीय शङ्करमान राजवंशीको योगदान प्रशंसनीय रहेको छ। पुरालेखनको अध्ययन गर्नु निःसन्देह धैर्य र परिश्रमको काम हो। यस लेखकको यस विषयको पहिलो परिचयात्मक पुस्तक छापिएको बाह्रौं वर्षमा मात्र यो पुस्तक तयार गर्न सकिएको छ।

पुरातत्व र संस्कृतिको अध्ययनमा सबभन्दा कम ध्यान गएका विषय पुरालेखन र अभिलेख अध्ययन हुन्। यद्यपि त्रि.वि.को नेपाली इतिहास, संस्कृति र पुरातत्व विभागमा एम.ए.र बी.ए.तहमा धेरै अघिदेखि यी विषयहरूको पठनपाठन हुँदैआएको छ। यिनको सरोकार भाषाविज्ञानमा रुचि राख्नेहरूसँग पनि हुन्छ। तथापि यससम्बन्धी पुस्तक दुर्लभ छ। यस लेखकको परिचयात्मक पुस्तक पनि अप्राप्य भएको छ। यस पुस्तकले त्यो अभाव पूरा गर्ने छ भन्ने आशा गरिन्छ।

लेखक ती सबै व्यक्ति र संस्थाप्रति आभार प्रकट गर्छ, जसले प्रत्यक्ष र परोक्षरूपमा यस लेखकलाई प्रेरणा दिएका छन् र सहयोग गरेका छन्। लेखकले दाजु श्रीमहेशचन्द्र रेग्मीबाट प्रेरणा पाएको छ र मित्र श्री पुष्करप्रसाद राजभण्डारी र भाइ डा.जगदीशचन्द्र रेग्मीबाट सहयोग। पाण्डुलिपि पढेर मन्तव्य लेखिदिनुभएकोमा मानविकी एवं सामाजिकशास्त्र संकाय डीन प्रा.डा. त्रिरत्न मानन्धर र विभागीयप्रमुख प्रा.डा.मुकुन्दराज अर्यालप्रति लेखक आभार प्रकट गर्दछ।

आफ्ना अमूल्य सुझाव र कतिपय नवीन सूचना दिएर प्रा.डा. कमलप्रकाश मल्लले ठूलो गुण लगाउनु भएको छ, जसप्रति लेखक कृतज्ञ छ। स्वर्गीय शङ्करमान राजवंशीका केही लेखोटको उपयोग गर्ने अनुमतिको साथसाथ कतिपय सुझाव दिनुभएकोमा लेखक राष्ट्रिय अभिलेखालयका लिपिविशेषज्ञ श्री श्यामसुन्दर राजवंशीलाई लागि धन्यवाद दिन चाहन्छ। नेवारी लिपिहरूको ट्रुयूटाइप फन्टका सर्जक श्री रबिसन शाक्यलाई धन्यवाद छ जसले त्यसको उपयोग गर्ने अनुमति दिनुभएको छ। यस विषयतिर अभिरुचि जगाउने पूर्व विभागीय प्रमुख प्रा.डा. रामनिवास पाण्डेय, प्रा.डा.प्रेम खत्री र प्रा.डा.पेशल दाहाललाई धन्यवाद छ। राष्ट्रिय अभिलेखालय र त्रिभुवन विश्वविद्यालयको केन्द्रीय पुस्तकालय र विशेषतः श्री विष्णुराज ओझाको सहयोगको लागि लेखक कृतज्ञ छ। कम्प्युटर टाइप गरी सहयोग गर्ने भाइहरू श्री देवेशचन्द्र रेग्मी र श्री भवेशचन्द्र रेग्मी, अन्य प्रकारको सहयोग गर्ने छोरीहरू सुषमा र अनुपमा तथा छोरा निखिलेशलाई आशीर्वाद छ। यस सन्दर्भमा आफ्नी सहधर्मिणी श्रीमती सुशीला रेग्मीले दिएको सहयोगलाई लेखक बिर्सन सक्दैन। लेखक ती विद्यार्थीहरूसँग कृतज्ञता व्यक्त गर्दछ जसको जिज्ञासा नै यस पुस्तकको बिऊ रहेको छ। अन्तमा, लेखक प्रकाशक हिमालय बुक स्टल तथा सुलभ कम्प्युटरका श्री विनोद घिमिरेलाई धन्यवाद दिन चाहन्छ, जसले गर्दा यसरूपमा पुस्तक छापिन सकेको छ।

**दिनेशचन्द्र रेग्मी**

नेपाली इतिहास, संस्कृति र पुरातत्व केन्द्रीय विभाग,

**बैशाख २५, २०६०।**

# पुरालेखन र अध्ययन

## विषयसूची

# फलक–सूची

# अध्याय एक

# लेखन र पुरालेखन

आन्तरिक भावना र विचारलाई संभिरहने र हालका र भोलि हुने मानिसहरूसम्म पुऱ्याउने काममा लेखनको ठूलो भूमिका रहेको छ। ज्ञानविज्ञानको विकास लेखनबाटै संभव भएको हो। वर्तमान ईराक र इजिप्ट (मिश्र) मा पाँच हजार वर्ष पहिले विकसित प्राचीन मानवसभ्यतामा आरम्भिक लेखनका नमुना पाइएका छन्। अन्यत्रका निवासीहरूले भिन्नाभिन्नै समयमा भिन्नाभिन्नै लेखनपद्धति विकास गरी अपनाए। नेपालमा भने लेखनको चलन पन्ध्र सय वर्ष पहिलेदेखि बढी चल्यो।

## लेखन

लेखन वा लेख्नुको अर्थ मनका कुरा कागजमा उतार्नु हो भन्ने कुरा सबैलाई थाहा हुनुपर्छ। मनको कुरा व्यक्तिको आफ्नो भाषामा हुन्छ। पच्चीस सय वर्ष अगिका यूनानी दार्शनिक अरस्तू (एरिस्टोटल) ले लेखेका छन्:[१] "बोलिने शब्द मनको अनुभवका चिह्न हुन् र लेखिएका शब्दहरूका संकेत हुन्।" लेखिएका शब्दहरूलाई बोलिएका शब्दहरूको संकेत भनेर अरस्तूले लेखनको अर्थ र त्यसको भाषासंगको संबन्धलाई स्पष्ट पारेका छन्। यसबाट भाषा लेख्नु नै लेखन हो भन्ने अर्थ निस्कन्छ। मनको अनुभव दुई मुख्य रूपमा व्यक्त हुन सक्छ: निजी रूपमा र सार्वजनिक रूपमा अर्थात् जनसमूहको बीचमा। व्यक्तिको अनुभव अरूको सामुन्ने स्पष्ट शब्दमा वा भाषातत्त्वलाई व्यक्त गर्ने चिह्न वा संकेतमा व्यक्त नगरेसम्म व्यक्तिगत वा निजी कुरा हुन्छ। सुखको अनुभवमा हाँस्नु, दंगपर्नु र पीडा र शोकमा रुनु, पिल्सिनु व्यक्तिका निजी अनुभव हुन्। यस्ता केही अनुभव व्यक्तिको अनुहार वा आँखामा पनि झल्कन्छ। तथापि यस्ता क्रियाकलापमा अरूको प्रतिक्रिया र सहभागिता आवश्यक हुँदैन। यिनमा सुखदु:ख र रीस जस्ता सीमित मनोभावनाका अभिव्यक्ति त हुन्छ तर बोलिने शब्द अथवा तिनका संकेत हुँदैनन्। लेखनको मुख्य गुण सञ्चार हो। संकेतचिह्नद्वारा आफ्नो आशय बुझाउन गरिने कार्य लेखन हो।

व्यक्तिगत अनुभूतिको विपरीत सञ्चार सामाजिक व्यवहार हो। यसको लागि सञ्चार पठाउने र पाउने व्यक्तिहरूका साथसाथ सञ्चारको माध्यम, उपाय वा साधनको समेत आवश्यकता हुन्छ। सञ्चारको माध्यम, उपाय वा साधन भनेको दुवै थरिले बोल्ने र बुझ्ने भाषा र त्यसलाई अर्थ्याउन वा व्यक्त गर्न उपयोग गरिने चिह्न अक्षर वा वर्ण हुन्। सामुन्ने रहेको व्यक्तिसँग भाषामा बोलेर र टाढा बसेका वा भविष्यमा हुने व्यक्तिसँग भाषातत्त्व बुझाउने चिह्नहरू अर्थात् शब्दचिह्न, अक्षर वा वर्णचिह्नहरूको माध्यमले सञ्चार कार्य पुरा

गरिन्छ । मानिसको मनोभावनालाई ठाउँ र समयको दृष्टिले टाढा रहेका व्यक्ति साम् पुऱ्याउने काममा लेखनको महत्त्व छ । टाढाका व्यक्तिसँग सञ्चार स्थापित गर्न सकिने टेलिफोन र व्यक्त गरिएका मनोभावनालाई स्थायी बनाउने रेकर्डिङ जस्ता उपकरण आधुनिक सुविधा मात्र हुन् । यिनले लेखनको जरूरत र महत्त्वलाई कम गरेका छैनन् । आइ. जे. गेल्बले लेखनलाई यसरी परिभाषित गरेका छन्:[२] "दृश्यमान (देखापर्ने) पारम्परिक चिह्नहरूको माध्यमले व्यक्त गरिने मानिसको अन्तर्सञ्चारको पद्धति नै लेखन हो ।" दृश्यमान पारम्परिक चिह्नहरूले भाषालाई व्यक्त गर्छन् । भाषा सञ्चारको माध्यम हो । लेखन भाषाको अभिलेखन (रेकर्डिङ) हो । लेखनमा प्राणी र वस्तुका तरह-तरहका चित्र र रेखाहरूको उपयोग गरिएको पाइन्छ । यस कारण चित्रकलाबाटै लेखनको उत्पत्ति भएको हो कि भन्ने लाग्नु स्वाभाविकै हो । (फलक ३९) ।

हजारौं वर्ष पहिलेका प्रागैतिहासिक कालमा मानिस चित्र बनाउन जान्दथ्यो । उसले आफू बस्ने प्राकृतिक गुफाका भित्ता र छतमा तथा आफ्ना ढुंगा र हाडका औजारहरूमा कोरेर, कपेर र रंगाएर बनाएका चित्र र बुट्टा पाइन्छन् । युरोपका फ्रान्स र स्पेनका प्रागैतिहासिक गुफाहरू भित्तिचित्रका लागि प्रसिद्ध छन् ।[३] यिनमा प्राणीहरूको वास्तविक स्वरूप उतार्ने प्रयास गरिएको छ । प्रागैतिहासिक चित्रकारीको उद्देश्यको बारेमा नानाथरिका अनुमान गरिएका छन् । कसैले यसलाई धार्मिक रहस्यात्मक र टुनामुना सम्बन्धी क्रियाकलाप मानेका छन् । कसैले यसलाई आफैं फुरेको (स्वत:स्फूर्त) कलाको अभिव्यक्ति मानेका छन् ।[४]

यस्ता चित्रहरूको प्रयोजन जे सुकै भएता पनि विषय भने तत्कालीन मानिसको जीवनसँग ज्यादै नजिक रहेका वास्तविक प्राणीहरूनै हुन् । यिनका यसभन्दा बढी केही आशय रहेमा चित्रकार आफैं वा उसका परिवार र नजिकका आफन्तबाहेक अरूले शायद बुझ्नसक्दैनथे । यसैले यी लेखनको सुनियोजित पद्धति अर्थात् सञ्चारका माध्यम वा उपाय बन्नसकेनन् । यी चित्रहरूले प्रागैतिहासिक मानवको कला-सर्जनात्मक प्रतिभा भने झल्काएका छन् ।

लेखनको उत्पत्तिसँग चित्रको गहीरो सम्बन्ध छ । प्राचीन लेखनमा चित्रात्मक रेखा र प्रतीकको उपयोग गरिएको छ । तथापि लेखनमा उपयोग भएका चिह्नहरू भौतिक वस्तु वा प्राणीका वास्तविक चित्र हुँदैनन् । बरू ती अपूर्ण चित्र वा तिनबाट सुनियोजित रूपमा विकसित रेखा वा ज्यामितीय डिजाईन झैं लाग्दछन् । वास्तवमा ती आफ्ना मूल चित्रहरूबाट धेरै टाढा भइसकेका लाग्छन् । यसरी वास्तविक चित्रमा भौतिक वस्तु वा प्राणीको स्वरूप उतार्ने भरसक प्रयास गरिएको हुन्छ भने लेखनचिह्नहरूमा चित्रको विवरणमा भन्दा बढी ध्यान भाषातत्त्व अर्थात् ध्वनिमा दिइएको पाइन्छ । लेखनमा यी चिह्नहरू विशेष वस्तु वा पदार्थ बुझाउने शब्द र उच्चारण गरिने अक्षर वा वर्णका प्रतीक हुन्छन् । यसरी चित्रबाट लेखनको जन्म भएको हुन सक्छ, तर चित्र आफैंमा लेखन होइन । भाषाको विकास धेरै पहिले भएको मानिन्छ । तर भाषा लेखनको इतिहास भने आजभन्दा पाँच हजार वर्ष पहिलेदेखिको मात्र पाइन्छ ।

सुमेरिया (मेसोपोटामिया), मिश्र (इजिप्ट) र एलममा ईसापूर्व तीन हजार वर्ष अगिदेखि लिखित सामग्री पाइनथाल्छन् । सिन्धुघाटीमा २२०० ईसापूर्वदेखि, एनातोलिया र सिरियाका हिट्टाईटहरूमा १५०० ईसापूर्वदेखि र चीनमा १३०० ईसापूर्वदेखिका अभिलेखहरू पाइएका छन् ।[५] यी लेखनहरूबाट यी क्षेत्रहरूका मानवसभ्यताको इतिहास स्पष्ट भएको छ । यसरी मानिसले विभिन्न क्षेत्रहरूमा अर्जेका उपलब्धिहरूमध्ये लेखनको ठुलो महत्त्व छ । यिनले ऐतिहासिक दस्तावेजको काम गरेका छन् । त्यसैले लेखनको आरम्भसँगै इतिहासको युग सुरू भएको मानिन्छ । त्यस अघिका मानवका अतीतको इतिहासको अध्ययन उसका अन्य भौतिक अवशेषहरूका आधारमा पुरातत्त्वशास्त्रले गर्दछ । इतिहासपूर्वका समयलाई प्रागैतिहासिक (Pre-historic) र आदीतिहासिक (Proto-historic) काल भनिन्छ ।

यस्ता पनि सभ्यताका केन्द्रहरू छन् जहाँका निवासीहरू लेख्नजान्दथे तर तिनले लेखेका कुरा हामीले जान्नसकेका छैनौं । भारतीय उपमहादेशको सिन्धुघाटी सभ्यताको लेखन अझै पढ्नसकिएको छैन ।[६] यस सभ्यताको बारेमा लेख्दा यसै सभ्यताका निर्माताहरूले लेखेको कुराको उपयोग गर्नसकिएको छैन । पुरातत्त्वविद्हरूले अन्य भौतिक अवशेषहरूका आधारमा आदीतिहास भनी त्यस सभ्यताको अध्ययन गरेका छन् । यस बाहेक एलम, क्रीट र ग्रीसका पुराना लेखन हालसम्म पढ्न सकिएका छैनन् ।[७]

## पुरालेखन

**पुरा** अर्थात् पुरानो र **लेखन** गरी दुई शब्दहरूको मेलबाट बनाइएको पुरालेखन अंग्रेजी भाषाको प्यालियोग्राफी (Palaeography) शब्दको रूपान्तर हो । अंग्रेजीको यो शब्द यूनानी भाषाको प्यालियोस (palaios) र ग्राफिएन (graphein) गरी दुइवटा शब्दहरूको मेलबाट बनाइएको छ, जसको अर्थ क्रमश: पुरानो र लेखन भन्ने हुन्छ । पुरानो लेखनका सवै पक्षहरूको अध्ययन पुरालेखनका क्षेत्रभित्र पर्छन्, जस्तै: पुराना लेखनको वर्णन गर्नु, पुराना लेखन पढ्नु र तिनको वर्गीकरण गर्नु ।

लेखनको वर्णनभित्र त्यसको बाहिरी स्वरूपको बयानको साथसाथ विभिन्न रेखा, प्रतीकात्मक र चित्रात्मक चिह्नहरूले भाषातत्त्वलाई कसरी बुझाउँछ भन्ने कुराको व्याख्या गरिन्छ । भाषातत्त्व अर्थात् भाषाका शब्द, अक्षर वा वर्ण बुझाउने चित्रहरूको सुनियोजित र व्यवस्थित पद्धतिको आरम्भ कहाँ र कसरी भयो र त्यसको कसरी विकास भयो भन्ने प्रश्नहरूको उत्तर पुरालेखनमै खोजिन्छ । लेखनपद्धतिहरूको वर्णनबाट तिनको आपसी सम्बन्ध र सम्पर्क र भाषातत्त्वबारे जानकारी पाइन्छ । त्यस्तो जानकारीलाई अनेक किसिमले वर्गीकरण गर्नसकिन्छ । पुराना लेखनको वर्णनबाट विकासका विभिन्न चरणहरू र तिनका विशेषताहरूका बारेमा प्रकाश पर्दछ । लेखनको आरम्भ र विकासको अध्ययन अर्थात् लेखनको इतिहास पुरालेखनको महत्त्वपूर्ण पक्ष हो ।

पुराना लेख पढ्नु अर्थात् त्यसको रहस्य वा कूट खोल्न डिसाइफर गर्नु वा लिप्यन्तर गर्नु पुरालेखनको महत्त्वको विषय हो। पुराना लेख (अभिलेख) पढ्ने प्रयासको लामो र कष्टमय इतिहास छ। विभिन्न ठाउँहरूमा पाइएका दुई भाषा/लिपिहरूमा कुँदिएका अभिलेखहरूबाट यस काममा ठूलो मद्दत मिलेको छ। तर दुई भाषा/लिपिमा लेखिएको लेख र अभिलेख सबै ठाउँमा पाइँदैनन्। भारत र पाकिस्तानको सिन्धुलिपिका साथ अन्यत्र कतिपय ठाउँका लेखोट पढ्न नसक्नुको एक मुख्य कारण यही रहेको छ।

पुरालेखनको आरम्भिक गतिविधिबारे बढी जानिएका ठाउँ पश्चिम एशियाका प्राचीन मेसोपोटामिया (हालको ईराक), संयुक्त अरब गणतन्त्रको मिश्र (इजिप्ट) र वरिपरिका क्षेत्रहरू हुन्। हाल विश्वभरी चलिरहेको प्रायः सबै लेखनपद्धतिहरू यिनै क्षेत्रहरूबाट प्रभावित भई विकसित भएका मानिन्छन्। पुरालेखनको अध्ययनको लागि यस क्षेत्रमा ढुंगामा कपिएका (कुँदिएका) आवश्यक स्रोतसामग्रीहरू पर्याप्त पाइन्छन्। तिनका आधारमा पुरालेखनविद्ले लेखनको विकासलाई अनेक चरणहरूमा विभाजित गरेर अध्ययन गरेकाछन्।[८] आरम्भमा भाषाका शब्दहरूको लागि खास शब्दचिह्नहरूका साथसाथ अक्षरचिह्नहरूको उपयोग भएको देखिन्छ। पछि अनेकौं शब्दचिह्नहरूको ठाउँमा अक्षरचिह्नहरूको मात्र उपयोग हुने पद्धतिको विकास भयो। अन्तमा पर्याप्त स्वर भएको, स्वर र व्यञ्जनमा स्पष्ट भेद भएको यस्तो लेखनपद्धतिको विकास भयो जसमा भाषाको एक वा बढी समान ध्वनिको लागि कुनै चिह्न निर्धारित हुन्छ। यो वर्णमालात्मक लेखन थियो, जसपछि लेखनपद्धतिमा खास विकास भएको छैन।

## दक्षिण एशियामा लेखन

हाल पाकिस्तानका दक्षिणपूर्वी र भारतका उत्तरपश्चिमी भूभागमा प्राप्त प्राचीन सभ्यताका अवशेषहरूमा ससाना छाप (सीलहरू) मा नानाथरिका चिह्नहरू कुँदिएका पाइन्छन् जो खास आशय वा अर्थ व्यक्त गर्न सुनियोजित ढंगले बनाइएका बुझिन्छन्। सिन्धुलिपि भनिने यो लेखन आजसम्म पनि चित्तबुझ्दो ढंगले पढ्न सकिएको छैन।[९] वास्तवमा सिन्धुलेखनको प्रकृतिसम्म पनि जानिएको छैन। (फलक ३६)।

सिन्धुसभ्यता पछिका वैदिक आर्यहरूको समाजमा लेखनको चलन थियो वा थिएन भन्ने बारेमा अनेक मत प्रचलित छन्। वैदिक आर्यहरूको सभ्यताका कुनै पनि भौतिक अवशेष नपाइएकाले समस्या भिन्नै प्रकारको छ। वैदिक सभ्यताको अध्ययनको एक मात्र स्रोत वेदहरूको यस्तो समृद्ध साहित्य हो, जो लामो कालदेखि मौखिक परम्परामा जीवित रह्यो। वैदिक साहित्यका रचनाकार आर्य मानिन्छन्, जो सिन्धु सभ्यताको पतन भएपछि दोस्रो सहस्राब्दी ईसापूर्वमा उत्तरभारतमा स्थायी रूपमा बसोबास गर्नलागे। कालान्तरमा आर्यहरू सम्पूर्ण भारतीय उपमहादेशमा फैलिए र आफ्नु प्रभाव स्थापना गरे भन्ने मान्यता छ। वेदहरूलाई श्रुति भनिन्छ जो सुन्नु भन्ने अर्थ लाग्ने धातुबाट बनेको हो। तिनमा

लेखन र लिखित वस्तुहरूबारे अनेकौं उद्धरणहरू पाइन्छन् । तिनकै आधारमा एक थरि लेखकहरू वैदिककालमा अर्थात् ईसापूर्व १५००–६०० मा लेखनको चलन रहेको कुरामा विश्वास गर्छन् ।[१०] अर्काथरि लेखकहरू भने श्रुतिपरम्परामा रहेको वैदिक साहित्यमा यस्ता उद्धरणहरूको प्रामाणिकतामाथि सन्देह गर्छन् । तिनीहरू भौतिक अवशेषहरूमाथि जोड दिन्छन्, जो निकै पछि मात्र पाइनथाल्छन् । यथार्थमा ईसापूर्व तेस्रो शताब्दीमा मात्र पहिलो पल्ट लेखनको अस्तित्त्वको भौतिक प्रमाण पाइएको छ ।[११]

ईसापूर्व तेस्रो शताब्दीमा दुई किसिमका लेखनपद्धतिहरू देखापरे : खरोष्ठी र ब्राह्मी । दाहिनेबाट देब्रेतिर लेखिनेपढिने खरोष्ठीलिपि वर्तमान पाकिस्तान र सुदूर पश्चिममा केही शताब्दीसम्म चलेर बन्द भयो । देब्रेतिरबाट दाहिनेतिर लेखिनेपढिने ब्राह्मीलिपि भने सम्पूर्ण उपमहादेशमा प्रचलित रह्यो र कालान्तरमा अनेकौं क्षेत्रीय शैलीहरूसहित वर्तमान लिपिहरूका उत्पत्तिका कारण बन्यो । ब्राह्मी र खरोष्ठी दुवै लिपिहरूको प्रयोग सर्वप्रथम मौर्य सम्राट् अशोकले (ईसापूर्व २७४–२३७) आफ्ना अभिलेखहरूमा गरे ।[१२]

एकथरि लेखकहरूको विचारमा ब्राह्मी भारतीय आर्यहरूले भारतमै विकसित गरेको लेखन हो ।[१३] अरू भने पश्चिम एशियामा विकसित कुनै आरंभिक लेखनसँग ब्राह्मीको सम्बन्ध जोड्न खोज्छन् ।[१४] वेदको उचारण शुद्ध रहोस् भन्ने उद्देश्यले होला वैदिक साहित्यमा अक्षर (वर्ण) र तिनको शुद्ध उच्चारणको सूक्ष्म रूपमा विवेचन गर्ने शास्त्रको विकास भएको छ । अर्को महत्त्वको कुरा के छ भने तेस्रो शताब्दी ई.पू.भन्दा पहिलेको ब्राह्मीको उदाहरण पाइँदैन र त्यसको उपयोग संस्कृत भाषा लेख्न होइन बरू प्राकृत (पाली) भाषा लेख्न गरिएको छ । ब्राह्मीलिपिको उत्पतिबारेको विवाद अझै टुंगो लागिसकेको छैन ।

अशोककालीन ब्राह्मीका वर्ण, मात्राचिह्न र संयुक्ताक्षर सरल र आंरभिक किसिमका छन् । वर्णहरूको बनावटमा एकरूपता पाइन्छ । यस वर्णमालामा ६ स्वर, ३३ व्यञ्जन छन् र एक अनुस्वार अं छ । अशोक मरेपछि उसको साम्राज्य अनेक स्वतन्त्र राज्यहरूमा टुक्रियो । नयाँ राज्यहरूले भिन्नाभिन्नै प्रकृतिका अभिलेखहरू लेखाए । परिणामस्वरूप क्षेत्रीय लेखनशैलीहरूको विकासको भूमिका तयार भयो । त्यस्ता क्षेत्रीय लेखनशैलीहरूमध्ये पहिलो शताब्दी ई.का मथुराका शकक्षत्रपहरूको समयमा नयाँ प्रविधिको विकास धेरै महत्त्वको थियो । ब्राह्मी वर्णहरूको आकारप्रकारमा समानुपात र डीकोको विकासमा यस शैलीको प्रभाव चिरस्थायी र महत्त्वपूर्ण रह्यो । क्षेत्रीय लेखनहरूमा अन्तर आउँदैगयो ।

दोस्रो शताब्दी ई.ताका उत्तरप्रदेशको इलाहाबाद नजिकैको पुरानो नगर कौशाम्बीमा शीघ्रताले धस्काएर लेख्ने करसिभ लेखनप्रवृत्ति विकसित भयो, जसले गर्दा कतिपय वर्णहरूका नौला स्वरूप अस्तित्त्वमा आए ।[१५] समुद्रगुप्तको इलाहाबाद स्तम्भअभिलेखमा कौशाम्बीशैलीका विशेषताहरू पाइन्छन् । त्यस्ता कतिपय विशेषताहरू पाँचौं शताब्दीदेखिको नेपालको लेखनमा पनि पाइन्छन् ।

## नेपालमा लेखन

पाँचौं शताब्दी ई.देखिका नेपालका लिच्छविकालका अभिलेखहरूको लेखनलाई लिच्छविलिपि भनिन्छ। पहिले यसलाई गुप्तलिपि भनिन्थ्यो। गुप्तकालमा भारतमा अनेकौं लेखनशैलीहरू विकसित भएकाले यस नामले लिच्छविलिपिको मूलको बारेमा कुनै संकेत दिँदैन। पछिल्लो एक अध्ययनले लिच्छविलेखनमा समुद्रगुप्तको माथि चर्चिएको अभिलेखको लेखनको प्रभाव रहेको कुरा देखाएको छ।[१६] त्यसै अभिलेखमा समुदगुप्तको नेपालसंग कुनै किसिमको राजनीतिक संम्बन्ध रहेको कुराको उल्लेख छ। तत्कालीन नेपालको धर्म, कला संस्कृति र संस्कृत भाषाका अभिलेखहरूमा गुप्तकालीन संस्कृतिको प्रभाव देखिन्छ। अभिलेख लेखाउने पहिला लिच्छवि राजा मानदेव गुप्तसम्राट् समुद्रगुप्तभन्दा झण्डै एक सय वर्ष पछिका हुन्। त्यसअनुरूप लिच्छविलेखनमा केही थप विशेषताहरू पाइन्छन्। जस्तै समुद्रगुप्तको उक्त अभिलेखमा सामान्य कलमको सरल लेखाई र सानो तेर्सो रेखाको डीकोका ठाउँमा लिच्छविलेखनमा मोटो टाँकाको प्रौढ लेखाई र ठोस त्रिकोण डीको पाइन्छ। संयोगवश केही वर्षअघि काठमाडौंको मालीगाउँमा पाइएको मूर्तिको लेखनले उपर्युक्त दुई लेखनहरूको बीचको उदाहरण प्रस्तुत गरेको छ।[१७]

आठौं शताब्दी ई.मा लिच्छविशासन टुंगेतापनि त्यसकालको लेखनका अधिकांश विशेषताहरू १००० ई.सम्म कायम रह्यो। त्यतिबेलादेखि ग्रन्थलेखन लोकप्रिय भयो। लेखनको माध्यममा आएको परिवर्तनले उपकरण र प्रविधिमा फरक ल्यायो। साथसाथै ग्रन्थको बढ्दो मागको कारण पनि लेखनमा अन्तर र विविधता आउँदैगयो। त्यति वेलासम्म अन्यत्र झैं वर्णहरूको प्राय: दाहिनेतिरको भुजा वा पुच्छर तलतिर बढ्ने प्रवृत्तिको विकास भइसकेको थियो र नागरी वा प्राचीन देवनागरीका कतिपय विशेषताहरू देखिनलागे। ११०० ई.सम्म पारम्परिक त्रिकोण डीकोको ठाउँमा कोणात्मक डीकोको विकास भयो जसको कारण ऊर्ध्वरेखाको माथिल्लो भाग बांगो जस्तो देखिने वर्ण तथा मात्रा र संयुक्ताक्षरपद्धतिमा केही फरक लाग्ने लेखनको विकास भयो जसलाई प्रारंभिक नेवारी भनिएको छ।[१८] यिनै विशेषताहरूबाट प्रेरित भई लिपिकारहरूले डीकोबाट चिनिने विभिन्न लेखनशैलीहरूको प्रयोग गरे। एघारौं शताब्दी ई.देखिका बंगाली, मैथिली, देवनागरी र प्रारंभिक रञ्जनाका यस्ता अनेकौं पाण्डुलिपिग्रन्थहरू काठमाडौं उपत्यकामा पाइएका छन् जो यहाँ लेखिएका थिएनन्। स्वभावत: यहीं लेखिएका कैयौं पाण्डुलिपिहरूमा समेत तिनको प्रभाव देखिन्छ। यी सबैबाट समृद्ध भएका विभिन्न शैलीहरूको नेवारीलेखन अठारौं शताब्दीमा गोर्खाका राजा पृथ्वीनारायण शाहद्वारा नजितुञ्जेल काठमाडौं उपत्यकामा प्रचलित रह्यो। त्यस बेलादेखि झण्डै एकसय वर्ष पहिले प्रेसमा छापिएका किताबको व्यापक चलन नचलुञ्जेल काठमाडौं उपत्यकामा पुरानो लेखनपरम्परा धेरथोर कायम रह्यो।

सिंगारिएको कलापूर्ण लेखाई विभिन्न लेखनपद्धतिहरूमा पाइन्छ। वर्णहरूका धर्सा, अंकुश, गाँठो, कोण र गोलोपनदाई खास ढंगले अनुपात मिलाई

लेखिएका वर्णहरू, तिनको खास किसिमको डीको, मात्रा चिह्न र पंक्तिबद्धता, र खास किसिमले तानिएका मोटा र पातला धर्साको संयोजनका कारण मध्यकालीन नेपाली लेखनका भुजिंमो: र रञ्जना सुलेखन वा क्यालिग्राफीका राम्रा उदाहरण भएका छन् ।

पुरालेखनको अर्को महत्त्वको विषय अङ्कलेखन हो । प्राचीन ब्राह्मीमा झैं लिच्छविलेखनमा पनि एकदेखि नौसम्मका भिन्नभिन्न चिह्नहरू र दशदेखि सयसम्मका दशमान चिह्न र शतमान चिह्नहरू बनाइएका हुन्छन् । त्यस पद्धतिमा दशभन्दा बढी अंक लेख्नु परेमा दशमान चिह्नको दाहिनेतिर र शयभन्दा बढी अंक लेख्नु परेमा शतमानचिह्नमा चाहिएको अंक चिन्ह थप्नुपर्छ । एघारौं शताब्दी ई.देखि यहाँ यो पुरानो पद्धतिको साथसाथ शब्दको माध्यमले अंक लेख्ने नौलो शब्दाङ्कपद्धति समेत लोकप्रिय रह्यो । यसमा निश्चित संख्या भएका वस्तु, पदार्थ, जीव वा देवताको माध्यमले संख्या बताइएको हुन्छ । पद्यमा यसको उपयोग सजिलो हुन्थ्यो । बाह्रौं शताब्दी ई.देखि यहाँ दशमलव प्रणालीको प्रवेश भएको पाइएता पनि आउँदो तीनसय वर्षसम्म अङ्कलेखनका पुरानै पद्धतिहरू लोकप्रिय रहे । (फलक ३५) । यद्यपि शब्दाङ्कपद्धतिमा समेत दशमलवको विशेषता पाइन्छन् ।

## अभिलेखअध्ययन र पुरालेखन

कडा बस्तुमा कुँदिएका लेख अभिलेख भनिन्छन् । माथिका हरफहरूबाट अभिलेखअध्ययन र पुरालेखनका बीच घनिष्ट सम्बन्ध रहेको जानिन्छ । दुवैले प्राचीन लेखनको अध्ययन गर्दछन् । पुराना पुरालेखनविद्हरूको विचारमा कडा वस्तुमा कुँदिएका अभिलेखहरूको अध्ययन अभिलेखअध्ययनले गर्छ र छाला, पेपिरस, ताडपत्र र कागतका पाण्डुलिपिहरूमा मात्र पुरालेखनले रुचि लिन्छ भन्ने देखिन्छ । तथापि यो पारम्परिक भनाई मुनासिब देखिँदैन । कडा वस्तुमा कुँदिएका अभिलेख धेरै पुराना पाइन्छन् भन्ने कुरा साँचो हो । तर पुरालेखनको विषय पाण्डुलिपिहरूमा मात्र सीमित रहँदैन । किनभने ढुंगा, धातु, पात र कागत त लेखनका माध्यम मात्र हुन् । लेखनको सबभन्दा पुराना नमुना अभिलेखमा नै पाइने भएकाले पुरालेखनको प्राचीनतम स्रोत अभिलेख नै हुनआउँछ । लेखनको निरन्तरता र विकासको अध्ययनमा प्राय: परवर्तीकालका पाण्डुलिपिहरूको उत्तिकै महत्त्व हुन्छ । त्यसै गरी अभिलेखको व्याख्या र वर्गीकरणको प्रसंगमा पुरालेखनको आफ्नै महत्त्व छ ।

पहिले भारतीय उपमहादेशमा पुरालेखनविद्रूले वर्णका बाहिरी स्वरूपलाई बढी महत्त्व दिए । तिनले खास किसिमको लेखाइ र वर्णहरूलाई खास समयको आदर्श माने । यिनलाई तिथिमिति नभएका ऐतिहासिक वस्तु वा घटनाको कालनिर्धारणको आधार बनाए र लेखनशैलीहरूको नामकरण राजवंशका नाममा गरे । यसो गर्दा त्रुटि हुन सक्थ्यो र विवाद उठ्नेगर्थ्यो । वास्तवमा पुरालेखनको क्षेत्र वैयक्तिक वर्णहरूको विकासको अध्ययनमा मात्र सीमित रहँदैन । यिनमाथि विचार गरी आज पुरालेखनको क्षेत्रलाई बढी व्यापकता दिने प्रयास गरिएको

छ ।[१९] लेखन कुनै खास संस्कृति अन्तर्गत विकसित कला हो । यस कारण लेखन संस्कृतिको अंग हो । सांस्कृतिक विकासको पृष्ठभूमिमा मात्र पुरालेखनको अध्ययन हुनसक्छ र त्यसमा आएको परिवर्तनहरूको व्याख्या गर्न सकिन्छ । खास प्रविधिमा आधारित परम्पराहरूको खोजी हुनुपर्दछ । लेखनशैलीहरूको विश्लेषणले कुनै निश्चित ठाउँ र समयमा प्रचलित लेखनका किसिम छुट्याउन सकिन्छ । सांस्कृतिक सन्दर्भभित्र गरिने लेखनशैलीको अध्ययन मात्र कालनिर्धारणको असरदार साधन हुनसक्छ । यसरीनै वर्णहरूका आकारप्रकारका आधारमा कुनै संस्कृति र त्यसको अन्य संस्कृतिसँगको सम्बन्धको व्याख्या गर्न सकिन्छ । वर्णहरूको बाहिरी बनाबटलाई बढी महत्त्व दिने र त्यसलाई कालनिर्धारणको साधन मान्ने परिपाटी वैज्ञानिक होइन ।

ईसवीको उन्डाईसौं शताब्दीको उत्तरार्धदेखि नै काठमाण्डौं उपत्यका वरिपरिका अभिलेख र पाण्डुलिपिहरूको लेखनको अध्ययन सुरू भएको थियो । तथापि लेखनका कैयौं पक्षहरूको अध्ययन अझै हुनसकको छैन । नेपाली पुरालेखनको अध्ययन गर्दा पुरा उपमहादेशको लेखनको विकासको सर्न्दभलाई बिर्सनुहुँदैन । पाँचौं शताब्दी ई.देखि काठमाडौ उपत्यकामा प्रचलित भारतमा गुप्तकालमा विकसित कला र संस्कृतिका विभिन्न पक्षहरूको पृष्ठभूमिमा नेपाली पुरालेखनको अध्ययन गरिनुपर्दछ । लेखनमा देखिने विभिन्न परम्पराहरूको पत्ता लगाएर लेखनशैलीहरूका विशेषताहरूको अध्ययन गरिनुपर्दछ । प्रविधिमा आएको परिवर्तनले लेखनमा के कस्तो प्रभाव पार्‍यो भन्ने कुरा र पारम्परिक मान्यताका आधारमा लेखनशैलीहरूको व्याख्या गरिनुपर्दछ । समग्र नेपाली संस्कृतिको अध्ययनमा लेखनशैलीको भूमिका खोज्नुपर्दछ ।

## टिप्पणी

१. I. J.Gelb, **A Study of Writing** (Cicago & London, 1965 पृष्ठ १३ मा उद्धृत ।

२. **उही** पृ. १८ ।

३. M.C. Burkitt, **The Old Stone Age, A study of Palaeolithic Times** (New Delhi: Rupa & Co, 1985, reprint) 55 ff..

४. **उही** पृ. १८२ र अगाडि ।

५. I. J. Gelb, *op.cit.* (note 1), P.60.

६. Ahmad Hasan Dani, **Indian Palaeography** (Oxford, 1963), P. 13.

७. I. J. Gelb.

८. *ibid.*191.

९. A.H.Dani, *op.cit.*(n.6), P. 13.

१०. गौरीशंकर हीराचन्द ओझा, **भारतीय प्राचीन लिपिमाला** (दिल्ली : मुन्शीराम मनोहरलाल १९५९), पृष्ठ २८–३०; राजबली पाण्डेय, **भारतीय पुरालिपि इलाहावाद १९७८**, पृष्ठ ४४ ।

११. अहमद हसन दानी, **पूर्वोक्त**, पृष्ठ २४ ।

१२. अशोकका अभिलेखहरू चट्टान र स्तंभमा पांइन्छन् जसलाई आकारको आधारमा ठूला साना भनी विभाजन गरिएको छ ।

१३. गौ.ही. ओझा **पूर्ववत्** (**टिप्पणी** १०.). पृष्ठ २८, रा.ब.पाण्डेय, **पूर्ववत्** पृष्ठ ४४ ।

१४ जर्ज बूलर, **भारतीय पुरा लिपिशास्त्र** (मंगल नाथद्वारा हिन्दीमा अनूदित), (दिल्ली, पटना र वाराणसीः मोतीलाल बनारसीदास, १९६६, पृ. ३१८ अगाडि) ।

१५. कौशाम्बी शैलीको विशेषताबारे हेर्नुहोस्, अ.ह. दानी, **पूर्ववत्** पृष्ठ ९० ।

१६. दिनेशचन्द्र रेग्मी, **पुरालेखनपरिचय नेपाल** (काठमाडौं, २०४८) पृष्ठ ७२-७३; दानी, **उही**, पृष्ठ १३७ ।

१७. दिनेशचन्द्र रेग्मी, "जयवर्मा, वंशावली र पुरालेखन," **मधुपर्क**, पृष्ठ ४२–४६ ।

१८. दिनेशचन्द्र रेग्मी **पूर्ववत्** (**टिप्पणी** १६) पृष्ठ ९३–९४ ।

१९. अ.ह. दानी, **पूर्ववत्**, १०–११ ।



# अध्याय दुई
# लेखनको उत्पत्ति र विकास

लेखनको अर्थ र महत्त्वबारे जानकारी भएपछि यहाँ लेखनको उत्पत्ति र विकासबारे छोटकरीमा चर्चा गरिंदैछ।[1] पाँच हजार वर्षपहिले मानिसले पहिलोपल्ट रेखात्मक चित्रहरूलाई भाषाको सञ्चारमाध्यम बनाएर पूर्णलेखनको सुरुवात गरेको देखिन्छ। पूर्णलेखनमा चित्रात्मक चिह्न र प्रतीकहरूको माध्यमले भाषातत्त्व व्यक्त गर्ने वा अभिलेखन गर्ने प्रयास गरिएको हुन्छ। लेखिने चिह्नहरूले भाषाको ध्वनि अर्थात् पदार्थको निर्धारित शब्द अक्षर वा वर्ण उच्चारण गर्दछन्, यसैकारण यस्तो लेखनलाई ध्वन्यात्मकलेखन भनिन्छ। ध्वनि सुनिने चिह्न हो जो उच्चारण वा बोलीसँग सम्बन्धित हुन्छ। ध्वनिको सरोकार भाषासँग हुन्छ। पूर्णलेखन वा ध्वन्यात्मक (Phonetic) लेखनको विकास अनेक चरणहरूमा भएको कुरा जानिएको छ। लेखनका विकासका भिन्नभिन्न चरणमा भाषाका विभिन्न किसिमका ध्वनि व्यक्त गर्ने चिह्न विकसित भए। यस्ता आरम्भिक चिह्नहरू प्राय: चित्रात्मक छन् र भाषाका शब्दलाई व्यक्त गर्छन्। (फलक ३९)। मेसोपोटामिया (सुमेरिया) र मिश्र (इजिप्ट)का निवासीहरू यस काममा अगुवा रहे। कालान्तरमा एलम, क्रीट (ग्रीस), एनातोलिया र सिरियामा हिट्टाइट, चीनमा चीनियाँ तथा भारत र पाकिस्तानको सिन्धुप्रदेशमा पूर्णलेखनको विकास भयो। पछि शब्द र अक्षरका ठाउँ अक्षरचिह्नहरूले लिए। यसपद्धतिमा एक वा अनेक अक्षर व्यक्त गर्ने चिह्नहरूको (syllabaries को) माध्यमले बढी सजिलो हुने गरी भाषालेखन सम्भव भयो। अन्तमा क ख ग, ए बी सी जस्ता वर्णहरूको उपयोग गर्ने पद्धति अर्थात् वर्णमालात्मक लेखनको विकास भयो। स्वर र व्यञ्जन स्पष्ट हुने र एक वर्णको एकभन्दा बढी ध्वनि उच्चारण गरिने वर्णात्मक लेखनपद्धति लेखनको अन्तिम विकास हो। हाल विश्वका धेरैजसो ठाउँहरूमा वर्णात्मक लेखन प्रचलित छ।

## प्राक्लेखन चरण/आशयलेखन

पूर्णलेखनको विकास हुनुभन्दा पहिले कुनै किसिमको सञ्चारको माध्यम विकसित भएको बारेमा अनेकौं अनुमान गरिएका छन्। संचारको त्यस्तो प्रयासको लागि "प्राक्लेखनचरण" भन्ने नामको कल्पना गरिएको छ। केहीले प्रागैतिहासिक ढुंगे युगको पूर्वार्धमा गुफाका भित्ता र छतमा कोरिएका वा कपिएका चित्रहरूसँग[2] यस चरणको सम्बन्ध जोड्नखोजेका छन्।[3] वास्तवमा ती चित्रहरूमा प्राणीहरूका वास्तविक स्वरूपको नक्कल गर्नखोजिएका हुन्छन्। यस कारण ती अभिव्यक्तिका उदाहरण त हुनसक्छन् तर संचारका लागि उपयोग गरिएका संकेतचिह्न वा लेखनका नमूना हुनसक्दैनन्। पछिल्लो कालमा वास्तविक चित्रहरूको साथसाथ प्रतीकात्मक रेखाहरू समेत थपी कुनै कुराको अनुमान गर्न सकिने खालका चिह्नहरू बनाइएका पाइन्छन्। देख्ने मानिसको

मनमा त्यस्ता चित्रात्मक चिह्नहरूले आफ्नो कुनै मतलब, प्रयोजन, अर्थ वा आशयको बारेमा कौतुहल जगाउन सक्छन्। भिन्नाभिन्नै व्यक्तिले तिनको अर्थ बेग्लाबेग्लै गरेतापनि त्यस्ता चिह्नहरूले कुनैनकुनै आशय बोकेकै हुन्छन्। तिनलाई आशयलेखनका नमुना भन्न सकिन्छ। यसरी पाषाणकालदेखिनै खास समूहका मानिसहरूका बीचमा आशय वा अर्थको संचारको लागि वस्तु वा प्राणीको हुबहु नक्कलभन्दा प्रतीकात्मक महत्त्व बढी भएका चित्रहरूको उपयोग भएको देखिन्छ। संझनु पर्ने कुरा यत्ति हो कि यस किसिमको उपायमा भाषा-तत्त्वको कुनै आवश्यकता हुँदैन। अतः यो वास्तविक लेखन भएन। प्राक्-लेखनको कल्पित चरणलाई आई. जे.गेल्बले[४] भनेका छन्: "देख्न सकिने चिह्नहरूको माध्यमले भाषाको उपयोग नगरी आशय व्यक्त गर्ने अन्तःसञ्चारको प्रयासलाई आशयलेखन वा सिमासियोग्राफी (semasiography)" भन्नु पर्छ। उनले आशयलेखनका दुई मुख्य प्रयासको यसरी चर्चा गरेका छन्:

(क) **विवरणात्मक-प्रतिनिधिमूलक** (descriptive-representational) अर्थात् चित्र वा चित्रहरूको श्रृङ्खलाको माध्यमले आशयको विवरण दिने वा कुनै आशय वा अर्थको प्रतिनिधित्व गर्ने प्रयास र,

(ख) **समीकरण-स्मरणात्मक** (identifying-mnemonic) अर्थात् कुनै घटना, नाम, उखान कथा वा गीतसँग कुनै चिह्न वा प्रतीकको पहिचान गर्ने र तिनको अभिलेखन गर्ने प्रयास। खास चिह्न, चित्र वा चित्रहरूको श्रृङ्खला वा प्रतीकको माध्यमले यी दुई उपायद्वारा आशय प्रकट गर्ने चलन विभिन्न प्राचीन जातिहरूमा आज पनि पाइन्छ।[५]

## (क) विवरणात्मक-प्रतिनिधिमूलक

यस पद्धतिमा पनि चित्रको उपयोग हुन्छ, तर चित्र बनाउने विधि र त्यसको उद्देश्य फरक हुन्छ। संचारप्रणालीमा उपयोग गरिने यस्ता चित्रमा पूरा विवरण र कलातत्त्व खोज्न सकिंदैन। यसका चित्र, प्रतीकात्मक, यान्त्रिक र व्यावहारिक किसिमका हुन्छन्। यसमा कुनै चित्रबाट विकसित चिह्नहरूको उपयोग आजभोलि प्रचलित शब्द नभएका चित्रावली वा कमिक्समा झैं गरिन्छ। यस्ता चित्र वा चिह्नहरूको उद्देश्य कुनै व्यक्तिद्वारा आशय बुझ्ने व्यक्तिहरूलाई भाषाको उपयोग विना सन्देशको विवरण दिनु र तिनको प्रतिनिधित्व गराउनु हो। उदाहरणको लागि मानिस, बँदेल र भालाका चित्रहरूले 'मानिसले बँदेल मार्‍यो' भन्ने विवरण दिन्छ र 'मार्‍यो' भन्ने आशयको प्रतिनिधित्व भालाले गर्छ। पछिल्लो पाषाणकालमा चलेका प्रतीकात्मक चिह्नहरूले यस पद्धतिको विकासमा सहयोग गरेका हुनसक्छन्। फ्रान्सको दोरदोनी (Dordogne) क्षेत्रको तेजात भन्ने ठाउँबाट प्राप्त हाडमा कुँदिएको चित्रमा अगाडि र पछाडि बाह्रसिंगाका प्राय पुरै चित्र बनाइएका छन् तर बीचमा भने माथिल्ला र तल्लो भागमा ढल्केका ठाडा रेखाहरू बनेका छन्। यी रेखाहरूले सिंग र खुट्टाहरूको आशय दिन्छन्। पूरा रचना हेर्दा दौडिरहेका बाह्रसिंगाको आभास पाइन्छ। यस प्रकारका केही

उदाहरणहरूलाई एकजना पुरातत्त्वविद्ले सुझावचित्र (suggestion picture) भनेका छन् ।[६]

## (ख) समीकरण-स्मरणात्मक

कुनै दुई वस्तुहरूलाई आपसमा मिलान गर्नु वा दुवैलाई एउटै मान्नु समीकरण हो । यसमा कुनै चित्र, चिह्न वा प्रतीकसँग कुनै वस्तु, प्राणी वा घटनाको चिनारी वा पहिचान गरिन्छ । कुनै उखान, गाना वा घटना जस्ता कुरा संझने उद्देश्यले खास चिह्न वा प्रतीकको उपयोग गर्नु स्मरणात्मक उपाय हो । समीकरण-स्मरणात्मक पद्धतिमा उपयोग गरिने चित्रको उद्देश्य घटनाको वर्णन गर्नु नभई कुनै गाना, उखान, गिन्ती वा घटना जस्ता कुराको संझना राख्नु र अभिलेखन (record) गर्नु हुन्छ । यस्तो चलन केही पुराना जातिहरूमा अझै पनि पाइन्छ । पसलेले संझिरहन र हिसाब राख्न भित्तामा धर्सो कोर्ने, गर्नुपर्ने कुरा संझन वा कुनै सन्देश संझिराख्न तुनामा गाँठो पार्ने, निम्ता दिन वा कामको जिम्मा दिन सुपारी दिने, कुनै काम सुरू गर्न वा कसैलाई विदा गर्न पान दिई पठाउने र मृत्युको खबर भएको चिठीमा काँचो धागो बाँध्ने जस्ता चलन धेरै ठाँउमा चलेको छ । विभिन्न प्राचीन जनजातिहरूमा विभिन्न माध्यमले सन्देश पठाउने र उखान र गानाको संझना राख्न र तिनको अभिलेखन गर्न विभिन्न वस्तुलाई धागोमा गाँठो पार्ने चलन आज पनि पाइने कुराका अनेक उदाहरणहरू पाइन्छन् । प्राचीन कालदेखि नै भाँडा-कुँडा, हातहतियार, हाड वा ढुंगाको थुप्रो, माटाको भाँडा र इँटमा ज्यामितीय वा रेखागणितीय डिजाइन वा चिह्नहरूको उपयोग गर्ने चलन चल्दैआएको छ । पाल्तु जनावरहरूको पहिचान गर्न चिनो लगाउने चलन पनि प्रायः सबै ठाँउमा पाइन्छ । अमेरिकी रेड इण्डियनहरूमा धार्मिक अवसरमा गाइने गानाको संझना राख्न र अभिलेखन गर्न यो उपाय अपनाइन्छ । प्राचीन सुमेरिया र बेबिलोनियामा यसै पद्धतिले जाडो, वर्षाको हिसाब गरी वर्षगणना गरिन्थ्यो । घटना, गाना वा उखान जस्ता कुराको भविष्यको लागि अभिलेखन गर्ने प्रयासले नै पूर्णलेखनको बाटो खोल्यो । सुमेरीहरूले यसको आवश्यकता बुझी संझना दिलाउने चिह्नहरूको प्रभावशाली माध्यमले अभिलेखनको कामलाई अगि बढाए । यो वास्तविक लेखनको बाटोमा महत्त्वपूर्ण पाइलो थियो ।

यस प्रकार सन्देशको आदानप्रदानको व्यवस्था हुँदैजाँदा एकातिर प्रतीक चिह्न र अर्कोतिर कुनै वस्तु वा प्राणीको बीचमा एक अर्काको संबन्ध बलियो हुँदै जान्छ । यस्ता वस्तु वा प्राणीको बोलिने भाषामा कुनै नाम हुन्छ, यस कारण लिखित चिह्न र भाषाको शब्दको बीचमा एक अर्कोसँग सम्बन्ध बन्दछ । जब कुनै भाषाको शब्द प्रतीकचिह्नको माध्यमले व्यक्त गर्न सकिन्छ भन्ने कुरा पत्ता लाग्यो, अन्तसञ्चारको नौलो र महत्त्वपूर्ण पद्धति विकसित भयो । यो पद्धति विवरणात्मक प्रतिनिधिमूलक पद्धतिभन्दा निकै फरक छ । यसमा स्थापित मान्यताका आधारमा निर्धारित गरिएका ससाना रेखा, चित्र वा चिह्न बोलिने

शब्दहरूको क्रम अनुसार राखिन्छन् । सम्झनाको अभिलेखन गर्ने यस्तो पद्धतिलाई केहीले वाक्यलेखन वा वाक्यांशलेखन पनि भनेका छन् । तथापि यसमा वास्तविक वाक्य वा वाक्यांश हुँदैन र यसको उद्देश्य संझनु र अभिलेखन गर्नु मात्र भएकोले यस पद्धतिलाई यसो भन्नु ठीक हुँदैन । त्यस्ता चिह्नहरू भाषालेखनको आरंभिक प्रयास भने पक्कै हुन् । आशयलेखनका यी दुवै उपायहरू सबै ठाँउमा चलेका नहुन पनि सक्छन् र यीमध्ये कुन पहिले चलेको हो त्यो पनि भन्नसकिँदैन । यी दुईमध्ये समीकरण-स्मरणात्मक पद्धतिले भने पूर्णलेखनका केही आवश्यकता पूरा गरेको देखिन्छ ।

## पूर्णलेखन/ध्वन्यात्मक लेखन

शब्द वा अक्षरका रूपमा चिनिएका चिह्नहरूमा उच्चारणसँग सम्बन्धित खास ध्वनि रहेको मान्नु लेखनको इतिहासमा महत्त्वपूर्ण कुरो थियो । यसअन्तर्गत निर्धारित र स्वीकृत चित्र र प्रतीकचिह्नहरूको माध्यमले भाषाको अभिव्यक्ति संभव भयो । चित्र, चिह्न र प्रतीकहरूको माध्यमले भाषातत्त्व व्यक्त गर्नसकिने भएकोले यो पूर्णलेखन अर्थात् ध्वन्यात्मक (phonetic) लेखनको विकास थियो । (फलक ३९) । भाषालेखन वा पूर्णलेखनको विकास ईसापूर्व तीनहजार अर्थात् आजभन्दा पाँच हजार वर्ष पहिले भएको देखिन्छ । यसका सुरुका चरणमा शब्दचिह्नहरू र अक्षरचिह्नहरूको उपयोग भएको हुनाले क्रमश: शब्दात्मकलेखन (logography वा word writing) र अक्षरात्मकलेखन (syllabic writing) भन्ने सामान्य चलन छ । शब्दात्मकलेखन त्यस्तो लेखन हो जसमा भाषाको एक वा बढी शब्दको निम्ति सामान्यतया एक चिह्न निर्धारित गरिएको हुन्छ । खास गरी सुमेरिया र मिश्रको लेखनमा शब्दचिह्नहरूको साथसाथ अक्षरचिह्नहरूको उपयोग भएको कारणका आधारमा आ ई. जे.गेल्बले पूर्णलेखनको पहिलो चरणलाई शब्दाक्षरात्मक लेखन (word-syllabic or logo-syllabic writing) भनेका छन्[७] र दोस्रो र तेस्रो चरणमा क्रमशः अक्षरात्मक लेखन (syllabic writing) र वर्णात्मक वा वर्णमालात्मक लेखन (alphabetic writing)लाई राखेर भाषातत्त्व व्यक्त गर्ने पूर्णलेखनको विकास तीन मुख्य चरणहरूमा भएको मानेका छन् ।

### (क) शब्दाक्षरात्मक लेखन

भाषाको शब्दको निम्ति चिह्नको छनोटले शब्दलेखनलाई जन्म दियो । शब्द बुझाउने चिह्नहरूको माध्यमले भाषा लेख्ने पूर्णलेखनको सबभन्दा पहिलो चरणमा शब्दचिह्नहरूको साथसाथ धेरथोर उपयोगमा आएका अक्षरात्मक चिह्नहरूले लेखनलाई बढी शुद्ध र सजिलो बनाउन सघाएको छ । भूमध्यसागर (Mediterranean Sea)को पूर्वी किनाराबाट प्रशान्त महासागरको पश्चिमसम्म फैलिएको विशाल भूभाग लेखनको उत्पत्ति र विकासमा ज्यादै महत्त्वको रहेको छ । यस भूभागमा यस चरणका तलका सात लेखनपद्धतिहरू जानिएका छन्:[८]

(१) मेसोपोटामिया (वर्तमान ईराक) को सुमेरी (ई. पू. ३१००-७५ ई.),
(२) एलमको आदिएलामाइट (ई. पू. ३०००-२२००),
(३) सिन्धुघाटीको आदिभारतीय (ई. पू.२२००को आसपास),
(४) चीनमा चीनियाँ ई .पू. १३०० देखि हालसम्म),
(५) मिश्रमा मिश्री (ई. पू. ३०००-४०० ई.),
(६) क्रीट र ग्रीसको क्रेटान (ई. पू.२०००- ई. पू. १२००) र
(७) एनातोलिया र सीरियाको हिट्टी (हिट्टाइट) (ई. पू. १५०० - ई. पू. ७००)। (फलक ३९)। यीमध्ये आदिएलामाइट, सिन्धुघाटीको आदिभारतीय र क्रीट र ग्रीसको केटानका लेखन अझै पढ्नसकिएका छैनन्।

दक्षिणी मेसोपोटामियाको सुमेरी लेखन सबभन्दा पुरानो मानिएको छ। यसको सुरुवात ई. पू. ३१०० मा भएको।[९] गेल्बको विचारमा ई. पू. ३००० तिर सुमेरीलेखनको प्रभाव पश्चिममा मिश्र पुग्यो; मिश्री लेखनको प्रभाव एजियान पुग्यो जहाँ ई. पू. २००० तिर यसले क्रेटान लेखनलाई जन्म दियो।

केही शताब्दीपछि एनातोलिया र सिरियामा मिश्रको प्रभावबाट हिट्टी (हिट्टाइट)पवित्रलेखन (हियरोग्लिफिक लेखन)को विकास भयो। पूर्वतिर सुमेरीलेखनको मुख्य सिद्धान्तको प्रभाव आदिएलामाइटलेखनमा र तिनका माध्यमले सिन्धुघाटीको लेखनमा फैलियो। चीनियाँ लेखन पनि सुमेरी लेखनको प्रभावबाटै विकसित भएको मानिन्छ। सुमेरी, मिश्री, चीनियाँ र हिट्टी शब्दाक्षरात्मक चिह्नहरूका बाहिरी स्वरूपमा केही फरक देखिएता पनि भित्री (आन्तरिक) स्वरूपमा अन्तर पाइँदैन। यिनमा शब्दचिह्नहरू र अक्षरचिह्नहरूका साथसाथ सहायक चिह्नहरूको पनि उपयोग भएको छ, जसले निश्चय, विराम जस्ता अर्थ गर्छन्।[१०]

## पवित्रलेखन वा हियरोग्लिफिक

चित्रमय चिह्नहरूको माध्यमले मिश्रको धार्मिक र सार्वजनिक स्थानमा लेखिने पवित्र वा धार्मिक लेखनलाई हियरोग्लिफ वा हियरोग्लिफिक (hieroglyphic) लेखन भनिन्छ। यस्तो लेखन त्यहाँ ई. पू. १९०० देखि ई. पू. ७०० सम्म प्रचलित रह्यो। (फलक ३८)। शब्दाक्षरात्मक लेखनलाई हिट्टाइट वा हिट्टीहरूले ई. पू. १५०० तिर अपनाएर खास किसिमको हियरोग्लिफको विकास गरे जसमा शब्दचिह्नको उपयोग छँदैछैन भने पनि हुन्छ। एर्किलेटबाट पाइएको धस्काएर लेखिएको एउटा हिट्टी हियरोग्लिफिक अभिलेखमा अष्टवसुको मन्दिरको उल्लेख छ।[११] अष्टवसु आर्य देवता हुन् र हिट्टाइटहरू आर्य जातिका मानिन्छन्।[१२] यसको साथसाथ मिश्रमा पुरोहितहरूले शीघ्रताले धस्काएर लेखिने कर्सिभ लेखनको विकास गरे जसलाई हियरेटिक (hieratic) भनिन्छ। मिश्रका जनसाधारणले भने आफ्नो लागि धस्काएर लेखिने कर्सिभ लेखनको विकास गरे, जसलाई जनलेखन वा डेमोटिक (demotic writing) भनिन्छ।

## कीलाक्षर वा क्यूनिफर्म

मेसोपोटामियामा शब्दाक्षरात्मकलेखनको चरणमा कीला जस्ता आकारका फेसो वा त्रिकोणात्मक चिह्नहरूको लेखन चल्यो, जसलाई कीलाक्षर वा क्यूनिफर्म (Cuneiform) भनिन्छ। त्यहाँ धेरै चलनमा आएको लेख्ने वस्तु मुछिएको माटाको पाटी हो जसमाथि लेख्ने र सुकाएर पोल्ने चलन चलेको पाइन्छ। गीलो माटाको पाटीमा तीखो कलमले लेख्दा चिह्नहरूको गोलाई कोणात्मक भएको र छेउछेउमा यस्ता रेखा दोहरिन जाँदा अन्तमा त्रिकोणात्मक स्वरूपको विकास भएको अनुमान गरिएको छ। क्यूनिफर्म मेसोपोटामियाको आरम्भिक लेखन होइन। त्यहाँको पनि प्राचीनतम लेखन मिश्री हियरोग्लिफिक झैं चित्रात्मक नै रहेको देखिन्छ। (फलक ३७)। कीलाक्षर लेखनपद्धति लामो कालसम्म विस्तृत क्षेत्रमा प्रभावशाली रह्यो।[१३] कालान्तरमा कीलाक्षर लेखन बेबिलोनिया, असीरिया, ईरान (पर्सिया) र एलम जस्ता देश र हुर्रियन र यूरार्टियन जातिहरूमा निकै चल्यो। ईरानीहरूले कीलाक्षरलाई धेरै समयसम्म कायम राखे।

## (ख) अक्षरात्मक लेखन

शब्दाक्षरात्मक चरणपछि अक्षरात्मक चिह्नहरूको मात्र उपयोग हुने लेखनको चरण विकसित भयो। अक्षरात्मकलेखन (syllabic writing) यस्तो लेखन थियो जसमा सामान्यतया कुनै एउटा चिह्न भाषाको एक वा बढी अक्षरको लागि निर्धारित गरिएको हुन्थ्यो। हजारौं शब्दचिह्नहरूको उपयोग विना कम संख्याका अक्षरचिह्नहरूको मात्र उपयोग गरिने अक्षरात्मक वा आक्षरिक लेखनपद्धति निकै छरितो र सजिलो थियो। लेखनको विकासमा यो कदम निकै क्रान्तिकारी थियो। यो धेरै लोकप्रिय भयो। अक्षरचिह्नहरूले सामान्यतया स्वर व्यक्त गर्छन् वा कुनै व्यञ्जनको अगाडि जोडिएर स्वरको उच्चारण गर्न सहयोग गर्छन्। सुमेरी पद्धतिमा स्वर वा व्यञ्जनमा अन्त हुने एकाक्षरिक अक्षरचिह्नहरू शब्दाक्षरात्मकलेखनमा शब्दचिह्नहरूका साथ र पछि स्वतन्त्र रूपमा लेखिएका छन्। मिश्री र हिट्टी अक्षरहरूमा स्वरमा अन्त हुने एकाक्षर पाइन्छन्। अक्षरचिह्नहरूको विकास प्रायः शब्दचिह्नहरूकै आधारमा भएको देखिन्छ।

अक्षरात्मकचिह्न मात्र अपनाई लेखनलाई छरितो बनाउनुमा विदेशीहरूको योगदान महत्त्वपूर्ण थियो। मेसोपोटामियाका बेबिलोनियाई र असीरियाईहरूको लागि सुमेरियाई शब्दाक्षरात्मक लेखन पवित्र परम्पराको अंग थियो, यसमा परिवर्तन गर्नु यिनको लागि गाहारो काम थियो। यसको विपरीत विदेशीहरूको मनमा सुमेरियाई लेखनप्रति अपनत्वको कुनै मोह वा श्रद्धा थिएन, यसको पवित्रतालाई जोगाइराख्नु आवश्यक थिएन। एलामाइट, हुर्रिएन र युरार्टियन जस्ता विदेशीहरूको लागि जटिल सुमेरियाई लेखनपद्धतिमाथि पूरा अधिकार स्थापित गर्नु पनि गाहारो थियो। फलस्वरूप शब्दचिह्नलाई पूर्णतः त्यागेर तिनले सरलीकृत अक्षरात्मकलेखन विकसित गरे। फिलिस्तिनी र सिरियाका सेमाइट्सहरूले त्यसलाई अझ सजिलो बनाए। तिनले मिश्रीहरूबाट स्वरमा फरक नदेखाउने एकाक्षरलेखनको सिद्धान्त अपनाए। अक्षरात्मक लेखनको

विकासमा मिश्री लेखन सिद्धान्त र सेमिटिकहरूको सबै ठाँउमा विदेशीहरूको ठूलो योगदान थियो। ईसापूर्व एकहजारभन्दा पहिले फिनेशियाई, हिब्रू र अन्य सेमाइट्सहरूमा चलेको पश्चिमी सेमाइट्स् लेखन मिश्रीपद्धतिबाट विकसित भएको अक्षरात्मक लेखन थियो।

अन्दाजि ईसापूर्व १५०० वर्षदेखि नै मिश्री-सेमिटिक अक्षरचिह्नहरूमा स्पष्ट रूपमा स्वरसंकेत गर्ने पद्धति खोज्ने अनेकौं कोशिश भएका पाइन्छन्। तिनमा सामान्य अवस्थामा स्वरको स्पष्ट संकेत नहुनेहुँदा पढ्ने व्यक्तिले आवश्यक ठाउँमा स्वर थपी पढ्नुपर्छ। अगाडिको अक्षरचिह्नमा स्वर या त पूरारूपमा व्यक्त हुँदैन या हुँदैहुँदैन। सुमेरियाई कीलाक्षर र हिट्टी पवित्रलेखनमा स्वरको उच्चारणको लागि कुनै किसिमले चिह्न जोडिएको हुन्छ। "कमजोर व्यञ्जन"को सहयोगले पनि स्वरको उच्चारणको प्रयत्न भएको पाइन्छ। अरू पश्चिमी सेमिटिक पद्धतिमा भैं प्राचीन हिब्रु लेखनमा व्यञ्जनबाट सुरू हुने र स्वरमा अन्त हुने अक्षरात्मक चिह्नको उपयोग गरिएको हुन्छ। दीर्घस्वरको संकेत गर्नुपरेमा अघिको अक्षरचिह्नमा "कमजोरव्यञ्जन"बाट सुरू हुने अक्षरचिह्न जोडिएको हुन्छ। मिश्री-सेमिटिक लेखनमा स्वरसंकेतको प्रक्रिया अझै कमजोर र अनियमित रहेको देखिन्छ।

## (ग) वर्णात्मक (वार्णिक वा वर्णमालात्मक) लेखन

भाषाको एक वा बढी समान ध्वनिको लागि कुनै चिह्न निर्धारित गरिएको लेखन वर्णात्मक, वार्णिक वा वर्णमालात्मक (alphabetic writing) भनिन्छ। यसमा पर्याप्त स्वरहरू हुन्छन्; स्वर र व्यञ्जनमा स्पष्ट भेद हुन्छ; स्वरको सहायताले सही रूपमा लेख्नपढ्न सकिन्छ र निर्धारित वर्णहरूको समूह वा वर्णमाला हुन्छ। प्राचीन यूनानी अर्थात् ग्रीकलेखनमा अल्फा, बेटा, गामा, डेल्टा; तथा रोमनमा ए, बी, सी, डी यस्तै वर्णमाला हुन्। यूनानी वर्णमाला विश्वको पहिलो वर्णमाला हो। यो फिनिशियाई अक्षरचिह्नहरूबाट व्युत्पन्न भएको मानिन्छ।[१४] यूनानमा व्यापार गर्ने फिनिशियाईहरूबाट यूनानीहरूले सेमिटिक अक्षरचिह्नहरूको अध्ययन गरे, तिनलाई आफ्नो भाषामा मिल्ने किसिमले सुधार गरे र तिनबाटै आवश्यक स्वर र व्यञ्जन वर्णहरू बनाई नयाँ लेखनपद्धतिको सूत्रपात गरे। (फलक ४०)। प्राचीन यूनानीबाट कालान्तरमा रोमन र अन्य यूरोपेली वर्णमालाहरूको विकास भयो।

## यूनानी वर्णमाला

यूनानीहरूले सेमिटिक अक्षरचिह्नहरू(syllaberies) मध्ये अधिकांशलाई व्यञ्जनकै रूपमा कायम राखे र केहीबाट आफ्नो भाषामा आवश्यक पर्ने स्वरवर्णहरूको निर्माण गरे। आफ्नु भाषामा आवश्यक नपर्ने ध्वनि व्यक्त गर्ने प्रायः कमजोर व्यञ्जन भनिने सेमिटिक अक्षरहरू यूनानी भाषाको लागि आवश्यक थिएनन्। व्यञ्जनहरूको साथ स्वरवर्णको व्यवस्थित रूपमा प्रयोग गर्ने यसप्रकारको कोशिशमा यूनानीहरूको भूमिका महत्त्वको हुनगयो। सेमिटिक

भाषामा कोमलश्वासको भण्डै **वृए** जस्तो ध्वनि उच्चारण गर्ने अक्षर **अलेफ्**लाई यूनानीहरूले **अ** स्वर व्यक्त गर्ने **अल्फा**को रूपमा ग्रहण गरे। यसैगरी तिनीहरूले सेमिटिक अक्षर **हे**लाई **ए (e)** को उच्चारण हुने स्वरवर्ण **एप्सिलोन**को रूपमा र सेमिटिक **वाव्**लाई **व (w)** को उच्चारण हुने व्यञ्जनवर्ण **दिगम्माको** रूपमा विकसित गरे। **दिगम्मा**लाई पछि तिनीहरूले अर्धस्वर **य (y)** को उच्चारण हुने **युप्सिलोन**मा परिवर्तन गरी यूनानी वर्णमाला विकसित गरे। त्यसैगरी तिनीहरूले सेमिटिक **योध्**लाई **इ (i)** स्वर उच्चारण गर्ने **इयोटा**मा र सेमिटिक **अयिन्**लाई **ओ (o)** स्वर उच्चारण गर्ने **ओमिक्रन**को रूपमा परिवर्तन गरे पछि **ऐटा** (ओ) र **ओमेगा** (ए) जस्ता थप स्वरवर्णहरू विकसित गरिए।[१५]

सुरूमा यूनानीहरूले सेमिटिक लेखन भैं दायाँबाट बायाँ लेखे। तिनको लेखन दायाँ वा बायाँ जताबाटपनि सुरु हुनसक्थ्यो, तर त्यसपछिको पंक्ति भने विपरीत दिशामा जान्थ्यो। यसरी पहिलो, तेस्रो, पाचौं आदि विजोर पंक्तिहरू एउटै दिशाबाट लेखिन्थे भने दोस्रो चौथो आदि जोर संख्याका पंक्तिहरू अर्कै दिशामा लेखिन्थे। यो हलो जोत्दा अपनाइने हलावर्त भैं उभयगतिको लेखन हुनगयो जसमा यदि पहिलो पंक्ति दायाँबाट बायाँ लेखिन्थ्यो भने दोस्रो पंक्ति बायाँबाट दायाँ र तेस्रो पंक्ति पुनः दायाँबाट बायाँ र यसै गरी पालैपालोसँग लेखनगति फरक गरिन्थ्यो। तर चाँडै नै यूनानी लेखनदिशा बायाँबाट दायाँ निर्धारित भयो। यसो हुंदा बायाँतिर फर्कने कतिपय वर्णहरूका चिह्न दायाँतिर फर्किनगए।

यूनानीहरूले वर्णमालात्मक लेखनको विकासको लागि अग्रज लेखनपद्धतिहरूबाट पर्याप्त आधार लिए। उनीहरूले मिश्री र मेसोपोटामियाई कीलाक्षर, हिट्टी हियरोग्लिफिक, पारसी र सेमिटिक अक्षरात्मक लेखनपद्धतिहरूमा उपयोग गरिएका स्वरव्यक्त गर्ने उपायहरूलाई सर्वथा नयाँ पद्धतिमा व्यवस्थित गरे। वर्णात्मक लेखनको विकासको प्रशस्त आधार एशियाई क्षेत्रमै थिए, यूनानीहरूले तिनलाई नयाँ पद्धतिमा व्यवस्थित गरे। यूनानीहरूले वर्णात्मक लेखनको विकास कहिले गरे भन्ने बारेमा सबैको मत एकै छैन। ईसापूर्व आठौं शताब्दीदेखि यूनानी अभिलेख पाइनथाल्छन्। यस आधारमा यूनानी वर्णमालाको विकास नवौं शताब्दी ईसापूर्वमा भएको मान्नु तर्कसंगत हुने छ।[१६] सुरूमा यूनानी स्वरसिद्धान्त नियमित देखिँदैन, तर एक शताब्दी बित्दानबित्दै त्यसमा पर्याप्त सुधार आइसकेको पाइन्छ। कालान्तरमा यूनानी वर्णमालाको लोकप्रियता सेमिटिकजगत्सम्म पुग्यो र स्वयं सेमिटाइट्सहरूले यूनानी वर्णमालाको पद्धति अपनाए।

नवौं शताब्दी ईसापूर्वदेखि विश्वभरि चलेका नानाथरीका वर्णात्मक लेखनहरूमा आज कुनै नयाँ कुरा थप भएको छैन। सुदूरपूर्वको चीनियाँ र त्यसबाट विकसित केही लेखनपद्धतिहरूलाई छोडेर प्रायः विश्वभरी नै सेमिटिक-यूनानी वर्णमालाको प्रभाव पाइन्छ। हाल विश्वमा प्रचलित विभिन्न वर्णमालात्मक लेखनहरूलाई स्वरचिह्नको उपयोगको पद्धतिको आधारमा गेल्बले तीन मुख्य प्रकारमा विभाजित गरेका छन्:[१७]

**पहिलो प्रकार**मा यूनानी वर्णमाला पर्दछ जो सबभन्दा सजिलो छ। यसमा व्यञ्जन वर्णको उच्चारण त्यसपछि लेखिने स्वरवर्ण बमोजिम हुन्छ। यो पद्धति ल्याटिन र रोमन हुँदै पश्चिमी जगत्का प्रायः सबै लेखनहरूमा पाइन्छ। (फलक ४०, ४१)।

**दोस्रो प्रकार**मा स्पष्ट स्वरवर्णको सट्टा स्वरचिह्न व्यञ्जनको तल र माथि सानो धर्सो वा विन्दु उच्चारणचिह्नको (diacritic marks) रूपमा थपिएका हुन्छन्। यूनानी वर्णमालाको प्रवेश भइसकेपछि पनि सुरुमा पूर्वी सिरियाई, फिलिस्तिनी, हिब्रू र पछि अरबी लेखनहरूमा विकसित भएको यस्तो स्वरपद्धति यूनानी पद्धतिभन्दा फरक छ। पहिले सेमिटिक अक्षरात्मक लेखनमा स्वरको उच्चारणमा सहयोग गर्ने 'कमजोरव्यञ्जन' व्यञ्जनचिह्नको माथितिर जोडिएको हुन्थ्यो। सेमिटिकहरूको आफ्नो परम्पराप्रति मोह हुनुको कारण, धार्मिक ग्रन्थहरूको उच्चारण शुद्ध र पारम्परिक ढंगमा गर्ने उद्देश्यले, अथवा व्यञ्जन लेखनको गतिमा कमी नआओस् भनेर पनि यस्तो पद्धति अपनाइएको हुनसक्छ। स्पष्ट स्वरवर्णको सट्टा व्यञ्जनको तलमाथि उच्चारणचिह्न (diacritic marks) मात्र उपयोग गर्ने अरेबिक र हिब्रू जस्ता लेखन आजसम्म पनि प्रचलित छन्।

**तेस्रो प्रकार**भित्र खरोष्ठी, ब्राह्मी जस्ता दक्षिण एशियाई लेखन र पूर्वोत्तर अफ्रिकाको ईथियोपियाई लेखनपद्धतिहरू पर्दछन्। (फलक ४१)। ईसापूर्व तेस्रो शताब्दीमा भारतीय सम्राट् अशोकले उपयोगमा ल्याएका खरोष्ठी र ब्राह्मी लेखनपद्धतिहरूमध्ये खरोष्ठीमा स्वतन्त्र स्वर **अ** मात्र छ र यसैमा अगाडि पछाडि धर्सा जोडेर **इ** (i ), **उ** (u), **ए** (e) र **ओ** (o) बनाइन्छन्। खरोष्ठीको व्यञ्जनमा **अ**स्वर जोडिएको मानिन्छ र अन्य स्वरहरू व्यञ्जनमा जोडिने ससाना धर्साका मात्राचिह्नको माध्यमले व्यक्त गरिन्छन्। खरोष्ठी र इथियोपियाई स्वरपद्धतिहरूमा धेरै फरक देखिँदैन। इथियोपियाई लेखनमा पनि **अ**मा विभिन्न धर्सा जोडी **इ ए उ** र **ओ** बनाइन्छन्। केही लेखकले ईथियोपियाई लेखनको स्वरपद्धतिलाई भारतीय लेखनबाट विकसित भएको मानेका छन्। स्वतन्त्र र स्पष्ट स्वरचिह्न नभएको कारण केही विद्वान्ले यी दुवैलाई वर्णात्मक लेखन मानेका छैनन्।

ब्राह्मी खरोष्ठीभन्दा धेरै विकसित छ। व्यञ्जनमा जोडिने स्वर अर्थात् मात्राचिह्नको पद्धति खरोष्ठीको समान भएता पनि आरम्भिक ब्राह्मीका प्रशस्त मात्रामा स्वतन्त्र स्वरवर्णहरू छन्, जस्तै **अ, इ, उ, ए, ओ**। वर्णहरूको बनावट र देब्रेबाट दाहिने लेखनगतिको कारण ब्राह्मीको सम्बन्ध कुनै पनि लेखनसँग जोड्न गाहारो छ।[१८] ब्राह्मीबाट विकसित (देवनागरीसहित) सबै लेखनको गति देब्रेबाट दाहिने निर्धारित भएको छ। व्यञ्जनमा मात्रा जोडी भिन्नाभिन्नै स्वरको उच्चारण गरिने हुँदा धेरै लेखकले ब्राह्मीलाई वर्णात्मक लेखन नमानी अक्षरात्मक वा अर्धवर्णात्मक भनेका छन्। तर स्वतन्त्र मूल स्वरहरूको पूरा समूह भएको कारण ब्राह्मीले स्वरको फरकलाई व्यक्त गर्न सक्छ; यसमा स्वर र व्यञ्जनमा स्पष्ट भेद छ र भाषाको समान ध्वनिको लागि निर्धारित वर्ण भएका कारण ब्राह्मीको तुलना 'स्वरको फरकलाई व्यक्त गर्न नसक्ने' पुरानो सेमिटिक लेखनसँग पनि गर्न

मिल्दैन। ब्राह्मीमा वर्णात्मक लेखनका धेरै विशेषताहरू पाइन्छन्।[१९] तथापि वर्णमालाको प्रचलित परिभाषा ब्राह्मीलिपिमा पुरा लागु हुँदैन। ब्राह्मीमा कुनै एक चिह्न एउटै ध्वनिको लागि निर्धारित छ। यसमा रोमनको जस्तो एक चिह्नको एक भन्दा बढी उच्चारण हुँदैन। उदाहरणार्थ रोमनको सीको उच्चारण क वा स दुवै हुनसक्छ जबकि ब्राह्मीमा अर्को व्यञ्जनचिह्न नजोडिएसम्म प्रत्येक चिह्नको स्वयंको उच्चारण हुन्छ। यस स्थितिमा ब्राह्मीलाई अक्षरात्मक भन्नेहरूले सेमिटिक अक्षरात्मक लेखनमा नभएका ब्राह्मीका विशेषताहरूलाई मनमा राख्नुपर्छ। भारत र नेपालमा विकसित देवनागरी लगायत प्रायः सबै लिपिहरू ब्राह्मीबाटै व्युत्पन्न भएका हुन्।

## टिप्पणी

१. लेखनको इतिहासको व्याख्या गर्ने प्रसङ्गमा विभिन्न पुरालेखनविद् र भाषावैज्ञानिकहरको बीच मतमतान्तर छन्। नेपाली पुरालेखनको अध्ययनको यस प्रसङ्गमा मतमतान्तरमा जानु अपेक्षित छैन। अत एव यहाँ आ ई. जे. गेल्बको अध्ययनपद्धतिको अनुसरण गरिएको छ। हेर्नुस् : I.J.Gelb, **A Study of Writing** (Chicago & London : The University of Chicago Press, 1965). गेल्ब पुरालेखनलाई पारम्परिक र संकुचित घेराबाट बाहिर निकाली स्वतन्त्र शास्त्रको रूपमा अध्ययन गरिनुपर्ने कुरामा जोर दिन्छन्। हेर्नुस् पृष्ठ २३।

२. प्रागैतिहासिक युगको पूर्वपाषाणकालको अन्दाजि तीस हजार वर्ष पहिलेको अन्तिम चरणमा मानवनिर्मित यस्ता गुफाचित्रहरू विशेष गरी दक्षिणी फ्रान्स र स्पेनमा पाइन्छन्। तिनमा अधिकतर घोडा, साँढे, हिरण, गैंडा, हात्ति जस्ता प्राणीहरू छन्। हेर्नुस् : M.C. Burkitt, **The Old Stone Age, A Study of Palaeolithic Times** (Rupa & Co, 1985.) 151 ff.

३. केही लेखकहरू यस्ता गुफाचित्रहरूलाई भ्रूणलेखन वा embryo writing भन्ने गर्छन्। यर्थाथमा तिनीहरूको संकेत आशय लेखनतिर हो।

४. I.J. Gelb, **op.cit.** P. 252. अन्यत्र (पृष्ठ १९०-९१) उनी लेख्छन् : "The all-inclusive term which I have coind for these devices is 'semasiography' from Greek *sēmasia,* 'meaning, signification,' and *graphē,* 'writing.' As the word implies, this is the stage in which pictures can convey the general meaning intended by the writer. In this stage visible drawn forms- just like gesture language- can express meaning directly without an intervening linguistic form."

५. विस्तृत अध्ययनको लागि हेर्नुस् **उही**, पृष्ठ २९-५९।

६. M.C. Burkitt, *op.cit.* note 2, 147-48, 149, 169. Figs. 20,26.

७. I.J.Gelb, pp 69 ff., 194 ff. दिनेशचन्द्र रेग्मीले (**पुरालेखनपरिचय नेपाल**, काठमाडौं : श्रीमती सुशीला रेग्मी, २०४८, पृष्ठ २० र अन्यत्र) सिलेबरी (syllabary) र सिलेबिक (syllsbic) को क्रमशः पदचिह्न र पदात्मक भन्ने अर्थ गरी **शब्दाक्षरात्मक** र **अक्षरात्मक** लेखनलाई क्रमशः **शब्दपदचिह्न लेखन** र

**पदात्मक लेखन** भनी लेखेको थियो। यसै गरी सोही पुस्तकको पृष्ठ २२मा **वर्णात्मकलेखन** हुनुपर्नेमा अन्यथा हुनगएको थियो। यहाँ ती सच्याइएका छन्।

८. Gelb, *ibid.* pp. 60 ff.

९. *ibid.* P. 63.

१०. *ibid.* pp. 72, 195.

११. *ibid.* P. 114. Fig. 39. यस अभिलेखमा लेखिएको छ : "यो भवन(मा) अष्टवसुस् राखिएका (छन्), यस कारण यो कसैले बिगार्न हुँदैन।" अष्टवसु वैदिक (हिन्दु) देवता हुन्।

१२. ई. पू.२००० ताका मध्य एशिया माइनरमा सैनिकसाम्राज्य स्थापना गर्ने हिट्टीहरू आर्यभाषा बोल्ने समुदायका थिए। हेर्नुस्: Kroeber, **Anthropology,** (Oxford & IBH Publishing Co. 1967)713.

१३. I.J.Gelb, pp. 61 ff.

१४. खुद यूनानी परम्परामा यस लेखनलाई "फिनिशियाई लेखन" भनिएको छ। धेरैजसो यूनानी वर्णहरूका आकारप्रकार, नाम र क्रम पनि सेमिटिक अक्षरचिह्नहरूसँग मिल्दाजुल्दा छन्। यूनानी वर्णहरूको नामको अर्थ यूनानीमा होइन सेमिटिकमा खोज्नुपर्छ, जस्तै अल्फाको अर्थ गोरू, बेटाको घर, गम्मा वा गिमेलको अर्थ ऊँट र दालेथ वा डेल्टाको ढोका हुन्छ। लेखनगतिको विकासबाट पनि यूनानीवर्णमालाको सेमेटिकसँगको सम्बन्ध देख्नसकिन्छ। आरम्भमा यो दाहिनेबाट देब्रे लेखिन्थ्यो र उभयगतिमा निकसित भयो।

१५. सुरूमा यूनानीहरूले **वाव्, षाधे** र **कोफ** जस्ता सेमिटिक अक्षरहरूलाई क्रमशः **वाउ** वा **दिगम्मा, सान** र **कोप्पा** वर्णका रूपमा अपनाए। यूनानी साहित्यको उत्कर्षकालमा यी वर्णहरूको उपयोग गर्न छोडियो।

१६. I.J.Gelb, P. 181.

१७. *ibid.* 184 ff. Fig. 94.

१८. गेल्बले यहाँ ब्राह्मीलिपिलाई स्वतन्त्र रूपमा आविष्कृत भनेका छन्। **उही** पृष्ठ १८७।

१९. ब्राह्मीमा रहेका कतिपय अक्षरात्मक विशेषताहरूका आधारमा धेरै लेखकहरूले ब्राह्मीलाई अक्षरात्मकलिपि मानेका छन्। यसमा देखिने वर्णात्मकलेखनका विशेषताहरूलाई ध्यानमा राखी गेल्बले ब्राह्मीको चर्चा वर्णात्मकलेखनको सन्दर्भमा गरेका हुन्। यहाँ यस विवादलाई उठाइनु आवश्यक छैन।



# अध्याय तीन

# लेखन-सामग्री

लेखनको आरम्भ भएदेखि विभिन्न सामग्रीहरूमा लेखिन्थे होलान्, तर लेखनका आर्रम्भिक नमूना भने ढुंगा, धातु र पोलिएको माटाका पाटीमा पाइन्छन्। वनस्पतिका पात, डाँठ र गुदीबाट लेख्नको लागि तयार पारिएका पेपिरस, ताडपत्र, भोजपत्र र कागतको साथसाथ छाला र रेशम (सिल्क) जस्ता जैविक पदार्थहरू धेरैसम्म नरहने हुनाले स्वभावैले पछिपछिका पाइन्छन्। नेपालमा पुराना अभिलेख ढुंगाकै बढी पाइन्छन्। दशौं शताब्दी ई.देखि तामाका पाता (ताम्रपत्र) र अन्य धातुलेख बढी पाइन्छन्। यसै वेलादेखि पुस्तक र अरू किसिमका सानाठूला लेखका लागि ताडपत्र र सोह्रौं शताब्दी ई.देखि कागत लोकप्रिय भए। नेपालमा कागत त्यसको चार सय वर्ष पहिले नै जानिएको थियो।[1] तथापि ढुंगा र धातुमाथिको लेख अर्थात् अभिलेखको चलन जारी नै रह्यो।

## १. ढुङ्गा

लामो कालसम्म रहने र सार्वजनिक ठाउँमा राख्न सकिने भएकोले होला ढुंगा सबै ठाउँमा लोकप्रिय लेखनसामग्री रह्यो। अभिलेखकै निम्ति तयार पारिएको ढुंगाको पाटी वा शिलापत्र, ढुंगाको अग्लो खामो वा स्तम्भ, मूर्ति र शिवलिङ्गको तल्लो भाग वा पादपीठ र ढुंगेधाराको डुँडको दायाँ वा बायाँ पाटा लेखका लागि राम्रा ठाउँ हुन्। नेपालमा ठूलो ढुंगा वा चट्टानलेख, गुफालेख र माटाका पाटीलेख पाइएका छैनन्।

### (१) शिलापत्र

पातलो चारपाटे ढुंगाको पाटीमा लेख्ने चलन सबै ठाउँमा पाइन्छ। यस्तालाई **सिलाफलक** वा **शिलापत्र** भनिन्छ। नेपालको प्राचीन अभिलेखहरूमा शिलापत्रलाई **शिलापट्टक** वा **शिलापट्टकशासन** भनिएको छ।[2] यहाँ सुरुदेखिनै लोकप्रिय रहेको शिलापत्रको माथिल्लो भागका दुवै कुना मारेर गोल बनाइएको हुन्छ। पाटीको अग्रभागको सतहमा घोटेर चिप्लो र चम्किलो हुनेगरी पालिश गरेपछि माथिल्लो गोल भागमा साँढे, मृग, चक्र, कमल, शंख, माछा, वज्र, चैत्य (स्तूप), त्रिशूल, शिवलिङ्ग, चन्द्र, सूर्य वा गणेशको मूर्ति कुँदिएको हुन्छ र किनारामा फूलबुट्टा वा आगोको ज्वालावली बनाइएको हुन्छ। विषयको प्रकृति हेरी शिलापत्र साना र ठूला दुवै किसिमका हुन्छन्। धेरैजसो शिलापत्र ३० से.मी. देखि ५० से.मी.सम्म लम्बा हुन्छन्। कान्तिपुरको नक्साल नारायणचौरको लिच्छविकालको तिथिविहीन शिलापत्र र पशुपतिको जयदेवको संवत १५८को (७३३ ई.को) शिलापत्र त्यसकालको सबभन्दा ठूला अभिलेख हुन्। १.२ मीटर लम्वा र ३६ से.मी. चौडा नारायणचौरका शिलापत्रका ७३ पंक्तिहरूमध्ये धेरै

पढ्नसकिने अवस्थामा छैनन् । ३५ पंक्तिहरूको पशुपतिप्रशस्तिको लेख्यभाग मात्र १.७ मीटर लम्बा र ७० से.मी. चौडा छ। यसको शिरोभागमा फक्रिएको कमलको फूल कुँदिएको छ।

मल्लकालका केही शिलापत्रहरूको मध्यभाग बढी फुकेको र माथिल्लो र तल्लो भाग साँघुरिएको बनेको छ। कान्तिपुरको टेबहालको नरेन्द्रमल्लको ने.सं. ६६५ (१५४५ ई.) को २६ पंक्तिको शिलापत्रको चौडाई माथि २५.५ से.मी. बीचमा ३० से.मी. र तल २२ से.मी. छ। ठूला शिलापत्रहरूमा प्रतापमल्लका संवत् ७७०/१६५० ई.को स्वयंभू अभिलेख र संवत् ७७६/१६५६ ई.को पशुपति अभिलेखको उल्लेख गर्न सकिन्छ। लम्बाईमा यी क्रमशः १.२८ मी. र १.२९ मी. छन्। स्वयंभू शिलापत्रको चोडाई माथिल्लो, बीचको र तल्लो भागमा क्रमशः ४० से.मी, ७५ से.मी. र ६३.५ से.मी. छ। पशुपतिअभिलेखको चौडाई भने माथि र तल क्रमशः ७० से.मी. र ६६ से.मी. छ। (फलक १५, १६, १८, १९, २९-३१)।

## (२) शिलास्तंभ (खामो)

जरूरतबमोजिम अग्लो र बलियो जातको ढुंगालाई काटेर ताछेर घोटेर पालिश लगाइएको खामो वा स्तंभमा लेख कुँद्ने चलन निकै पुरानो हो। ईसापूर्व तेस्रो शताब्दीका सम्राट् अशोकले बिहार, उत्तरप्रदेश, उत्तरांचलप्रदेश, मध्यप्रदेश र लुम्बिनी अञ्चलमा अभिलेख कुँदी कलापूर्ण विशाल स्तंभ गाड्न लगाए।[३] अशोकका सबै स्तंभहरू उ.प्र.को चुनार ढुंगा खानीको कैलो बलौटे ढुंगाका बेलनाआकारका डोलो छन् र माथितिर थोरैमात्र साघुँरिदैगएका छन्। अशोकस्तंभको शीर्षभागमा माथितिर कमलको कोपिला, गोलो आसन वा पेटी र त्यसमाथि साँढे, सिंह वा हात्तिका मूर्ति बनेका छन्। उच्च कलाकारिताको साथसाथ अशोकस्तंभको अर्को विशेषता यसको सतहमा चिल्लो र टल्कने गरी घोटिएको पालिश हो।[४] उत्तरप्रदेशको वाराणसी जिल्लाको सारनाथमा उत्खननमा पाइएको शीर्षभागसहितको अशोकस्तंभको माथिल्लो भाग मौलिक रूपमा छ र आफ्नो चमक र उच्च कलाको लागि प्रसिद्ध छ। यसको शीर्षभागमा उल्टो कमलको कोपिला, त्यसमाथि गोल आधारपेटी र अन्तमा चारै दिशातर्फ फर्केको सिंहको मूर्ति बनेको छ, जो आफ्ना अगाडिका दुवै पौंजा टेकेर शिर उठाउँदै गर्जिरहेको छ। सिंहको पछाडिको भाग बनाइएको छैन, बरु प्रत्येक दिशाबाट गर्जिरहेको सिंहको स्वतन्त्र मुखभाग देखिन्छ। यसको आसनपेटीमा सिंह, साँढे र बुर्कुच्चा ठोकिरहेको घोडाका गहीरो गरी कुँदिएका मूर्तिहरू र धर्मचक्र बनाइएका छन्। यसलाई भारतको राष्ट्रिय चिह्न बनाइएको छ।

मध्यउत्तर भारतका धार्मिक र व्यापारिक दृष्टिले महत्त्वका ठाउँहरूमा अशोकस्तंभ पाइन्छन्। लुम्बिनी र निग्लिहवा धार्मिक महत्त्वमा ठाउँ थिए जहाँ क्रमशः शाक्यमुनि बुद्धको जन्म भयो र कनकमुनि बुद्धको स्तूप बनाइयो भन्ने कुरा अशोक स्तंभका अभिलेखहरूबाट जानिन्छ। नजिकैको गोटीहवा भन्ने ठाउँमा एक अर्को स्तंभको तल्लो भाग पाइएको छ, जो ढुङ्गाको जात र पालिशको

विशेषताको कारण अशोककै निर्माण प्रतीत हुन्छ । अभिलेख हुनसक्ने माथिल्लो भाग भने भाँचिएर हराइसकेको छ । भारतमा कतिपय ठाउँहरूमा अशोकस्तंभ आफ्नो मूल ठाउँबाट उखेली अन्यत्र गाडिएको पाइन्छ । हाल दिल्लीमा रहेका अशोकका दुई स्तंभहरू र इलाहाबादको समुद्रगुप्तको प्रशस्ति भएको स्तंभ क्रमशः टोपरा, मेरठ र कौशाम्बीबाट ल्याई गाडिएका हुन् ।[५]

लुम्बिनी स्तंभ जमीनको सतहभन्दा ५.३१ मीटर अग्लो छ । माथिल्लो भागको घेरा २ मीटर व्यासको छ र सतहको तल्लो घेरा २.२६ मीटर व्यासको छ । यस स्तंभको भार ३७ टन रहेको अनुमान गरिएको छ । धेरैसम्म घामपानी परेको कारण ठाउँठाउँमा खस्रो देखिएता पनि स्तंभमा कतै कतै पालिशको चहक अझै देखिन्छ । अभिलेखभाग निकै सफा छ । त्यस अनुसार "राज्याभिषेकको बीसौं वर्षमा देवताहरूका प्यारा प्रियदर्शी राजा (अशोक) ले यहाँ आएर शाक्यमुनि बुद्धको जन्मस्थलको पूजा गरे, ढुंगाको पर्खाल लगाए, लामो कालसम्म रहिरहोस् भनी शिलास्तंभ ठड्याए र त्यहाँका किसानहरूलाई मालपोतमा सुविधा दिए ।" लुम्बिनीस्तंभमा ठाडो चीरा परेको छ जो तलतिर बढ्दै गएको छ । माथिल्लो भागमा फलामको पेटीले बाँधिएको छ । जग हेर्ने उद्देश्ले धेरैपल्ट खनिएको कारण यो स्तंभ पश्चिमतिर केही ढल्केको छ ।[६] लुम्बिनीस्तम्भको शीर्षभाग भाँच्चिएर हराइसकेको छ । सातौं शताब्दी ई.मा यात्रा गर्ने चीनियाँ यात्री युवान च्वांगले लुम्बिनीस्तंभमाथि घोडाको मूर्ति देखेका थिए । नजिकै भएको उत्खननमा पाइएको ढुंगाको टुक्रालाई शीर्षभागको फुटेको टुक्रा मानी हाल स्तंभकै छेउमा राखिएको छ । निग्लिहवाको स्तंभको अभिलेखसहितको भाग गाडिएको स्तंभबाट भिन्न भएर लडेको छ । गाडिएको स्तंभभागमा हँसिया उदाएको र टुप्पामा जथाभावी खोपिएका चिह्न छन् । लुम्बिनी स्तम्भमा झैं निग्लिहवाको स्तंभको शीर्षभाग फुटेर हराइसकेको छ । हाल टिनको छानुले यसको संरक्षण भएको छ । चार पंक्तिको निग्लिहवास्तंभअभिलेख बमोजिम "आफ्नो राज्याभिषेकको चौधौं वर्षमा अशोकले यहाँ आएर कनकमुनि बुद्धको स्तूपलाई दोस्रो पल्ट बढी ठूलो हुनेगरी बनाए र राज्याभिषेकको बीसौं वर्षमा पुनः आएर यहाँ पूजा गरेर सिलाथव (शिलास्तंभ) खडा गरे ।" यसरी अशोकले यस क्षेत्रमा दुई पल्ट यात्रा गरी दुवै स्तंभ ठड्याएको बुझिन्छ । नेपालका दुवै अशोक स्तंभ राम्रा हालतमा छैनन् । (फलक ४-५) ।

काठमाडौं उपत्यकामा चारपाटे स्तंभको चलन पाइन्छ जसको माथिल्लो भाग प्रायः क्रमशः आठपाटे र बेलनाकार बनाइएको हुन्छ । लिच्छवि राजा मानदेवको चांगुनारायणअभिलेख तीन मीटर अग्लो राम्ररी पालिश गरिएको स्तंभका तीन पाटामा कुँदिएको छ । हाल यो स्तंभ मन्दिरको प्रवेशद्वारभन्दा केही पर कछुवाको आसनमाथि छ र तलका केही पङ्तिहरू छोपिएका छन् । प्रवेशद्वारको अगाडि आंगनमा गाडिएको र भांचिएको चारकुने ढुंगालाई स्तम्भको तल्लो मूलभाग मानिएको छ । यसमा चार पंक्तिमा कुँदिएका केही शब्दहरू पढ्न सकिन्छन् । कुनै कारणले मूल स्तंभ भाँचिएपछि त्यसको बीचको भाग कुनामा ठड्याइएको मानिन्छ । प्रवेशद्वारअगाडि घुँडा टेकी नमस्कार गरिरहेको गरुडको

विशाल र भव्य मूर्ति अव्यवस्थित रूपमा रहेको छ। कसैको विचारमा यही गरुडमूर्ति स्तंभको शीर्षभागमा थियो। स्तंभको शीर्षभागमा गरुडमूर्ति राख्ने चलन पछिसम्म पनि कायम रहेको पाइन्छ जसलाई गरुडध्वज भन्ने चलन छ। चांगुनारायणस्तंभका तीन पाटामा २६, २४ र १८ गरी जम्मा ६८ पंक्तिहरू र मूल टुक्राको एक पाटामा ४ पंक्तिहरू कुँदिएका छन्। यसमा १९ पद्यहरूमा मानदेवको कवितात्मक प्रशस्ति बयान गरिएको छ। (फलक १०)।

हाँडीगाउँ काठमाडौंको सत्यनारायणमन्दिरको गरुडस्तम्भ व्यक्तिगत अभिलेखको राम्रो उदाहरण हो। यसमा अनुपरम भन्ने व्यक्तिले गरेको व्यासको स्तुति छ। यसमा एकै पाटामा ७३ पंक्तिको अभिलेख कुँदिएको भाग १.६२ मीटर लम्बा र २७ से. मी. चौडा छ। यसको शीर्षभागमा कमलमाथि दाहिने घुँडा टेकी नमस्कार मुद्रामा बसेका पखेटावाल गरुडको ७६ से.मी.अग्लो र ४६ से.मी. चौडा सुन्दर मानवमूर्ति बनाइएको छ। पाटनमा कृष्णमन्दिरअगाडि १६३७ ई.मा सिद्धिनरसिंहले स्थापना गरेको गरुडस्तंभ र पाटनको जगत्नारायणमन्दिरको गरुड स्तम्भअभिलेख पछिल्लो कालका राम्रा उदाहरण हुन्।

## (३) ढुंगाका अन्य लेखनसामग्रीहरू

अभिलेख पाइने ढुंगाका अन्य सामग्रीहरूमा मूर्ति, शिवलिङ्ग र ढुंगेधारा हुन्। मूर्तिको तल्लो भाग वा पादपीठ, शिवलिङ्गको जलहरी, ढुंगेधाराको चारपाटे डुँडको दायाँ वा बायाँ पाटा अभिलेखका लोकप्रिय ठाउँ हुन्। मूर्तिलेखको सबभन्दा पुरानो उदाहरण मालीगाउँमा प्राप्त पुरुषमूर्तिको अभिलेख हो। यसको पादपीठमा एक पंक्तिका महाराज जयवर्माको उल्लेख भएको छ र कुनै अनिर्णित संवत्को १०७ वर्ष लेखिएको छ। यो मानदेवभन्दा पहिलेको देखिनआउँछ।[७] (फलक ८)। पशुपति नजिकैको तिलगंगा र लाजिम्पाटमा प्राप्त (हाल म्युजियममा रहेको) एकैखाले विष्णुविक्रान्तमूर्त्तिका पादपीठमा एकै भाखाका ६१ से.मी.लम्बा र ६ से.मी. चौडा अभिलेख कुँदिएका छन्। यस अनुसार मानदेवले संवत् ३८७/४६७ ई.मा आमाको पुण्य बढोस् भनी सुन्दर मन्दिर बनाई यी मूर्ति स्थापित गरे। पछिल्लो कालका मूर्तिलेखहरूमा देउपाटनको स्वामिवार्त्तको मूर्तिलेख (फलक १३), चार पंक्तिको चांगुनारायणको मूर्तिलेख (फलक २४) र संवत् १८५/ १०६५ ई.को थापाहिटी ललितपुरको सूर्यमूर्तिको १३X६ से.मी.को अभिलेख निकै चर्चित छन्।

शिवलिङ्गको जलहरीमा ५ पंक्तिभन्दा बढी लेखिएको विरलै पाइन्छ। बुढानीलकण्ठको शिवलिङ्गको जलहरीमा कुँदिएको ४७४ ई.को मानदेवको अभिलेख चार पंक्तिको छ। मानदेवकी रानी क्षेमसुन्दरीको शिवलिङ्गअभिलेख पाँच पंक्तिको छ (फलक ११)। विजयवतीको संवत् ४२७ (५०५ ई.) को सात पंक्तिहरूको पशुपति शिवलिङ्गअभिलेखमा छ श्लोकमा मानदेवको प्रशंसा गरिएको छ। सं. ४५ (६२१ ई.) को विभुवर्माको टुँडिखेल ढुंगेधाराको अभिलेख दुई पंक्तिको छ। मूर्ति र शिवलिङ्गका साथसाथ ढुंगाका ससाना चैत्य (चिँ बहा), आसन (चौकी), पानस जस्ता वस्तुहरूमा पनि केही शब्द कुँदिएका पाइन्छन्।

## २. धातु

महंगो हुनुको साथसाथ गालेर अन्य वस्तु वनाउन सकिने भएकोले होला नेपालमा धातुलेख त्याति धेरै पाइँदैनन् ।[८] चार सय वर्षको लिच्छविकालमा प्राप्त एकमात्र धातुलेख अंशुवर्माको चांगुनारायण मन्दिरभित्रको सं. ३२ को सुवर्णपत्र लेख हो ।

### (१) ताम्रपत्र

लाम्चो चारकुने आकारमा काटिएको तामाको पातलो पाता ताम्रपत्र भनिन्छ । भारतमा केही बौद्धग्रन्थ ताम्रपत्रमा लेखिन्थे भन्ने सन्दर्भ पाइन्छ । म्यानमार र श्रीलङ्कामा लेखिएका ताम्रपत्रका केही पृष्ठहरू बृटिश संग्रहालयमा छन् । भारतमा एउटै लामो लेख अनेक ताम्रपत्रहरूमा कुँदिएको र कुनामा प्वाल पारी धातुको औंठीमा उनिएका ११ पत्रसम्मका नमूना पाइएका छन् । भारतमा कतै दोब्ब्याएर राख्न सकिने किसिमका निकै पातला ताम्रपत्र पनि पाइएका छन् ।[९] ताम्रपत्र नेपालमा सबभन्दा बढी चलेको धातुको लेखनसामग्री हो । लिच्छविकालका अभिलेखहरूमा राजकीय ताम्रपत्र अभिलेखका लागि 'ताम्रशासन' शब्द पाइन्छ,[१०] तर लिच्छविकालीन ताम्रपत्र पाइएको छैन । लिच्छविकालपछिका ताम्रपत्रहरू लेखिने विषय हेरी साना, मझौला र ठूला पाइन्छन् । ताम्रपत्रमा भूमिदान, राजाज्ञा र दुई वा तीन राजाहरूका बीच सन्धिपत्र जस्ता विषय कुँदिएका हुन्छन् । राजकीय ताम्रपत्रमा प्राय: सुनको मोलम्मा र छाप लगाइएका हुन्छन् । ताम्रपत्रमा कुँदेर वा सतहमाथि उठ्ने गरी ढालेर छाप बनाइएको पाइन्छ । ललितपुर दरबारको मूलचोकमा सुनको मोलम्मा लगाइएको पद्यात्मक संस्कृत र गद्यात्मक नेपालभाषा समेत भएको एउटा ताम्रपत्रमा १४ पंक्ति छन् । यसको लेख्य भाग २१ × २७ से.मी. छ । भक्तपुर तलेजुचौकको भूपतीन्द्रमल्ल र योगनरेन्द्रमल्लको संवत् ८२२/१७०२ को दश पंक्तिको ताम्रपत्रमा सन्धिपत्रको विषय छ । ७ × १८ से.मी. लेख्यभाग भएको यस ताम्रपत्रमा भक्तपुरले ललितपुरलाई आफूतिर मिलाई कान्तिपुरको विरूद्ध मोर्चा बाँधेको कुरा छ ।

### (२) सुवर्णपत्र

नेपालको एकमात्र प्राचीन धातुपत्र लेख ६०७ को अंशुवर्माको चांगुनारायणको सुवर्णपत्रलेख हो । नारायणको सुनको कवचमुनि २.४ × १२ से.मी.मा ३ पंक्तिमा लेखिएको यस अभिलेखमा अंशुवर्माले नारायणको पुरानो कवच र गरूडको मूर्तिको जीर्णोद्धार गरेको कुरा छ ।[११] काठमाडौं उपत्यकाका केही मल्लकालीन ताम्रपत्रहरू सुनको मोलम्मा लगाइएको कारण सुवर्णपत्र भनिन्छन् । दरबारको भित्तामा टाँसिएका यस्ता 'सुवर्णपत्र' राजकीय अभिलेख वा अनेक राजाका बीचको सन्धिपत्र हुनसक्छन् । कर्णाली प्रदेशका केही राजकीय अभिलेख सुवर्णपत्र (कनकपत्र) मा पाइन्छन् ।

सुनको मोलम्मा लगाइएका आँखिभ्याल र तोरणमा लेखिएको अनुपम उदाहरण भक्तपुर दरबारभित्र पाइन्छ। तलेजु चोकको दक्षिण देवस्थानभित्र जाने ढोकाको दायाँबायाँ बनेका दुइवटा साना सुवर्णमय आँखिभ्यालका लिण्टलहरूमा एकएक पंक्तिको अभिलेख कुँदिएको छ। यसमा अनुष्टुभ् छन्दका दुई श्लोक छन्, जस अनुसार संवत् ७५७/१६३७मा राजा नरेशमल्लले गवाक्षको यो राम्रो जोडा देवीलाई अर्पण गरे। यसको नजिकको ढोकाको तोरणमा राजा जितामित्रमल्लको ६ पंक्तिको अभिलेख पाइन्छ। त्यहाँ त्यसको निर्माणवर्ष चार संवत्हरूमा दिइएको छ, जो १६८५ ई. हुनआउँछ। नेपाली शैलीका केही मन्दिरहरूमा धातुका पाता मोरिएका तोरण, ढोका र भ्यालका माथिल्लो तेर्सो भाग वा लिण्टलको साथसाथ छानाको किनाराको चौडा भाग (ईभबोर्ड) आदिमा पनि देवीदेवता वा दाताका नाम, संवत् र मिति भएकाससाना लेख उभाडदार वा कुँदिएका रूपमा पाइन्छन्।

### (३) अन्य धातुलेख

ढलौटे मूर्तिको पादपीठमा देवस्तुति वा दाताको नाम र मिति भएका लेख सतहमाथि उठ्ने गरी अर्थात् उभाडदार हुने गरी ढालिएका हुन्छन्। पन्धौं शताब्दी ई.देखि उन्नाइसौं शताब्दी ई.सम्मका साना ठूला ढलौटे घण्टाहरूको तल्लो बाहिरी धेरामा एकदेखि छ पंक्तिसम्मका लेख पाइन्छन्। यिनमा घण्टा राख्ने व्यक्तिका नाम र विशेषण, देवदेवीका नाम, दानको उद्देश्य र मिति जस्ता कुरा हुन्छन्। नासमुना टोल भक्तपुरको नृत्यनाथको मन्दिरको आँगनको घण्टाको बाहिरी घेरामा ५८ से.मी. लामो एक पंक्तिको अभिलेख छ। यसमा संवत् ८२७ /१७०७ ई. अंकित छ। साँचामा ढालेर बनाइएका तामा र चाँदीका र सुनका सिक्काहरूका ससाना लेखहरू पनि उभाडदार हुन्छन्।[१२]

## ३. काठ

वर्ण चिनाउने काममा यहाँ काठको पाटीको चलन निकै पुरानो हुनुपर्छ। हिमालय क्षेत्रका गुम्बाहरूमा काठका पाटीमा तिब्बतीलिपिमा लेखिएका पुस्तकहरू पाइन्छन्। सुन र चाँदीका मोलम्मा लगाइएको काठको पाटीमा लेख्ने चलन बर्मामा चलेको पाइन्छ, जसका केही नमूना बृटीश संग्रहालयमा छन्।[१३] काठका मूर्तिका पादपीठमा र नेपाली शैलीका केही मन्दिरका ढोका, लिण्टल र तोरणमा ससाना लेख कुँदिएका पाइन्छन्। यिनमा संक्षिप्त स्तुति, परिचयात्मक नाम र मिति जस्ता कुरा हुनसक्छन्। भक्तपुर राजदरबारका दुइवटा ढोकाका ठेलाहरूमा राजा जितामित्रका काष्ठ अभिलेखहरू कुँदिएका छन्। कुमारीचोकको खोल्न नहुने गरी शोभाकै लागि बनाइएको ढोकाको माथिल्लो ठेलामा कुँदिएको अभिलेख निकै खिइसकेको छ। तथापि यसमा चारथरि संवत्हरूमा वर्ष संवत् ८०१/१६८१ र 'सुमति जितामित्रमल्ल' को नामको उल्लेख गरिएको छ। तलेजुचोकको ढोकाको माथिल्लो ठेलामा १.३ मीटर लम्बाईमा दुई पंक्तिको संवत् ८१५/१६९५ को अभिलेख पढ्न सकिने अवस्थामा छैन।

## ४. माटो /ईंट

प्राचीन मेसोपोटामिया (वर्तमान ईराक) मा मुछेको माटाको भिंगटी जस्तो पाटी बनाई तीखो कलमले अक्षर कोरेर घाममा सुकाई आगोमा पोलिन्थ्यो । भारत र नेपालमा यस्तो चलन चलेन । केही वर्णहरू कुँदिएका ईंट भने काठमाडौंका हाँडीगाउँ र बत्तीसपुतलीमा पाइएका छन् । हाँडीगाउँबाट पाइएका ईंटमा अंशुवर्मा र बत्तीसपुतलीको ईंटमा अमरदेवका नाउँ कुँदिका छन् । काठमाडौं उपत्यकाका विभिन्न ठाउँहरूबाट ससाना उद्देशिक चैत्यहरू, माटाका ससाना छापहरू र माटाका भाँडाका टुक्राहरूमा पनि केही वर्णहरू कुँदिएका पाइन्छन् । पक्की माटाका मध्यकालीन केही मूर्तिहरूमा पनि साना लेख पाइन्छन् । यहाँ हिलो वा कच्ची माटोले छाप लगाउने चलन पनि चलेको पाइन्छ ।

## उपकरण र कुँदाई

ढुंगा र धातुजस्ता कडा वस्तुको सतहलाई बराबर ताछेर अनि घोटेर चिप्लो बनाएपछि रंग लगाएको डोरी, खरी वा मसीले शलाका (रूलर) को मदतले सोझो रेखा तानिन्थ्यो । त्यसमाथि लिपिक वा लिपिकारले खरी वा मसीले अभिलेखको पाठ लेख्थे । त्यसछिको काम कालीगढको हुन्थ्यो, जो मसिनो छिनु र हतौडीको उपयोग गरी लेखिएका वर्णहरूलाई बराबर गहराईमा खोपी साबधानीसँग कुँद्थे । भूलले गलत वर्ण लेखिएमा वा त्यस अनुसार कुँदिएमा वा पाप्रो उप्केमा राँगा जस्तो नरम धातु पगालेर त्यसमा भरिन्थ्यो र पुनः शुद्ध वर्ण कुँदिन्थ्यो ।[१४] नेपाली अभिलेखका एकनासका वर्णहरूको बनावटमा लिपिक र कालीगढ दुवैको भूमिका महत्त्वको देखिन्छ ।

## अन्य लेखनसामग्रीहरू

आरम्भमा मानिसले पात, छाला, बालुवा जस्ता वस्तुमा लेखनको प्रयोग र अभ्यास गरेको हुनसक्छ । ईसवीका आरम्भिक शताब्दीसम्म मानिसले लेख्नैको लागि भनी पेपिरस, ताडपत्र, भोजपत्र जस्ता वस्तुहरू तयार गरिसकेको थियो । यी मध्ये पेपिरस पश्चिम एशिया र यूरोपमा बढी लोकप्रिय रह्यो । यो प्राचीन मिश्रको देन थियो । त्यहाँको नाइल नदीको छिपछिपे किनारामा उम्रने नरकट जस्तो वनस्पतिको १.८ मीटर अग्लो डाँठको बोक्राका पातला टुक्राहरूलाई गुँदले टाँसी बनाइएको लेखनसामग्री पेपिरस हो । यो नाम यूरोपेलीहरूले राखेका हुन् । यसै शब्दबाट अंग्रेजी भाषाको 'पेपर' शब्द बनेको हो ।

यस्ता नरम वस्तु र ढुंगा, धातुजस्ता कडा वस्तुमा लेख्ने प्रविधि र उपकरणमा अन्तर आउनु स्वाभाविक थियो । अब लेख्न रंग वा मसी र कलम वा बुरुसको उपयोग भयो । पूर्वी एशियामा बुरुसको र दक्षिण एशियामा कलमको चलन चल्यो । ताडपत्र, भोजपत्र, पेपिरस, छाला, रेशम र कागत जस्ता नरम सामग्रीहरूको सतहमा हातले लेखिएको लेखलाई पाण्डुलिपि भनिन्छ । संस्कृतमा

पाण्डुको अर्थ पहेंलो (फुस्रो) भन्ने हुन्छ। रंग खुइलिसकेको कारण पुराना पाण्डुलिपि त्यसै पनि फुस्रो हुन्छ। नेपाली कागतको धेरै चलेको प्रकार पहेंलो फुस्रो रंगको हुन्छ : यसकारण पाण्डुलिपि शब्द सुहाउँदो छ। अंग्रेजीमा यसको लागि म्यानुस्कृप्ट शब्दको प्रयोग हुन्छ, जसको अर्थ हातको लेखोट वा हस्तलिखित भन्ने हुन्छ। नेपालमा नवौं शताब्दीदेखि पाण्डुलिपि धेरै पाइन-थाल्छन्।

## (क) ताडपत्र

नरिवलको रूख जस्तो अग्लो हुने ताड (पामीरा) को ठूला र चौडा पातबाट बनाइने लेखनसामग्री ताडपत्र वा तालपत्र भनिन्छ। पातका बीचबीचमा हुने मोटा ठाडा नसाहरूको बीचको ४ देखि ६ से.मी. सम्मको साँघुरो भागलाई आवश्यक लम्बाईमा काटेर पानीमा उमाली सुकाएपछि शंख वा चिप्लो ढुंगाले घोटेर ताडपत्र तयार गरेको देखिन्छ। मूल रूपमा दक्षिण भारतको समुद्रको किनारामा हुने तालीपात (ताडीपट) भनिने जातको रुखको पात सबभन्दा राम्रो लेखनसामग्री मानिन्छ।[१५] नेपालका पुराना पाण्डुलिपि ग्रन्थ यसैका पाइन्छन्। तालीपातको पातका नसाहरूको बीचको भागको चौडाई पनि साधारण पामीरा जातको पातको भन्दा बढी अर्थात् ६.५ से.मी. देखि ९ से.मी. सम्म हुन्छ र लम्बाई झण्डै एक मीटर हुन्छ। पछि तालीपातको सट्टा अरू ठाँउमा पनि सजिलै पाइने पामीरा जातको ताडको पात उपयोगमा आएको पाइछ। (फलक २१, २२, २६, २७)। नेपाल तराई समेतमा पाइने पामीराको रूखबाट नीरा र ताडी जस्ता पेय; सख्खर र मिश्री (तालमिश्री) जस्ता खाद्यपदार्थ बनाइन्छन्; यसको पात घर छाउने र पंखा बनाउने काममा आउँछ र पातको मोटो नसाबाट च्वापी (कुचो) बनाइन्छ। तर तालीपातबाट अरू उत्पादन पाइँदैन। तालीपातको तुलनामा पामीराको पात कमसल र साघुँरो हुन्छ।

## (ख) कागत

वनस्पतिको कमलो मसिनो रेशाबाट बनाइएको दोब्र्याउन मिल्ने पातलो लेखनसामग्री कागत हो। कागतको आविष्कार १०५ ई.मा चीनमा भएको थियो जो कालान्तरमा अरब हुँदै सारा विश्वमा फैलियो। ईसापूर्व चौथो शताब्दीका यूनानी लेखक नियार्कसले भारतमा कपासको लेखनसामग्रीको उल्लेख गरेका छन्।[१६] पाँचौं शताब्दी ईसवीताका उत्तर भारतमा चलेको लिपिमा लेखिएको कागतका केही पृष्ठहरू मध्य एशियामा पाइएका छन्।[१७] तर त्यो कागत कहाँ बनाइएको थियो थाहा छैन। पश्चिम भारतमा कागतको पाण्डुलिपिको प्रामाणिक नमूना ईसवीको तेह्रौं र चोधौं शताब्दीको पाइएको छ।[१८]

नेपालमा कागतको इतिहास शायद बेग्लै किसिमको छ। यहाँ कागत बनाउने चलन निकै पुरानो हुनुपर्छ। नेपाली कागत स्थानीय रूपमा पाइने वनस्पतिको लोक्ताबाट तयार गरिन्छ। सामान्य उपयोगमा आउने नेपाली कागत निकै पातलो हुन्छ। माँडले टाँसेर मोटो र दरो बनाएपछि त्यसमाथि हरिताल वा

नीलोतुथो दलेर हम्मेसी कीरा नलाग्ने तुल्याइएको पाको कागत ग्रन्थलेखनमा उपयोग भएको पाइन्छ। (फलक ३३)। पहेंलो रङ्गको हरिताल वा नीलो रंगको नीलोतुथो जस्ता पदार्थको उपयोग भएको कारण पाको कागत पहेंलो र नीलो गरी दुई थरिका हुन्छन्। यसरी तयार गरिएको कागतलाई चिप्लो र कमलो वनाउन शंख वा ढुंगाले घोटिएको हुन्छ। नीलोकालो रङ्गको कागत नीलपत्र वा स्याहपत्र पनि भनिन्छ।

दक्षिण एशियामा ताडपत्र झैं भुर्जपत्र (भोजपत्र) पनि ग्रन्थलेखनका लोकप्रिय सामग्री थियो। हिमालय क्षेत्रमा हुने भुर्जवृक्षको भित्री बोक्राबाट खास उपचार गरी बनाइएको लेखनसामग्री भोजपत्र हो। यसलाई सुकाई तेल दली घोटेर चिप्लो बनाइन्थ्यो। प्राचीन संस्कृतसाहित्यमा भोजपत्रको उल्लेख पाइन्छ।[१९] भोजपत्र प्रायः ताडपत्रकै आकारमा काटिन्थ्यो। यस सामग्रीमा लेखिएको सर्वप्राचीन नमूना खरोष्ठी लिपिमा लेखिएको धम्मपद मानिन्छ। खोटानमा पाइएको यस ग्रन्थलाई कसैले ईसाको दोस्रो वा तेस्रो शताब्दीको मानेका छन्।[२०] काश्मीरमा लेखिएका भोजपत्रग्रन्थका केही नमूना यूरोपका केही निजी संग्रहालयमा सुरक्षित छन्।[२१] भोजपत्रको चलन उत्तरपश्चिम भारतबाट अन्यत्र चलेको अनुमान गरिएको छ। तर ताडपत्रको तुलनामा भारत र नेपालमा पनि भोजपत्रको चलन कमै चलेको पाइन्छ। नजिकैको हिमालयमा हुने भोजपत्रको चलन नेपालमा किन चलेन र दक्षिणमा हुने ताडपत्र किन लोकप्रिय भयो यसको कारण थाहा छैन। तर यसबाट ताडपत्रको आपूर्त्ति गर्नेहरूसँग नेपालीहरूको कुनै किसिमको आर्थिकसामाजिक सम्बन्ध रहेको कुरा भने स्पष्ट हुन्छ। अठारौं शताब्दी ई.को एउटा तान्त्रिक यन्त्र भोजपत्रमा लेखिएको पाइएको छ।

## टिप्पणी

१. हेर्नुस् तल अध्याय २२ **ग्रन्थलेखनकला**।

२. हेर्नुस् राजा शिवदेव प्रथमका संवत् ५१२ र ५२० तदनुसार ५९० र ५९८ ई.का अभिलेखहरू : धनवज्र वज्राचार्य सम्पादित, **लिच्छविकालका अभिलेख** (त्रि.वि.: काठमाडौं, २०३०) पृष्ठ २१५, २७४।

३. अशोकका एघारवटा स्तम्भलेखहरूलाई ठुला र साना गरी दुई भागमा विभाजित गरिएको छ। ठुला स्तम्भलेखहरूमा टोपरा र मेरठबाट लगी गाडिएका दिल्लीका दुईवटा, बिहारको चंपारणका तीनवटा र कौशाम्बीबाट लगी इलाहाबादमा गाडिएको गरी छवटा पर्दछन्। साना स्तम्भलेखहरूमा लुम्बिनी अञ्चलका दुइवटा, मध्यप्रदेशको सांचीको एक, र उत्तरप्रदेशको वाराणसीको सारनाथको स्तम्भलेख पर्दछन्।

४. K.A.Nilakanta Sastri, G. Srinivasachari, **Advanced History of India** (Allied Publishers, 1982).134-135.

५. *ibid.* 368. दिल्लीबाट टोपरा २०० कि.मी. जति टाढा छ र मेरठ धेरै टाढा छैन। टोपराबाट १३ मीटर अग्लो अशोकस्तंभ दिल्ली लग्न चौधौं शताब्दी ई.का

सुल्तान फिरोज शाहले ४० पाँग्राको खास किसिमको गाडा तयार गरी त्यसलाई २०० मजदूरहरूलाई तान्न लगाई यमुनानदीमा खास किसिमका डुंगाहरूको वेडा तयार गरी आफ्नो कोटमा गाड्न लगाएको कुराको विस्तृत विवरण पाइन्छ ।

६. भिक्षु सुदर्शन महास्थविर, **लुम्बिनीको काखमा** (ललितपुर : हिमाली बौद्ध प्रशिक्षण संस्थान, २०५५) पृष्ठ ५ र अगाडि ।

७. हेर्नुस् तल अध्याय १२ ।

८. नेपालमा विभिन्न समयका ताम्रपत्र गालेर मूर्ति वा घण्टा बनाइएका उदाहरणहरू पाइन्छन् । श्री ३ जङ्गबहादुर राणाद्वारा पशुपति मृगस्थलीको मन्दिरमा स्थापित विश्वरूपमूर्ति र जगत्नारायण मन्दिरको प्राङ्गणको शिलास्तम्भमाथिको गरुडको धातुमूर्ति बनाउन ताम्रपत्रहरू गालेको उल्लेख पाइन्छ ।

९. जर्ज बूलर, **भारतीय पुरालिपि शास्त्र** (दिल्ली, १९६६) पृष्ठ १९६-१९७ । गौरीशंकर हीराचन्द ओझा, **भारतीय प्राचीन लिपिमाला** (दिल्ली : मुन्शीराम मनोहरलाल, १९५९) पृष्ठ १५२-१५४ ।

१०. शासकीय ताम्रपत्र र दानपत्रको लागि भारतमा पनि ताम्रशासन वा शासनपत्र जस्ता शब्दहरूको व्यवहार हुन्थ्यो । हेर्नुस् गौ.ही. ओझा, **उही** पृष्ठ १५२ ।

११. D.R. Regmi, **Inscriptions of Ancient Nepal** (New Delhi : Abhinav Publications, 1983) Plate LXXIII.

१२. लिच्छविकालका सिक्का तामाका छन् र तिनका लेख ज्यादै साना छन् । मल्लकालका अधिकतर सिक्का चाँदीका छन् जसका लेख केही लामा छन् ।

१३. जर्ज बूलर, टिप्पणी ९, पृष्ट ९२ ।

१४. उही ।

१५. J.P. Losty, **The Art of Book In India** (London, 1982), P. 11 गौ.ही.ओझा, **टिप्पणी** ९, पृष्ठ २ (पादटिप्पणी ३), १४३ ।

१६. गौ.ही.ओझा, **टिप्पणी** ९, पृष्ठ १४४ र रा.ब.पाण्डेय, भारतीय पुरा लिपि ( इलाहावाद, १९७८) पृष्ठ ६४ मा उद्धृत ।

१७. गौ.ही.ओझा, पृष्ठ २ को पादटिप्पणी ४ र पृष्ठ १४५ ।

१८. गौ.ही.ओझा, पृष्ठ १४५, जर्ज बूलर, टिप्पणी ९, पृष्ठ १९९ ।

१९. जर्ज बूलर **पूर्वोक्त उही** पृष्ठ १९० ।

२०. गौ.ही.ओझा, **टिप्पणी** ९, पृष्ठ १४४ । जर्ज बूलर **उही**, पृष्ठ १९१, जो धम्मपदको लेखनकालको बारेमा मौन छन् ।

२१. जर्ज बूलर **उही** ।



# अध्याय चार

# नेपालमा अभिलेखअध्ययन

यहाँ नेपाली अभिलेखहरूको खोज र अध्ययनको इतिहास, इतिहास र संस्कृतिको अध्ययनमा अभिलेखको महत्त्व, अभिलेखका कमी र त्रुटिहरू र तिनका विषयगत प्रकारहरूको चर्चा गरिँदैछ। चाँडै नष्ट हुने पाण्डुलिपिको तुलनामा कडा र चिरस्थायी वस्तुमा कुँदिएका कारण अभिलेख लेखनका पुराना नमूना हुनआएका छन्। तिनमा उपयोग भएका संवत्हरूबारे चर्चा त्यसपछिको अध्यायको विषय बनाइएको छ।

## १. अभिलेखहरूको खोज र अध्ययनको इतिहास

लुम्बिनी र निग्लिहवामा पाइएका ईसापूर्व तेस्रो शताब्दीका सम्राट् अशोकका स्तंभलेखहरू, काठमाडौं उपत्यका र नजिकै प्राप्त ईसवीका पाँचौं शताब्दीदेखि उण्डाइसौं शताब्दीसम्मका अभिलेखहरू नेपालका अभिलेखअध्ययनका मूल स्रोत हुन्। यिनले नेपालको इतिहास र संस्कृतिको अध्ययनमा ठूलो भूमिका खेलेका छन्। उण्डाइसौं शताब्दीको उत्तरार्धमा भारतमा अभिलेखअध्ययन अघि बढिरहेको वेलामा नेपालमा अभिलेखअध्ययनको सूत्रपात भएको हो। यस विषयको सुरूवात यहाँ भारतको अभिलेखअध्ययनका सन्दर्भको साथ गर्नु मुनासिब सम्झिएको छ।

लुम्बिनी र निग्लिहवामा अशोकस्तंभहरूको पत्तो लगाई अभिलेख पढ्ने काम फ्यूहरर र पूर्णचन्द्र (पी.सी.) मुखर्जीबाट १८९६ ई.मा सम्पन्न भयो।[1] यतिबेलासम्म ए.सी.बर्नेलको **दक्षिण भारतीय पुरालेखन** (१८७४),[2] कर्नल ए.कनिंघमको **अशोकका अभिलेखहरू** (१८७७),[3] जे.एफ.फ्लीटको **गुप्तहरू र तिनका समयका अभिलेखहरू** (१८८८),[4] गौरीशङ्कर हीराचन्द ओझाको **प्राचीन भारतीय लिपिमाला** (१८९४)[5] र जोहन जर्ज बूलरको **भारतीय पुरालेखन** (१८९६)[6] जस्ता अध्ययनहरू प्रकाशित भइसकेका थिए। त्यसै गरी **कर्पस इन्स्क्रिप्सनम् इण्डिकेरम्** र **एपिग्राफिया इण्डिका** जस्ता सामयिक प्रकाशन छापिँदै थिए।[7] अभिलेखअध्ययनका पछिल्ला कालका महत्त्वपूर्ण पुस्तकहरूमा एफ. डब्लु थोमसको **मध्य एशियाई पाण्डुलिपिमा ब्राह्मीलिपि** (१९५४),[8] दीनेशचन्द्र सरकारका **अभिलेखसंग्रह** (१९५४) र **अभिलेखअध्ययन** (१९६४) प्रसिद्ध छन्।[9]

पं. भगवान्लाल इन्द्रजी र जर्ज बूलरले १८८० ई. ताका नेपालमा अभिलेख खोज्ने, पढ्ने र छपाउने परिपाटी बसाले। यिनीहरूले ईसवीको पाँचौं शताब्दीदेखि आठौं शताब्दीसम्मको लिच्छविकालका १५ र पछिल्लो कालका ८ गरी २३ अभिलेखहरू छपाए।[10] १८८६मा सेसिल बेण्डालले नेपालका चार अरू प्राचीन अभिलेखहरू छपाए।[11] सिल्वाँ लेवीले १९०८मा लिच्छविकालका २१ अभिलेखहरू प्रकाशित गरे।[12] २००७ सालको राजनीतिक परिवर्तनपछि नेपालीहरू पनि यस क्षेत्रमा अगि बढे। तिनमा पं.बाबुराम आचार्य, पं.नयराज

पन्त, योगी नरहरिनाथ, जनकलाल ढकाल र अरू केही उल्लेखनीय छन् जसले १९५६सम्म १८ जति नयाँ अभिलेखहरूका पाठ छपाए।[१३] यसै ताका पं.नयराज पन्तको नेतृत्वमा इतिहासको अध्ययनअनुसन्धान गर्ने उद्देश्यले (इतिहास)-संशोधन मण्डलको स्थापना भयो। १९५६मा आर.नोलीले लिच्छविकालका ९२ अभिलेखहरूको महत्त्वपूर्ण संग्रह टिप्पणी र छापासहित छपाए।[१४] १९५७ मा आर.नोलीले दुई अन्य अभिलेखहरू छपाए।[१५] टी.ओ.ब्यालिन्जरले १९५८मा पाँच अभिलेख प्रकाशित गरे।[१६] १९६०-६३मा संशोधनमण्डलले १२ ससाना भागमा **अभिलेखसंग्रह** प्रकाशित गऱ्यो।[१७] यिनमा धेरैजसो अप्रकाशित र केही प्रकाशित अभिलेखहरूका शुद्ध पाठ छापिए। यसरी १९६० ई.को दशकसम्म प्राचीन र अर्वाचीन कालका निकै अभिलेखहरू प्रकाशित भइसकेका थिए। १९६४मा संशोधनमण्डलले **पूर्णिमा** नामक इतिहासप्रधान त्रैमासिक पत्रिकाको प्रकाशनको आरंभ गऱ्यो। **पूर्णिमा**मा अरू विषयका साथसाथ अनेकौं अभिलेखहरूको शुद्ध पाठ र महत्त्वपूर्ण टिप्पणीका साथसाथ अङ्कचिह्नहरूको बारेमा महत्त्वका लेखहरू छापिँदैआएका छन्।[१८] नेपाली अभिलेखहरूका संपादकहरूमा हेमराज शाक्य,[१९] शङ्करमान राजवंशी[२०] र मोहनप्रसाद खनाल[२१] प्रमुख छन्। १९७४ मा (२०३० सालमा) प्राचीन कालका अभिलेखहरूका दुई संग्रह प्रकाशित भए : हरिराम जोशीद्वारा सम्पादित **नेपालको प्राचीन अभिलेख** [२२] र धनवज्र वज्राचार्यद्वारा अनुदित र सम्पादित **लिच्छविकालका अभिलेख**।[२३] हरिराम जोशीले लिच्छविकालका १७५ वटा अभिलेखहरूको मूल पाठ र टिप्पणीका साथ धेरैजसो अभिलेखहरूका छापा पनि प्रस्तुत गरेका छन्। धनवज्र वज्राचार्यले १८९ अभिलेखहरूका शुद्ध पाठ, अनुवाद र विभिन्न विषयका विस्तृत टिप्पणीसहित व्याख्या प्रस्तुत गरेका छन्। शुद्ध सम्पादन, व्याख्या र राम्रो छपाइको निम्ति वज्राचार्यको पुस्तक निकै चर्चित छ।

१८८० ई. कै दशकदेखि नेपालका पाण्डुलिपिग्रन्थहरूले पनि विद्वान्हरूको ध्यान आकर्षित गरे। त्यति वेलासम्म नेपालका ताडपत्र र कागतका ग्रन्थहरू भारत र बेलाइतमा संग्रह गरिँदै थिए। नेपालमा लेखिएका पाण्डुलिपिग्रन्थहरूका पहिलो सूचीपत्र राजेन्द्रलाल मित्रले १८८२ मा प्रकाशित गरे।[२४] १८८३ मा सेसिल बेण्डालले बेलाइतको क्याम्ब्रिज विश्वविद्यालयको संग्रहमा रहेका पाण्डुलिपिहरूको सूचीपत्र छपाए।[२५] हरप्रसाद शास्त्रीले १९०५ देखि १९१७ सम्म काठमाडौंको तत्कालीन दरवारपुस्तकालय (हाल राष्ट्रिय अभिलेखालय) र कोलकाताको एशियाटिक सोसाइटी अफ बङ्गालको संग्रहमा रहेका पाण्डुलिपिहरूका सूचीपत्रका अनेकौं भाग छपाए।[२६] पाण्डुलिपिहरूको खोजका सिलसिलामा अनेक वंशावलीहरू पनि पत्ता लागे। यिनमा डब्लू.जे.कर्कप्याट्रिक (१८११),[२७] डेनिएल राइट (१८७७),[२८] सेसिल बेण्डाल (१९०५)[२९] र सिल्वाँ लेवीले (१९०५-८)[३०] उपयोग गरेका वंशावलीहरू बढी प्रसिद्ध भए। सेसिल बेण्डालले उपयोगमा ल्याएको चौधौं शताब्दीको ई.को गोपालवंशावली सबभन्दा पुरानो र भरपर्दो मानिन्छ।[३१] यसरी अभिलेख र पाण्डुलिपिहरूको महत्त्व जानिएको एक शताब्दीभन्दा बढी समय बितिसकेको छ र इतिहासको अध्ययनमा

तिनको उपयोग भएको छ। स्वयं अभिलेखअध्ययनको बारेमा भन्ने खास काम हुनसकेको छैन ।

## २. इतिहास र संस्कृतिको अध्ययनमा अभिलेखको महत्त्व

इतिहास भन्ने शब्द अंग्रेजीको हिस्ट्री (history) शब्दको पर्याय हो। हिस्ट्री ग्रीक भाषाको हिस्टोरिया (historia) शब्दबाट बनेको हो, जसको अर्थ 'खोजेर पत्ता लगाएर अध्ययन गर्नु' भन्ने हुन्छ। हालसम्म जानिएको कुराको आधारमा बीतेका (अतीतका) घटनाहरूको प्रामाणिकताको जाँच गरी तिनलाई सिलसिलेवार रूपमा मिलाउनु तथा घटनाहरूका कारण र परिणामको विवेचना गर्नु नै इतिहासको अध्ययन गर्नु हो ।

हिस्ट्रीको आधुनिक परिभाषा र हिन्दु परंपरामा इतिहासका अर्थ र उद्देश्य भिन्न रहेका छन्। संस्कृत साहित्यमा रामायण र महाभारतलाई इतिहासग्रन्थ मानिन्छ। पारम्परिक 'इतिहास'को अर्थ हुन्छ: 'यस्तो भएको थियो'। पारंपरिक इतिहासमा प्रसिद्ध राजा वा महापुरुषको जीवनी हुन्छ जसबाट पढ्ने वा सुन्ने व्यक्तिले प्रेरणा पाउन् भन्ने उद्देश्य निहित हुन्छ। यस कारण यसमा घटना र तिथिक्रमको प्रामाणिकता आवश्यक हुँदैन। मध्यकालमा संग्रह गरिएका स्कन्दपुराणको हिमवत्खण्ड, नेपालमहात्म्य र स्वयंभूपुराण[३२] जस्ता संस्कृतका ग्रन्थहरू र संस्कृत, नेवारी र नेपालीका वंशावलीहरू प्रायः पारंपरिक 'इतिहास'कै शैलीमा लेखिएका छन्। यिनीहरू आफ्ना संकलनकालको इतिहासको लागि धेरथोर भरपर्दा सामग्री भएता पनि पहिलेको इतिहासको लागि भने प्रामाणिक स्रोत हुनसक्दैनन्। तथ्यपरक इतिहासको लागि पुरातात्विक महत्त्वका समसामयिक लिखित सामग्री खोज्नुपर्दछ। अतीतका घटनाबारे जानकारी दिने सामग्री लेखिएको रूपमा र तिथियुक्त भएमा त्यो इतिहासको बढी भरपर्दो र प्रामाणिक स्रोत हुन्छ। लिखित प्रमाण र तिथिक्रम इतिहासका लागि आवश्यक कुरा हुन्। घटना र तथ्यका साथसाथ संवत् र तिथि पाइने हुनाले अभिलेखहरू भरपर्दा तिथियुक्त र समसामयिक लिखित सामग्री हुन्। ज्यादै साना लेख भएता पनि सिक्का अभिलेख नै हुन्।

मानिसमा अरू प्राणीहरूमा नहुने सोचविचार, विवेक र सीप हुन्छ र उसले तिनलाई प्रकट गर्ने माध्यमको विकास गरेको छ। मानिसको सीप, रुचि, कुनै पनि विषयमा सोचविचार र सौन्दर्यप्रेम विज्ञान र कलाका रूपमा व्यक्त हुँदैआएका छन्। भौतिक माध्यमले प्रकट हुने मानिसका सीप र कलात्मक सर्जन तथा विचारात्मक क्रियाकलापहरूको समष्टि नै संस्कृति हो। संबन्धित कालको समाजको विचार, भावना, रुचि, धार्मिक आस्था, सीप र कला जस्ता क्रियाकलापबारे जानकारी दिने कारणले नेपाली अभिलेखहरू संस्कृतिको अध्ययनका महत्त्वपूर्ण स्रोत हुन्।

प्राचीन मिश्रको पिरामिडलेख, मेसोपोटामियाका माटाका पाटीलेख, चीन र अन्य ठाउँका अभिलेखहरूले आफ्ना समयका इतिहास र संस्कृतिका बारेमा

भरपर्दो र प्रामाणिक जानकारी दिएका छन्। भारत-पाकिस्तानको सिन्धुघाटी सभ्यताका छाप (सील)हरूका लेख पढ्न नसकिएकाले त्यहाँको इतिहास र संस्कृतिको यथार्थ जानकारी हुनसकेको छैन। प्राचीन लेखोटको अभावमा पारंपरिक साहित्यमा धनी मानिएता पनि वैदिक आर्यहरूको प्रामाणिक इतिहास र भौतिक संस्कृतिको बारेमा यथार्थ ज्ञान पाउनसकिएको छैन र तिनको नाउँको विशाल साहित्यभण्डारको प्रामाणिकरूपमा जाँच संभव भएको छैन। यसै कारण ईसापूर्व चौथो शताब्दीका यूनानी विजेता एलेक्जेण्डरको (सिकन्दरको) आक्रमण हुनुभन्दा पहिलेको काल पुरातत्त्वको शब्दमा इतिहासकालभन्दा पहिलेको भन्ने अर्थमा आदिऐतिहासिककाल (आद्यैतिहासिककाल वा Protohistoric Period) भनिन्छ। भारतको वास्तविक इतिहासको थालनी यूनानी इतिहासकारहरूको लिखित विवरण र ईसापूर्व तेस्रो शताब्दीका अशोकका अभिलेखहरूले गरेका छन्। दक्षिणएशियामा सम्राट् अशोक नै पहिला देखिन्छन्, जसले अभिलेखको परिपाटी सुरु गऱ्यो।[३३]

## इतिहास

नेपालको पश्चिमी तराईका लुम्बिनी र निग्लिहवाको अशोकका स्तंभलेखहरू ऐतिहासिक दृष्टिले पनि महत्त्वपूर्ण छन्। लुम्बिनीअभिलेखले बुद्धको जन्म भएको ठाउँबारे सूचना दिएर खुद भगवान् बुद्धको ऐतिहासिकता स्पष्ट गरेको छ। सम्राट् अशोकले आफ्नु राज्याभिषेकको बीसौं वर्षमा लुम्बिनीको यात्रा गरी त्यस गाउँका किसानलाई मालपोत मिनाहा गरेको सूचना यसले दिएको छ। अर्को अभिलेखमा अशोकले आफ्नु राज्याभिषेकका चौधौं र बीसौं वर्षहरूमा आएर कनकमुनि बुद्धको[३४] सम्मानमा निग्लिहवामा बनेको स्तूपलाई ठुलो बनाई पूजा गरेर शिलास्तम्भ ठडाएको कुरा लेखिएको छ।[३५] (फलक ४, ५)। लुम्बिनी र वरिपरिका क्षेत्रका उत्खननबाट पछिल्लो कालका केही पुरातात्त्विक वस्तु पाइएता पनि राजनीतिक प्रकृतिको अभिलेखको अभावमा त्यस क्षेत्रको लामो कालसम्मको इतिहास स्पष्ट छैन।

काठमाडौं उपत्यका र नजिकैका क्षेत्रमा ईसवीको पाँचौं शताब्दीदेखि प्रचलित अभिलेखको चलनले त्यस क्षेत्रको इतिहासकालको आरंभ जनाउँछ। त्यसवेलादेखि आठौं शताब्दीसम्मको लिच्छविकालको नाउँले प्रसिद्ध कालका झण्डै २०० जति अभिलेखहरूले इतिहासका विभिन्न पक्षहरूमाथि प्रकाश पारेका छन्। नवौं शताब्दीदेखि चौधौं शताब्दीसम्मको इतिहास त्यति स्पष्ट छैन किनभने त्यसकालमा पाइएका अभिलेखहरू संख्यामा कम, आकारमा साना र राजनीतिक र सांस्कृतिक दृष्टिले कम महत्त्वका छन्। चौधौं शताब्दी ई.को अन्तिम दशकदेखि निकै मात्रामा अभिलेख र पाण्डुलिपिहरू पाइने भएकाले तत्कालीन इतिहास र संस्कृतिका विभिन्न पक्षहरू जानिएका छन्। यसै गरी पश्चिमी नेपालको कर्णाली प्रदेशका खसमल्ल शासकहरूका इतिहास र संस्कृतिको अध्ययनमा तिनले जारी गरेका स्तंभलेख, शिलालेख, ताम्रपत्र र सुवर्णपत्रको महत्त्वपूर्ण भूमिका रहेको छ।[३६]

वंशावलीसाहित्यमा बयान गरिएका विभिन्न राजवंश र शासकहरूको क्रम र तिथिक्रम अभिलेखको अभावमा स्पष्ट हुँदैन । संवत् (वर्ष) ३८६ देखि वर्ष ५२६ सम्मका अभिलेखहरूमा एक किसिमको संवत् र वर्ष २९ देखि वर्ष १५७ सम्मका अभिलेखहरूमा अर्को संवत् गरी लिच्छविकालमा जम्मा दुई संवत्हरू चलेका देखिन्छन् ।[३७] ८७९ ई.को अक्टोबरमा चलेको नेपालसंवत् सुरू गर्ने व्यक्ति र उपलक्षको बारेमा निश्चित जानकारी नभएतापनि यो एघार सये वर्षदेखि लोकप्रिय भएको छ ।

अरू स्रोतबाट थाहा नभएका ऐतिहासिक घटना र विवरणहरूमध्ये केही त पहिलो पल्ट अभिलेखहरूबाटै जानिन्छन् र तिथि नभएका वा कुनै किसिमले पनि कालक्रम नखुल्ने र छरिएर रहेका अपुष्ट घटनाहरूलाई अभिलेखहरूले तिथिक्रममा राख्न मद्दत गर्छन् अनि प्रामाणिक र विवरणात्मक बनाउँछन् । सम्राट् समुद्रगुप्तको (मृत्युतिथि ३७५ ई.) इलाहाबाद स्तंभलेख नपाइएको भए तत्कालीन नेपालसँग भारतको कुनै किसिमको राजनीतिक सम्बन्ध रहेको तथ्य जानिने थिएन ।[३८] लिच्छविकालमा आभीरगुप्तको बढ्दो शक्ति, अंशुवर्माको उदय र अन्त, नरेन्द्रदेवद्वारा गुप्तहरूमाथिको नियन्त्रण र लिच्छविशक्तिको पुनर्स्थापना, चौधौं शताब्दी ईसवीको पूर्वार्द्धमा बंगालको शम्शुद्दीन इलियासको आक्रमण र त्यसमा मन्दिर र मूर्तिको विनाश, स्थितिमल्लको उदय र उपत्यकाको राज्य-विभाजन जस्ता घटनाको विवरण र तिथिक्रमलाई अभिलेखहरूले प्रामाणिक बनाइदिएका छन् ।[३९]

अभिलेखहरूले शासकका गुण, चरित्र र प्रशासनव्यवस्थाबारेमा पनि प्रकाश पारेका छन् । अभिलेखहरूमा विभिन्न शासकहरूका उपलब्धि र देनकाबारेमा विचार गर्ने आधार हुन्छन् । मानदेव, जयदेव र प्रतापमल्ल जस्ता राजाहरूका व्यक्तिगत गुण र चरित्रमा मात्र सीमित प्रशस्तिअभिलेखहरू पनि पाइन्छन् । लिच्छविकालमा राजाका मुख्य सहायक र स्थानीयशासक सामन्त वा महासामन्त भनिन्थे र सर्वदण्डनायक, महाप्रतिहार र बलाध्यक्ष मुख्य केन्द्रीय अधिकृतहरू थिए; गाउँको प्रशासनमा पाञ्चाली (पञ्चायत) को व्यवस्था थियो; र कुथेर, लिङ्वल, माप्चोक र शुल्लीसहित अनेकौं महत्त्वका कार्यालयहरू थिए भन्ने कुरा तत्कालीन अभिलेखहरूबाटै जानिएका छन् ।[४०] लिच्छविअभिलेखमा सर्वत्र ग्रामको चर्चा पाइन्छ, नगर वा पुरका ठाउँमा द्रङ्ग शब्दको उल्लेख गरिएको छ । अभिलेखहरूबाट नेपालका राजा निरंकुश थिए अर्थात् उनमाथि कुनै किसिमको नियन्त्रण थिएन भन्ने थाहा हुन्छ ।

## संस्कृति

सामाजिक र आर्थिक अवस्था तथा भाषा, साहित्य, कला र धर्म-दर्शन जस्ता सांस्कृतिक पक्षका अध्ययनमा अभिलेखहरू समसामयिक र प्रमाणिक स्रोत हुन् । यहाँ अभिलेखहरूबाट देशको आर्थिक ढाँचा कृषिमा आधारित रहेको र आर्थिक-सामाजिक व्यवस्था सामन्तवादी रहेको देखिन्छ । राजकीय आमदानीको

मूल स्रोत कृषि र कृषिमा आधारित उद्योगधन्दा र व्यापारवाणिज्यबाट वसूल गरिने कर र राजस्व रहेको पाइन्छ। अभिलेखहरूले प्राचीनकालमा भाग, भोग, कर गरी तीन किसिमको करव्यवस्था रहेको र परवर्ती कालमा समेत वेठबेगारी(विष्ठी) र दासप्रथा र सतीप्रथा रहेको देखाएका छन्।

अभिलेखहरूबाट समाजको संगठनबारे जानकारी पाइन्छ। लिच्छविकालीन समाजमा वर्णव्यवस्था अन्तर्गतका चार जातिहरू र अन्य अनेक समुदायहरू समेत गरी जम्मा १८ किसिमका जनसमूह अर्थात् अष्टादशप्रकृति रहेका तथ्य जानिएको छ। शासकवर्गले वर्णव्यवस्थाको पक्षपात गरेका छन्। तिनले आफूलाई "आर्यमर्यादाको पुल ननाघ्ने" भनी गर्व गरेका छन्। एउटै वर्ण वा जातिभित्र बिहेवारी चलोस् अर्थात् वर्णसङ्करताको स्थिति पैदा नहोस् भनी वर्णव्यवस्थालाई बलियो पार्ने उद्देश्यले लिच्छविशासकहरूले भट्टाधिकरण नाउँको कार्यालयको व्यवस्था गरेको देखिन्छ। ठुलो संख्यामा बसोवास गर्ने स्थानीय आदिनिवासीहरूको परंपरामा आधारित सामाजिक समस्याहरूमाथि विचार गर्ने माप्चोक नाउँको अधिकरण (अड्डा) शायद पहिले देखिनै थियो।[४१]

नेपाली जनजीवनलाई धेरैसम्म प्रभावित गर्ने गोष्ठी (गुठी)का किसिमहरू र तिनका उद्देश्यकोबारे अभिलेखहरूले निकै जानकारी दिएका छन्। इलम सिकाउने व्यवस्था गोष्ठीहरूकै माध्यमबाट हुनेगरेको पाइन्छ।[४२] बौद्ध विहारहरू शिक्षाका केन्द्र थिए भन्ने कुरा पछिल्लो कालका अभिलेख र पाण्डुलिपिबाट स्पष्ट भएको छ। मल्लकालका अभिलेखहरूले त्यस समयका अनेकौं जातजाति र समूहहरूको व्यवस्था अर्थात् सामाजिक संगठन र गुठीहरूको व्यापक भूमिका जस्ता सामाजिक पक्षमाथि धेरै प्रकाश पारेका छन्।

अभिलेखहरूले विभिन्न कालका राज्यको भौगोलिक बनावट, जनसंख्याको वितरण, गाउँ, शहर, जिल्ला र राजधानीको बारेमा जानकारी दिएका छन्। विभिन्न गाउँहरूमा जारी गरिएका लिच्छविकालका अभिलेखहरूमा संबन्धित टोल र गाउँका नाम दिइएका छन् जसमध्ये केही सामान्य परिवर्तनको साथ आश्चर्यजनक रूपमा हालसम्म विद्यमान छन्।[४३] त्यस कालमा काठमाडौं उपत्यकाका तीनैवटा नगरहरूले प्रसिद्धि पाइसकेको तथ्य थाहा हुन्छ। बाहिरका क्षेत्रहरूमध्ये पूर्वमा पूर्वदेश र पश्चिममा मल्लपुरीका साथसाथ, गोर्खा, चित्लाङ, टिस्टुङ र पालुङ क्षेत्रमा पनि घना वस्ती रहेको जानिएको छ। पूर्वदेश र मल्लपुरी कहाँ थिए भन्ने बारेमा चाहीं थाहा हुन सकेको छैन।

यहाँ सुरुदेखिनै अभिलेखको भाषा निकै शुद्ध र परिष्कृत संस्कृत रहेको छ। धेरैजसो अभिलेख गद्यमा छन्। देवताको स्तुति र राजाको तारीफमा लेखिएका अभिलेख (प्रशस्ति) भने राम्रा पद्य(कविता) मा लेखिएका छन्। संस्कृतसाहित्यको इतिहासमा लिच्छविअभिलेखको भाषाशैलीको आफ्नै खास ठाउँ छ। लिच्छविवंशको पतन भएपछि संस्कृत भाषाको स्तर निकै खस्केको पाइएता पनि मल्लकालका अभिलेखहरूका सुरु र आखिरका केही वाक्य संस्कृतमा छन्।

बीचको भागमा देशभाषा, भाषा वा नेपालभाषा भनी नेवारीको उपयोग भएको पाइन्छ। नेवारी भाषाको इतिहासको लागि मल्लकालका अभिलेख महत्त्वपूर्ण छन्। मैथिली भाषाका कतिपय नाटक र कविताहरूका पाण्डुलिपि पाइन्छन्। कर्णाली प्रदेशका खसमल्ल शासकहरूका अभिलेखरू नेपाली भाषा (खसकुरा)का आरम्भिक उदाहरण हुनआएका छन्। यसरी संस्कृत, नेवारी, नेपाली र मैथिली भाषाको इतिहासको अध्ययनमा समेत अभिलेखहरूबाट पर्याप्त सूचना पाइन्छन्।

अभिलेखहरू आफैं कलाका मनोहर माध्यम हुन्। शिलापत्र र स्तंभको सतहलाई खास पद्धतिले घोटेर पालिस लगाएपछि माथिल्ला (शीर्ष)भागमा सुन्दर धार्मिक आकृति वा चिह्नहरू र किनारामा फुलबुट्टा वा आगोको ज्वालाको बुट्टा कुँदिएका पाइन्छन्। कतिपय स्मारकअभिलेखहरू त स्वयं कलाकृतिमै पाइन्छन्। मानदेवको विष्णुविक्रान्तमूर्तिसहित अनेकौं प्राचीन र अर्वाचीन देवीदेवताका मूर्ति र शिवलिङ्गका पादपीठमा र कलात्मक ढुंगेधाराहरूमा अभिलेख कुँदिएका छन्। अभिलेखहरूबाट राजदरबार, विहार, देवकुल अर्थात् मन्दिर र चैत्य जस्ता धार्मिक र कलापूर्ण भवनहरूबारे सूचना पाइन्छन्। वास्तुकलाको शैलीको बारेमा केही नभनिएता पनि कैलासकूटभवनको भव्यता र सुन्दरताको वर्णन गरिएको छ। अभिलेखहरूमा श्रीमानविहार, श्रीराजविहार, श्रीशिवदेवविहार, मध्यमविहार, खर्जूरिकाविहार र गुंविहार जस्ता बौद्धविहारहरू तथा दोलाशिखरस्वामी, भुम्भुक्किका-जलशयन, पशुपति, पशुपतिपारदेवता जस्ता मन्दिरहरूको उल्लेख पाइन्छ। लिच्छविकालमा केही मन्दिर माटो र काठका बन्थे भन्ने कुराको संकेत अंशुवर्माले माटिङ देवकुलको जीर्णोद्धारको प्रसङ्गमा दिएका छन्।[४४]

अभिलेखहरूबाट विभिन्न समयका धार्मिक अवस्थाबारे पनि जानकारी मिल्दछ। लिच्छविकालको प्रारम्भदेखिनै यहाँ हिन्दुधर्म र बौद्धधर्म साथसाथ लोकप्रिय रहँदै आएको तथ्यबारे थाहा भएको छ। देवताका स्वरूपचिन्तन(ध्यान), पूजापद्धति, धार्मिकयात्रा वा तीर्थ, मूर्ति, शिवलिङ्ग, विहार, मन्दिर, चैत्यको स्थापना, निर्माण वा जीर्णोद्धार, तिनका निम्ति गुठी जग्गाको प्रबन्ध आदिबारे अभिलेखबाट सूचना पाइन्छ। प्रारम्भमा यहाँ धर्मको स्वरूप स्मार्त 'वा पौराणिक देखिन्छ। पछि केही सम्प्रदायहरूको स्वतन्त्र उल्लेख पाइन्छ। हिन्दु र बौद्ध धर्मको सम्बन्ध प्रायः मधुर देखिन्छ। हिन्दु राजाहरूद्वारा विहारको निर्माण, भिक्षुसङ्घ र भिक्षुणीसङ्घलाई जग्गादान र अन्य सुविधा उपलब्ध गराइएका उदाहरणहरू पाइन्छन्। तथापि यदाकदा समाजमा धार्मिक मतभेद रहेको पाइन्छ।[४५]

## ३. अभिलेखका कमी र त्रुटिहरू

इतिहासको निर्माणमा यतिका महत्त्व हुँदाहुँदै पनि अभिलेखहरू सबै अवस्थामा निर्दोष र त्रुटिरहित हुँदैनन्। यिनबाट प्राप्त सूचना सदा सत्य र विश्वसनीय नहुन पनि सक्छ। अभिलेखका कमी र त्रुटिहरूलाई यस प्रकार रेखाङ्कित गर्न सकिन्छ :

### (१) अतिरंजित र अतिशयोक्तिपूर्ण वर्णन

अभिलेखहरूका खास गरी राजाका प्रशंसामा लेखिएका प्रशस्तिका रचनाकार प्राय: दरबारका कवि वा राजाका आश्रित पण्डित हुनेगर्थे। तिनबाट आफ्ना संरक्षक राजाको गुण र चरित्रलाई बढाइचढाई प्रस्तुत गरिनु र तिनका असफलता र पराजयलाई लुकाइनु स्वाभाविक हुन्थ्यो। परिणाममा इतिहासका छात्र तिनबाट तथ्यभन्दा बढी राजाका उदात्त चरित्रमाथि लेखिएका शब्दहरू पाउने गर्छन् र भ्रमित हुनसक्छन्। यसप्रकारका केही अभिलेखले इतिहासको स्रोतका मान्यता र महत्त्वलाई कम गरिदिन्छन्। मानदेवको चांगुनारायणप्रशस्ति र जयदेवको पशुपतिप्रशस्ति राजाहरूका गुण र चरित्रको वास्तविकताभन्दा बढी प्रशंसा गर्छन् र ऐतिहासिक महत्त्वका अन्य कुरा गौण विषय बनाइएका देखिन्छन्। मल्लपुरीको विजययात्राको प्रशंसामा गण्डकी नदीको वर्णन यति अतिरंजित किसिमको छ कि त्यसबाट मैदानी भूभागमा बग्ने विशाल नदीको भ्रम हुनसक्छ। जयदेवको विजयअभियानबारे केही थाहा छैन तर पशुपतिप्रशस्तिमा उनलाई सम्पूर्ण भारतका विजेता भन्ने समेत अर्थ लाग्ने विशेषण दिइएको छ। यक्षमल्लको विजय अभियानलाई पनि यसै गरी अतिशयोक्तिको पुट दिइएको पाइन्छ। यस स्थितिमा अन्य सामग्रीको आधारमा इतिहासकारले तथ्य र अतिशयोक्तिको बीचमा भेद गर्नुपर्ने हुन्छ।

### (२) काव्यात्मक र लाक्षणिक शैली

धेरैजसो अभिलेखहरू उच्चस्तरीय काव्यात्मक र लाक्षणिक शैलीमा लेखिएका छन्। भाषा र वर्णनका चमत्कारभित्र महत्त्वपूर्ण ऐतिहासिक तथ्य हराउनसक्छन्। तिनबाट ऐतिहासिक महत्त्व खोज्न अन्य स्रोतको सहारा लिनुपर्ने हुन्छ। चांगुनारायणप्रशस्तिमा काव्यात्मक शैलीमा राजाको विजयको वर्णन त छ, तर 'पूर्वदेश' र 'मल्लपुरी' कहाँ थिए, त्यहाँका सामन्तहरू र राजाको बीचमा कस्तो राजनीतिक सम्बन्ध थियो भन्ने प्रश्नहरूको उत्तर छैन। वैयक्तिक अभिलेखहरूमा लाक्षणिक शैलीमा "फलाना राजाले सय वर्षभन्दा बढी कालदेखि शासन गरिरहेका समयमा" जस्तो शब्दावली पाइन्छ। अभिलेखको यस शैलीका कारण यिनमा ऐतिहासिक महत्त्वका घटना र तथ्य अस्पष्ट भएका छन् र तिनका व्याख्या गर्ने इतिहासकारहरूको बीच मतभेद पाइन्छन्।

### (३) इतिहासको धारणा

परम्परा अनुसार इतिहास 'यस्तो भयो' को विवरण हो तथा दैवी चरित्रका मानव वा राजाको जीवनी हो। अभिलेखको भाखा लेख्ने लेखक वा कविको पनि यस्तै पारंपरिक धारणा हुनु कुनै आश्चर्यको कुरा होइन। चांगुनारायणप्रशस्तिका रचयिताले मानदेवको विजयअभियानलाई जोड दियो, मल्लपुरी र पूर्वदेशको परिचय दिनुलाई आवश्यक मानेन। यस प्रकारका अभिलेखहरूले कहिलेकाहीं इतिहासकारको कामलाई कठिन बनाइदिएका छन्। तिनका सबै बयानलाई राम्ररी नजाँची स्वीकार गर्नसकिंदैन।

## (४) अपर्याप्त र असन्तुलित विवरण

एक त अभिलेखको आफ्नो सीमा हुन्छ; सम्पूर्ण विषय निर्धारित ठाउँमा अटाउन सक्तैनन्। अर्को; राजाको गुणगानमा जति लेखिन्छ, त्यसको तुलनामा अन्य विषय संक्षिप्त र अपर्याप्त हुनसक्छन्। परिणामस्वरूप अभिलेख अपूर्ण र असन्तुलित विवरण दिनेगर्छन्। उदाहरणार्थ, शिवदेवका अभिलेखहरूमा अंशुवर्माको पराक्रम, विद्वत्ता, नीतिवत्ता र धार्मिकताको बारेमा सुन्दर पदावलीमा वर्णन पाइन्छ। तर यसका के कारण थिए; स्वयं अंशुवर्मा को थिए; उनको शिवदेवसँग के नाता थियो; उनको उदयको के कारण थियो; के अंशुवर्मा शिवदेवभन्दा बढी शक्तिशाली थिए; उनी शिवदेवको इच्छाले वा स्वयं जबर्दस्ती गद्दीमा बसे; आफ्नु १६ वर्षको राज्यकालका अभिलेखमा उनले किन राजकीय विरूद लेखाएनन्; आदि प्रश्नहरूको उत्तर तत्कालीन अभिलेखहरूमा पाइँदैनन्। गुप्त र लिच्छविहरूको आपसी राजनीतिक सम्बन्धलाई जिष्णुगुप्त र विष्णुगुप्तका अभिलेखहरूले स्पष्ट गरेका छैनन्। केही इतिहासकारहरूको अनुमान बामोजिम के त्यतिखेर द्वैतशासन नै थियो? भन्ने विषयमा अभिलेखहरू स्पष्ट सूचना दिंदैनन्। कतिपय महत्त्वपूर्ण ऐतिहासिक पक्ष अभिलेखबाट स्पष्ट छैनन्, जसलाई अन्य ज्ञात आधारमा इतिहासकारहरूले खोज्नुपर्ने हुन्छ।

## (५) अशुद्ध वंशावली

आफ्ना संरक्षक राजालाई उच्च वंशको सिद्ध गर्न अभिलेखका लेखकहरूले पौराणिक महत्त्वका व्यक्तिहरूलाई सम्मिलित गरी काल्पनिक वंशावली बनाइदिएका छन्। सूर्यवंश र चन्द्रवंश प्राचीनकालदेखि नै क्षत्रियहरूको उच्च वंश मानिन्छन्। जयदेवको पशुपतिप्रशस्तिमा लिच्छविवंशावली सूर्यबाट सुरु गरिएको छ र अनेकौं पौराणिक राजाहरूका नामपछि 'लिच्छवि' नामक राजा र निकैपछि जयदेवका पूर्वजका नाम लेखिएका छन्। तर जयदेवका वास्तविक पूर्वजहरूका अभिलेखहरूबाट ज्ञात केही नामहरू यसमा छोडिएका छन्। चौधौं शताब्दीका स्थितिमल्लले आफ्नो परिचयबारे विशेष कुरा लेखाएनन् तर उनका सन्तानले स्वयं स्थितिमल्लको नाम छुटाएर आफ्नो वंशको सम्बन्ध कर्णाटवंशसँग जोडे।

## (६) कालक्रमको समस्या

अशोकका अभिलेखहरूमा उनको राज्याभिषेकका वर्षबाट गणना गरिएको छ। तिनमा कतै राज्याभिषेकको वर्ष किटिएको छैन। लिच्छविअभिलेखहरूमा दुई भिन्न पद्धतिहरूमा वर्षगणना गरिएको छ तर संवत्का नाम कतै किटेर लेखिएको छैन। यस तथ्यले गर्दा यी संवत्हरू भारत, तिब्बत र नेपालका कुनै राजाले चलाएका होलान् भन्ने अनेकौं विवादहरूको जन्म भयो। मानदेवको पालादेखि शिवदेवको पालासम्मका वर्षहरूलाइ ७८ ई.मा चलेको शकसंवत् र अंशुवर्मादेखि जयदेवको पालासम्मका अभिलेखमा चलेको संवत्लाइ ५७६ ई.देखि शुरु भएको संवत् मानिन्छ।[४६] यी संवत्हरू कार्त्तिकमा फिर्थे भन्ने तथ्य त अभिलेखहरूबाट

थाहा हुन्छ तथापि यस परंपराको आधार अज्ञात छ। दोस्रो संवत्का प्रवर्तक मानिएका ५७६ ई.का 'मानदेव'को बारेमा अभिलेख लगायत कुनै स्रोतबाट केही जानिएको छैन। नवौं शताब्दी ई.को उत्तरार्धदेखि प्रचलित भएको नेपालसंवत्को आरंभकर्ता र उद्देश्यको बारेमा अभिलेखमा सूचनाको अभाव छ।

## (७) लिपिक र कालीगढद्वारा त्रुटि

केही अभिलेखमा गम्भीर त्रुटि पाइन्छ, जसले गर्दा अर्थको अनर्थ हुनगएको छ। उदाहरणार्थ संवत् ५१७ तदनुसार ५९५ ई.को एक अभिलेखमा 'त्रिकर'को ठाउँमा 'स्त्रीकर' कुँदिएको पाइन्छ।[४७] लिच्छविकालमा भाग, भोग र कर गरी तीन किसिमका करहरू (त्रिकर) को उल्लेख धेरै ठाउंमा पाइन्छन्। संस्कृतको व्याकरणअनुसार अगाडिको शब्दको अन्तमा विसर्ग भएमा तवर्गका व्यञ्जनमा स् जोडिन्छ र त्रिकर **स्त्रिकर** हुनजान्छ। त्यसो हुनुपर्नेमा यहाँ (दीर्घ) **स्त्रीकर** भएको छ, जसको अर्थ स्त्री अर्थात् महिलामाथि लाग्ने कर भन्ने हुन्छ। अभिलेखको लागि तयार गरिएको सामग्रीमा अक्षर कुँद्नुअघि शायद लेखक वा लिपिकले खरी वा मसीले लेख्यो र त्यसमाथि कालीगढले छिनोले कुँद्‌थ्यो। यसो हुँदा ती दुईमध्ये कसैले वा दुवैले गल्ती गर्ने संभावना रहन्थ्यो। ऐतिहासिक तथ्य र घटनाको जाँच गर्दा अभिलेखका यस्ता कमी र त्रुटिबारे विचार गर्नु आवश्यक हुन्छ।

## टिप्पणी


१. A.Fuhrer, **Antiquities of the Buddha's Birth Place in the Nepalese Terai** (Delhi: Indological Book House,1972, reprint of 1897 publication). P.C. Mukherji, **A Report of Tour of Exploration of the Antiquities in the Terai, Nepal, the Region of Kapilavastu, During February and March 1899** (Delhi: Indological Book House, 1969, reprint of Archaeological Survey of India Publication of 1901).

२. A.C. Burnell, **Elements of South Indian Palaeography (from the 4th Century B.C. to the 4th Century A.D.), being an introduction to the study of South Indian inscriptions and manuscripts** (London, 1874).

३. Alexander Cunningham, ed. **Inscriptions of Asoka** (London, 1877).

४. J.F.Fleet, ed. **Corpus Inscriptionum Indicarum. III. Inscriptions of the Guptas and their Contemporaries, (1888)** (reprint. Varanasi, 1963).

५. गौरीशंकर हीराचन्द ओझा, **प्राचीन भारतीय लिपिमाला** (दिल्ली : मुन्शीराम मनोहरलाल, १९५९) ।

६. जर्ज बूलर, **भारतीय पुरालिपिशास्त्र** (Indische Palaeographei को मंगल नाथ सिंह द्वारा हिन्दी अनुवाद), (मोतीलाल बनारसीदास, १९६६) ।

७. आर्कियोलोजिकल सर्वे अफ इण्डियाका प्रथम डाइरेक्टर जनरल जनरल अलेक्जण्डर कनिंघमले १८७७मा **कर्पस इन्स्क्रिप्सनम् इण्डिकेरम**को शृङ्खलाको प्रकाशन **अशोकका अभिलेखहरू**बाट सुरु गरे । त्यसै गरी त्यसै शताब्दीको अन्तमा **एपिग्राफिया इण्डिका**को नियमित प्रकाशन सुरु भयो जसमा प्रत्येक अभिलेखको परिचयको साथसाथ पुरालेखनसम्बन्धी टिप्पणीसहित सम्पादन गरिएको छ ।

८. F.W.Thomas, "Brahmi Script in Central Asian Sanskrit Manuscripts" in **Asiatica** (Leipzig,1954).

९. D.C.Sircar, **Select Inscriptions, Bearing on Indian History and Civilization,Vol.I** (University of Calcutta, 1965); **Indian Epigraphy** (Motilal Banarasidas, !965).

१०. Bhagvan Lal Indraji and George Buhler, "Inscriptions from Nepal" **Indian Antiquary,** 9 (June-August 1880) pp. 163-94; B.Lal. Indraji, **Twenty-Three Inscriptions from Nepal Together with Some Considerations on the Chronology of Nepal"** (Trans. from Gujarati by G. Buhler) ( Bombay, 1885).

११. Cecil Bendall, **A journey of Literary and Archaeological Research in Nepal and Northern India During the winter of 1884-85** (Cambridge, 1886); Cecil Bendall,"Manuscripts and Inscriptions from Nepal", **Proceeding of the Asiatic Scciety of Bengal,** 1899.

१२. S. Levi, **Le Nepal; Etude Historique d'un Royaume Hindou** (Paris: E. Leroux, 1905, 1908: 3 vols).

१३. कतिपय अभिलेखहरू योगी नरहरिनाथसंपादित **संस्कृतसन्देश** (१९५३मा सुरु भएको सामयिक प्रकाशन), १९५५ मा सुरु भएको **इतिहास प्रकाश** (भाग १-४) र १९५९ को **हिमवत्संस्कृति**मा प्रकाशित भएका थिए ।

१४. R.Gnoli, **Nepalese Inscriptions in Gupta Characters,** 2 vols. (Roma : ISMEO,1956) (with 85 plates).

१५. R. Gnoli, "Two New Nepalese Inscriptions in Gupta Characters" **East and West,** VIII : 2, 1957, 192-93

१६. T.O.Ballinger, "Five Unpublished Nepalese Inscriptions" **J. Amer. Orient. Soc.** LXXVII: 4, 1958. 277-79.

१७. रामजी तेवारी, धनवज्र वज्राचार्य, आदि सम्पादित, **अभिलेखसङ्ग्रह,** भाग १- १२ (काठमाडौं : संशोधनमण्डल), वैशाख २०१८–माघ २०२० वि.सं. ।

१८. अभिलेखहरूको प्रकाशनका दृष्टिले **पूर्णिमाका** १.२, २.१, २.२, २.३, २.४, ३.१, ३.२,३.३,४.१,४.२,४.३ र ५.२ र पछिका केही अङ्कहरू महत्त्वका छन्। यसै गरी लिच्छविकालका संख्याचिह्नहरूकोबारेमा प.नयराज पन्तका लेखहरू (**पूर्णिमा,** १.४ र २.१) विशेष महत्त्वका छन्।

१९. **अभिलेख प्रकाश**, काठमाडौं, २०२७ वि.सं.।

२०. शङ्करमान राजवंशी, सम्पादित, **भक्तपुर शिलालेखसूची** (काठमाडौं : वीरपुस्तकालय, २०२० वि.सं. र **कान्तिपुर शिलालेख सूची** (काठमाडौं : राष्ट्रीय अभिलेखालय, २०२७ वि.सं.)।

२१. **अभिलेख सङ्कलन** (काठमाडौं, २०२८ वि.सं.)।

२२. काठमाडौं : नेपाल राजकीय प्रज्ञाप्रतिष्ठान, २०३० वि.सं.।

२३. काठमाडौं : त्रि.वि., २०३०।

२४. Rajendralala Mitra, **The Sanskrit Buddhist Literature of Nepal** (A Descriptive Catalogue of the Collection of MSS Presented by B.H. Hodgson, Preceded by a Memoir of the Donor) (Calcutta: Asiatic Society of Bengal, 1882 reprint, Calcutta, 1971).

२५. Cecil Bendall, **Catalogue of the Buddhist Sanskrit Manuscripts in the University Library, Cambridge, with Introductory Notices and Illustrations of the Palaeography and Chronology of Nepal and Bengal** (Cambridge: University Press, 1883).

२६. Haraprasad Shastri, **A Catalogue of Palm-leaf and Selected Paper Manuscripts Belonging to the Durbar Library Nepal, to Which Has Been Added a Historical Introduction by Prof. Cecil Bendall** (Calcutta, 1905-1915) 2 vols.; **A Descriptive Catalogue of the Sanskrit Manuscripts in the Government Collection of the Asiatic Society of Bengal, Vol.1** (Calcutta,1917), Vol.2 (Calcutta,1955), Vol.3 (Calcutta, 1957) and his articles on Nepali manuscripts in the **Journal of the Asiatic Society of Bengal**, LXII:3 (1893); LXVI:4(1897); LXVII:2(1898); 1899; 1905; V(1909); VI (1910) and VII(1911).

२७. William J.Kirkpatrick, **An account of the Kingdom of Nepaul, Being the Substance of Observations Made During a Mission to That Country in the Year 1793** (London: William Miller,1811 reprint. New Delhi: Manjusri,1969).

२८. Daniel Wright, ed. **History of Nepal** (Translation from Parvatiya by Munshi Shew Shunkar Singh and Pandit Sri Gunanand, with an Introductory Sketch of the Country and people by the Editor) (Cambridge, 1877 reprint. Calcutta, 1958)

२९. Cecil Bendall, "The History of Nepal and Surrounding Kingdoms (1000-1600 A.D.) Compiled Chiefly from MSS Lately

Discovered. Written As an Historical Introduction to Pandit Haraprasad Sastri's Catalogue of the Nepal Durbar Library" **Journal of Asiatic Society of Bengal**, LXXII: 1. 1-2 (1903) also see Haraprasad Sastri, *op.cit.* note 26.

३०. S.Levi, *op. cit.* note 12.

३१. राम्ररी सम्पादन गरिएको गोपालवंशावली प्रकाशित भएको छ : Dhanavajra Vajracharya, Kamal P. Malla, ed. **The Gopalarajavamshavali** (Kathmandu: Nepal Research Centre Publications No. 9, 1985).

३२. **स्कन्दपुराणको हिमवत्खण्ड** अन्तर्गत मानिएको **नेपालमाहात्म्य** र **वाराहपुराण** सत्रौं शताब्दीको र **स्वयम्भूपुराण** सोह्रौं शताब्दी ई.का मानिएका छन् । हेर्नुस् : D.R. Regmi, Medieval Nepal, Part I (Calcutta: Firma K.L. Mukhopadhyay, 1961).91, 93.

३३. K.A. Nilakanta Sastri, G.Srinivasachari, **Advanced History of India** (Allied Publishers, 1982). 95, 99.

३४. स्वयम्भू पुराण र केही बौद्ध वंशावलीहरूमा काठमाडौं उपत्यकाको उत्पत्तिको प्रसङ्गमा मानुषी बुद्धहरूको उल्लेख पाइन्छ । बौद्धधर्मको महायानशाखा अनुसार कनकमुनि सात मानुषी बुद्धहरूमध्ये पर्दछन् जो काठमाडौं उपत्यकामा मध्यकालमा निकै लोकप्रिय देखिन्छन् । सात मानुषी बुद्धहरू हुन् : विपश्वी, शिखी, विश्वभू, ककुच्छन्द, कनकमुनि, कश्यप र शाक्यसिंह । यिनमा कनकमुनि र ककुच्छन्द ऐतिहासिक मानिन्छन् । B.Bhattacharyya, **The Indian Buddhist Iconography,** Mainly Based on The Sadhanamala and Cognate Tantric Texts of Rituals (Calcutta : Firma K.L. Mukhopadhay, 1968) 76-77.

३५. मालपोत मिनाहा गरेको देखिएकोले लुम्बिनीमा त्यस कालमा पनि बस्ती रहेको गाउँ थियो जो अशोकको राज्यको सीमाभित्र थियो भन्ने देखिन्छ । पाँच पंक्तिको लुम्बिनी अभिलेखमा शाक्यमुनि बुद्धको जन्मस्थलको निर्देशन गरिएको छ । भिक्षु सुदर्शन महास्थविर, **लुम्बिनीको काखमा** (ललितपुर : हिमाली बौद्ध प्रशिक्षण संस्थान, १९९८) पृष्ठ २३ । निग्लिहवाको अभिलेखमा अशोक यहाँ दुइपल्ट आएको उल्लेख छ ।

३६. D,R. Regmi, *op.cit.* note 32.712-13, 716.

३७. हेर्नुस् तल अध्याय ६ ।

३८. भारतको उत्तरप्रदेशस्थित इलाहाबादको समुद्रगुप्तको स्तम्भलेख नेपालको उल्लेख गर्ने पहिलो अभिलेख हो, जसबाट नेपालमा कुनै किसिमको भारतको प्रभाव रहेको देखिन्छ । हेर्नुस् : J.F. Fleet, *op.cit.* note 4, pp. 1-10.

३९. हेर्नुस् तल अध्याय १६ ।

४०. यी कार्यालयहरूका नाउँ संस्कृत भाषाका नभएकाले संस्कृत भाषामा अभिलेख लेखाउने लिच्छविहरूको राज्यस्थापना हुनुअगावैदेखि चलनचल्तीमा आएका कार्यालय थिए होलान् भन्ने अनुमान गरिएको छ ।

४१. दिनेशचन्द्र रेग्मी, **प्राचीन समाज, धर्म र लेखन** (काठमाडौं : श्रीमती सुशीला रेग्मी, २०५८) पृष्ठ ३ ।

४२. धनवज्र वज्राचार्य, **पूर्वोक्त, टिप्पणी** २३, पृष्ठ २८५ र अगाडि । शासकवर्गमा हातहतियार चलाउने (शस्त्रविद्या) र अन्य शास्त्रको शिक्षा दिइन्थ्यो । केही अभिलेखमा उल्लेख भएका भरताश्रम (धनवज्र वज्राचार्य, **पूर्वोक्त, टिप्पणी** २३, पृष्ठ ३४२,३४४) र गौतमाश्रम (**उही** पृष्ठ ५३२,५३६) शायद शिक्षाकेन्द्र थिए । सर्वसाधारणमा शिक्षाव्यवस्था रहेको जनाउने अन्य कुनै सन्दर्भ पाइँदैन ।

४३. उदाहरणार्थ लिच्छविकालीन अभिलेखहरूमा वर्तमान त्यागलटोललाई तेग्वल (वज्राचार्य **उही** पृष्ठ ५४६), थानकोटलाई थेञ्चोग्राम (**उही** पृष्ठ ४३४) र टिष्टुङलाई तेस्तुङ (**उही** पृष्ठ ३११) जस्ता अनेक पाइन्छन् ।

४४. धनवज्र वज्राचार्य, **पूर्वोक्त**, पृष्ठ ३३९-४० ।

४५. दिनेशचन्द्र रेग्मी, **पूर्वोक्त, टिप्पणी** ४१, पृष्ठ ३० र Some Aspects of Nepali Culture (Kathmandu : Mrs Sushila Regmi, 2001). 17.

४६. हेर्नुस् तल अध्याय ६ ।

४७. धनवज्र वज्राचार्य, **पूर्वोक्त, टिप्पणी** २३, पृष्ठ २६१-६२ ।



# अध्याय पाँच

# अभिलेखका प्रकार

प्रकृतिका आधारमा नेपालका अभिलेखहरूको वर्गीकरण **राजकीय** र **व्यक्तिगत** गरी दुई मुख्य भागमा गर्न सकिन्छ। राजाको तारीफमा (यशोगानमा) लेखिएका प्रशस्ति, राजकीय घोषणा, प्रशासकीय नियम वा थितिबन्देज वा निगाह, भूमिदान वा अनुदान, संस्मरण र शासकहरूबीच सन्धि जस्ता विषयहरू राजकीय अभिलेखहरूभित्र पर्दछन्। शासकभन्दा भिन्न व्यक्तिले कुँदाएका अभिलेखहरूलाई यहाँ व्यक्तिगत भनिएको छ। व्यक्तिगत अभिलेखहरूका मुख्य विषय दान र संस्मरण नै हुन्छन्।

## प्रशस्ति

राजाको तारीफमा लेखिएको अभिलेखलाई प्रशस्ति भनिन्छ जो राजाको विजयको प्रसङ्गमा अथवा खास राजकीय वा धार्मिक अवसरमा कुँदिएका हुन्छन्। यिनमा सुन्दर पदावली र प्रौढ अभिव्यक्ति भएका काव्यमय पद्य हुन्छन्। लिच्छविकालका दुइवटा अभिलेखहरू नेपाली प्रशस्तिका राम्रा उदाहरण हुन् :४६४ ई.को मानदेवको चांगुनारायण स्तंभलेख[१] र ७३३ ई.को जयदेवको पशुपतिअभिलेख।[२] दुवैको आरंभ देवस्तुतिबाट भएको छ र दुवैमा राजाका पूर्वजहरूका नाम अर्थात् वंशावली दिइएको छ। चांगुनारायणप्रशस्तिमा राजाको विजयवर्णन छ। पशुपतिप्रशस्तिमा राजा जयदेवले पशुपतिनाथलाई चाँदीको कमल चढाएको प्रसंग छ। दुवैमा राजाको रूप, बहादुरी, दानशीलता र महत्त्वाकांक्षाको बखान छ। दुवै सुन्दर कवितामय भाषामा लेखिएका छन्। चांगुनारायणप्रशस्तिको रचनाकार कविको उल्लेख पाइँदैन, पशुपतिप्रशस्तिका रचयितालाई कवि बुद्धकीर्त्ति भनिएको छ।

मानदेवको प्रशस्ति चांगुनारायण मन्दिरको प्राङ्गणमा मूल ढोकानजिकै चारपाटे स्तंभका तीन पाटामा कुँदिएको छ। मूल स्तम्भ भांचिएको कारण पछि आजको ठाउँमा गाडिएको हुन सक्छ। सुरुका दुई पंक्तिहरू गद्यमा छन् जसमा क्रमशः वर्ष (संवत् ३८६), महिना, पक्ष, तिथि, नक्षत्र र मुहूर्त लेखिएका छन्। त्यसपछि तीन पाटामा छैसट्ठी पंक्तिहरूमा शार्दूलविक्रीडित छन्दका १९ पद्य छन्। भाँचिएको स्तम्भको तल्लो मूलभाग भनी अनुमान गरिएको ढोकाको सामुन्नेको ढुंगामा चार पंक्ति गद्यका छन् जसमा गुठी जग्गाको दानको विवरण छ। पहिलो पद्यमा चांगु पहाडमा (दोलाद्रिमा) बस्ने हरिको स्तुति गरिएको छ। दोस्रोदेखि पाँचौ पद्यमा वृषदेव, शङ्करदेव धर्मदेव र रानी राज्यवतीको परिचय, छैटौं-दशौं पद्यहरूमा धर्मदेवको अचानक मृत्युमा शोक गर्दै रानीको सती हुने इच्छालाई मानदेवले रोकेको कुरा पाइन्छ। एघारौंदेखि तेह्रौं पद्यहरूमा मानदेवका गुणहरूको बखान छ। चौधौंमा पूर्वदेशका बागी सामन्तलाई नाश गर्ने मानदेवको संकल्प र पन्ध्रौं र सोह्रौं पद्यहरूमा पूर्वदेशको विजय र राजधानी फर्केको कुरा बयान

गरिएको छ। सत्रौं र अठारौं श्लोकहरूमा मानदेवले आफ्ना मामाको सहायताले पश्चिमको मल्लपुरीका सामन्तलाई कजाएर आत्मसमर्पण गर्न लगाई थमौती गरी फर्केको बयान छ। अन्तिम पद्यमा आफ्नी आमाको साथ मानदेवले पुण्यकर्म गरेको कुरा छ।

पशुपतिनाथ मन्दिरको प्राङ्गणमा रहेको विशाल शिलापत्रमा जम्मा ३५ पंक्तिहरूमा राजा जयदेवको संवत् १५७/ ७३३ ई.को ३४ पद्यहरूको प्रशस्ति कुँदिएको छ। यो दुई सुन्दर पद्यहरूमा पशुपतिको स्तुतिबाट आरम्भ गरिएको छ। तेस्रोदेखि तेह्रौं पद्यसम्ममा लिच्छविवंशको वंशावली छ। यसको सुरूवात ब्रह्माबाट गरी जयदेवमा टुङ्ग्याइएको छ। यस वंशावलीमा बीचबीचका राजाहरूका नाम दिइएका छैनन्। 'लिच्छवि' नाम गरेका व्यक्तिलाई राजा दशरथका आठौं पुस्तापछिका भनिएको छ। अभिलेखहरूबाट जानिएका कतिपय राजाहरूका नाम समेत यसमा पाइँदैनन्। जयदेवका बाबु शिवदेव (द्वितीय)लाई यहाँ उत्तरभारतका परवर्तीगुप्तराजा आदित्यसेनका नातिनी ज्वाइँ र मौखरीवंशका राजाका छोरीज्वाइँ भनिएको छ। चौधौं श्लोकमा तिनै मौखरी राजपुत्री वत्सदेवीको कोखबाट जयदेवको जन्म भएको कुरा बताइएको छ। पन्ध्रौं पद्यमा जयदेवको विवाह भारतका राजा हर्षदेवकी छोरी राज्यवतीसँग भएको कुरा छ। अठारौं पद्यसम्म जयदेवका ठूलो कुल, त्याग, आत्माभिमान, सज्जनता, विद्वत्ता, रूप, महत्त्वकांक्षा, साहस र पराक्रमको बयान पाइन्छ। १९ देखि ३० श्लोकसम्म पशुपतिलाई चढाउन भनी राजा जयदेवले बनाएको चाँदीको आठ पाते कमलको बयान र पशुपतिशिवको स्तुति गर्दै "सो कमल चढाउनाले पाएको पुण्य आमालाई मिलोस्" भन्ने कामना गरिएको छ। एकतीसौं र बत्तिसौं पद्यहरूमा राजमाताले पनि "स्वर्गवासी राजाको भलो होस्" भनी अर्को सानो कमल पशुपतिलाई चढाएको कुरा छ। तेत्तिसौं पद्यमा भनिएको छ : आफ्नैवंशको बयान आफैले गर्नु कुलीन व्यक्तिको लागि लज्जाको कुरा मानेर "असल कवि भएर पनि विद्वान् राजाले पाँच श्लोक बाहेक अरूको रचना गरेनन्। यो अपूर्व काव्य राजामाथिको स्नेहले बुद्धकीर्तिले रचेका हुन्।" राजाले रचेको प्रत्येक श्लोकको सुरुमा 'राजाको' भन्ने शब्द लेखिएको छ। चौतिसौं पद्यमा राजा जयदेवको दीर्घायु, नीरोगिता र समृद्धिको कामना गरिएको छ र अन्तमा संवत्, महिना, पक्ष र तिथि लेखिएका छन्।

मल्लकालका प्रशस्तिहरूमा राजा प्रतापमल्लको नेपालसंवत् ७६९ तदनुसार १६४८ ई.को हनुमानढोका अगाडिको कृष्णदेवलको ३३ पंक्तिहरूको शिलालेख प्रसिद्ध छ।[३] यसको सुरुमा वंशावली दिइएको छ, जसमा पहिले रामचन्द्रको वंशबाट कर्णाटवंशको प्रादुर्भाव भएको कुरा र त्यस वंशका नान्यदेव, हरसिंहदेव लगायत सिमरौनगढका राजाहरूका नाम दिइएका छन् र त्यसपछि राजा यक्षमल्लको उल्लेख गरेपछि वास्तविक वंशावली पाइन्छ। प्रतापमल्लले स्वयंले गरेको भोट देशका कुती र खासा प्रदेशको विजय, भक्तपुरका राजालाई पराजित गरी तिनबाट किल्ला जितेको र गोरखाका डंबरसाहराजाको सेनालाई हराएको वर्णन यहाँ गरेका छन्। प्रशस्तिको अन्तमा सम्बन्धित मन्दिरको

विधिपूर्वक प्राणप्रतिष्ठा गरेको बयान गरिएको छ। ललितपुरका राजा सिद्धिनरसिंहमल्लको कृष्णमन्दिर अभिलेख पनि प्रशस्तिकै शैलीमा छ।[४] यसमा पनि राजाको विजयवर्णन पाइन्छ। जुनसुकै किसिमका राजकीय अभिलेख, रूक्का, लालमोहर वा सनदपत्रमा राजाको विरुद्ध वा प्रशस्ति लेख्ने चलन अन्यत्र भैं नेपालमा पछिसम्म चलेको पाइन्छ।.

## प्रशासकीय र प्रसादशासन

राजकीय अभिलेखहरू विभिन्न किसिमका हुन्छन्। राजाका आदेश, घोषणा वा थितिबन्देज जस्ता विषय भएका अभिलेखलाई प्रशासकीय भन्नसकिन्छ। यस्ता अभिलेख **शिलापट्टकशासन, ताम्रशासन** (सनदपत्र) भनिएका छन्।[५] स्थितिबन्देज गरिएका प्रशासकीय अभिलेख र राजाको निगाह परेको प्रसादशासन अभिलेखलाई भेद गर्न गाहारो छ। यसै गरी दान गरिएको जग्गाका रैतीलाई प्रायः विशेष छूट र निगाह दिइने भएकोले प्रसादशासन र दानशासनमा फरक गर्नु सजिलो छैन। यहाँ पहिले दिइएको दानलाई थमौती गर्दै रैतीहरूलाई निगाह गरिएको अभिलेखलाई प्रसादशासन र हालैको राजकीय दानपत्रलाई दानशासन मानिएको छ।

छैठौं शताब्दीका राजा वसन्तदेवको पालादेखि प्राशासनिक अभिलेख पाइन्छन्। यिनको बेहोरा खास किसिमको हुन्छ, जस्तै : आरम्भमा (क) "ॐ स्वस्ति" (कल्याण होस्) भन्ने शब्दहरू, (ख) राजदरबार (मानगृह वा कैलासकूटभवन)बाट" भन्ने शब्द, (ग) औपचारिक उपाधिसहित राजाको नाउँ र उसलाई संचो रहेको बेहोरा, (घ) संबोधन गरिएको "गाउँमा बस्ने परिवारको संचोविसंचो सोधेर" र, (ङ) "राजा आज्ञा दिन्छ वा यो राजाज्ञा हो " वा "यो स्वयं आज्ञा हो" भन्ने शब्दावली, (च) राजाको निगाह (प्रसाद) र नियमसंबन्धी मूल विषय, (छ) त्यसको पालना नगरिनहुने चेतावनी (ज) राजाको आज्ञा प्रसारित गर्ने खटाइएको 'दूतक' वा साक्षीका पदसहित नाम र अन्तमा (झ) संवत्का वर्ष, चान्द्रमास र तिथि। यस प्रकारको फर्मुला केही परिवर्तनको साथ प्रसादशासन र दानशासनमा पनि पाइन्छ। यस्ता अभिलेख राजा मानदेवको पालाको पाईंदैन।[६]

राजाको निगाहको साथसाथ प्रशासकीय व्यवस्था गरिएका अभिलेखहरूका राम्रा उदाहरण राजा वसन्तदेवका चौकिटार र पासिंख्यका एकै व्योहोराका अभिलेखहरू हुन्।[७] यी अभिलेखहरूमा दुइवटा कार्यालयहरूका कर्मचारीहरूलाई सरकारी काममा गाउँमा पस्न नपाउने गरी गाउँलेहरूलाई निगाह गरिएको छ। त्यस पछि राजकोषलाई हानि हुननपाओस् भनी गाउँलेहरूबाट खेत प्राप्त भएको बेहोरा लेखिएको छ। राजा गणदेवका संवत् ४८२/ ५६० का पाँच विभिन्न ठाउँहरूमा जारी गरिएका एकै बेहोराका ६ अभिलेखहरू प्रशासकीय अभिलेखका राम्रा उदाहरण हुन्।[८] यिनको मूल भागमा भनिएको छ : "भूतपूर्व राजाहरूबाट दुई अधिकरणहरूले (कार्यालयहरूले) गाउँमा पस्न नपाउने गरी निगाह गरिएकोमा हामीले दुई अरू कार्यालयले समेत गरी चारैवटा कार्यालयहरूले ... पस्न नपाउने गरी निगाह गरेका छौं"। त्यसपछि गाउँलेहरूलाई "हुकुम मानी

निर्धक्क भई बस्ने" आदेश र भविष्यका राजाहरूलाई संबन्धित आज्ञापालन गर्नुपर्ने निर्देश दिइएको छ ।

प्रायः प्रशासनसम्बन्धी कुराको साथसाथ राजाले गरेको निगाह वा प्रसादको चर्चा गर्ने अभिलेखहरूलाई **प्रसादशासनपट्टक** भनिएको छ । नरेन्द्रदेवको अनन्तलिङ्गेश्वरको खण्डित अभिलेख साबिकको दानलाई थमौती गरिएको प्रसादशासनको राम्रो नमूना हो ।[९] नेपाल राज्यको सीमाभित्रका तत्कालीन र भविष्यका अधिकृतहरूलाई संबोधन गर्दै यस अभिलेखमा भनिएको छ: ललितपुर जिल्लाको लुभुदेखि पूर्वको "हंसगृहद्रङ्गमा सरकारी कर्मचारीले पस्न नपाउने गरी **कोट्टमर्यादा** कायम गरिएको पुरानो **प्रसादशासनपट्ट** पहिलेका राजाको गल्तीले हराएकोले पुरानो स्थितिबन्देजलाई कायम राख्न यो शिलापट्टक निगाह भएको हो ।" यसमा जात्रा र अरू धार्मिक कामको देखरेख गर्ने अधिकारी (कुलपति)बाट लोकपालस्वामी देवताका विभिन्न धार्मिक कामको लागि बेग्लाबेग्लै हिसाबले रकम र जिन्सी (धान) दिनु पर्ने कुराको उल्लेख गरिएको छ । अन्तमा "दानमा दिइएको जग्गा थाम्नु दान दिनुभन्दा पनि उत्तम हो" भन्ने पौराणिक वाक्य, संवत्, महिना, तिथि र दूतकको उल्लेख छ ।

लिच्छविकालमा कुनै गाउँ वा क्षेत्रलाई "कोट्टमर्यादासम्पन्न" घोषित गरिनु राजाको ठूलो निगाह मानिन्थ्यो । सुरक्षाको लागि बनाइएको किल्लालाई कोट्ट र त्यसलाई दिइने सुविधालाई कोट्टमर्यादा वा कोटको दर्जा भन्ने गरिएको छ ।[१०] कोट्टको सीमाभित्र गाउँ, घर-खेत हुन्थे र त्यहाँका निवासीहरूलाई विशेष सुविधा दिइन्थ्यो । कोट्टको दर्जा पाएको गाउँमा मालपोत र अरू कर उठाउने कर्मचारीहरूको प्रवेश वर्जित गरिएको हुन्छ । अधिकांश अवस्थामा गाउँहरूले करको रूपमा बुझाउनु पर्ने रकम वा वस्तु माफ गरिएको पाइन्छ ।[११] केहीमा खास कार्यालयको काम गर्ने अधिकार दान पाउने व्यक्ति वा दानपतिलाई वा ग्रामवासीहरूलाई नै सुम्पिएको छ ।[१२] केही अभिलेखहरूमा राजाबाट दान दिइएको जग्गाका किसानहरूले सबै किसिमका करको रकम दानपतिलाई दिनुपर्ने आदेश दिइएको छ ।[१३] केहीमा बग्गी, गाडा र साँढे पस्न नपाउने गरी निगाह गरिएको छ ।[१४] केहीमा निर्धारित गाउँका सीमाभित्रका जनतालाई गहना लगाउन सक्ने निगाहको साथसाथै ठूला अपराध गर्नेहरूको मात्र अंश सरकार लाग्ने र उसका अंशियारहरूसँग केही नलिने गरी निगाह गरिएको छ ।[१५] कोट्टमर्यादासम्पन्नको उल्लेख प्रसादशासनमा झैं जग्गादानको प्रसंगमा पनि पाइन्छ ।

केही प्रसादशासन सीधै कर्मचारीहरूलाई संबोधन गरिएका हुन्छन् । टिस्टुङ पालुङ भेगका दुइवटा अभिलेखहरू यसै प्रकारका छन् ।[१६] नेपालीहरूको कल्याणकामना गर्दै आरंभ गरिएको ती अभिलेखहरूमा अधिकृतहरूलाई संबोधन गरी सरकारी स्वीकृतिविना निकासी गर्न नहुने बाहेक अन्य वस्तु लिएर जाने र फर्कने गाउँका निवासीहरूले बुझाउनु पर्ने दस्तूर माफ गरिएको बेहोरा दिइएको छ । काठमाडौंको यंगालहिटीको नरेन्द्रदेवको अभिलेख भिन्न किसिमको छ । यसमा कसैलाई सम्बोधन गरिएको छैन बरु त्यस ठाउँमा राजा नरेन्द्रदेवले भावी

राजाहरूलाई बाटो देखाएको कुरा छ। यसअनुसार अघि अग्रहार वा बिर्तासहित दुई मन्दिरहरूको जिम्मेदारी दक्षिणकोलिग्रामद्रङ्गलाई दिइएकोमा भूमगुप्तले (भौमगुप्तले) सो हरिदिँदा प्रजाको हितको लागि सो थमौती गरी निगाह गरियो। यसनिम्ति दिइएको बिर्तामा चाटभटले पस्नपाउने गरी कोट्टमर्यादा निगाह भएको छ।

मर्यादापण अर्थात् दर्शनभेटको रूपमा जागिरदारहरूले बुझाउनु पर्ने रकमको बारेमा स्थितिबन्देज गरिएको प्रसादशासन पनि पाइन्छन्। राजा अंशुवर्माको संवत् ३०/६०६ को काठमाडौंको हाँडीगाउँको अभिलेखमा दरवारका मन्दिर, देवता, कार्यालय, पदाधिकारी र कर्मचारीहरूले मर्यादाको रूपमा पाउने नगद (मर्यादापण) को विवरण दिइएको छ।[१७] यसमा दूतकको उल्लेख पाइँदैन। अंशुवर्माकै दुई वर्षपछिको हाँडीगाउँकै अर्को अभिलेखमा घरखेत भएको प्रत्येक गृहस्थबाट देवमन्दिर, विहार, राजा, पाञ्चाली, गुठियार वा गौष्ठिक र ब्राह्मणहरूको लागि पण र पुराणको रूपमा नगद उठाइने श्रावणिकादान अर्थात् साउने करको रकमको निर्धारण गरिएको छ। यसमा पनि दूतक छैन र संवत् र मितिभन्दा पहिले "कसरी मेरो प्रजा सुखी होला भनी यो प्यारो व्यवस्था बाँधिएको हो" भनिएको छ।[१८] पुण्यवृद्धिको निम्ति मूर्ति वा मन्दिरको स्थापनाको साथसाथ प्रसादशासनका बेहोरा भएका अभिलेखहरू पनि पाइन्छन्। केही प्रसादशासनको सुरु देवस्तुतिबाट गरिएको छ।[१९]

मल्लकालीन प्रसादशासनको बेहोरा र भाषामा फरक पाइन्छ।[२०] प्रायः संस्कृतमा सुरू गरिएका यस्ता अभिलेखमा उपाधिसहित राजाको नाम र त्यसपछि नेपालभाषामा निगाहको उद्देश्य र विवरण, साक्षी (दृष्टसाक्षी), नेपालसंवत्मा वर्ष, महिना, पक्ष र तिथि हुन्छन्। यस्ता शिलापत्रको साथसाथ ताम्रपत्रमा समेत कुँदाई मन्दिरमा वा राजदरवारका भित्तामा कीला ठोकी जडिएका पाइन्छन्। यिनको बेहोरा एकनासको पाइँदैन।

## दानशासन

भूमिदानको विवरण दिने अभिलेखलाई दानपत्र भनिन्छ। दान पाउनेले पालन गर्नुपर्ने शर्त र नियमको व्याख्या गरी निगाह गरिएको राजकीय दानपत्रलाई दानशासन भनिन्छ।[२१] लिच्छविकालीन दानशासनको सुरुका बेहोरा प्रसादशासनभन्दा बढी फरक छैन। दान पाउने व्यक्ति वा मन्दिर, विहार, भिक्षुसंघ वा भिक्षुणीसंघ जस्ता संस्थाको नाम, उसले पालना गर्नुपर्ने शर्त र नियम, जग्गा कमाउने रैतीहरूले गर्नुपर्ने कर्त्तव्य, जग्गाको चार किल्ला, जग्गाको परिमाण वा ठेकिएको कुत(पिण्डक), जग्गादान गर्नेले पाउने पुण्यको बखान वा दाताको प्रशंसा र हिनामिना गर्ने वा मास्ने व्यक्तिले पाउने नरकवास र उत्पीडन जस्ता कुराहरू पाइन्छन्। प्रसादशासनमा झैं यसको अन्त उपाधिसहित दूतकको नाम, महिना, पक्ष, र तिथिमा गरिएको हुन्छ।

राजा वसन्तदेवको संवत् ४२८ (५०६ ई.) को थानकोट अभिलेखमा राजाले आफ्नी बहिनी जयसुन्दरीलाई सन्तान-दर-सन्तानले पाउने गरी गाउँ दान दिएका छन्।[२२] त्यस गाउँलाई कोट्टको दर्जा दिइएको छ र चाटभट जस्ता सरकारी कर्मचारीहरूलाई त्यहाँ जान मनाही गरिएको छ। त्यसपछि क्रमशः जग्गाको चार किल्ला छुट्याइएको छ; गाउँका रैतीलाई दुःख दिन नहुने आदेश र अन्यथा गर्नेलाई नसहने धमकी दिइएको छ; रैतीहरूले गाउँबाट उठ्ने सबै किसिमका कर र कुत नयाँ मालिक्नीलाई नै दिनु र उनैले अह्राएको काम गरी उनलाई खुसी राख्नु भन्ने आदेश दिइएको छ। त्यसपछि भूमिदानको महिमाको बखान गर्ने र त्यसलाई मास्नेलाई नरकमा बस्नु पर्ने आशयका पौराणिक वाक्यहरूका उद्धरण दिइएका छन्।[२३]

धेरैजसो दानशासनमा दान दिइएको जग्गालाई 'चाटभटले पस्न नपाउने' गरी कोट्टमर्यादासम्पन्न घोषित गरी निगाह गरिएको हुन्छ। चाटभटको अर्थ गाउँमा गई मालपोत र अरू किसिमका कर उठाउने सरकारी कर्मचारी भन्ने गरिएको छ। यसबाट आफ्नू गाउँमा सरकारी कर्मचारीहरूलाई पस्न मनाही गर्नु पनि गाउँलेहरूको लागि राजाको ठूलो निगाह मानिन्थ्यो भन्ने देखिन्छ, किनभने यस्तो अधिकांश अवस्थामा मालपोत मिनाहा गरिएको छ।[२४] त्यस्ता गाउँका दानपतिलाईनै कर उठाउने र कहिलेकाहीँ स्थानीय मुद्दा छिनी अपराधीलाई दण्डसजाय दिने जिम्मेवारी समेत सुम्पिएको पाइन्छ। कोट्टमर्यादाको साथसाथ, **भूमिच्छिद्रन्याय, अग्रहार** (विर्ता), **वृत्ति, वृत्तिभुक्** र **वार्त** शब्दहरूको उल्लेख पाइन्छ। भूमिच्छिद्रन्याय प्राचीन भारतीय दानशासनमा पनि चलेको संस्कृत नीति वा आहान हो। छिद्रको अर्थ प्वाल हो: भूमिमा प्वाल पार्नु भनेको पर्तीजग्गामा पहिलो पल्ट खेती गर्नु (कमाउनु) हो। ऋषिमुनि र आचार्यलाई तपोभूमि, आश्रम र गुरूकुलको लागि यस्तै जग्गा दिइएको उल्लेख संस्कृतसाहित्यमा र गुप्तकालीन भारतीय अभिलेखमा पाइन्छ।[२५] यस्ता जग्गामाथि दान पाउने व्यक्तिको पूर्ण स्वामित्व रहेको मानिन्थ्यो। आबादी गरिसकिएको जग्गा ब्राह्मण, धार्मिक संगठन वा व्यक्तिविशेषलाई दिंदा पनि लगान वा मालपोत मिनाहा गरिएको जग्गालाई 'भूमिच्छिद्रन्याय'अन्तर्गत दिने चलन लिच्छविकालीन नेपालमा पनि चलेको देखिन्छ।[२६] **अग्रहार** शब्दको अर्थ लगान वा मालपोत नलाग्ने स्वतन्त्र स्वामित्व भएको जग्गा भन्ने हुन्छ। राजाले आफ्नु मानिस, ब्राह्मण वा धार्मिक संगठनलाई स्थायी बिर्ताको रूपमा दिइएको भूमिलाई अग्रहार भनिएको पाइन्छ।[२७] अग्रहार भूमिको स्वामित्व दान पाउनेको मानिन्थ्यो। यसरी जग्गा दिँदा "सन्तानदरसन्तानले भोग गर्नपाउने गरी" भन्ने शब्दहरू दानशासनमा पाइन्छन्। अग्रहार पाउनेहरू रैतीकिसानहरू लाई पिण्डक ठेकेर खेती गर्न दिन्थे। 'पिण्डक'को अर्थ कुत भन्ने गरिएको छ। **वृत्ति** र **वार्त** जस्ता शब्दहरू पनि जग्गासँग संबन्धित देखिन्छन्। कर्मचारीलाई जागीरको रूपमा ओहदाबमोजिम सरकारबाट जग्गाको रूपमा दिइने खान्कीलाई वृत्ति भनिएको देखिन्छ। यस्ता वृत्ति पाउनेहरूलाई अभिलेखहरूमा वृत्तिखाने अर्थात् **वृत्तिभुक्/ वृत्तिभुज** भनिएको छ।[२८] वृत्ति शब्दबाटै बनेको वार्त भन्ने शब्द प्रभावशाली व्यक्तिका नाममा

जोडिएका छन्। मानदेवकी छोरी विजयवतीका पतिको नाम वार्तदेवलाभ पाइन्छ। दुइजना दूतकका नाम, दुइवटा बौद्ध विहारका निर्माता वा दाता र अंशुवर्माका एक जना प्रशंसक वार्त भनिएका छन्।[२९]

देवालयको उद्देश्य गरी पूजा, मरम्मत र संभारको लागि दिइएको गुठीजग्गा र त्यसको व्यवस्था गरिएको राजकीय दानशासनको एउटा राम्रो नमूना लगनटोलको शिवदेव द्वितीयको अभिलेख हो।[३०] सबै औपचारिकताको फर्मुला भएको यस अभिलेखमा राजा शिवदेवले स्वयंले स्थापना गरेको शिवदेवेश्वर मन्दिरको मरम्मत संभार र पूजाको प्रबन्ध गर्न वशपाशुपत संप्रदायका शैव आचार्यलाई गुठी जग्गा दिएको कुरा यसमा परेको छ। यस बमोजिम आफ्ना आमाबाबु र आफ्नु समेत पुण्य बढोस् भन्ने कामना गरी भूमिच्छिद्रन्यायले अग्रहार गरी दिइएको सो जग्गाक्षेत्रलाई कोट्टमर्यादाको निगाह गरिएको छ जहाँ चाटभट जस्ता सरकारी कर्मचारीहरूलाई पस्न मनाही गरिएको छ। गाउँलेहरूले सबै किसिमका कर दान पाउनेलाई दिनुपर्ने र उनकै अधीनमा बस्नु पर्ने आदेश दिइएको छ। यसमा जग्गाको चार किल्ला खोलिएको छ। त्यसपछि जग्गा दान पाउनेलाई भोट्टविष्टी नाम गरेको बेगारी अर्थात् ज्याला नलिई शायद भारी बोकी भोट जाने प्रतिवर्ष पाँच जना भरियाको त्यहींबाट बन्दोबस्त गर्नुपर्ने आदेश दिइएको छ। त्यसपछि भविष्यका राजाले यो आदेश मान्नु पर्ने आग्रह गरिएको छ। अनि "ब्राह्मणलाई दिइएको जग्गा थमौती गर्नु दान दिनुभन्दा उत्तम हुन्छ", "भूमिदान दिने व्यक्ति साठी हजार वर्षसम्म स्वर्गमा बस्छ र जग्गा मास्ने व्यक्ति भने त्यति नै अवधिसम्म नरकमा बस्ने छ" भन्ने पौराणिक वाक्य र अन्तमा "यो आज्ञा राजाको आफ्नै हो" भन्ने वाक्य, दूतक, संवत्, महिना, पक्ष र तिथिको उल्लेख पाइन्छ।

मल्लकालीन दानशासन शिलापत्रको साथसाथ ताम्रपत्रमा पनि कुँदिएका हुन्छन्। यिनका उठानमा 'ॐ', वा 'ॐ स्वस्ति', संवत्, महिना, पक्ष, तिथि, नक्षत्र, योग, मुहूर्त, वार, सूर्य र चन्द्रको राशि, दान दिइने जग्गाको चारकिल्ला, क्षेत्रफल र दानको उद्देश्यसहितको संकल्पवाक्यको साथसाथ जग्गा हिनामिना र थिचोमिचो गर्नेले विष्ठाको कीरा भई नरकमा बस्नु पर्ने पौराणिक चेतावनी संस्कृतमै दिइएको हुन्छ। त्यसपछि 'भाषा', 'देशभाषा' 'नेपालभाखा' भन्ने शब्दपछि त्यसै भाषामा भूमिदानको उद्देश्य जग्गा चर्चिनेले गर्नु पर्ने कर्त्तव्य जस्ता कुराको विवरण, दृष्टसाक्षी, दान थमौती गर्ने व्यक्तिमाथि देवताको राम्रो दृष्टि पर्ने कामना र लोभानिपापानि गरेमा 'पञ्चमहापातक' 'गोब्राह्मणादिहत्या', 'कोटिशिवलिङ्ग ध्वंशन' 'तलेजुमाजुको कुदृष्टि' पर्ने जस्ता चेतावनीका शब्दहरू र अन्तमा 'भगवान् वा भगवती प्रसन्न हुन् र ' शुभ होस्' भन्ने वाक्य पाइन्छन्। केहीमा सूर्य, चन्द्र र पृथ्वीलाई पनि साक्षी राखिएको छ। प्रायः सबै किसिमका परवर्ती मल्लकालीन दानपत्र संस्कृत र नेपालभाषा गरी दुई भाषामा छन्।

ललितपुरका राजा योगनरेन्द्रमल्लले भक्तपुरको तलेजु भगवतीको लागि गुठी राखी गरिएको ताम्रपत्र दानशासनको राम्रो नमूना हो।[३१] भक्तपुर दरबारको मूलचोकको भित्तामा सन्धिपत्रहरूको बीच जडिएको सुनको मुलम्मा चढाइएको

संवत् ८१८ (१६९८ ई.) को यो ताम्रपत्र १८ पंक्तिहरूको छ। यसको शिरानीमा ललितपुरका राजाको छाप लागेको छ र पहिलो पंक्तिमा "श्री ३ भवान्यै नमः" र संस्कृतमा शिखरिणीछन्दमा देवीको स्तुति कुँदिएको छ। त्यसपछि क्रमशः संकल्पवाक्य, जगाको चारकिल्ला र पौराणिक चेतावनी दिइएका छन्। दान पाउने व्यक्तिले गर्नु पर्ने कर्त्तव्यहरूको निर्देशन नेवारीमा दिइएको छ। दानको रक्षा गर्नेहरूप्रति श्री३ परमेश्वरीको सुदृष्टि पर्ने कुरा र दृष्टसाक्षी र अन्तमा श्री३ भवानी प्रसन्न हुन् र शुभहोस् भन्ने कामना गरिएको छ।

भक्तपुर दरबारनजिकै खौमाटोलको भवानीशङ्कर मन्दिरको राजा जगत्प्रकाशमल्लको १६६७ ई.को शिलालेख तीन भाषाको दानशासनको नमूना हो।[३२] भवानीशङ्करलाई नमस्कार गरी सुरू गरिएको यो अभिलेख मैथिली पद्य, संस्कृतगद्य र पद्यको साथसाथ नेपालभाषाको गद्यमा लेखिएको छ। अभिलेखको आरम्भ मैथिली र संस्कृत पद्यबाट भएको छ जहाँ मन्त्री चन्द्रशेखर, अन्नपूर्णा र शिवको संझना र राजाको प्रशंसापछि संस्कृतको संकल्पवाक्य र त्यसपछि नेपालभाषामा पूजासामग्री, तिनमा खर्च हुने रकम (दम्म र मोहरमा), अनि "यस पुण्यले राजाको आयु, आरोग्य र राज्यलक्ष्मी बढोस्" भन्ने कामना, दान दिएको जग्गा हिनामिना गर्नेले नरकमा पाउने यातनासम्बन्धी पौराणिक पद्य, संवत् (७८७), महिना, पक्ष, तिथि र 'शुभ होस्' भन्ने वाक्य लेखिएका छन्।

## व्यक्तिगत दानपत्र

व्यक्तिगत दानपत्रमा दानशासनमा झैं औपचारिकता हुँदैन। यिनको आरंभ प्रायः 'ॐस्वस्ति' संवत् र तिथिबाट गरिएको हुन्छ र क्रमशः राजा र दाताको नाम, भूमिको विवरण र दानको उद्देश्य व्यावहारिक भाषामा हुन्छन्। राजाको नाम सम्मानसहित लिइन्छ जसमा प्रायः "भट्टारकमहाराज....को विजयराज्यमा" वा "सय वर्षभन्दा लामो समयदेखि शासन गरिरहेको वेलामा" भनिएको हुन्छ। कुनैमा राजाको नाम हुँदैनन्। यी प्रायः साना आकारका हुन्छन् र कम संख्यामा पाइन्छन्। यिनमा जग्गाको विस्तृत विवरण र सीमा खोलिएको हुँदैन। व्यक्तिगत दानपत्रमा जग्गालाई प्रायः **अक्षयनीवीको** रूपमा गुठी राखिएको उल्लेख पाइन्छ। अक्षयनीवी शब्दको अर्थ कहिल्यै नाश नहुने खजाना भन्ने हुन्छ र यो भूमिदान वा गुठीको सिलसिलामा आउँछ। मूलधन कहिल्यै नाश नहुने र व्याज वा जग्गाको आयस्ताबाट काम चलाउनसकिने अर्थमा यस शब्दको उपयोग भएको हो।[३३] रत्नसंघले देउपाटनमा४७७ ई.मा स्थापना गरेको रत्नेश्वरलाई चढाएको जग्गा आरंभिक व्यक्तिगत दानपत्रको राम्रो नमूना हो।[३४] यसमा सुरूमा वर्ष, महिना, र तिथि दिइएको छ र मानदेवको प्रशंसा गर्दै भनिएको छ: "सधैं वहाँको भक्ति गर्ने रत्नसंघले विधिपूर्वक रत्नेश्वरको स्थापना गरे।" त्यसपछि विभिन्न गाउँमा दान गरिएको २५७० भूमि जग्गाको उल्लेख छ।[३५]

पशुपतिनाथमन्दिरनजिकैका अनेकौं शिवलिङ्गमा यसखाले प्राचीन अभिलेखहरू पाइन्छन्। जयलम्भ नामक व्यक्तिले ४९१ ई.मा जयेश्वरलिङ्गको स्थापना गर्दा सम्वत् ४१३ लेखेपछि "राजा मानदेवको निगाहले" आफूले संसारको

हितको लागि सो स्थापना गरेर सोको कारणपूजाको लागि भनी अक्षय हुनेगरी जग्गा दान गरिएको कुरा लेखेका छन् । यसमा दिइएको जग्गाको कुत पनि तोकिएको छ । तीन पंक्तिको यो अभिलेख तिथिमा टुंगिन्छ ।[३६] नजिकैको भस्मेश्वरको शिवलिङ्गअभिलेखमा[३७] राजाको नाम र शासनवर्ष दिइएको छैन । सम्वत् ४५५ (५३३ ई.) बाट सुरू गरिएको यस अभिलेखअनुसार वार्त प्रतीहार ध्रुवसंघले आफ्नो र आफ्ना आमाबाबुको पुण्य बढोस्, भलो होस् भनी पाँचवटा शिवलिङ्गहरूको स्थापना गरे । त्यसपछि तिनको कारणपूजा र मरम्मत गर्न दान गरिएको भूमिको परिमाण र कुतको उल्लेख गरिएको छ । यसमा आफन्तहरूको गोष्ठीको अधीनमा रहने गरी त्यस जग्गाको व्यवस्था गरिएको छ । यसमा अक्षयनीविको उल्लेख छैन । चप:टोल, ललितपुरको अभिलेखमा[३८] मृगिनी नामकी महिलाले आफ्ना आमाबाबु र पतिको कल्याणको कामना गरी गन्धकुटी (विहार)-को मरम्मत गर्न र सो गर्नु नपरेमा भिक्षुणीसंघलाई भोजन गराउन अक्षयनीवी गरी गुठी राखिएको खेतको ठाउँ र परिमाण दिएकी छन् । यसको आरंभको एक पंक्ति पढ्न सकिएको छैन र दोस्रो पंक्तिमा दाता मृगिनीको परिचय दिइएको छ ।

## संस्मरणात्मक

कसैको संझना वा संस्मरणलाई अभिलेखन गरिएको अभिलेखलाई संस्मरणात्मक भनिन्छ । पाँचौ शताब्दीदेखिका शिवलिङ्ग र मूर्तिको पादपीठ र ढुंगेधारामा कुँदिएका यस्ता अनेकौं अभिलेख पाइन्छन्, जसमा कुनै आफन्तको संझना गरिएको हुन्छ र त्यसबाट पाइने पुण्य उसैलाई जाओस् भन्ने कामना गरिएको हुन्छ । संस्मरणात्मक अभिलेख आकारमा निकै साना हुन्छन् र राजा, रानी वा सामान्य व्यक्तिका पनि हुनसक्छन् । तिलगंगा (गौचर) र लाजिम्पाटबाट पाइएका एकैनासका दुइवटा विष्णुविक्रान्तमूर्तिका पादपीठको एउटै भाखाको अभिलेखमा राजा मानदेवले आफ्नी आमा राज्यवतीको नामको स्मरण गरी उनको पुण्यवृद्धिको कामना गरेका छन् ।[३९] संवत् ३८९ (४६७ ई.) वैशाखशुल्कदिवा २को यस मूर्तिलेखअनुसार "भलो गर्ने मन भएकी आफ्नी आमा राज्यवतीको पुण्य बढिरहोस् भन्ने कामना गरी बुद्धिमान् र दानी राजा मानदेवले भव्य र सुन्दर मन्दिर बनाई देवता र ऋषिहरूले पूजिएका संसारका एउटैमात्र स्वामी विष्णुविक्रान्तमूर्तिको स्थापना गरे ।" राजा मानदेवकी रानी गुणवतीले संवत् ४१९ (४९७ ई.) मा आफ्ना बाबु किन्नरवर्माको स्मरण गर्दै लाजिम्पाटमा शिवलिङ्ग स्थापना गरिन् ।[४०] यसमा संवत् र तिथिपछि भनिएको छ: "पति श्रीमानदेवको निगाहले रानी गुणवतीले भक्तिपूर्वक गरेको शिवलिङ्गस्थापनाबाट पाइने पुण्यरूपी धन आफ्ना स्वर्गीय पिता किन्नरवर्माका लागि कहिल्यै नाश नहुने भइरहोस्" ।

धेरैजसो संस्मरणात्मक अभिलेखहरूमा स्थापना गरिएको देवता वा शिवलिङ्गको नामकरण समेत संझना गरिएको व्यक्तिको वा आफ्नु नाममा 'ईश्वर' शब्द जोडी गरिएको पाइन्छ । गद्यमा वा पद्यमा लेखिएका यस्ता अभिलेख ईसवीका पाँचौ शताब्दीदेखि आठौं शताब्दीसम्मका निकै पाइन्छन् । यिनको आरंभ

संवत् र तिथिबाट गरिएको हुन्छ। यिनमा प्रायः शासकको उल्लेख गरिएको हुन्छ। मूल विषयपछि कुनैकुनैमा जग्गादान वा अक्षयनीवीको उल्लेख पनि पाइन्छ। कुनैमा राजाको नाम पाइँदैन। आफ्नो नाउँमा रत्नेश्वरमहादेवको स्थापना गर्ने रत्नसंघले[४१] प्रभुसंघ नामका आफन्तको संझनामा देउपाटनमा संवत् ४०२ (४८० ई.) मा प्रभुकेश्वरलिङ्गको स्थापना गरी जग्गाको गुठी राखेका छन्।[४२] जलहरीमा कुँदिएको यो अभिलेख संवत्‌बाट सुरू भएको छ र "राजा मानदेवको पाउको निगाहबाट" संसारको हितको लागि प्रभुसंघको नाउँमा शिवलिङ्ग स्थापना गरेको कुरा पद्यमा र जग्गाको विवरण गद्यमा छ। रत्नसंघलाई यहाँ सार्थवाह अर्थात् देशान्तरमा व्यापार गर्नेहरूको नेता भनिएको छ। सम्पूर्ण पद्यमा लेखिएको विजयवतीको शिवलिङ्गअभिलेखका ६ श्लोकहरूमा मानदेवको संझना गरिएको छ। पहिलो श्लोकमा शिव महेश्वरको स्तुति, दोस्रोमा राजा मानदेवको प्रशंसा, तेस्रोमा रानी भोगिनीको गुणगान र चौथो र पाँचौमा विजयवती र उनका पति वार्त देवलाभको तारीफ गरिएको छ। छैठौं श्लोकमा मोक्षको कामना गरी विजयवतीले विजयेश्वरलिङ्गको स्थापना गरेको कुरा परेको छ। अन्तमा संवत् ४२७ (५०५ ई.) र तिथि दिइएको छ।[४३] पलाञ्चोकको विजयस्वामिनीको संवत् ४२५ (५०३ ई.) को दुई पंक्तिको अभिलेख[४४] गद्यमा छ, यस अनुसार : "भट्टारकमहाराजश्रीमानदेवले शासन गरिरहेको वेलामा सम्राट् गृहपतिकी पत्नी विजयस्वामिनीले भगवती विजयेश्वरीको प्रतिष्ठा गरिन्"।

आभीरी गोमिनी नामकी महिलाले सं. ४६२ (५४० ई.)मा आफ्ना स्वर्गीय पतिका नाममा स्थापित अनुपरमेश्वर शिवलिङ्गको अभिलेखमा[४५] तत्कालीन राजाको नामको उल्लेख गरिएको छैन। पद्यबाट आरंभ गरिएको यस अभिलेखमा आभीरीको परिचय र स्वर्गीय पतिको पुण्य बढोस् भन्ने कामना गरी, छोराको अनुमति लिई अनुपरमेश्वर महादेवको स्थापना गरिएको र खेत र गहनाको अक्षयनीवी चढाएको कुराको साथसाथ गद्यमा गुठी खेतको विवरण लेखिएको छ। यसमा भौमगुप्त समेत छोराहरूको कल्याणकामना गरिएको छ। कुनै व्यक्तिको संझना गरी उसले सद्‌गति अर्थात् स्वर्ग वा मुक्ति पाउन् भन्ने कामना गरी मन्दिर निर्माण गर्ने चलन निकै पछिसम्म कायम रहेको देखिन्छ। आफ्नै कल्याणकामना गरी निर्मित मन्दिरहरूमा शिवदेव द्वितीयद्वारा स्थापित शिवदेवेश्वर[४६] र यक्षमल्लद्वारा निर्मित यक्षेश्वर (पशुपति) निकै प्रसिद्ध छन्। काठमाडौंको रणमुक्तेश्वरको निर्माणको उद्देश्य राजा रणबहादुरले मुक्ति पाउन् भन्ने देखिन्छ।

## सन्धिपत्र

शासकहरूका बीच जारी गरिएको संझौता वा सन्धिपत्र पनि महत्त्वपूर्ण राजकीय अभिलेख हो। लिच्छविकालीन सन्धिपत्र पाइएको छैन। सुनको मोलम्मा लगाइएको ताम्रपत्रमा कुँदिएका र दरबारभित्रको भित्तामा जडिएका मल्लकालीन सन्धिपत्रहरू निकै पाइन्छन्। 'ॐ स्वस्ति' र विभिन्न देवदेवीका नामहरूबाट आरंभ गरिएका त्यस्ता सन्धिपत्रमा मूल विषयपछि सबै पक्षहरूले पालन गर्नुपर्ने कर्त्तव्य र सो नगरेमा देवदवीको कुदृष्टि पर्ने धम्की, साक्षी वा दृष्टसाक्षीका

संवत्, महिना, पक्ष, तिथि र अन्तमा 'शुभ होस्' भन्ने कामना गरिएको हुन्छ। धेरैजसो सन्धिपत्र नेपालभाषामा पाइन्छन्। भक्तपुर दरबारको तलेजुचोकका निम्नलिखित तीनवटा सन्धिपत्र उल्लेखनीय छन्। यी सन्धिपत्र तलेजु, करूणामय, पशुपति, गरुडनारायण, गुहचेश्वरी, वज्रयोगिनी वा भगवती, हरसिद्धिका नामहरूबाट सुरू गरिएका छन्। मूल भागमा परेका संभौताका कुराहरू पालन नगरेमा विभिन्न देवदवीको कुदृष्टि पर्ने चेतावनी दिइएको छ, त्यसपछि साक्षी वा दृष्टसाक्षीका नाम, संवत्वर्ष, महिना, पक्ष र तिथि र अन्तमा 'शुभम्' लेखिएका छन्।

भक्तपुरका राजा जितामित्रमल्ल र ललितपुरका राजा योगनरेन्द्रमल्लको बीच ने.सं. ८१६ अर्थात् १६९६ ई.मा भएको संभौता विशुद्ध धार्मिक प्रकृतिको हो।[४७] यस सन्धिपत्रमा एक राज्यले अर्को राज्यको धार्मिक कृत्य र विधिविधानमा हस्तक्षेप वा परिवर्तन गर्न नपाइने कुरामा दुवै पक्षले सहमति जनाएका छन्। यस बमोजिम नगर्नेमाथि देवताहरूको कुदृष्टि पर्ने, गोब्राह्मणहत्या जस्ता पञ्चमहापातक लाग्ने चेतावनी दिइएको छ। ललितपुरका राजा योगनरेन्द्रमल्ल र भक्तपुरका राजा भूपतीन्द्रमल्लको १७०२ ई.को सन्धिपत्र[४८] राजनीतिक प्रकृतिको छ। यसमा देवीदेवताको उल्लेख गर्दै दुवै राजाहरूको नाम लिएपछि भक्तपुरले गोरखा, मकवानपुर र उपाध्या गरी तीन राज्यहरूको सहयोग लिएर ललितपुरलाई आफूतिर मिलाएको र कान्तिपुरको विरूद्ध मोर्चा बाँधेको कुरा लेखिएको छ। यसमा योगनरेन्द्रमल्लबाट चालीस हजार रूपैयाँ धरौटी राख्नलगाइएको कुरा छ। ललितपुर कान्तिपुरसँग मिल्न नजाओस् भनी यसो गरिएको भनिएको छ। यसमा भक्तपुरलाई नसोधी ललितपुर कान्तिपुरसँग मिल्नगएमा सो धरौटी रकम माथिका चारैवटा राज्यहरूले बाँडिलिने र ललितपुरलाई दबाउने भनिएको छ।[४९] भक्तपुरका राजा भूपतीन्द्रमल्ल र कान्तिपुरका राजा भास्करमल्लको बीच ने.सं ८२३ (१७०३ ई.) मा भएको सन्धिपत्रमा[५०] देवदवीहरूका नाम र दुवै राजाका नामको उल्लेख गरेपछि कान्तिपुर र भक्तपुर मिलेर ललितपुरलाई एक्लो पारिएको कुरा परेको छ। कान्तिपुरले भक्तपुरलाई आफूतिर मिलाउन छत्तीस हजार मोहर तथा केही जग्गा धरौटी राखी आफ्नु नेतृत्वमा मात्र अन्य राज्यहरूसँग मदत माग्नु पर्ने र कान्तिपुरको राय विना भक्तपुरले ललितपुरको लागि बाटो खोल्न नहुने शर्त लेखिएका छन्।

### अन्य

पूजा र मरम्मत जस्ता कामको लागि अक्षयनीवी राखिएको वा जग्गादानको उल्लेख भएका कतिपय अभिलेखहरूमा दानमाभन्दा व्यक्तिको संभनामा बढी जोड दिइएको पाइन्छ। यिनका अतिरिक्त कीर्ति वा पुण्य कमाउने उद्देश्यले शिवलिङ्ग, मूर्ति, मन्दिर, ढुंगेधारा वा जलद्रोणी, चैत्य वा घण्टाका निर्माण गरी ससाना अभिलेख कुँद्ने चलन पनि काठमाडौं उपत्यकामा पहिलेदेखि नै चलेको पाइन्छ। यसका निर्माण वा स्थापना गर्ने व्यक्तिको नाम त पाइन्छ तर व्यक्तिविशेषको नाम लिई संभना गरिएको हुँदैन। यस्ता अभिलेखहरू राजा वा

सर्वसाधारण दुवैका पाइन्छन्। यिनलाई निर्माण वा पुण्यकर्मसंबन्धी अभिलेख भन्न सकिन्छ। यिनमध्ये केहीमा जग्गा गुठी राखिएको पनि पाइन्छ। चाबहिलमा पाइएको एउटा अभिलेखमा[५१] कुनै महिलाद्वारा किन्नरीजातकका कथादृश्य कुँदिएको र चित्रहरूले सिंगारिएको मुक्तिदाता भगवान् बुद्धको भवन(चैत्य) कष्टपूर्वक बनाइएको तथा भगवान्को पूजा र भिक्षुसंघलाई भोजन गराउनको लागि जग्गादान गरिएको कुरा ६ श्लोकहरूमा लेखिएको छ। अन्तमा निर्मात्रीले गद्यमा त्यस दानधर्मबाट पाइने पुण्यले अर्को जन्ममा पुरूष हुने कामना गरेकी छन्। यसमा शासकको नाम र संवत् मेटिएको छ। सर्वदण्डनायकको कृपा पाएका ब्राह्मण पुण्यगोमीले आफ्नो पुण्य बढोस् भनी पशुपति आर्यघाटमा संवत् ४५२ (५३० ई.) मा खेत गुठी राखी पार्थिवशिला राखेका छन्।[५२] यसमा राजाको नाम छैन।

संवत् ३८८ (४६६ ई.) मा राजा मानदेवको आज्ञाले सेवक नरवर्माले स्थापित गरेको लाजिम्पाटको शिवलिङ्ग अभिलेख,[५३] मानदेव र आफ्नो प्रशंसा गरी रानी क्षेमसुन्दरीले लाजिम्पाटमा स्थापना गरेको ऐशानलिङ्गको अभिलेख,[५४] (फलक ११) सृष्टि र प्रलयका कारण मानी महादेवको स्तुति गर्दै संसारको दुःख नाश होस् भन्ने कामना गरी राजा मानदेवले विष्णुपादुका फेदीमा राखेको शिवलिङ्गको अभिलेख;[५५] सार्थवाह गुहमित्रले काठमाडौंको टेबहालमा मानदेवको प्रशंसा गरी संवत् ४०२ (४८० ई.) मा इन्द्र नामक सूर्यको स्थापना गरी राखेको अभिलेख,[५६] संवत् ४२७ (५०५ ई.) मा निरपेक्षले आफ्ना दिवंगत आमाबाबुसँग अर्को चोखो जन्ममा भेट गर्ने कामना गरी स्थापना गरेका सालिकको अभिलेख,[५७] मानदेवकी छोरीका छोरा भारविका हाँडिगाउँमा र पाटनको मङ्गलबजारको ढुंगेधाराका अभिलेख[५८] र उपासक मणिगुप्त र उनकी पत्नी महेन्द्रमतीले काठमाडौं धरहरा नजिकै प्राणीको हित र सुखका लागि स्थापना गरेको अवलोकितेश्वरमूर्तिको अभिलेख[५९] यसै प्रकृतिका हुन्।

यस्ता अभिलेखहरू पछिल्ला कालका पनि पाइन्छन्। ने.सं. १०७ (९८७ ई.) मा पाटन कुंभेश्वर धाँय्बुमा राजा गुणकामदेवको पालामा आफ्ना आमाबाबु र गुरुले स्वर्ग र मुक्ति पाउन् भनी उमामहेश्वरको मूर्ति स्थापित गरिएको उल्लेख पाइन्छ। ने.सं. १३२ (१०१२ ई.) को रूद्रदेव-भोजदेवको राज्यकालमा ललितपुरको त्यागलटोल गचाननीको अभिलेखमा दिवंगत भइसकेका आफन्तहरूको भलो होस्, राजा तेजस्वी हुन्, पृथ्वीमा अन्न धेरै फलोस्, सबै प्राणीको भलो होस् भन्ने कामना गरी उमामहेश्वरको मूर्ति स्थापित गरिएको कुरा लेखिएको छ। यसै गरी आफ्नी मरेकी छोरी अमृतश्रीले मुक्ति पाओस् भनी शोकाकुल विजयपालले नन्दपाल नामक मूर्तिकारले बनाएको महागौरीको मूर्ति स्थापना गरेको कुरा देउपाटनको कुनै मूर्तिको पादपीठमा कुँदिएको छ। चाँगु नारायण मन्दिरको प्राङ्गणको दक्षिणपूर्व कुनामा हाल गणेशको मूर्तिको पदपीठमा कुंदिएको अभिलेख यसै प्रकारको हो। यस अनुसार यो पादपीठ विष्णुमूर्तिको हो। (फलक २४)[६०] पछिल्ला कालमा यस्ता अभिलेखहरूका साथसाथ 'देवतालाई प्रीति गरी' अभिलेख कुँदिएका घण्टाहरू निकै संख्यामा पाइन्छन्।

## टिप्पणी

१. धनवज्र वज्राचार्य सम्पादित, **लिच्छविकालका अभिलेख** (काठमाडौं त्रि.वि.,२०३०) पृष्ठ १०-१३ ।
२. उही, पृष्ठ ५४८-५५२ ।
३. Bhagvan Lal Indraji, **Twenty-Three Inscriptions from Nepal Together with Some Considerations on the Chronology of Nepal"** (Trans. from Gujarati by G. Buhler) (Bombay, 1885) No. 18; योगी नरहरिनाथ, **संस्कृतसन्देश** १.३ । यस प्रशस्तिको केही अंश शङ्करमान राजवंशीले **कान्तिपुर शिलालेख सूची** (काठमाडौं :राष्ट्रिय अभिलेखालय, २०२७) पृष्ठ ७०-७२ मा छापेका छन् ।
४. भगवान्लाल इन्द्रजी, **उही** । धनवज्र वज्राचार्य, सम्पादित **मध्यकालका अभिलेख (पाटनखण्ड)** (काठमाडौं : त्रि.वि., २०५६) पृष्ठ ७४-७८ ।
५. वज्राचार्य, **उही**, पृष्ठ २३३, २४१, २४५, २६३, २७९, २८२, ३५४, ३६४, ४०२, ४१४, ४२०, ४५९, ४६५, । शिलापट्टकको अर्थ ढुंगे पाटी भन्ने हुन्छ : (फलक ११) त्यसमा शासन शब्द थपेपछि शासकीय ढुंगे पाटीलेख भन्ने हुन्छ । एक ठाउँमा यसै अर्थमा **शिलापट्टकाभिलेख्य** र अर्को ठाउँमा **ताम्रशासन** शब्दको उल्लेख पाइन्छ । ठाउँठाउँमा 'शिलापट्टकले निगाह गरिएको छ' भन्ने शब्दावली पाइन्छ ।
६ यसै कारण मानदेवको औपचारिक राजकीय उपाधि कतै पाइएको छैन । तथापि पलाञ्चोकको एउटा व्यक्तिगत अभिलेखमा अन्य उत्तराधिकारीसरह मानदेवलाई **भट्टारकमहाराज** भनिएको छ । **उही**, पृष्ठ ६७ ।
७. **उही**, पृष्ठ १४५-४८ ।
८. **उही**, पृष्ठ १८७-१९३ ।
९. **उही**, पृष्ठ ४८५-८७ ।
१०. **उही**, पृष्ठ १०२ ।
११. **उही**, ।
१२. **उही**, पृष्ठ ४५८ ।
१३. **उही**, पृष्ठ ९२-९३, ५१४-१५ । पछिल्लो अभिलेखमा राजा शिवदेवले वशपाशुपत सम्प्रदायका आचार्यहरूलाई भूमिच्छिद्रन्यायले अग्रहार वा बिर्ता गराई भूमिदान गरेर तिनैलाई आफैंले स्थापना गरेको शिवदेवेश्वर मन्दिरको देखरेख र मरम्मतको जिम्मा दिएका छन् । कोट्टमर्यादा निगाह भएको सो जग्गाका रैतीहरूबाट सबै किसिमका करहरू उठाएर अग्रहार पाउनेहरूलाई नै दिनुपर्ने र ज्याला नलिई भाराको रूपमा भोट जाने पाँच जना भरियाको वर्षेपिच्छे बन्दोबस्त गर्नुपर्ने जिम्मा वैद्यग्रामका निवासीहरूलाई दिइएको छ ।
१४. **उही**, पृष्ठ ३५४ ।
१५. **उही**, पृष्ठ ४४२-४३ ।
१६. **उही**, पृष्ठ ३०९-३१४ ।
१७. **उही**, पृष्ठ ३०१-२ ।
१८. **उही**, पृष्ठ ३२०-२१ ।
१९. **उही**, पृष्ठ ३३६-३७ । यसमा महादेवको डरलाग्दो स्वरूपको स्तुति गरिएको छ र शांगा गाउँले सरकारलाई बुझाउनुपर्ने तेल र अन्य वस्तुहरू माफ गरी निगाह गरिएको छ । हाल यो पढ्न सकिँदैन ।

२०. मल्लकालीन शुद्ध प्राशासनिक अभिलेख कम छन् र तिनलाई दानशासन्त्रभ्राट/खुटचाउन गाहारो छ ।

२१. हेर्नुस् D.C.Sircar, **Indian Epigraphy** (New Delhi, 1965). 1-4, जहाँ भारतका विभिन्न किसिमका दानपत्र र दानशासनको उल्लेख गरिएको छ ।

२२. धनवज्र वज्राचार्य, **पूर्वोक्त टिप्पणी** १ पृष्ठ ९१-९२ ।

२३. जस्तै "सगर जस्ता धेरै राजाहरूले भूमिको भोग गरिसकेका छन्; जसको पालामा जुन भूमि छ त्यसको फल तिनैले पाउँछन्" र "आफूले वा अरूले दिएको जग्गालाई जसले मास्नेमिच्ने छ, त्यो व्यक्ति साठी हजार वर्षसम्म गुहुको कीरा भएर नरकमा पर्ने छ ।"

२४. **उही,** पृष्ठ १०० ।

२५. J.F.Fleet, ed. **Corpus Inscriptionum Indicarum III** (reprint. Varanasi, 1963).138, 170.

२६. धनवज्र वज्राचार्य, **उही** पृष्ठ ५१४,५१७ । भूमिच्छिद्रन्याय शब्दको उल्लेख नभएतापनि 'सन्तानदरसन्तानले पाउने गरी' (उही पृष्ठ ९२) र 'चन्द्र, सूर्य र पृथिवी रहुञ्जेलको लागि' (**उही** पृष्ठ ५१४) जस्ता शब्दावली पाइन्छन् ।

२७. **उही** पृष्ठ २९८, ४६४, ४९७, ५००, ५१५ । धनवज्र वज्राचार्यको विचारमा (पृष्ठ ९६) अग्रहार बिर्ता हुन्थ्यो जो दान पाउनेका सन्तानदरसन्तानले भोग गर्थे र त्यस्ता जग्गाबाट उठ्ने सबै किसिमका कर सो जग्गावालले‌नै पाउँथ्यो । यो शब्द प्राचीन भारतीय अभिलेखहरूमा पनि प्रचलित छ ।

२८. **उही,** पृष्ठ २४८, ४१९-२० । अधिकृतहरूको उल्लेख गर्दा फलाना कार्यालयबाट वृत्ति खाने भनिएको पाइन्छ, जस्तै कुथेर अड्डाबाट वृत्ति खाने अधिकृतहरूलाई **कुथेर्वृत्त्यधिकृत** (पृष्ठ २४४) र माप्चोक अड्डाबाट वृत्तिखाने अधिकृतहरूलाई **माप्चोकवृत्तिभुजः** (पृष्ठ ४३९) र पश्चिमाधिकरणका अधिकृतहरूलाई **पश्चिमाधिकरणवृत्तिभुजः** (पृष्ठ ३५७) भनिएको छ । कतै (पृष्ठ ४१९-२०) गीनुङवृत्तिभुजः र दिग्वारवृत्तिभुजःलाई सम्बोधन गरिएको छ । निगाह पाएका केही गाउँमा **कुथेर्वृत्त्यधिकृत**ले त्रिकर उठाउन मात्र पस्नुपर्ने र अरू कार्यालयका अधिकृतहरूले पस्न नपाउने व्यवस्था गरिएको पाइन्छ । कहीं वृत्तिमा दिइएको जग्गाको चार किल्ला समेत खोलिएको छ ।

२९. हेर्नुस् **उही** पृष्ठ ८३, १९९, २४५, २७२, ३७८, ४५७, ४९७ । यस्ता केही नाम हुन् : भगवान् हरिहरको मूर्ति स्थापना गर्ने स्वामीवार्त्त, काठमाडौंको भोटाहिटीमा ढुंगेधाराका निर्माता वार्त्त विभुवर्मा, विहारका निर्माता महाप्रतिहार वार्त्त सुजातप्रभ र वार्त्त कल्याणगुप्त तथा दूतकका रूपमा उल्लिखित वार्त्त रामशील र वार्त्त भोगचन्द्र ।

३०. **उही,** पृष्ठ ५१४-१५ ।

३१. **अभिलेख-सङ्ग्रह** सातौं भाग (काठमाडौं : २०१९) पृष्ठ २९-३० ।

३२. **उही** पृष्ठ २१-२३ । यसमा संस्कृत शुद्ध छैन । खर्च हुने रकम दम्म र मोहरमा दिइएको छ ।

३३. बंगालका गुप्तकालीन अभिलेखहरूमा पनि यसै अर्थमा अक्षयनीवी शब्दको उपयोग भएको पाइन्छ । यसको स्थायित्वमाथि जोर दिन कतै 'चन्द्र, सूर्य र तारा झैं शाश्वत' भनिएको छ ।

३४. धनवज्र वज्राचार्य, **पूर्वोक्त** पृष्ठ ५०-५१ ।

३५. **उही** पृष्ठ ५४, जहाँ धनवज्र वज्राचार्यले भूमिलाई रोपनीबराबरको क्षेत्रफल भएको भूखण्ड मानेका छन् ।

३६. **उही** पृष्ठ ६२-६३ । यसमा २०० मानिका कुत आउने ४५० भूमि भनिएको छ । धनवज्र वज्राचार्यको विचारमा मानिकां शायद मुरी बराबरको नापो थियो (**उही** पृष्ठ ४-६) ।

३७. **उही** पृष्ठ १५५ ।

३८. **उही** पृष्ठ ३८२-८३ ।

३९. **उही** पृष्ठ ३४-३६ । लाजिम्पाटबाट पाइएको मूर्ति हाल राष्ट्रिय संग्रहालयमा राखिएको छ । वामन अवतारका विष्णुले आफ्ना पाइलाले संसार नाप्न लागेको दृश्य भएको यी दुवै मूर्ति कलाको दृष्टिले अद्वितीय छन् ।

४०. **उही** पृष्ठ ६५-६६ ।

४१. हेर्नुस् माथि **टिप्पणी** ३४ ।

४२. धनवज्र वज्राचार्य, **उही** पृष्ठ ५५-५६ ।

४३. **उही** पृष्ठ ८२-८३ ।

४४. **उही** पृष्ठ ६७ ।

४५. **उही** पृष्ठ १७०-७१ ।

४६. **उही** पृष्ठ ५१४-१५ ।

४७. **अभिलेखसङ्ग्रह**, एघारौं भाग (काठमाडौं : २०२०) पृष्ठ १० ।

४८. **उही** पृष्ठ ११ ।

४९. यस सन्धिपत्रमा उल्लेख भएको उपाध्या राज्यकोबारेमा जानकारी भएको छैन । उही पृष्ठ ६ ।

५०. **उही** पृष्ठ १२ ।

५१. धनवज्र वज्राचार्य, उही पृष्ठ १-२ । यस अभिलेखलाई सम्पादकले मानदेवभन्दा पहिलेको मानेका छन् । यस लेखकले त्यस्तो मान्नुपर्ने कुनै कारण देखेको छैन ।

५२. **उही** पृष्ठ १४१ । यो अभिलेख बाटुलो ढुंगाको चारैतिर कुँदिएको छ ।

५३. **उही** पृष्ठ ३१ ।

५४. **उही** पृष्ठ ३९ ।

५५. **उही** पृष्ठ ४१ ।

५६. **उही** पृष्ठ ५९ । हाल यसमा सूर्यमूर्तिको ठाउँमा भैरवको मूर्ति स्थापित छ ।

५७. **उही** पृष्ठ ७९-८० । हाल त्यो सालिक पाइँदैन ।

५८. **उही** पृष्ठ १७९, २०८-२०९ ।

५९. **उही** पृष्ठ १७७ ।

६०. **अभिलेख संग्रह** भाग २, २०१८, पृ. १३ ।



## अध्याय छ

# अभिलेखहरूका संवत्

अशोकका अभिलेखहरूमा राज्याभिषेकका वर्षबाट कालगणना गरिएको छ।[1] पाँचौ शताब्दीदेखि आठौं शताब्दी ई.सम्मका अभिलेखहरूमा दुई बेग्लाबेग्लै संवत्हरू पाइन्छन्। नवौं शताब्दी ई.देखिका सबै अभिलेख, पाण्डुलिपि र सिक्काहरूमा नेपालसंवत्का वर्ष पाइन्छन्। अठारौं शताब्दी सम्म शकसंवत् र पछि विक्रमसंवत्को चलन चलेको छ। पहिलो संवत् वर्ष ३८१ देखि वर्ष ५२६सम्म प्रायः लगातार र केहीमा वर्ष ५३५ र ५३६ सम्म पाइन्छन्।[2] दोस्रो संवत् भने अंशुवर्माको वर्ष २९को अभिलेखबाट सुरु हुँदै वर्ष १५७ सम्म प्रायः लगातार र नवौं शताब्दी ई.मा नेपालसंवत् सुरू नहुन्जेल फाटफुट रूपमा चलिरह्यो।[3] यी दुवैका नाम किटेर कतै नलेखिएकाले ती कहिले सुरू भएका कुन संवत् थिए भन्ने बारेमा अनेक अनुमान गरिएका छन्। सबै संवत्हरूको आरम्भ भने कार्तिकशुक्लप्रतिपदामा भएको तथ्य जानिएको छ।[4]

सजिलो र एकरूपताको लागि यस पुस्तकमा ईसवी सन्को उपयोग गरिएको छ। ईसवी सन्को आरम्भ हुनुभन्दा पहिलेको कुरा गर्दा यहाँ **ईसापूर्व** (ई.पू.) भन्ने शब्दको व्यवहार गरिएको छ। विक्रमसंवत्को वर्ष २०६०बाट इसवीको वर्ष २००३ घटाउँदा यी दुईको बीचमा ५७ वर्षको फरक हुने र २०६० को पुषको आधाआधी अर्थात् जनवरी १ देखि २००४ ई. हुनेहुनाले यो फरक ५६ वर्षको रहने कुरा बुझ्न सकिन्छ। पौषको आधाबाट चैत्र मसान्तसम्म (जनवरी १ देखि अप्रिल १५ तिरसम्म) भने ५६ वर्ष घटाउनु पर्दछ। यसको अर्थ ई. पू. ५७को अप्रिलमा विक्रमसंवत् सुरु भयो भन्ने हुन्छ। शकसंवत्को आरम्भ ७८ ईसवीमा अर्थात् विक्रमसंवत् १३५मा भयो (ई.पू. ५७ + ७८ ई.)। यसकारण विक्रमसंवत्लाई शकसंवत्मा परिवर्तित गर्न १३५ घटाउनु पर्दछ र शकसंवत्लाई ईसवीमा लग्न ७८ जोड्नुपर्छ। ३१९/३२० ई.मा गुप्तसंवत् चलेको मानिएकोले यसमा त्यति नै वर्ष जोडेमा ई. सन्को वर्ष बन्दछ। हर्षसंवत् भारतमा ६०६ ई.मा चलेको मानिन्छ। अक्टोबर ८७९ (वि.सं. ९३७ कार्तिक) मा नेपालसंवत् सुरू भयो।[5] त्यतिखेर ई.को वर्ष ८८० सुरू हुन दुई महिना केही दिन बाँकि थिए। साधारण व्यवहारमा नेपाल संवत्लाई ८८० ई.मा सुरू भएको मानेर हिसाब गरिन्छ।

अंशुवर्माको नाम उल्लेख भएका अभिलेखहरूका वर्षहरूले यी संवत्हरूको आपसी संबन्धबारे केही सङ्केत दिएका छन्। पहिलो संवत्का वर्ष ५१६ देखि वर्ष ५२६ सम्मका अभिलेखहरूमा अंशुवर्मा शिवदेवका सहायकका रूपमा[5] र अर्को संवत्का वर्ष २९देखि वर्ष ४५सम्म र संवत् ५३६मा एक्लै राजाका रूपमा देखापर्छन्।[6] यस तथ्यले वर्ष २९, वर्ष ५२६भन्दा पछिको हुनुपर्छ र ५३६ चाहिं

पुरानै संवत्को वर्ष हुनुपर्छ भन्ने अनुमानको आधार बनाएको छ। ६४३ ई.मा चीन फर्कनुअघि लुम्बिनी क्षेत्रहरूमा यात्रा गर्ने चीनियाँ यात्री युवान च्वांगको यात्रावर्णन बमोजिम त्यतिखेर अंशुवर्मा मरिसकेका थिए।[७] यसबाट अंशुवर्मालाई जीवित देखाउने दोस्रो संवत्को वर्ष ४५ ६३७ ई. भन्दा पहिलेको देखिनआउँछ। संवत्हरूको पहिचान गर्दा यी कुराहरूमाथि पनि मनन गर्नुपर्दछ।

## पहिलो संवत्

वर्ष ३८६ देखि १४० वर्षसम्म प्रायः लगातार चलेको पहिलो संवत्का बारेमा विभिन्न लेखकहरूले आफ्ना समयसम्म पाइएका अभिलेखहरू, पञ्चाङ्गसिद्धान्त र भारतीय इतिहासका सन्दर्भहरूको आधार लिएर अनेक मत बनाएका छन्। ती यस प्रकार छन् :

(१) ईसापूर्व ५६/५७ मा चलेको विक्रमसंवत्संबन्धी भगवान्लाल इन्द्रजीको मत।

(२) ३१९/३२० ई.मा चलेको गुप्तसंवत्संबन्धी जे.एफ. फ्लीटको मत।

(३) ११० ई.मा सुरु भएको लिच्छविसंवत्संबन्धी सिल्वाँ लेवीको मत।

(४) ३४ ई.मा सुरू भएको संवत्संबन्धी के.जी. शङ्करको मत।

(५) ५६ ई.मा वा ७६ ई.मा सुरु भएको लिच्छविसंवत्संबन्धी शङ्करमान राजवंशी र श्यामसुन्दर राजवंशीको मत।

(६) ७८ ई.मा सुरु भएको शकसंवत्संबन्धी आर.सी. (रमेशचन्द्र) मजुमदारको मत।

### (१) विक्रमसंवत्

हिन्दु परंपरामा मालवा (उज्जयिनी) का राजा विक्रम र उनले चलाएको संवत्बारेको कथा निकै प्रसिद्ध छ। तथापि ईसापूर्व ५६/५७ का यी राजाको ऐतिहासिता स्पष्ट छैन र प्राचीन लेखोटहरूमा संवत्को यो नाम पाइँदैन, बरु मिल्दोजुल्दो संवत्लाई मालवसंवत् भनिएको छ। मालव नामका गणतान्त्रिक जाति ईसापूर्वका आरम्भिक शताब्दीहरूमा राजस्थानको जयपुरमा देखिन्छन्। पछि तिनले अवन्तीलाई जितेर मालवराज्यको स्थापना गरे। चौथो शताब्दीमा यी समुद्रगुप्त र चन्द्रगुप्त द्वितीय (राज्याभिषेकवर्ष ३८० ई.) द्वारा पराजित भए। पाँचौं-छैठौं शताब्दी ई.का पश्चिम भारतका केही अभिलेखहरूमा यी पुनः देखिन्छन्। "मालव गण(जाति) को स्थापनाको ...वर्षमा" वा "मालवपूर्व" जस्ता शब्दहरू र "मालवानां जयः" लेख भएका त्यतिखेरका सिक्काहरू पाइएका छन्। मूल रूपमा मालवगणले चलाएको उक्त संवत्मा त्यसपछि विक्रम नाम जोडिएको हुनुपर्छ भन्ने धेरैको अनुमान छ। विक्रमसंवत्को वर्षको आरंभ भारतका भिन्नभिन्न भागमा अलगअलग महिनामा मनाइन्छ। उत्तरभारतमा यस संवत्को आरम्भ चैत्रशुक्लप्रतिपदामा र दक्षिण भारतमा भने कार्तिकशुक्ल प्रतिपदामा मनाइन्छ।[८]

नेपालका अभिलेखहरूप्रति चासो राख्ने पहिला लेखक भगवान्लाल इन्द्रजीले आफैंले खोजी प्रकाशित गरेका १५ वटा अभिलेखहरूका आधारमा पहिलो संवत्लाई ईसापूर्व ५६/५७ मा उठेको विक्रमसंवत् माने।[९] यसरी इन्द्रजीले मानदेवको अभिलेखको वर्ष ३८६ लाई ३२९ ई. र वसन्तदेवको वर्ष ४३५लाई ३७८ ई.को ठाने। दोस्रो संवत्लाई भने इन्द्रजीले उत्तर भारतका राजा हर्षवर्धनले ६०६ ई.मा चलाएको हर्षसंवत् माने। यस बमोजिम अंशुवर्माको अभिलेखको सं. ३४लाई ६४० ई. र पहिलो संवत्को वर्ष ५२६, जुन वर्षसम्म अंशुवर्मा शिवदेवका साथ थिए, ४६९ ई. हुने भयो। अंशुवर्माको नाम भएका सं. २९ देखि सं. ४५सम्मका वर्षहरूलाई हर्षसंवत्का मान्दा ती क्रमशः ६३५ र ६५० ई. हुने भए। यसको अर्थ भयोः अंशुवर्माले ४५९ ई. (सं.५१६) देखि ६५१ ई. (संवत् ४५) सम्म अर्थात् १९१ वर्षसम्म सक्रिय जीवन बिताए, जो सम्भव थिएन। सीमित स्रोतसामग्रीमा आधारित विक्रमसंवत्को धारणालाई पछि पाइँदै गएका सामग्रीहरूले नै यसरी खण्डन गरिदिएका छन्।[१०]

## (२) गुप्तसंवत्

गुप्तशासक चन्द्रगुप्तप्रथमले ३१९/३२० ई.मा राज्यस्थापनाको वेलामा गुप्तसंवत्को आरंभ गरिएको मानिन्छ, जो भारतका केही अभिलेखहरूमा "गुप्तवर्ष" वा "गुप्तकाल" भनिएको छ। चन्द्रगुप्तप्रथमका छोरा समुद्रगुप्तको इलाहाबादस्तम्भलेखमा सम्राट्लाई करकोसेली दिई खुशी तुल्याउने सीमावर्ती राज्यहरूमध्ये नेपालको पनि उल्लेख पाइने कुराको आधारमा जोहन फेथफुल फ्लीटले पहिलो संवत्लाई गुप्तसंवत् माने।[११] यो मत मान्दा मानदेवको अभिलेखको वर्ष ३८६ ७०५ ई. हुनआउँछ। दोस्रो संवत्लाई फ्लीटले पनि हर्षसंवत् ठानेर अंशुवर्माको वर्ष ३४ लाई ६४० ई.माने। यो मत मान्दा अंशुवर्मा मानदेवभन्दा पहिलेका देखिनआउँछन्। त्यतिखेर सेसिल बेण्डालले आफूले छपाएको शिवदेव र अंशुवर्माको एउटा अभिलेखको संवत् ५१६ लाई गल्तीले ३१६ पढेका थिए।[१२] फ्लीटले त्यसलाई सकारेर ६३५ ई.को माने। हालसम्म शिवदेव र अंशुवर्माका वर्ष ५२६ सम्मका अभिलेख पाइएका छन् र अंशुवर्माको सं ३४ पढिएको वर्षलाई २९ भनी संशोधन गरिएको छ।[१३] यसबमोजिम संशोधन गर्दा अंशुवर्मा ६३५ ई.मा स्वतन्त्र राजा थिए र ८३५देखि ८४५ ई.सम्म शिवदेवका सहायक थिए भन्ने कुरा मान्नुपर्ने हुन्छ।[१४]

राधागोविन्द बासकको विचारमा संवत् ३८६देखि ४८९सम्मका वर्षहरू विक्रम संवत्का हुन्; त्यसपछिका वर्षहरू गुप्तसंवत्का हुन्। दोस्रो संवत्लाई भने उनले पनि हर्षसंवत् माने।[१५] यसबमोजिम मानदेवको सं. ३८६ ३२९ ई.; शिवदेव र अंशुवर्माको समय ६३५ ई. (गुप्तसंवत् ३१६) र अंशुवर्माको वर्ष ३४ ६४० ई. हुने भयो। बासकले लेवीको तर्कको वास्तै नगरी ५१६लाई ३१६ माने। भारतमा गुप्तसाम्राज्यको चकचकीको समयमा नेपालमा विक्रमसंवत् चलेको र गुप्तसाम्राज्यको अन्त भइसकेपछि भने गुप्तसंवत् चलेको भन्ने बासकको मतको मजुमदारले सटीक आलोचना गरेका छन्।[१६]

### (३) ११० ई.मा चलेको लिच्छविसंवत्

गुप्तसम्राट् र हर्षवर्धनको राजनीतिक प्रभाव नेपालमा नपरेकोले नेपाल गुप्तसंवत् र हर्षसंवत् चलाउन बाध्य नभएको कुरा सिल्वाँ लेवीले गरे। उनले पहिलो संवत्लाई ११० ई.मा लिच्छविहरूले या त आफ्नु मूल थलो भारतको वैशालीबाट ल्याएको, या नेपालमा लिच्छविराज्यको स्थापना भएदेखि गन्ती गरी सुरू गरिएको लिच्छविसंवत् भन्ने मत प्रकाशित गरे।[१७] अघि ३१६ पढिएको शिवदेव प्रथमको अभिलेखको अङ्कचिह्नलाई सिल्वाँ लेवीले ५१६ भनी सच्याए। दोस्रो संवत्लाई भने उनले ५९५ ई.मा चलेको तिब्बतीसंवत् माने। सिल्वाँ लेवीको मत मान्दा मानदेवको चांगुनारायणअभिलेखको वर्ष (सं. ३८६) ४९६ ई. (३८६+११०) हुनेभयो; अंशुवर्माको साथ शिवदेवलाई देखाउने अभिलेखका वर्ष (५१६-५२६) ६२६-६३६ ई. र अंशुवर्मालाई मात्र देखाउने संवत् २९-४५ का वर्ष ६२४-६३९ ई. हुने भए। यसबाट ६२४ ई.मा स्वतन्त्र भइसकेका अंशुवर्मा पुनः ६२६ ई.मा शिवदेवका सहायक देखिनआउँछन्। लेवीले अंशुवर्मा कुनै प्रान्तमा शासक रहेका अनुमान गरे। हालसम्म प्राप्त सामग्रीहरूले राज्य खण्डित रहेको भन्ने अनुमानको पुष्टि गर्दैनन्। गणितज्यौतिषका आधारमा पनि लेवीको मतलाई अमान्य घोषित गरिएको छ।[१८]

### (४) ३४ ईसवीमा चलेको संवत्

के.जी. शङ्करले पहिलो संवत्लाई ३४ ई.मा चलेको संवत् माने र वंशावलीहरूमा दिइएका राजाहरूका राज्यकाल सरदर मिल्न आउने दाबी गरे। दोस्रो संवत्लाई भने शङ्करले यशोधर्मा नामका कुनै भारतीय विजेताले ५३८ ई.मा चलाएको संवत् माने।[१९] यसअनुसार मानदेवको अभिलेखको वर्ष ३८६ ४२० ई., शिवदेव र अंशुवर्माको वर्ष ५२० ५५४ ई. र अंशुवर्माको वर्ष ३० ५६८ ई. हुनआउँछ। विभिन्न आधारमा यो मत पनि मानिएन।[२०]

### (५) ५६ ई.मा चलेको लिच्छविसंवत्

१९७३ ई.मा शङ्करमान राजवंशीले लिच्छविसंवत्सम्बन्धी धारणालाई केही हेरफेर गरी पुनः उठाए। त्यति वेलासम्म नेपालका संवत् कार्तिकमा आरंभ हुन्थ्यो भन्ने तथ्य प्रकाशमा आइसकेको थियो। राजवंशीले शकपूर्व २२ अर्थात् ५६ ई.मा लिच्छविहरूले राज्यस्थापना गरेको ठान्दै पहिलो संवत्लाई सोही अवसरमा चलाएको लिच्छविसंवत् र दोस्रो संवत्लाई ५५२ ई.मा आरंभ भएको अंशुवर्मासंवत् माने.।[२१] यस बमोजिम मानदेवको वर्ष ३८६ ४४२ ई. ; शिवदेव र अंशुवर्माको वर्ष ५२६ ५८१ ई. ; अंशुवर्माका वर्ष २९ र ४५ क्रमशः ५८१ र ५९७ ई. हुनआउँछ। लिच्छविराज्यको स्थापनाको समयबारे थाहा छैन र त्यस अवसरमा संवत् चलेको भन्ने प्रमाण कतै पाइँदैन। यस मतलाई पं. नयराज पन्तले अमान्य ठहराएका छन्।[२२] पछि शङ्करमान राजवंशीले श्यामसुन्दर राजवंशीको तलको मतको समर्थनमा आफ्नु मत त्यागे।[२३]

## (६) ७६ ई.मा चलेको लिच्छवि संवत्

श्यामसुन्दर राजवंशीले पहिलो संवत्लाई ७६ ई.मा अर्थात् शकसंवत् सुरु हुनुभन्दा २ वर्षअघि लिच्छविहरूले चलाएको संवत् मानेका छन्।[२४] श्यामसुन्दर राजवंशीको युक्ति धेरै पहिले सीमित स्रोतसामग्रीका आधारमा रमेशचन्द्र मजुमदारको युक्तिभन्दा अधिक भिन्न छैन। तथापि उनले कार्तिकदेखि पनि शकवर्ष सुरु हुनसक्ने शास्त्रीय आधार र त्यसको प्रचलन रहेको चर्चा गर्ने प्रकाशित सामग्रीको उल्लेख गरेका छैनन्।[२५] ७६ ई.मा कुनै संवत्को अस्तित्वको ऐतिहासिक प्रमाण पाइएको छैन।

## (७) ७८ ई.मा चलेको शकसंवत्

छैठौं शताब्दी ई.देखिका अभिलेख र ग्रन्थहरूमा यस संवत्कालागि अनेक शब्दहरू प्रयोग भएका पाइन्छन्। पश्चिमी क्षत्रपहरूका दोस्रोतेस्रो शताब्दी ई.का अभिलेखहरूमा अंकचिह्नको साथ 'वर्षे' (वर्षमा) भन्ने शब्द र चौथो शताब्दी ई.सम्मका केही सिक्काहरूमा अङ्क मात्र लेखिएको छ जो शकसंवत्का वर्ष मानिएका छन्। परंपरामा यस संवत्का प्रवर्तक दक्कनका (पैठण वा प्रतिष्ठानपुरका) शालिवाहन, सातवाहन वा हाल मानिएका छन्। चौधौं शताब्दीदेखि यस संवत्मा शालिवाहन भन्ने शब्द जोडिएको पाइन्छ। यस संवत्का प्रवर्तकको बारेमा धेरै थरिका अनुमान गरिएका छन्। पछिमात्र शकसंवत्मा 'शालिवाहन' भन्ने शब्द जोडिनपुगेको देखिन्छ। शकसंवत् राजा कनिष्कले चलाएको भन्ने विचार धेरैको छ। यद्यपि कनिष्क शक नभई कुषाण जातिको थियो। ७८ ई.मा (वि.सं. १३५ मा) सुरु भएको शकसंवत् दक्षिण भारतमा केही जिल्लाहरूमा बाहेक सबै ठाउँमा प्रचलित छ। उत्तर भारतमा शकसंवत्को वर्षको आरंभ चैत्रशुक्लप्रतिपदामा गरिन्छ र प्रायः त्यसैलाई पञ्चाङ्ग तयार गर्दा गणनाको आधार बनाइन्छ।[२६]

पहिलो संवत्लाई रमेशचन्द्र मजुमदारले शकसंवत् मानेका छन्।[२७] अधिकांश लेखकहरूले यस मतको समर्थन गरेका छन्। यस अनुसार मानदेवको वर्ष ३८६ ४६४ ई. तदनुसार वि.सं. ५२१; शिवदेव र अंशुवर्माको आखिरी वर्ष ५२६ ६०४ ई. (वि.सं. ६६१) हुनआउँछन्। रमेशचन्द्र मजुमदारले दोस्रो संवत्लाई बेग्लै संवत् नमानी शकसंवत्को ५०० वर्ष पूरा भएपछि १ देखि गन्न सुरू गरिएको वर्ष माने। यस बमोजिम अंशुवर्माको अभिलेखको सं. २९ शकसं. ५२९ तदनुसार ६०७ ई. (वि.सं. ६६४) हुनआउँछ। शकसंवत्को मत पुरालेखन र ऐतिहासिक दृष्टिले पनि मिल्दो देखिन्छ।[२८] विचार गर्नु पर्ने कुरा यत्ति हो कि त्यतिखेर नेपालमा कार्तिकदेखि संवत् प्रारंभ हुन्थ्यो नकि वैशाखदेखि। शकसंवत्को हकमा सुमतितन्त्र नामक पाण्डुलिपि ग्रन्थ प्रमाणको रूपमा अघि सार्ने गरिन्छ।

## दोस्रो संवत्

दोस्रो संवत्का बारेमा निम्नलिखित अनुमान गरिएका छन् :

(१) ६०६ ई.देखि चलेको हर्षसंवत् (भगवान्लाल इन्द्रजी, जे.एफ. फ्लीट र आर.जी.बासक),

(२) ५९५ ई.देखि चलेको तिब्बती संवत् (सिल्वाँ लेवी) ठकुरी संवत् (के.पी. जायसवाल),

(३) ५३८ ई.देखि चलेको यशोधर्मसंवत् (के. जी. शङ्कर),

(४) शकसंवत्को ५०० वर्ष पछि एकदेखि गनिएका वर्ष (आर.सी.मजुमदार),

(५) ५७१ ई.देखि चलेको ठकुरीसंवत् (बालचन्द्र शर्मा),

(६) ५७४ ई.देखि चलेको अंशुवर्मासंवत् (हित नारायण झा),

(७) ५५२ ई.देखि चलेको अंशुवर्मासंवत् (शङ्करमान राजवंशी) र ७६ ई.मा उठेको संवत्को ५०० वर्ष पुगेपछि एकदेखि गनिएका वर्ष (श्यामसुन्दर),

(८) ५७६ ई.देखि (शक संवत्४९८ देखि) चलेको मानदेवसंवत् (सुमतितन्त्र)।

### (१) ६०६ ई.को हर्षसंवत्

अंशुवर्माले आफ्ना अभिलेखहरूमा राजाको पदवीको ठाउंमा कुनै राजाको अधीनस्थ शासक भन्ने अर्थमा प्रयोग हुने 'सामन्त' वा 'महासामन्त' जस्ता नम्र उपाधि लिएको र नयाँ संवत्को व्यवहार गरेको कारण भ्रमको सिर्जना भएको छ। भगवान्लाल इन्द्रजीले अंशुवर्मालाई हर्षको सामन्त मानेर उनका अभिलेखहरूको संवत्लाई ६०६ ई.मा सुरु भएको हर्षसंवत् माने। हर्षवर्धन उत्तर भारतका निकै महत्त्वका राजा भए।[२९] भाषावंशावलीमा अंशुवर्माभन्दा पहिले विक्रमादित्य नेपाल आएको बयान पाइन्छ।[३०] हर्षसंवत्को मत मान्नेहरूले कवि बाणभट्टको हर्षचरितको बयानको साथसाथ नेपालमा पाइने यस्ता सन्दर्भहरूको पनि उपयोग गरे। जे.एफ. फ्लीट, गौरीशङ्कर हीराचन्द ओझा र अहमद हसन दानीले यस मतलाई पुरालेखनप्रमाणले पनि पुष्ट गर्नखोजे र हर्षकै समयमा नेपालमा कुटिलालिपि चलेको भन्ने मत स्थापित गरे।[३१]

पहिलो संवत्लाई शकसंवत् मान्दा अंशुवर्मा ५९४ ई. (सं ५१६)मै सामन्त भएका र त्यसको बाह्र वर्षपछि मात्र स्वतन्त्र राजा देखिन्छन्। ६०४ ई. (सं ५२६)सम्म अंशुवर्मा शिवदेवका सामन्त र सं. २९मा स्वतन्त्र राजा देखापर्छन्। २९लाई हर्षसंवत् मान्दा सो वर्ष ६३५ हुनआउंछ। यो मान्दा दुईवटा प्रश्न उठ्छन् : एक, बीचका ३१ वर्षसम्म (६०४ देखि ६३५ ई.सम्म) अंशुवर्मा कहाँ थिए ? दुई, ५९४ ई.सम्म अंशुवर्माको शिवदेवका सामन्तका रूपमा स्पष्ट उल्लेख भए जस्तै ६३५ ई.देखिका अभिलेखहरूमा सार्वभौम राजा हर्षको उल्लेख किन कतै पाइँदैन? स्वयं हर्षको अभिलेख वा नेपालको कुनै अभिलेखबाट पनि अंशुवर्मा सुरुमा शिवदेवको बाहेक कसैको अधीनमा रहेको देखिँदैन। सार्वभौम राजा भएर पनि अंशुवर्माले महासामन्तको पदवी किन लिइरहे भन्ने प्रश्नको ठीक उत्तर

दिनसकिँदैन। अंशुवर्माले लिच्छविराजकुमार उदयदेवलाई आफ्नो उत्तराधिकारी युवराज नियुक्त गरेको र अंशुवर्माको मृत्युपछि उदयदेव राजा भएको प्रमाण पाइएको छ। अंशुवर्मालाई केही सिक्कामा र पछिका केही अभिलेखहरूमा 'महाराजाधिराज' पनि भनिएको छ। ६४३ ई.मा चीन फर्केका चीनियाँ यात्री युवान च्वांगको अनुसार, जो शायद ६३७ ई. ताका नालन्दाको यात्रा गर्दा लुम्बिनी आएका थिए, त्यति वेला अंशुवर्मा भर्खर मरिसकेका थिए र गद्दीमा कुनै लिच्छवि राजा थिए।[३२] अंशुवर्मालाई जीवित देखाउने अन्तिम अभिलेखको संवत् ४५लाई हर्षसंवत्का वर्ष मान्दा अंशुवर्मा ६५१ ई. (हर्ष सं. ४५+६०६) सम्म बाँचेकै थिए भन्ने मान्नु पर्ने हुन्छ र युवान च्वांगको विवरण झुठो ठर्हछ। सिल्वाँ लेवी र रमेशचन्द्र मजुमदारले हर्षसंवत्को मतको खण्डन गरे।[३३] नेपालको तत्कालीन लेखनमा कुटिलाका लक्षण हबी नरहेको कुराको चर्चा पुरालेखनको अध्ययनको प्रसङ्गमा गरिनेछ।[३४] ज्यौतिषको गणनाबाट पनि यस मतलाई अमान्य ठहराइएको छ।[३५]

## (२) ५९५ ई.मा चलेको तिब्बती संवत्

सिल्वाँ लेवीले दोस्रो संवत्लाई ५९५ ई.मा तिब्बतका विजयी राजा स्रङ चङ गम्पोका पिताले चलाएको तिब्बती संवत् माने। लेवीको विचारमा अंशुवर्मा तिब्बती राजाका सामन्त थिए। आफ्नु मतलाई पुष्ट गर्न लेवीले लद्दाखको किंवदन्तीका आधारमा भृकुटीको कथालाई नेपाली इतिहासमा प्रवेश गराए।[३६] यो मत मान्दा अंशुवर्माको स्वतन्त्र राज्यकाल ६२४ ई. (संवत् २९+५९५) देखि ६४० ई. (संवत् ४५+५९५) सम्म हुनआउँछ, र राजा नरेन्द्रदेवको राज्यकालको आरंभ (संवत् ६७) ६६२ ई. (६७+५९५) मान्नु पर्ने हुन्छ। तर ६४५ ई. तिर नेपाल हुँदै भारत जाने चीनियाँ दूत वाङ युञ्चेको बयानअनुसार त्यतिखेर नेपालमा नरेन्द्रदेव राजा थिए र भारतमा हर्ष मरिसकेका थिए।[३७] प्राप्त अभिलेखहरूले अंशुवर्मा र नरेन्द्रदेवको बीचमा २३ वर्षको फरक देखाएका छन्। त्यस वेला नेपालमाथि तिब्बतको राजनीतिक प्रभाव रहेको सम्भावनालाई रमेशचन्द्र मजुमदारले इन्कार गरेका छैनन् तर भोटमा त्यति खेर कुनै संवत् चलेको प्रमाण नपाइने जिकिर गर्दै तिब्बतीसंवत्को मतलाई अमान्य ठहराएका छन्।[३८] यहाँ पाइने कुनै पनि स्रोतसामग्रीले नेपाल तिब्बतको अधीनमा रहेको र त्यहींको संवत् चलेको भन्ने देखाउँदैन। तिथिमितिहरूको जाँच गर्दै पं. नयराज पन्तले यस मतलाई अमान्य ठहराएका छन्।[३९]

मानदेवको पालादेखिको संवत्लाई गुप्तसंवत् मान्ने र ५०० को अंकचिह्नलाई ३०० पढी शिवदेव र अंशुवर्मालाई मानदेवभन्दा पहिलेका मान्ने काशीप्रसाद जायसवालले दोस्रो संवत्लाई लेवीले झैं ५९५ मैं सुरु भएको तर अंशुवर्माले चलाएको ठकुरीसंवत् माने।[४०] जायसवालको मतलाई कुनै पनि प्रमाणले पुष्ट गर्नसकिँदैन।[४१]

## (३) ५३८ ई.मा चलेको यशोधर्मसंवत्

पहिलो संवत्लाई ३४ ई.मा सुरु भएको मान्ने के.जी. शङ्करले दोस्रो संवत्लाई ५३८ ई.देखि चलेको यशोधर्मसंवत् माने।[४२] पश्चिम भारतमा प्राप्त ५३३ ई.को एउटा अभिलेख अनुसार राजा यशोधर्माले हूणहरूलाई धपाएर आसामदेखि समुद्रसम्मका राज्य जितेका थिए। भारतको इतिहासमा अकस्मात् देखापर्ने यशोधर्माको बारेमा नत धेरै कुरा जानिएको छ, न उनले जितेका भूभागहरूको सूचीमा नेपालको नाउँ छ। यशोधर्माले संवत् चलाएको कुरा स्वयं के.जी. शङ्करबाहेक अरू कसैलाई थाहा छैन। विभिन्न दृष्टिले यो मत अमान्य ठहराइएको छ।[४३]

## (४) शक संवत्को ५०० वर्ष पछि ५७८ ई.देखि गनिएको वर्ष

पहिलो संवत्लाई शकसंवत् मान्ने रमेशचन्द्र मजुमदारले अंशुवर्माका पालादेखि पाइने संवत्का वर्षहरूलाई भिन्नै संवत्का नमानी शकसंवत्को ५०० वर्ष पूरा भएपछि (५७८ ई.मा) एकदेखि गनिएको संवत्का वर्ष माने।[४४] यस मतले पहिलो (शक)संवत्का वर्षहरूसँग कुनै विरोध देखाएको छैन र पछाडिको कालक्रम पनि ऐतिहासिक दृष्टिले खासै नमिल्ने किसिमको बनाएको छैन। यो मान्दा अंशुवर्मा शिवदेवका साथमा ६०४ ई.सम्म रहेका; अंशुवर्माको स्वतन्त्र राज्यकाल ६२३ ई.मा टुंगेको र नरेन्द्रदेवको पहिलो अभिलेखको वर्ष ६४५ ई. हुनआउँछ। युवान च्वांगको विवरण झूठो ठहर्दैन। तैपनि पछिपछि पाइएका अभिलेखहरूमा जुन किसिमले संवत्का वर्षहरू लेखिएका पाइन्छन्, तिनले मजुमदारको मतप्रति सन्देह उब्जाउँछन्। एकातिर ५०० वर्ष पूरा भएपछि एकदेखि वर्षगणना गरिएको कुनै उदाहरण पाइँदैन भने अर्कोतिर ५१२ देखि ५३६ सम्मका संवत्वर्षहरू लेखिएका कम्तीमा १६ अभिलेखहरू पाइन्छन्। यिनमध्ये केही वर्ष २९ भन्दा पछिका छन्। यतिका उदाहरणहरूलाई अनियमित वा अपवाद भन्न मिल्दैन। मजुमदारको समयमा नेपालका संवत् कार्तिकमा फिर्थे भन्ने तथ्य थाहा थिएन। ज्यौतिषसिद्धान्तका आधारमा परीक्षण गर्दा यो मत अमान्य ठहरिएको छ।[४५]

## (५) ५७१ ई.देखि चलेको ठकुरीसंवत् वा अंशुवर्मासंवत्

बालचन्द्र शर्माले दोस्रो संवत्लाई ५७१ ई.माा ठकुरीवंशका अंशुवर्माले वर्ष ३०मा आफू सामन्त भएदेखि गणना गर्दै व्यवहार गरेको संवत् माने।[४६] शर्माले अंशुवर्माको साथको शिवदेवको अभिलेखको सं. ५२० लाई शकसंवत् मानी ५९८ ई.को र सं. ३० को अभिलेखलाई अंशुवर्माको पहिलो अभिलेख मानी त्यसको समय ६०१ ई.निर्धारित गरे। तर शिवदेवका साथ अंशुवर्मा ६०१ ई. भन्दा पछि ६०४ ई. (सं. ५२६) सम्मका अभिलेखमा देखिएका छन्। शिवदेव प्रथमको पहिलो अभिलेख सं. ५१२को पाइन्छ र त्यसमा अंशुवर्माको होइन भौमगुप्तको नाम पाइन्छ।[४७] (शक) सं.४९३ को कुनै अभिलेख पाइएको छैन। पाइएका अन्य अभिलेखहरूबाट वर्ष ४७९ देखि ५१२ सम्म (शकसंवत् मान्दा ५५७ ई.देखि ५९० ई.सम्म) भौमगुप्त प्रभावशाली पदाधिकारी देखापर्छन्। शिवदेवका 'सामन्त' अंशुवर्मा पहिलो पल्ट (शक) सं. ५१६ (५९४ ई.) मा देखापर्छन्। शिवदेवभन्दा

पहिले सं.४८९ मा (५६७ ई.मा) अन्य दुई राजा देखिन्छन् अत एव यो मत पनि अमान्य भएको छ।[४८]

## (६) ५७४ ई.मा सुरु भएको अंशुवर्मा संवत्

हितनारायण झाले दोस्रो संवत्लाई ५७४ ई.मा अंशुवर्माले चलाएको संवत् माने। उनको विचारमा पहिलो संवत् शकसंवत्को वर्ष ५२६ र अंशुवर्माको अभिलेखको संवत् ३० एकै वर्ष अर्थात् ६०४ ई. हुनुपर्छ र अंशुवर्माले त्यसको ३० वर्ष पहिले ५७४ ई.मा शिवदेव प्रथमबाट महासामन्त पद पाएको अथवा छुट्टै राज्य खडा गरेको अवसरमा नयाँ संवत् चलाएको हुनसक्छ।[४९] तर पाइएका अभिलेखहरूबाट ५७४ ई. (शक सं ४९६) मा नत शिवदेव देखिन्छन् नअंशुवर्मा नै। बरु त्यतिखेर निर्बल लिच्छवि राजाहरूका साथ शक्तिशाली पदाधिकारी भौमगुप्त देखिन्छन्। शिवदेवको पहिलो अभिलेख सं.५१२ (५९० ई.) को पाइन्छ र अंशुवर्माको उल्लेख गर्ने पहिलो अभिलेखमा संवत् ५१६ अङ्कित छ। त्यतिखेर छुट्टै राज्य खडा गरिएको कुनै प्रमाण पाइँदैन। ज्यौतिष र अन्य आधारमा पनि यस मतको खण्डन गरिएको छ।[५०]

## (७) ५५२ ई.देखि चलेको अंशुवर्मासंवत्

पहिलो संवत्लाई ५६ ई.मा चलेको लिच्छविसंवत् मान्ने शङ्करमान राजवंशीले दोस्रो संवत्लाई ५५२ ई. (शकसंवत् ४७४) मा सुरू भएको अंशुवर्मासंवत् माने।[५१] अंशुवर्माको पहिलो उल्लेख उनकै मत अनुसार हिसाब गर्दा ५७२ ई.मा मात्र भएको पाइन्छ। राजवंशीको विचारमा शिवदेव र अंशुवर्माको संयुक्त शासनको अन्त ५८२ ई.मा भयो र त्यसै वर्ष अंशुवर्मा स्वतन्त्र राजा भए। दिनेशराज पन्तले कालक्रमको हिसाबले यो मत नमिल्ने कुरो देखाएका छन्।[५२] हाल शङ्करमान राजवंशीले श्यामसुन्दर राजवंशीको विचारमा सहमति जनाउँदै आफ्नो मत फिर्ता लिएका छन्।[५३] श्यामसुन्दर राजवंशीको विचारमा ७६ ई.मा चलेको संवत्को ५०० वर्ष पुरा भएपछि १देखि गनिएका वर्ष नै दोस्रो संवत्का वर्ष हुन्। उनको परिकल्पना सुमतितन्त्रको सूचना र मजुमदारको युक्तिमा आधारित देखिन्छ, यद्यपि प्रत्यक्षमा उनले दुवैको आलोचना गरेका छन्।[५४] सुमतितन्त्रले यसलाई ४९८देखि सुरु भएको संवत् भनेको छ र मजुमदारले शकसंवत्को ५०० वर्ष पूरा भएपछि १ देखि सुरु भएको मानेका छन्। श्यामसुन्दर राजवंशीले सुमतितन्त्रले भनेबमोजिम तथाकथित दोस्रो संवत्को पहिलो वर्ष ४९८ सँग मिल्नेगरी लिच्छविसंवत्को उठानमै शकसंवत्बाट दुई वर्ष घटाइसकेका छन्।

## (८) ५७६ ई.देखि (शक संवत् ४९८ देखि) चलेको मानदेवसंवत् (सुमतितन्त्र)

ज्यौतिषविषयको **सुमतितन्त्र** नामक ग्रन्थतिर ध्यान गएपछि नेपाली अभिलेखहरूको पहिलो संवत्लाई **शकसंवत्** र दोस्रो संवत्लाई शकसंवत् ४९८मा (५७६ ई.मा) उठेको **मानदेवसंवत्** मान्ने चलन आम भएको छ। यो संवत् ५७६ ई.मा सुरु भएको कुरा पञ्चाङ्गका आधारमा गणित गर्दा पनि मिलेको दाबी

गरिएको छ। काठमाडौंको राष्ट्रिय अभिलेखालयमा र बृटीश म्यूजियम लण्डनमा गरी **सुमतितन्त्र** नामक ग्रन्थका दुइवटा ताडपत्रपाण्डुलिपि पाइएका छन्। राष्ट्रिय अभिलेखालयको सुमतितन्त्र १३७४ ई.मा भुंजिमोः लिपिमा लेखिएको छ र बृटीश म्यूजियमको प्रति १३५५ ई.मा लेखिएको हो। यहाँ रहेको ग्रन्थमा दुवैतर्फ लेखिएका जम्मा १५२ पत्रहरू छन्; जसमध्ये सुरूका १४३ पत्रसम्ममा मात्र पत्रसंख्या लेखिएको छ र सुरूदेखि ६२ पत्रसम्म एक थरिको लेखावट र ६३ देखि अर्कै गरी दुई थरिको लेखावट पाइन्छ। संस्कृत भाषाको यो ग्रन्थ ज्यादै अशुद्ध छ। ग्रन्थको पुष्प्रमा पौषकृष्ण त्रयोदशी ने.सं. ४५९ लेखिएको छ।[५५] सुमतितन्त्रको रचना ५७६ देखि ८८० ई.को बीच काठमाडौं उपत्यकामा नै भएको भन्ने प.नयराज पन्तको विचार छ।[५६]

सुमतितन्त्रमा मूल श्लोकमा एकथरि लेखावट छ र चिनो दिई लेखिएको टिप्पणीमा भिन्न लेखावट छ र पत्रसंख्या अङ्कित नभएका पत्रहरूमा पनि केही पछिका लाग्ने लेखावट पाइन्छ। यसको पत्र २(ख)का मूल श्लोकहरूमा विभिन्न समयमा चलेका संवत्हरूको परिचय यसरी दिइएको छ :

> दुर्योधन राजा भएपछि कलियुग लाग्ने छ। राजा युधिष्ठिर र दुर्योधनको संवत् २००० वर्षसम्म चल्ने छ। त्यसपछि ८०० वर्षसम्म राजा नन्दको संवत् चल्ने छ। त्यसपछि १३२ वर्षसम्म राजा चन्द्रगुप्तको संवत् चल्ने छ। त्यसपछि २४७ वर्षसम्म राजा शूद्रकको संवत् चल्ने छ। त्यसपछि ४९८ वर्षसम्म शक राजाको संवत् चल्ने छ। राजाहरूका यी संवत् क्रमैसँग बताइए।[५७]

श्लोकको माथितिर चिनो दिई भिन्न लेखावटमा लेखिएको छ : "त्यसपछि ३०४ वर्षसम्म मानदेवको संवत् चल्ने छ"। पत्रसंख्या अङ्कित नभएको आखिरी भागमा भिन्न लेखावटमा संवत्को विवरण यसरी दिइएको छ:[५८] "युधिष्ठिरदुर्ज्जोधन उभो राज्याब्द २०००, नन्द राज्याब्द ८००, चन्द्रगुप्त राज्याब्द १३२, सुद्रकदेव राज्याब्द २४७, शक राज्याब्द ४९८, मानन्देवस्य राज्याब्द ३०४।" यहाँ ४९८ वर्षसम्म शकसंवत् चलेको र त्यसपछि अर्को संवत् चलेको भन्ने अर्थ गरिएको छ। पछि थपिएको वाक्यबाट त्यो संवत् मानन्देवराज्याब्द (मानदेवसंवत्) रहेको र त्यो ३०४ वर्षसम्म चलेको भन्ने आशय पाइन्छ। यहाँ अन्तमा दिइएको अङ्कले संबन्धित संवत् चलेको अवधि र अर्को संवत्को आरंभ जनाउँछ। यस प्रकार शकसंवत् ४९८ तदनुसार ५७६ ई.मा सुरू भएको संवत्को ३०४ वर्ष बितेपछि अर्थात् शकसंवत् ८०२ तदनुसार ८८० ई. लाई नेपालसंवत्तिर गरिएको संकेत मानिएको हो, जो अक्टुबर ८७९ ई.मा सुरू भएको हो। बृटीश म्यूजियमको प्रतिमा पछि थपिएका वाक्य नपाइएता पनि मूल पाठ समान छ। तर त्यहाँ शकराज्याब्द ४९८ को ठाउँमा ४१८ पढिएको छ।[५९]

सुमतितन्त्रको पहिलो परिचय १९०२ ई.मा सेसिल बेण्डालले दिए।[६०] १९३६ ई.मा काशीप्रसाद जायसवालले यस ग्रन्थबारेको सूचना राजगुरु हेमराजशर्माबाट पाएको कुराको उल्लेख गरी त्यसका केही अंश छपाए तर यस विषयतिर ध्यान दिएनन्।[६१] बाबुराम आचार्यले १९३९ ई.मा मानदेव र अंशुवर्माका वर्ष निश्चित गर्न स्रोतको उल्लेख नगरी शायद सुमतितन्त्रकै आधार

लिए ।[६२] संवत्‌को निर्णय गर्ने प्रसंगमा पहिलोपल्ट यसको महत्त्व बुझेर उपयोग गर्ने लेखक लुसियानो पेतेकनै ठहर्छन् ।[६३] यस ग्रन्थले नेपाली इतिहासकारहरू लगायत इतिहाससंशोधनमण्डलको ध्यान भने १९७० को दशकमा मात्र आकर्षित गरेको देखिन्छ । प. नयराज पन्तको संपादनमा सुमतितन्त्र १९७८ मा प्रकाशित भएको छ ।[६४] यस ग्रन्थका आधारमा लिच्छविकालमा प्रचलित संवत्‌हरूको निर्णय गर्ने प्रसंगमा पं.नयराज पन्तको भूमिका महत्त्वको छ । ५७६ ई.मा नेपालमा संवत् चलेको परंपरा तिब्बतमा समेत अंशुवर्माको राज्याभिषेक भएको मानी 'अंशुवर्माको संवत्' भन्ने चलन चलेको कुरा पेतेकले लेखेका छन् ।[६५] कतिपय ग्रन्थहरूमा यसै अनुरूप संवत्‌वर्ष दिइएका छन् ।[६६]

## उपसंहार

संवत्‌सम्बन्धी समस्या अझै टुंगिएको छैन । सुमतितन्त्रको प्रामाणिकतामाथि सन्देह गर्ने आधार छन् जस्तैः पहिलो, चैत्रादि मानिने शकसंवत्‌लाई यस ग्रन्थले कार्तिकादि संवत्‌को आधार मानेको कुरा स्पष्ट छैन । दोस्रो, यस ग्रन्थको प्राचीन प्रति पाइएको छैन । दुवै प्रतिहरू चौधौं शताब्दी ई.का हुन् । राष्ट्रिय अभिलेखालयको प्रतिमा देखिने दुई किसिमका लेखावटमध्ये पुरानो बढीमा एक शताब्दी पहिलेको हुनसक्छ । शङ्करमान राजवंशीले यस ग्रन्थको अशुद्धि वा कोरापनतिर ध्यान आकर्षित गरेका छन् ।[६७] आफ्नु अशुद्ध भाषाले पनि यस ग्रन्थको प्राचीनताबारे सन्देह उब्जाउँछ । तेस्रो, ब्रिटीश म्युजियमको प्रतिमा शकराजाब्द ४९८ को ठाउँमा कसैले ४१८ पढेको कुरामा कसैको ध्यान गएको देखिँदैन । चौथो, नेपालको यस परंपराको मूलको सम्बन्धमा र संवत् चलाउने मानन्देव (यथावत्) को बारेमा कसैले केही बोलेका छैनन् । अंशुवर्माभन्दा अघि ५७६ ई.का भनिएका मानदेवको सुमतितन्त्रमा नामोल्लेख बाहेक ऐतिहासिकता अज्ञात छ, जबकि संवत्‌प्रवर्तक व्यक्ति ख्यातिप्राप्त हुनुपर्ने हो । यस्ता कतिपय आधारमा सुमतितन्त्रको सूचनामाथि शङ्का गर्ने ठाउं छ । दिनेश राज पन्तले वराहमिहिरको उद्धरण दिई शकसंवत् चैत्रशुक्लप्रतिपदा र माघशुक्ल प्रतिपदा दुवैबाट सुरू हुन्थ्यो भन्ने देखाएर यसको उत्तर दिनखोजेका छन् । हो, दक्षिण भारतमा विक्रम संवत् पनि कार्तिकमा आरंभ हुन्छ । तथापि यो सूचना पर्याप्त छैन ।[६८]

पहिलेका लेखकहरूका सामु सीमित सामग्री थिए, त्यसताका भारतीय इतिहासका समेत धेरै तथ्य जानिएका थिएनन् र पुरालेखनको अध्ययन प्रारंभिक अवस्थामा थियो । जोहन फेथफुल फ्लीटले मानदेवलाई ७०५ ई.मा र शिवदेवका साथ अंशुवर्मालाई भने मानदेवभन्दा पहिले राख्न पुगे । बेण्डालले शिवदेव र अंशुवर्माको अभिलेखको संवत् ५१६ लाई ३१६ पढेर अर्को भ्रमको सूत्रपात गरे । ५०० भनी सिल्वाँ लेवीले सच्याएपछि पनि केही लेखकहरूले ३०० पढ्ने भ्रम पालिराखे । आज सं. ५१२ देखि सं. ५२६ सम्मका १३ वटा अभिलेखहरू छापिएका छन् ।[६९] त्यतिखेर हर्षलाई उत्तर भारतको महान् राजा मानिन्थ्यो । उनका प्रतिद्वन्द्वीहरूका सबै अभिलेखहरू प्रकाशमा आएका थिएनन् । अंशुवर्मा अथवा

उनको तथाकथित वंशका नामका तीनवटा मतको बीज शायद सिल्वाँ लेवीको युक्ति थियो। तथापि कुनै सामन्तले संवत् चलाएको नमुना विश्वमा शायद विरलै होला। शिवदेवका आरंभिक वर्षहरूमा अंशुवर्मा होइनन् भौमगुप्त देखिन्छन्। यस संवत्को सरोकार अंशुवर्माको प्रगतिसँग रहेको देखिँदैन। अंशुवर्मा ठकुरीवंशका थिए भन्ने कुराको कुनै प्रमाण पाइँदैन।

यसको अर्को कारण पुरालेखनको तुलनात्मक अध्ययनको कमी हो। संवत्को निरूपणमा पुरालेखनअध्ययनलाई पहिलोपल्ट सिल्वाँ लेवीले महत्त्व दिँदै अरू सन्दर्भ सामग्रीहरू जोडेर मानदेवलाई पाँचौ शताब्दीमा र अंशुवर्मालाई सातौं शताब्दीमा राख्नु पर्ने कुराको अनुभव गरेर नेपालमा गुप्तसाम्राज्य र हर्षसाम्राज्यको राजनीतिक प्रभावको खण्डन गरे। तर उनको समाधान पनि त्रुटिमुक्त थिएन। उनको मत अन्तबाट पुष्ट हुन सकेन। त्यतिखेर नेपालमा तिब्बतको कुनै किसिमको प्रभाव रहेको, तिब्बतमा कुनै संवत् चलेको र नेपालमा त्यो चलाइएको बारेमा प्रमाणको अझै खाँचो छ। त्यसैगरी शकपूर्व २२मा चलाइएको लिच्छविसंवत् र अन्य मतहरू पनि चल्न सकेनन्। श्यामसुन्दर राजवंशीले जुन युक्ति दिएका छन् त्यो सुमतितन्त्रको सूचनाको प्रतिकूल देखिँदैन। पहिले नै २ वर्ष घटाइएको संवत्को ५०० वर्ष भन्नु र सुमतितन्त्रको ४९८ एउटै कुरा हुन आउँछ। उनले सं. २९लाई शकपूर्व २ देखि गनिएको संवत्को ५२९ सौं वर्ष मानेर शकसंवत् ५२७ भने; सुमतितन्त्र बमोजिम सं. २९ शक सं. ४९८ मा सुरू भएको संवत्को २९ सौं वर्ष पनि शकसंवत् ५२७ नै हुन्छ। अघिल्लो संवत्को वर्षमा भने दुई वर्षको फरक आउँछ। सं. ५३६ लाई उनले सबैले मानिआएको ६१३ ई.को ठाउँमा ६११ ई.को वर्ष माने। यो मानिदिएता पनि कालक्रममा गम्भीर अन्तर आउँदैन।

कालक्रमसम्बन्धी समस्याको समाधानमा महत्त्वको भूमिका खेल्ने अभिलेख र अन्य लेखोट अघिका लेखकहरूका समयमाभन्दा आज थुप्रै पाइएका छन्। काठमाडौं उपत्यकामा पुरालेखनको आरम्भबारे विचार गर्ने प्रसङ्गमा चौथो शताब्दी ई.का समुद्रगुप्तको इलाहाबाद प्रशस्तिको लेखनभन्दा मानदेवको लेखनमा मौलिक विशेषताहरू थप भएका र यसका लागि कम्तीमा १०० वर्षको अभ्यास हुनु स्वाभाविक भएको देखाइएको छ।[७०] यसबाट पनि मानदेवलाई ईसवीको पाँचौं शताब्दीको उत्तरार्धका राजा मान्नुपर्छ। पहिलो संवत् शकसंवत् हो भन्ने मजुमदारको सुझाव धेरैलाई मान्य हुँदै आएको छ। यद्यपि यो चैत्र वा वैशाखमा सुरू नभई नेपालका अन्य संवत्हरू झैं कार्तिकमा सुरू हुन्थ्यो भन्ने तथ्यको उल्लेख भने न त सुमतितन्त्रले गरेको छ न मजुमदारले। त्यसैगरी कार्त्तिकमा सुरू हुने शकसंवत्को शास्त्रीय आधारबारे स्पष्ट नभएर प.नयराज पन्तले जिज्ञासुहरूलाई निराश बनाएका छन्।[७१]

संवत् ३८६ देखि ५२६ सम्मका अभिलेखहरूमा लेखनको विकासमा निरन्तरता पाइन्छ भन्ने कुरा पुरालेखनको अध्ययन गर्दा स्पष्ट हुने छ। ३८६ देखि ५२६ सम्मका वर्षहरू अङ्कहरूले बताए बमोजिम एकै संवत्का हुन् भन्ने कुरा स्पष्ट छ। यसै गरी वर्ष ५२६ र वर्ष २९ को लेखनमा पनि समान लक्षण र

स्वाभाविक क्रमिकता पाइने भएकाले यी वर्षहरू हाराहारीका हुनआउँछन् जो ऐतिहासिक दृष्टिले पनि ठीक लाग्दछ। अन्य स्रोतबाट जानिएका इतिहासका मुख्य घटनाहरूको कालक्रम सुमतितन्त्रबाट खण्डन भएको छैन। यद्यपि यस ग्रन्थले धेरै कुराको उत्तर दिनसकेको छैन। अन्य प्रमाण नपाउञ्जेल लिच्छविकालका अभिलेखहरूको पहिलो संवत् ७८ ई.को अक्टोबर तदनुसार वि.सं. १३५ को कार्त्तिक महिनामा सुरु भएको र दोस्रो संवत् शकसंवत्को ४९८ वर्षमा तदनुसार अक्टोबर ५७६ ई. अर्थात् वि.सं. ६३३ मान्नु उपयुक्त हुनेछ।

## टिप्पणी

१. अशोकको राज्याभिषेक ईसापूर्व २७४मा भएको मानिन्छ। हेर्नुस् : K.A.Nilakanta Sastri and G. Srinivasachari, **Advanced History of India** (Allied Publishers Pvt. Ltd. 1982) P. 807. अशोकले आफ्ना अभिलेखमा राज्याभिषेकको चौधौं र बीसौं वर्षमा गरी दुईपल्ट निग्लिीहवाको र बीसौं वर्षमा लुम्बिनीको यात्रा गरेको कुरा लेखेका छन्, जो, क्रमश : ई.पू. २६० र २५४ हुन आउँछ।

२. पशुपतिनाथमन्दिरको परिसरमा पाइएको खण्डित अभिलेखमा संवत् ३८१ लेखिएको छ। हेर्नुस् : श्यामसुन्दर राजवंशी, "पशुपतिनाथप्राङ्गणमा प्राप्त अप्रकाशित लिच्छवि अभिलेख", **प्राचीन नेपाल**, ११५, पृष्ठ १-२। मानदेवको चांगुनारायणको प्रशस्ति संवत् ३८६ को हो। ज्याबहाल काठमाडौंको खण्डित अभिलेखमा संवत् ५३५ अङ्कित छ। हेर्नुस् धनवज्र वज्राचार्य, सम्पादित, **लिच्छविकालका अभिलेख** (काठमाडौं : नेपाल र एशियाली अध्ययन संस्थान, त्रि.वि. २०३०) पष्ठ ३४२-४३। श्यामसुन्दर राजवंशीले काठमाण्डौं गोकर्णको बालुवागाउँमा प्राप्त अंशुवर्माको संवत् ५३६ अङ्कित अभिलेख प्रकाशमा ल्याएका छन् : **रोलम्ब**, वर्ष १०, जनवरी-मार्च १९९०। संवत् ५२६ र ५३५ को बीचको अन्य अभिलेख प्रकाशमा आएको छैन।

३. वज्राचार्य, **उही**, पृ.२९०-५४८ र अगाडि। केशरपुस्तकालय, काठमाडौंको **सहोत्तरतन्त्र** शीर्षकको ताडपत्र ग्रन्थमा संवत् ३०१ लेखिएको छ, जसलाई त्यसै संवत्को वर्ष मानिएको छ। (हेर्नुस् **उही** पृष्ठ ५९९)। यसको पुष्पिकावाक्यको फोटो डी.आर.रेग्मीले छापेका छन्, **Inscriptions of Ancient Nepal** (New Delhi: Abhinav Publications, 1983) Plate CLXI.

४. नयराज पन्त र सहायकहरू, **लिच्छविसंवत्को निर्णय** (काठमाडौं : नेपाल राजकीय प्रज्ञाप्रतिष्ठान, २०४३) पृष्ठ ४०१।

५. वज्राचार्य, **पूर्वोक्त**, पृष्ठ २४४-२८९।

६. **उही**, पृष्ठ ३०१-३७९। संवत् ४५ को अभिलेख व्यक्तिविशेषको हो, जसले त्यस वर्षको जेठसम्म अंशुवर्मालाइ जीवित देखाएको छ। पृष्ठ ३७८-७९।

७. S.Beal, trns. **Buddhist Records of the Western World, Translated from the Chinese of Hiuen Tsang,** Vol. II ( reprint, New Delhi: Oriental Books Reprint Corporation, 1969) P. 81.

८. गौरीशंकर हीराचन्द ओझा, **भारतीय प्राचीन लिपिमाला** (दिल्ली :मुन्शीराम मनोहरलाल, १९५९) पृष्ठ १६५-१७० ।
९. Bhagawanlal Indraji and G.Buhler, "Some Considerations on the History of Nepal"(**Indian Antiquary**, Vo. XII) pp. 411 ff. जी.बूलरसँग मिली इन्द्रजीले लिच्छविकालका १५ अभिलेखहरू छपाए : **Indian Antiquary,** Vol. ix, pp. 163 ff. सेसिल बेण्डालले अरू चारओटा अभिलेखहरू छपाए: **A Journey in Nepal and Northern India during the winter of 1884-85** (London: Cambridge University Press, 1886). त्यसै ताका इन्द्रजी र बूलरले मुम्बईबाट **Twenty-three Inscriptions from Nepal** प्रकाशित गरे ।
१०. अंशुवर्मा नामका दुइजना भएको कुरा पनि कतै सुनिंदैन । प.नयराज पन्तले (**टिप्पणी** ४, पृ.१८३- ९१) यस मतको खण्डन गरेका छन् ।
११. J.F. Fleet in **Indian Antiquary**, Vol. XIV, pp. 342 ff. and **Corpus Inscriptionum Indicarum,** Vol. III (reprint, Varanasi, 1963) Appendix IV, pp.177-191.
१२. सेसिल बेण्डाल, टिप्पणी ९, पृष्ठ ७२ र अगाडि, फलक ८ । यसलाई फ्लीटले (**उही**) सबभन्दा महत्त्वको मानेका छन् ।
१३. **पूर्णिमा**, अङ्क ७, पृष्ठ ४-५, वज्राचार्य, **पूर्वोक्त**, **टिप्पणी** २, पृष्ठ २९० ।
१४. पञ्चाङ्गसिद्धान्त र अन्य आधारमा प.नयराज पन्तले यस मतको खण्डन गरेका छन् । हेर्नुस् : **टिप्पणी** ४, पृष्ठ २४४-२४९ ।
१५. R.G.Basak, **History of North Eastern India** (Calcutta: Sambodhi Publications, 1967) pp.297 ff.
१६. R.C.Majumdar, "Chronology of Early Kings of Nepal" **B.C. Law Vol.I,** (Calcutta: Indian Research Institute) P.627, पन्त, **टिप्पणी** ४, पृष्ठ ४८४ ।
१७. **Le Nepal,** Vols. III, Paris, 1905-8. सिल्वाँ लेवीले समुद्रगुप्तको इलाहाबादस्तंभलेखको समीक्षा गर्दै नेपाललाई गुप्तसाम्राज्यको सीमामा रहेको, सम्राट्लाई सम्मान गर्ने तर स्वतन्त्र राज्य माने । उनले शिवदेव र अंशुवर्माको सं. ५२०को अभिलेख पनि प्रकाशित गराए । उनको समयमा शिवदेव र अंशुवर्माका सं.५२६सम्मका अभिलेखहरू पाइएका थिएनन् । यस ग्रन्थका खास गरी दोस्रो र तेस्रो भागका सम्बन्धित पृष्ठहरूको नेपाली अनुवादको लागि हेर्नुहोस् : प.नयराज पन्त, **पूर्वोक्त**, **टिप्पणी** ४, पृ.३०९-३१७ । यस ग्रन्थको अंग्रेजी अनुवाद, मण्डल प्रकाशन, काठमाडौंबाट प्रकाशित भएको छ ।
१८. प.नयराज पन्त, **उही**, पृ.२६९ र अगाडि ।
१९. K.G. Shankar, "The Early Chronology of Nepal", **Indian Historical Quarterly,** XI.1935, pp.304-12.
२०. प.नयराज पन्त, **उपर्युक्त** पृ.४४९ र अगाडि ।
२१. शङ्करमान राजवंशी, **लिच्छविसंवत्को निष्कर्ष** (काठमाडौं : दिलीपमान राजवंशी, २०३०) ।
२२. प.नयराज पन्त, **उही**, पृष्ठ ३८५ र अगाडि ।

२३. श्यामसुन्दर राजवंशी, **लिच्छविकालीन संवत्को निश्चय**, (काठमाडौं : गिरीन्द्रमान राजवंशी, चन्द्रकिरण राजवंशी, २०५२) का पृष्ठसंख्या अङ्कित नभएका सुरुका चार पृष्ठमा प्रकाशित शङ्करमान राजवंशीको वक्तव्य ।

२४. श्यामसुन्दर राजवंशी, **उही**, पृष्ठ २५ र अन्यत्र ।

२५. त्रि.वि. काठमाडौं द्वारा २०३७ मा **नेपालको इतिहासमा विवादास्पद विषयहरू** भन्ने शीर्षकमा प्रकाशित शङ्करमान राजवंशीको कार्यपत्रमा दिनेशराज पन्तको टिप्पणी, पृष्ठ १५-४२ । यो प. नयराज पन्त (**टिप्पणी** ४, पृष्ठ ४११-४३७) मा पनि छापिएको छ ।

२६. गौरीशंकर हीराचन्द ओझा, **पूर्वोक्त, टिप्पणी** ८, पृष्ठ १७०-७३ । यस संवत्को लागि "शकनृपतिराज्याभिषेकसंवत्सर", "शकनृपतिसंवत्सर", "शकनृपसंवत्सर", "शकनृपकाल", "शकसंवत्", "शकवर्ष", "शककाल", "शककालसंवत्सर", "शक" र "शाक" जस्ता शब्दहरू पाइन्छन् । चौधौं शताब्दीदेखिका अभिलेखहरूमा "नृपशालिवाहनशक" "शालिवाहनशकवर्ष" "शालिवाहनशकाब्द" जस्ता शब्द पाइन्छन् ।

२७. R.C.Majumdar, *op.cit. note* 16.

२८. अहमद हसन दानी (**Indian Palaeography**, Oxford : The Clarendon Press, 1963, P. 137) र दीनेशचन्द्र सरकारले (**Select Inscriptions I**, Calcutta University, 1942, p. 366) पुरालेखनको आधारमा पनि शकसंवत्को मतको पुष्टि गरेका छन् ।

२९. Sastri and Srinivasachari, *op.cit.* note 1, pp. 242 ff. हर्षको राजधानी दिल्लीनजिकै थानेश्वरमा थियो र कन्नौजमा यिनकी विधवा बहिनीको राज्य थियो । अभिलेखहरू, चीनीयाँ यात्री युवान च्वांगको यात्रावृत्तान्त र कवि बाणभट्टको हर्षचरित काव्यबाट हर्ष निकै शक्तिशाली र विजयी राजा थिए भन्ने बुझिन्छ । हर्षले तुषारशैल अर्थात् हिमालय जितेर कर लिएको कुरा हर्षचरितमा पाइन्छ । यसबाट इन्द्रजीसहित धेरैले हर्षले नेपाल जितेको अर्थ गरे । दशौं शताब्दीका अरब लेखक अलबेरुनीले ६०६ ई.देखि उत्तरप्रदेशमा हर्षसंवत् चलेको कुरा लेखेका छन् । हर्षका केही अभिलेखहरूको संवत्लाई हर्षसंवत् मानिन्छ ।

३०. नयनाथ पौडेल, सम्पादित, **भाषा वंशावली**, भाग १, काठमाडौं : पुरातत्त्व विभाग, २०२०, पृष्ठ ५८ र अगि ।

३१. Fleet, *op.cit.* **CII *note*** 131, Appendix IV, pp.177 ff.; ओझा, **टिप्पणी** पृष्ठ १७७; A.H. Dani, *op.cit.* P. 137.

३२. प.पन्त, **उही**, पृष्ठ ५११ जहाँ स्यामुयल बीलको (**टिप्पणी** ७, पृष्ठ ८०-८१) उद्धरणको नेपाली अनुवाद दिइएको छ ।

३३. प.पन्त, **पूर्वोक्त, टिप्पणी** ४, पृष्ठ. ३०५, ३२२ र अगाडि, जहाँ सिल्वाँ लेवीका (**टिप्पणी** १७) र रमेशचन्द्र मजुमदारका (**टिप्पणी** १६) सम्बन्धित उद्धरणहरूका नेपाली अनुवाद दिइएको छ । हर्षले जितेको भनिएको तुषारशैल हिमालय हो भने त्यो नेपालमा मात्र सीमित छैन, बरु स्थानेश्वरको नजिकैको पंजाबमा पनि छ । लेवीले तुषारलाई तुखार अर्थात् उत्तरपश्चिमका तुर्कहरूको राज्य भन्ने अर्थ गरे । हर्षका आश्रयमा रहेका बाणभट्ट र हर्षबाट सम्मान र सहयोग पाएका चीनीयाँ यात्री युवान च्वांगले हर्षको बढाइचढाई बयान गर्नु अस्वाभाविक थिएन । तैपनि तिनीहरूले हर्षले जितेका मुलुकमा नेपाल पर्थ्यो भनी कतै लेखका छैनन् । वंशावलीले त्यतिखेर नेपालको यात्रा गर्नेलाई किटेर

हर्ष भनेका छैनन् । यसै पनि केही शताब्दी पहिले संग्रह गरिएका वंशावलीलाई तेह्र सय वर्ष पहिलेको इतिहासको स्रोत मान्नु बुद्धिमानी हुँदैन ।

३४. हेर्नुस् तल **अध्याय चौध पृष्ठ १७४ र अगाडि ।**

३५. प.पन्त, **पूर्वोक्त**, पृष्ठ १८३ र अगाडि ।

३६. **उही**, पृष्ठ ३०५ र अगाडि, (लेवीको– **टिप्पणी** १७को भाग २ को सम्बद्ध अंशको नेपाली अनुवाद) । लेवीको समयमा बुङमतीअभिलेखको वर्ष २९लाई ३४ पढिएकोले सं.३०को हाँडिगाउँको अभिलेखनै अंशुवर्माको पहिलो अभिलेख देखिनआएको थियो । लेवीको अनुसार यस संवत्को व्यवहार १देखि नभई एकै पल्ट वर्ष ३०बाट भएको देखिएकोले यसलाई अंशुवर्माको राज्याभिषेकबाट सुरू भएको मान्न सकिँदैन ।

३७. ताङवृत्तान्तमा वाङ युञ्चेको वर्णन संग्रह भएको मानिन्छ । यसबमोजिम ६४३ ई.मा नरेन्द्रदेव राजा थिए । हेर्नुस् : K.P.Jayaswal, **Chronology and History of Nepal** ( Patna : M.N. Burman and Co., 1937) pp.82-83. यसको सम्बन्धित अंशको नेपाली अनुवाद प.पन्त, **उही**,पृष्ठ ५१२मा प्रकाशित छ ।

३८. प. पन्त, **उही**, पृष्ठ ३१८ र अगाडि ।

३९. **उही**, पृष्ठ २६५ र अगाडि ।

४०. K.P.Jayaswal, *op.cit.* note 37, pp.1-15, नेपाली अनुवादको लागि हेर्नुस् प.पन्त, पृष्ठ ५२६ र अगाडि ।

४१. प.पन्त, **उही**, ५१३ र अगाडि ।

४२. K.G.Shankar, *op.cit. note* 19. भाषावंशावलीमा बयान गरिएका विक्रमादित्य, शङ्करको विचारमा, राजा यशोधर्मा थिए, जसले नेपाल जितेर अंशुवर्मालाई आफ्नु सामन्त बनाए र आफ्नु संवत् चलाउन बाध्य गराए ।

४३. शङ्करको विचारबमोजिम अंशुवर्माको पहिलो वर्ष ५६७ ई. हुनआउँछ (५३८+२९) जबकि उनकै विचारमा (**उही**, पृष्ठ ३०९) यशोधर्माको मृत्यु ५३४ ई.मा भइसकेको थियो । यसै गरी यशोधर्माले संवत् चलाएको र नेपाल जितेको कुरा कसैले गरेका छैनन् । यशोधर्माले आफ्नु संवत् चलाउन पाँच वर्ष किन पर्खनु पऱ्यो भन्ने प्रश्नको उत्तर के.जी. शङ्करले दिएका छैनन् । उद्धरणहरूको निम्ति हेर्नुस् : प. पन्त, ४४९-४५१,४५५-४५७ ।

४४. R.C.Majumdar, *op.cit. note* 16, P.641, सम्पूर्ण लेखको नेपाली अनुवादको निम्ति हेर्नुस् प. पन्त, पृष्ठ ३२२-३४५ ।

४५. प.पन्त, पृष्ठ ३१८ र अगाडि ।

४६. बालचन्द्र शर्मा, **नेपालको ऐतिहासिक रूपरेखा** (वाराणसी : कृष्णकुमारी देवी, २०२२, २०३३) पृष्ठ ९१-९२ । बालचन्द्र शर्माको यो मत तीनवटा संभावनाहरूमाथि अडेको छ : (१) शिवदेवको राज्यारोहणसँगसँगै अंशुवर्मा महासामन्त भएका थिए ; (२) दुवैको शासनको सुरूवात ५७१ ई. (शक सं. ४९३) मा भएको थियो र (३) शिवदेवको अन्तिम अभिलेख शक सं. ५२० अर्थात् ५९८ ई.को हो । यी तीनै संभावनाहरूको खण्डन हालसम्म पाइएका अभिलेखहरूले खुद गरिदिएका छन् ।

४७. धनवज्र वज्राचार्य, **पूर्वोक्त**, **टिप्पणी** २, पृष्ठ २१४-१५ ।

४८. प.पन्त, पृष्ठ ३६५ र अगाडि ।

४९. H.N.Jha, **The Licchavis (of Vaishali)** (Varanasi: Chowkhamba Sanskrit Series, 1970) P. 117. सम्बद्ध भागको नेपाली अनुवादको लागि हेर्नुस् : प. पन्त, पृष्ठ ३५०- ३६४ ।

५०. प.पन्त, पृष्ठ ३४६ र अगाडि ।

५१. शङ्करमान राजवंशी, **पूर्वोक्त टिप्पणी** २५ ।

५२. **उही**, दिनेशराजको टिप्पणी, पृष्ठ १५-४२ र प.पन्त, पृष्ठ ४२१ । संयुक्त शासनकालको आखिरी अभिलेखमा आश्विन महिनाको उल्लेख भएको र अंशुवर्माको एकलौटी शासनकालको पहिलो अभिलेखमा जेठ महिनाको उल्लेख भएको देखाएर दिनेशराज पन्तले महिनाको हिसाबले यो नमिल्ने देखाएका छन् । कार्तिकबाट सुरूहुने वर्षमा जेठ आठौं महिना हुन्छ र असोज बाह्रौं महिना हुन्छ । यो मान्दा आठौं महिनामा स्वतन्त्र राजा भइसकेका अंशुवर्मा बाह्रौं महिनामा पुनः शिवदेवका सहायक रहे भन्ने मान्नुपर्ने हुन्छ । प.नयराज पन्तले पञ्चाङ्गसिद्धान्तका आधारमा पनि त्यसलाई अमान्य बताएका छन् । हेर्नुस् पृष्ठ ३८० र अगाडि ।

५३. हेर्नुस् **टिप्पणी** २३ ।

५४. श्यामसुन्दर राजवंशी, **उही**, पृष्ठ ९३ र अन्यत्र । हेर्नुस् तल ।

५५. प.पन्त, पृष्ठ १२०-१२४ । राष्ट्रीय अभिलेखालयमा सुमतितन्त्रको दर्ता "वीरपुस्तकालय चौथो ५७" रहेको छ । ब्रिटीश म्युजियमको प्रतिको दर्ता नम्बर ३५६४ रहेकोछ जसको विवरण सेसिल बेण्डालले आफ्नु **Catalogue of the Sanskrit Manuscripts in the British Museum,** London, 1902मा दिएका छन् । यो ग्रन्थ त्रि.वि. पाठ्यक्रम विकास केन्द्रबाट २०३५ मा छापिएको छ । हेर्नुस् तल **टिप्पणी** ६४ ।

५६. प.पन्तको विचारमा यसको रचना काठमाडौं उपत्यकामै वि.सं.६३३ र वि.सं.९३७ को बीचमा भएको थियो । पृष्ठ १-६, १३६ र अगाडि ।

५७. **उही**, पृष्ठ २ मा अनूदित ।

५८. **उही**, पृष्ठ ३ ।

५९. श्रीराम गोयल, **प्राचीन नेपाल का राजनीतिक और सांस्कृतिक इतिहास** (वाराणसी : भारतीय विद्याप्रकाशन, १९७३) पृष्ठ ४६ ।

६०. Cecil Bendall, *op.cit.* note 55, pp. 193-94.

६१ प.पन्त, पृष्ठ ५६४, K.P.Jayaswal, op.cit. note 40, pp. 33-38.

६२. प.पन्त, पृष्ठ ५६६, ५७०-५७१ जहाँ उनले वि.सं. १९९६को **शारदामा** प्रकाशित बाबुराम आचार्यको लेख प्रकाशित गरेका छन् । त्यसको कालक्रम, प.पन्तको विचारमा, सुमतितन्त्रकै आधारमा मिलाइएको हो ।

६३. L.Petech, "The Chronology of the Early Inscriptions of Nepal", **East and West,** Vol. 12, No.4 (December 1961), pp. 227-32.

६४. नयराज पन्त, देवीप्रसाद भण्डारी, दिनेशराज पन्त, सम्पादित **सुमतितन्त्रम् (प्रथमो भागः)** काठमाडौं : त्रि.वि. पाठ्यक्रम विकास केन्द्र, २०३५) ।

६५. एल. पेतेक, उही प.पन्त, पृष्ठ ५-६, श्रीराम गोयल, **पूर्वोक्त टिप्पणी** ५९, पृष्ठ ४७ ।

६६. राष्ट्रिय अभिलेखालयमा रहेको १६५५ ई.को हरिवंश ग्रन्थको पुष्पिकावाक्यमा अन्य संवत्हरूको साथसाथ विक्रम, शक, मानदेव र नेपाल संवत्हरूका वर्ष यसै अनुरूप दिइएका छन् । प. पन्त, पृष्ठ ४ ।

६७. राजवंशी, **पूर्वोक्त**, टिप्पणी २८ । यद्यपि हस्तलिखित ग्रन्थमा अशुद्धि धेरै कुरामा निर्भर गर्ने हुनाले सबै स्थितिमा त्यसलाई कालनिर्धारणको आधार मान्नमिल्दैन । शुद्ध र प्रौढ भाषाका लागि प्रसिद्ध रहेको लिच्छविकालमा राजाले जारी गरेका केही अभिलेखहरूमा समेत भाषा अशुद्ध पाइएको छ । ज्यौतिषी, वैद्य, नर्तक र कलाकारको भाषाबारे खिल्ली उडाइएका अनेकौं सन्दर्भ संस्कृतसाहित्यमा पाइन्छन् । तिनीहरूको वास्तविक मूल्याङ्कन विषयको प्रतिपादनको आधारमा गर्नु वाञ्छनीय हुन्छ । तथापि अन्य कुनै प्राचीन ग्रन्थ यत्ति मात्रामा अशुद्ध पाइँदैन भन्ने कुरा सत्य हो ।

६८. उहिल्यै **Indian Antiquary**, Vol. XX, P.399 मा छापिएको (ओझा, **पूर्वोक्त**, **टिप्पणी** ८, पृष्ठ १६९ टिप्पणी २) यस भनाईको परीक्षण हुनु जरुरी देखिन्छ : "....विक्रमसंवत्को आरम्भ कार्तिकशुक्ल १बाट र शकसंवत्को चैत्रशुक्ल १ बाट हुन्छ । उत्तरभारतका पञ्चाङ्ग शकसंवत्को आधारमा बनेकाले तिनका वर्ष चैत्रशुक्ल १देखि सुरु हुन्छ । यसकारण त्यहाँका मानिसहरूले पछि विक्रमसंवत्को प्रारम्भ चैत्रशुक्ल १बाट पनि मान्न सुरु गरिदिएका हुनसक्छ । उत्तर भारतका लेखहरूमा कार्तिकादि र चैत्रादि दुवै किसिमका संवत् पाइन्छन् । बाह्रौं शताब्दी ईसम्मका लेखहरूमा धेरैजसो कार्तिकादि संवत् र तेह्रौं शताब्दीदेखि सोह्रौं शताब्दी ईसम्मका लेखहरूमा प्रायःचैत्रादि पाइन्छन् ।"

६९. धनवज्र वज्राचार्य, **पूर्वोक्त**, **टिप्पणी** २, पृष्ठ २१४-१५, २२९-३०, २४४-४५, २४९-५०, २५३-५४, २५७-५८, २६०-६१, २६३-६४, २६६-६७, २७१-७२, २७४-७५, २७९-८०, २८२-८३ ।

७०. हेर्नुस् तल अध्याय १२ ।

७१. विषयको जानकार नभएकोले यसबारेमा केही भन्ने अधिकार यस लेखकले पाएको छैन । तथापि उसले यस विषयमा विद्वान्हरूबाट स्पष्टता मिल्ने अपेक्षा गर्नसक्छ ।



# अध्याय सात

# नेपालमा पुरालेखनअध्ययन

लेखन संस्कृतिको अङ्ग हो। संस्कृतिका अभिन्न अङ्गको रूपमा समाजमा या त स्वतन्त्र रूपमा लेखनको आरम्भ हुनसक्छ या संस्कृतिको प्रसारसँगसँगै अन्यत्र पुगेर त्यसले आफ्नु ठाउँ बनाउनसक्छ। विभिन्न ठाउँमा आफ्नै सांस्कृतिक परिवेश हुन्छ। लेखनबाट वेलावेलामा विकसित सांस्कृतिक विशेषताबारे थाहा हुन्छ। यसबाहेक लेखनपद्धतिका विकासका आफ्नै प्रवृत्तिहरू पनि देखिएका छन्। सांस्कृतिक परिवेश र विकासका प्रवृत्तिबमोजिम क्षेत्रीय लेखनको विकासको गति र विशेषताहरू निर्धारित हुन्छन्। विभिन्न कालका लेखनका नमुनाहरूबाट लेखनका विशेषताबारे थाहा हुन्छ र त्यसआधारमा लेखनको इतिहास जान्नसकिन्छ। कुन वेला र परिस्थितिमा कसरी लेखनको आरम्भ र विकास भयो, तिनका विशेषताहरू के थिए भन्ने जस्ता प्रश्नहरूको उत्तर लेखनको इतिहासले दिन्छ। लेखनको इतिहासबाट धर्म र संस्कृतिका अनेकौं सन्दर्भहरूको साथसाथ अन्य मुलुकसंगको सांस्कृतिक सम्बन्धको जानकारी पाइन्छ। नेपाली पुरालेखनको विषयप्रवेशको प्रसंगमा यहाँ पुरालेखनका स्रोतसामग्रीहरू, भारतमा भएको अध्ययनको पृष्ठभूमिमा नेपाली पुरालेखनअध्ययनको इतिहास, पुरालेखनका विकासचरण, अङ्कलेखन र ग्रन्थलेखनकलाको परिचय पाउनु सान्दर्भिक हुने छ।

## स्रोतसामग्री

नेपालमा पुराना लेखोट ढुंगा, खामा वा स्तम्भ, मूर्त्ति, शिवलिङ्ग, ढुंगेधारा, ताम्रपत्र वा तामाका पाता, सिक्का (टक वा मुद्रा), घण्टा, लेख्न बनाइएको ताडपत्र, नेपाली पाको कागतका पहेंलो र नीलोकालो पानाहरूमा पाइन्छन्। लेखनका प्राचीनतम नमुना स्वाभाविक रूपमा शिलास्तम्भ र शिलापत्र जस्ता अभिलेख र मुद्रा वा सिक्कामा पाइन्छन्। पछिको लेखोट विभिन्न प्रकृतिका अभिलेखहरूको साथसाथ ताडपत्र र कागतमा पाइन्छ। काठमाडौं उपत्यका र नजिकैका क्षेत्रहरूमा पाइने लेखनका यी नमुनाहरू नेपाली पुरालेखनअध्ययनका **स्रोत** हुन् जो लामो कालदेखि सांस्कृतिक परम्पराका संवाहक रहेका छन्। यिनका आधारमा पुरालेखनका विभिन्न पक्षको अध्ययन संभव भएको छ। ठुलो संख्याका अभिलेखहरू पढिएका छन्। देवनागरी वा रोमनमा लिप्यन्तर गरिएका तिनका झण्डै एक दर्जन जति राम्रा संग्रहहरू प्रकाशित भइसकेका छन्।[१] तथापि त्यस्ता अधिकांश संग्रहहरूमा मूल अभिलेखका छापा वा फोटो दिइएका छैनन्। मूल लेखावटको अभावमा विभिन्नकालका लेखन र तिनका विशेषता जान्नसकिंदैन। यस दृष्टिले पुरालेखनका विद्यार्थी र अनुसन्धाताको लागि आर.नोली,[२] हरिराम जोशी[३] र डिल्लीरमण रेग्मीको[४] लिच्छविकालीन अभिलेखहरूका संग्रह महत्त्वका छन्, किनभने यिनमा अभिलेखका छापा प्रकाशित छन्। त्यसैगरी लिच्छविकाल र मल्लकालका मुद्रा वा सिक्काका वास्तविक चित्र भएका ग्रन्थ प्रकाशित छन्।[५]

यिनको साथसाथ नेपालमा विभिन्न कालमा ताडपत्र र पाको कागतमा सारिएका भिन्नभिन्न विषयका पाण्डुलिपिग्रन्थहरूको ठुलो भण्डार पाइन्छ। नेपालसरकारको राष्ट्रीय अभिलेखालयमा मूल ग्रन्थको सुरक्षा र शोधार्थीहरूको सुविधाको लागि अधिकांश ग्रन्थहरूको चित्र (माइक्रो फिल्म) हेर्न, पढ्न र फोटो उतार्न उपलब्ध गराइएको छ। यसको साथसाथ भारतको एशियाटिक सोसाइटी बंगालको कोलकाताको संग्रहालय तथा बेलाइतका क्याम्ब्रिज विश्वविद्यालयको पुस्तकालय र बृटीश संग्रहालय र पुस्तकालयमा पनि निकै संख्यामा विभिन्न कालका नेपाली पाण्डुलिपिग्रन्थहरू संग्रह गरिएका छन्। जरमनी र संयुक्तराज्य अमेरिकाका केही व्यक्तिगत संग्रहमा केही नेपाली ग्रन्थ रहेका छन्।

## इतिहास

भारतमा अठारौं शताब्दीमा अभिलेखहरू खोजी पढ्ने काम बढ्दै जाँदा विभिन्न कालमा विकसित लेखनप्रति जिज्ञासा बढ्दैगयो। १७८४ ई.मा भारतमा एशियाटिक सोसाइटीको स्थापनाको साथसाथै पुरालेखनको अध्ययनको इतिहास आरम्भ भयो।[६] बाङ्लादेशको दिनाजपुरमा प्राप्त बंगालको पालवंशका राजा नारायणपालको बादलस्तम्भलेख १७८५मा चार्ल्स विल्किन्सले पढे। त्यसले पछि पाइएका गुप्तकालीन अभिलेख पढ्न सघायो। १८३०को दशकमा गुप्तशासकहरूका अभिलेख पढिए। यसबीच दक्षिणभारतीय पुरालेखनका बारेमा पनि नयां जानकारी प्रकाशित हुँदै थिए। देवानां पिय पियदसि राजा अर्थात् मौर्यसम्राट् अशोकका प्राचीनतम लेखन अझै रहस्यको विषय थियो। सबै कालका प्राचीन लेखनको पद्धति एउटै रहेको रहस्योद्घाटन गरेर १८५८मा जेम्स प्रिन्सेपले अशोकका अभिलेखहरू पढे।[७] पछि त्यस लेखनलाई पारम्परिक साहित्यमा प्रयोग गरिएको ब्राह्मी भन्ने नाम दिइयो। अब ब्राह्मीमा विभिन्न समयमा थप र फरक हुँदैआएका विशेषताहरूतिर पुरालेखनविद्हरूको ध्यान जानलाग्यो र लेखनको विकासमा तुलनात्मक अध्ययनको महत्त्व बढ्यो। यसै वेला ए.सी. बर्नेलको **दक्षिण भारतीय पुरालेखन** (१८७४) र जे.बर्गेसको **पुरालेखन** (१८८३)[८] छापिए। अलेक्जण्डर कनिंघमको **अशोकका अभिलेखहरू** (१८७७)[९] र जे.एफ.फ्लीटका (१८८८)[१०] **गुप्त र समकालीन शासकहरूका अभिलेखहरूका** संग्रह छापिएपछि ब्राह्मीको उत्पत्तिका सम्बन्धमा दुई महत्त्वका विचार प्रकाशित भए : रायबहादुर पं. गौरीशङ्कर हीराचन्द ओझाको "भारतीय मूलको सिद्धान्त" (१८९४)[११] र जोहन जर्ज बूलरको "उत्तरी सेमिटिक मूलको सिद्धान्त" (१८९६)।[१२] ओझाले वैदिक साहित्यको विश्लेषण गरेर आर्यहरूको समाजमा धेरै अघिदेखि लेखनको चलन रहेको देखाउने प्रयास गरे। बूलर प्राचीन मेसोपोटामियाको लेखनपद्धतिमा विकसित उत्तरी सेमेटिक वा फिनेशियाइ लेखनबाट बढी प्रभावित थिए। पछि पाइएका स्रोतहरूले बूलरका कतिपय युक्तिलाई अर्थहीन बनाएतापनि बूलरको विचार बढी वस्तुपरक र भौतिकवादी रहेको छ। राजबली पाण्डेयले (१९५२)[१३] लेखनको प्राचीनताको सम्बन्धमा ओझाकै विचार दोहोऱ्याए र ब्राह्मीको उत्पत्ति सिन्धुलेखनबाट भएको अनुमान थपे। ओझाको समयमा

सिन्धुघाटीको सभ्यता अज्ञात थियो। वैदिक आर्यहरूमा लेखनको प्राचीनता र ब्राह्मीको उत्पत्ति वा मूलको सम्बन्धमा अझै अन्योल कायमै छ। परवर्ती प्रकाशनहरूमा एफ.डब्लु. थोमसको **मध्यएशियाई पाण्डुलिपिमा ब्राह्मीलिपि** (१९५४),[१४] अहमद हसन दानीको **भारतीय पुरालेखन** (१९६०),[१५] ए.के. नारायण र टी.पी. वर्माको **प्राचीन भारतीय लिपिशास्त्र और अभिलेखकी** (१९७०),[१६] टी.पी. वर्माको **ब्राह्मीलिपिको पुरालेखन** (१९७१)[१७] र एस.पी गुप्त र के.एस. रामचन्द्रनद्वारा सम्पादित **ब्राह्मीलिपिको उत्पत्ति** (१९७९)[१८] महत्त्वका छन्।

अभिलेखको प्रकाशनको साथसाथ नेपालमा उण्डाइसौं शताब्दीदेखि पुरालेखन सम्बन्धी टिप्पणी प्रकाशित हुनलागे। आफूले पाएदेखेका नमूनाका भरमा भगवान्लाल इन्द्रजी, सेसिल बेण्डाल र जे.एफ. फ्लीटले नेपाली पुरालेखनअध्ययनको जग बसाले। १८९६ मा लुम्बिनी र निग्लिहवामा ईसापूर्व तेस्रो शताब्दीका अशोकका अभिलेखहरूको प्राप्तिले नेपाली पुरालेखनमा नयाँ अध्याय थप भयो र नेपाल दक्षिण एशियाको लेखन इतिहासको साझेदार बन्नपुग्यो। उण्डाइसौं शताब्दीको उत्तरार्धदेखि बीसौं शताब्दीको पूर्वार्धसम्म नेपालका पाण्डुलिपि ग्रन्थहरूको छानबीन गरी तिनका सूचीपत्र छपाउने महत्त्वपूर्ण काम भए। यस कामको सुरुवात राजेन्द्रलाल मित्रले १८८२ ई.मा गरे।[१९] त्यसको एकै वर्षपछि सेसिल बेण्डालले संयुक्तअधिराज्यको क्याम्ब्रिजविश्वविद्यालयमा संग्रहित नेपाली ग्रन्थहरूको सूचीपत्र छपाए।[२०] हरप्रसाद शास्त्रीले १८९७, १९०५-१९१५, १९१७, १९५५ र १९५७मा नेपालको तत्कालीन दरबार पुस्तकालय र एशियाटिक सोसाइटी बंगालका संग्रहमा रहेका ग्रन्थहरूका अनेकौं भागमा सूचीपत्रहरूको सम्पादन गरे तथा टिप्पणी र प्रतिवेदन लेखे।[२१] यी सबै सम्पादकहरूले आफ्ना वेलामा जानिएको भारतीय पुरालेखनका आधारमा आफ्नै किसिमले नेपाली पुरालेखनको व्याख्या गरे। पाण्डुलिपिहरूको अनुसन्धानको सिलसिलामा पत्ता लागेका अनेकौं वंशावलीहरूमध्ये डब्ल्यू. जे. कर्क्प्याट्रिक (१८११),[२२] डेनिएल राइट (१८७७),[२३] सेसिल बेण्डाल (१८८३)[२४] र सिल्वाँ लेवीले (१९०५–१९०८)[२५] उपयोग गरेका वंशावलीहरूको विशेष महत्त्व थियो।

नेपालमा प्राचीन लिपि पढ्ने प्रयासको इतिहास स्पष्ट छैन। तथापि एक शताब्दी अधिसम्म नेवारीका अनेक शैलीहरू लेख्न र अझ पुराना लिपि पढ्न जान्ने लेखक र पण्डितहरू यहाँ रहेका बुझिन्छन्। तिनका साथमा आफ्नु उपयोगको लागि विभिन्न वर्णमालाहरूको उतार रहन्थ्यो भन्ने जानिएको छ। तिनमध्ये केहीले भगवान् लाल इन्द्रजी र सिल्वाँ लेवीको लागि अभिलेखहरू उतार्न र पढ्न सहयोग गरेका थिए। ओझेलमा परेका यस्ता पण्डितहरूमा सिद्धिहर्ष वज्राचार्य र जीवहर्ष वज्राचार्यका नाम जानिएका छन्।[२६] बाबुराम आचार्य र नयराज पन्तले यस्तै कुनै पण्डितबाट प्राचीन लिपिको जानकारी पाएका थिए। प्राचीन लिपिको बारेमा जानकारी दिनु पुरालेखनअध्ययनको महत्त्वपूर्ण पक्ष हो। इतिहासको अध्ययनमा यसको महत्त्व बुझेर १९५१ मा पन्नाप्रसाद जोशीको **नेपाल देशया अक्षरबोध** र १९५३ मा हेमराज शाक्यवंशको

**नेपाललिपिसंग्रह**बाट पुराना लिपिहरू पढ्ने र लेख्ने ज्ञान बढाउने प्रयास सुरु भयो ।[२७] यस प्रयासमा शङ्करमान राजवंशीले १९६१मा **प्राचीन लिपिवर्णमाला**,[२८] १९६५ मा **लिच्छविलिपिसंग्रह**[२९] र १९७४मा **नेपाली लिपिविकास**[३०] प्रकाशित गरे । यसै वर्ष हेमराज शाक्यको **नेपाल लिपिप्रकाश**[३१] प्रकाशित भयो । नेपाल लिपि गुथिले नेवारीलिपिको शिक्षा दिने, प्रचारप्रसार गर्ने र वर्णमाला प्रकाशित गर्ने सराहनीय कार्य गर्दै आएको छ । यसले १९९२मा प्रचलित नेवारीलिपिको वर्णमाला प्रकाशित गरेको छ ।[३२] हालै अर्को एक नेपाललिपि वर्णमाला प्रकाशित भएको छ ।[३३] कम्प्यूटरमा कतिपय नेवारी लिपिहरूका टाइप फण्ट उपलब्ध छ ।

## अध्ययनविधि

दक्षिण एशियाको पुरालेखनको इतिहास दुई शताब्दी पुरानो भइसक्यो । तथापि कतिपय प्रश्नहरू अझै अनुत्तरित छन् । यसका अनेक कारणहरूमध्ये अध्ययनविधि पुरानो हुनु, पुरालेखनको सांस्कृतिक भूमिकाको पहिचान नहुनु र पुरालेखनलाई राजनीतिक इतिहासको मात्र उपकरण मानिनु मुख्य हुन् । पुरालेखनको अध्ययन स्वतन्त्र विषयको रूपमा नभई एपिग्राफी र प्यालियोग्राफी भन्ने छुट्टै पारम्परिक नाममा गर्ने चलन रहनु पनि अर्को कारण थियो । समयको अन्तरालमा वर्णहरूमा आएको परिवर्त्तनलाई दक्षिण एशियाको इतिहासको कालक्रमको समस्याको समाधान गर्ने साधन मानियो । वर्णहरूको बाह्य बनोटका आधारमा लेखनको तिथिनिर्धारण गर्ने परिपाटी धेरैसम्म कायम रह्यो । प्राचीन भारतीय इतिहासको कालक्रम झैं पुरालेखन जटिल बन्नगयो । मोटामोटी रूपमा जानिएका मौर्य, कुषाण, गुप्त जस्ता राजवंशहरूको क्रमसँगसँगै लेखनको नामकरण गरिएको छ । यसबाट लिपिको कालनिर्धारण त हुनसक्छ तर क्षेत्रीय शैलीहरूको अध्ययन सम्भव हुँदैन । यथार्थमा गुप्तलिपिको अर्थ गुप्तकालीन लिपिहरू भन्ने बुझ्नुपर्छ । सम्पूर्ण गुप्तसाम्राज्यमा एकैखाले लिपिको प्रचलन भएको पाइँदैन । एउटै व्यक्तिका विभिन्न ठाउँका अभिलेखहरूमा बेग्लाबेग्लै शैलीका लिपि पाइन्छन् ।[३४] नयाँ सामग्रीहरू प्रकाशमा आउँदै गएतापनि धेरैसम्म लेखकहरूको दृष्टिकोणमा परिवर्तन आएन । भारतीय पुरालेखनलाई बढी वैज्ञानिक दृष्टिले हेर्नेहरूमा अहमद हसन दानीको नाम उल्लेखनीय छ । पुरालेखनअध्ययनलाई उनी संस्कृतिको अंग मान्दछन् ।[३५]

पुरानो अध्ययनविधिको प्रभाव स्वभावतः नेपाली लेखकहरूमा पनि परेको छ । पुरालेखनको अध्ययनमा हातले नक्कल गरी सारिएको भन्दा मूल लेखोटबाट काटिएका अक्षरहरूको महत्त्व हुन्छ । भारतमा यसमाथि बूलरले जोर दिएका थिए । नेपालमा शङ्करमान राजवंशीले मूल अभिलेख र अन्य मूल लेखोटबाट उतार लिंदा वर्णहरूको मौलिक स्वरूपलाई महत्त्व दिएका छन् । शुद्ध रूपमा लिपिज्ञान गराउन उनको पुस्तक धेरै सफल भएको छ । यसको विपरीत काठमाडौं उपत्यकाभन्दा बाहिरको परम्परामा विकसित विभिन्न लिपिहरूको समेत वर्णमाला समावेश गरिएको **नेपाललिपिप्रकाश**मा हातले लेखिएका वर्णमालामा मौलिकताभन्दा कृत्रिमता बढी देखिन्छ । यसमा देखाइएका परवर्ती

लिच्छविलिपिका वर्णहरूमा दाहिनेतिरका ऊर्ध्वरेखा बढी ढल्केका वा तरंगयुक्त बनाइएका छन् र कुटिला भनिएका छन्। ती वर्णहरू कति अवास्तविक छन् भन्ने कुरा पुस्तकमा छापिएका अभिलेखहरूका छापाका वर्णहरूसंग भिडाउँदा स्पष्ट देख्नसकिन्छ।

## लिपिका नाम

भारतीय इतिहासको चौथो शताब्दीदेखि छैटौं शताब्दी ई.सम्मको गुप्तकालमा कतै चलेको लेखनसँग समानता रहेकोले लिच्छविकालमा प्रचलित लेखनलाई पहिले **गुप्तलिपि** भनिन्थ्यो। एक किसिमले यो ठीक पनि थियो। आरम्भिक लिच्छविलिपि स्वतन्त्र लिपि होइन, बरु ब्राह्मीपद्धतिमा विकसित कुनै गुप्तकालीन क्षेत्रीय लेखनको निकट सम्पर्कमा रही व्युत्पन्न भएको हो भन्ने तथ्य बिर्सनुहुँदैन। तथापि नेपालमा प्रवेश भइसकेपछि यसमा कालान्तरमा क्रमिक रूपमा अनेकौं लक्षणहरू थपिएका छन् र यहाँ त्यस लिपिको आफ्नै ढंगले विकास भएको छ। यस कारण नेपालको आरम्भिक लिपिलाई 'गुप्तलिपि' भन्ने व्यापक अर्थ लाग्ने नामको सट्टा अर्को नाम दिनु उपयुक्त देखिन्छ। यसो गर्दा नेपालमा विकसित लिपिको अध्ययनमाथि बढी न्याय गर्न सकिन्छ। १९६१ मा नेपाल सरकारको पुरातत्त्वविभागले पुरानो नामको सट्टा **लिच्छविलिपि** भन्ने नाम दियो। यद्यपि नयां नाम दिनुको कारण पुरालेखनसम्बन्धी नभई विशुद्ध राष्ट्रियताको भावना नै थियो। यस उद्देश्यले राजवंशकै नाममा राखिएको भएतापनि नेपालको यो लिपि विभिन्न शैलीको गुप्तलिपिको विपरीत सीमित क्षेत्रभित्र विकसित भएको एउटै शैली हो। यस कुराको साथसाथ यस लेखनशैलीको धेरैजसो उपयोग लिच्छविकालीन अभिलेखहरूमा भएको तथ्य र यसको दीर्घजीवी परम्परामाथि विचार गर्दा लेखनको यो नाम पुरालेखनको दृष्टिले पनि उपयुक्त देखिएको छ।[३६]

नेवारीलिपि भन्ने पारम्परिक नाम धेरै पुरानो प्रतीत हुँदैन। सत्रौं शताब्दीमा (संवत् ७७४मा) पहिलोपल्ट नेपालआखः शब्द प्रयोग भएको छ। यस लेखनका लक्षणहरूमाथि विचार गर्ने हो भने यसलाई नागरी भनेमा ठुलो गल्ती ठहर्दैन। तथापि यसका कतिपय लक्षणहरू विशिष्ट स्थानीय परम्परामा आधारित छन्। यिनै विशेषताहरूलाई रेखाङ्कित गर्न पनि नागरीभन्दा भिन्न नामको आवश्यकताको अनुभव गरी यहाँ नेवारीलिपि भन्ने पारम्परिक नाम संभिएको हो। सत्रौं शताब्दीदेखि कतिपय लेखोटमा पाइने देवनागरीबाट अलग गर्न पनि यस नामको सार्थकता देखिन्छ।[३७]

## पुरालेखनका विकासचरण

यति कुराबाट नेपालका सबै पारम्परिक लेखन भारतका अधिकांश क्षेत्रीय र प्रान्तीय लेखनका समान प्राचीन ब्राह्मीलिपिबाट विकसित भएका हुन् भन्ने कुरा स्पष्ट भइसकेको हुनुपर्छ। ब्राह्मीबाट प्रचलित नेवारी र देवनागरीसम्मको यात्रामा लेखनले अनेकौं काल र विकासचरण पार गरेको छ। नेपाली

पुरालेखनको अध्ययनलाई तीन मुख्य कालखण्डमा विभाजित गर्नसकिन्छ। पहिलो काल **अशोकब्राह्मी**को भएको छ। लुम्बिनी अञ्चलका स्तम्भलेखमा ती सबै विशेषताहरू छन् जो अशोकका अन्यत्रका स्तम्भलेखहरूमा पाइन्छन्। तथापि अन्यत्र झैं त्यसबाट वर्तमान नेपालको त्यस क्षेत्रमा लेखनको परिपाटी चलेन। त्यसको सात सय वर्षपछि अर्थात् पाँचौं शताब्दी ई.देखिको काठमाडौं उपत्यकाको लिच्छविराज्य र वरिपरिका प्रभावित क्षेत्रहरूमा प्रचलित **लिच्छविलिपिलाई** दोस्रो कालको मान्नुपर्छ। त्यो लेखन पहिलो लेखन अर्थात् अशोकब्राह्मीबाटै अनेकौं चरणमा भएको विकासको परिणाम थियो।[३८] यसपल्टको लेखन नेपालमा दीगो रह्यो। यसले आफ्नै गतिमा विकासको बाटो पैल्यायो र कालान्तरमा यो विशिष्ट बन्नगयो। आठौं शताब्दी ई.मा लिच्छविशासनको अन्त भएपछि पनि यो लेखन थप विशेषताहरूको साथ ग्रन्थलेखनमा प्रचलित रह्यो। लिच्छविलिपिले नेपालमा छ सय वर्षसम्म विभिन्न चरणमा आफ्नो विकास गऱ्यो र अन्तमा एघारौं शताब्दीमा विभिन्न शैलीको **नेवारीलिपि** र प्राचीन देवनागरीको विकासमा ठुलो भूमिका खेल्यो। यी लिपिहरूलाई नेपाली पुरालेखनको तेस्रो कालमा राख्नुपर्छ। पुरानो लेखनपरम्परामा विकसित भएतापनि कतिपय कारणले मौलिक रहेको नेवारीलिपि पूर्वमध्यकालीन र मध्यकालीन नेपालको राष्ट्रिय लेखन थियो जो अनेकौं शैलीहरूमा विकसित भई झण्डै आठ सय वर्षसम्म प्रचलित रह्यो।

दोस्रो कालको लेखनले छ सय वर्षसम्म दीगो रही विकासका अनेकौं चरण पार गरेको छ। यसलाई मुख्य रूपमा **पूर्वलिच्छवि** र **उत्तरलिच्छवि** गरी दुई भागमा बाँड्ने चलन छ। यस विभाजनको एउटा आधार वर्णहरूमा कुटिलता देखिनु र अर्को राजनीतिक रहेको देखिन्छ। आफ्नु वेलासम्म पाइएका अंशुवर्माका सीमित संख्याका अभिलेखको लेखनलाई उहिल्यै ओझाले उत्तर भारतको सातौं शताब्दी ई.को लेखनसरह कुटिलालिपि भनेका थिए।[३९] नेपाली लेखकहरूले त्यसैलाई उत्तरलिच्छविलिपिको मुख्य लक्षण माने। केही लिच्छविकालीन अभिलेखमा कुटिलालिपिका लक्षण अवश्य पाइन्छन् तर यस लेखकले लिच्छविलिपिको मुख्य प्रवाहमा कुटिलाको प्रभाव देखेको छैन। लिच्छविलेखनमा कहिलेदेखि यो विशेषता देखिनलाग्यो भन्ने बारेमा समेत दुई भिन्न धारणा प्रचलित छन्। यसलाई कसैले राजा अंशुवर्माको पालाको र कसैले राजा नरेन्द्रदेवको पालाको राजनीतिक परिवर्तनसँग गाँसेका छन्।[४०] पूर्वलिच्छवि भन्ने शब्दले लिच्छविपूर्व वा प्राक्लिच्छवि भन्ने र उत्तरलिच्छवि भन्ने शब्दले लिच्छविपश्चात् भन्ने आशय व्यक्त गर्ने भएकाले यहाँ तिनको ठाउंमा प्रारम्भिक लिच्छवि र परवर्ती लिच्छवि भन्ने शब्द बढी उपयुक्त ठानिएका छन्। लिच्छविलिपिको विकासचरणको आधार मानिएको कुटिलालिपिको अवधारणामाथि शङ्का गर्दै यस लेखकले नेपालमा दशौं शताब्दीसम्म एकै गतिमा विकसित लेखनलाई पाँच विकासचरणहरूमा अध्ययन गर्नु मुनासिब देखेको छ।[४१]

एघारौं शताब्दीको पूर्वार्धमा दुई धारामा विभाजित भई लेखनले नेवारीलिपिका विभिन्न शैलीहरूको विकासको मार्ग प्रशस्त गऱ्यो। पहिलो

धाराको प्राचीन नागरीको समान लेखन र दोस्रो धाराको कोणात्मक डीकोको लेखन दुवैलाई नेवारीलिपिको पहिलो चरणमा राख्नुपर्छ। खासगरी कोणात्मक डीकोको लेखनलाई प्राचीन वा आरम्भिक नेवारी भन्ने चलन छ। दोस्रो चरणमा पहिलो धाराबाट रञ्जना र प्रचलित नेवारीको आरम्भिक लेखन तथा दोस्रो धाराबाट भुजिंमो: को विकास भयो। नेवारीका प्राय:सबै शैलीहरूमा सोह्रौं शताब्दी ई.मा देखिने प्रौढताको आधारमा विचार गर्दा त्यसलाई नेवारीलिपिको अन्तिम चरण मान्नुपर्दछ।

## अङ्कलेखन

नेपालको लेखनमा संख्या बताउने चिह्न (अङ्कचिह्न) लेख्ने तीन पद्धतिहरू प्रचलित रहे।[४२] ब्राह्मीलिपिको परम्परामा विकसित अङ्कलेखनपद्धति पहिलो हो जो नेपालमा दोस्रो लिपिकालमा एकमात्र पद्धति थियो र तेस्रो लिपिकालसम्म अन्य पद्धतिको साथसाथ चल्यो। यस पद्धतिमा एकदेखि नौसम्मका अङ्कचिह्नहरूका साथसाथ दशदेखि सयसम्मका दशवटा दहाई (दशमान)का र सय, हजार, दशहजार आदिका बेग्लाबेग्लै अङ्कचिह्नहरूको उपयोग हुन्थ्यो। यहाँ हजारभन्दा उँभोका अङ्कचिह्न विरलै पाइन्छन्। संवत् ७६९मा पाटनमा सारिएको एक ग्रन्थमा यस पद्धतिका साथसाथ शब्दहरूमा अङ्क लेख्ने अर्को पद्धति पनि पाइन्छ जसलाई शब्दाङ्कपद्धति भनिन्छ। बाह्रौं शताब्दी ई.देखिनै लोकप्रिय रहेको यस पद्धतिमा लोकव्यवहारमा निर्धारित संख्याका वस्तु, पदार्थ वा देवताका नामबाट संख्या बुझाइन्छ। तेस्रो पद्धति १ देखि ९ र ० (शून्य) को दशमलव पद्धति थियो जो सोह्रौं शताब्दीपछि लोकप्रिय बन्यो। संख्यावाचक चिह्नहरू संवत्का साथसाथ श्लोकसंख्या, पृष्ठसंख्या, नकद र भूमिदानका प्रसंगमा र गणितका पुस्तकमा पाइन्छन्। यी तीन पद्धतिहरूको अतिरिक्त खासगरी गणितका ग्रन्थमा अक्षर वा वर्णको माध्यमले संख्या बताउने अक्षराङ्कपद्धति पनि प्रचलित थियो।

## ग्रन्थलेखनकला

नेपालमा ग्रन्थ वा किताब लेख्नु पनि कलाको रूपमा विकसित भएको छ।[४३] समान आकारमा लेख्ने सामग्री अर्थात् ताडपत्र वा कागतको तयारी, पानाहरूलाई उन्न प्वाल पारिने ठाउं छोडी समान दुरीमा एकनासका वर्णहरूको लेखन, अन्तमा तल र माथि काठको गाता राखी सुती धागोले उन्नु जस्ता काम यसभित्र पर्दछन्। कतिपय ग्रन्थहरूका पानामा र काठका गातामा अनेकौं रङ्गका ससाना सुरुचिपूर्ण चित्र बनाइएका हुन्छन्। भुजिंमो: र रञ्जनाका ग्रन्थहरू आफ्ना कलापूर्ण अक्षर र लेखाइका कारण प्रसिद्ध छन्। ताडपत्र र नेपाली पाको कागतको पानामा सुन र चाँदी घोटेर तयार गरिएको सुनौलो र रूपौलो मसी अनि अरू रङ्गहरूले वर्ण र चित्र लेखिएका ग्रन्थ निकै आकर्षक हुन्छन्।

## उपसंहार

पाँचौं शताब्दीदेखि आठौं शताब्दीसम्मको लिच्छविकालका अभिलेखहरूको छापा प्रकाशित गरेर सिल्वाँ लेवी र आर.नोलीले पुरालेखनअध्ययनको मानौं ढोका खोलिदिएतापनि तिनले नेपाली विद्वान्हरूको ध्यान तान्नसकेन, जबकि स्थानीय विद्वान्हरूका लागि अभिलेख र पाण्डुलिपि हेर्नपढ्नको लागि टाढा जानुपर्ने थिएन। तथापि लिपिज्ञान गराउने केही प्रयास भएको छ जो सराहनीय छ। यस काममा नेपाल लिपि गुथीको योगदान प्रशंसनीय रहेको छ।

दक्षिण एशियामा विकसित लेखनको पृष्ठभूमिमा नेपालको पुरालेखनको अध्ययन गर्ने पहिलो प्रयास १९८१ ई.मा भएको छ।[४४] त्यसमा लिच्छविलिपि र नेवारीलिपिका मूल लक्षणहरूको पहिचान गरी तिनको व्युत्पत्ति, आरम्भकाल, विकास र विशेषताहरूको विवेचन गर्ने कोशिश गरिएको छ। तापनि सानो आकारको उक्त पुस्तकमा कतिपय आवश्यक कुरा परेका छैनन् र कतिपय विवरण र व्याख्या यति छोटकरी छन् कि सर्जिलोसंग बुझ्नसकिदैनन्। यस ग्रन्थमा ती कमीहरूलाई पुरा गर्ने प्रयास गरिएको छ।

पुरालेखनअध्ययन संस्कृतिको अंग मानिनुपर्दछ र संस्कृतिको अध्ययनमा पुरालेखनको भूमिका खोज्नुपर्दछ। वेलावेलामा देखिने सांस्कृतिक प्रभाव लेखनमा पनि परेको हुन्छ। अभिलेख र पाण्डुलिपिहरूमा देखिने विभिन्न परम्पराहरूको पत्ता लगाई थरिथरिका लेखनशैलीहरूको अध्ययन गरिनुपर्दछ। ब्राह्मीको विकासको तेइस सय वर्षको इतिहासमा कतिपय साझा प्रवृत्तिहरूको विकास भएको र नेपालको भारतसंग सांस्कृतिक सम्बन्ध देखिएकोले भारतीय पुरालेखनको सन्दर्भविना नेपाली पुरालेखनको अध्ययन पुरा हुदैन। लेखनको प्रविधिमा परिवर्तन आउँदा पारंपरिक लेखाईमा फरक आउनसक्छ भन्ने कुरामा उदारताको साथ मनन गर्नुपर्दछ।

## टिप्पणी

१. **अभिलेखहरूका संग्रहहरूको लागि हेर्नुस् अध्याय ४। ग्रन्थहरूका कतिपय सूचीपत्रहरू तल दिइएका छन्।**

२. R.Gnoli, **Nepalese Inscriptions In Gupta Characters Part I. 2** (Roma : ISMEO, 1956) (with 85 plates).

३. हरिराम जोशी सम्पादित **नेपालको प्राचीन अभिलेख** (काठमाडौं : नेपाल राजकीय प्रज्ञाप्रतिष्ठान, २०३०)।

४. D.R. Regmi, **Inscriptions of Ancient Nepal** (New Delhi: Abhinav Publications, 1983).

५. E.H. Walsh, **The Coinage of Nepal** (reprint Delhi, 1973); सत्य मोहन जोशी, **नेपाली राष्ट्रिय मुद्रा** (काठमाडौं: साझा प्रकाशन २०४२) र N.G.

Rhodes, K. Gabrish and C. Veldettavo, **The Coinage of Nepal** (London, 1989).

६. विस्तारको निम्ति हेर्नुस् Ahmad Hasan Dani, **Indian Palaeography** (Oxford: Clarendon Press, 1963). 1-9 (Introduction).

७. ब्राह्मीलिपि पढेको विवरणको लागि हेर्नुस् James Princep, **Essays on Indian Antiquities,** ed by E. Thomas (London.1858) P.39.

८. A.C.Burnell, **Elements of South-Indian Palaeography** (second ed. London, 1878 ), J. Burgess, "Palaeography" in **Archaeological Survey of Western India,** iv (1883).

९. Alexander Cunningham, **Inscriptions of Asoka,** 1877.

१० J.F.Fleet, **Inscriptions of the Guptas and their Contemporaries,** in **Corpus Inscriptionum Indicarum** Vol.III. (1888, reprint. Varanasi, 1963).

११. गौरीशंकर हीराचन्द ओझा, **भारतीय प्राचीन लिपिमाला**, १८९४ (पुनर्मुद्रित, दिल्ली,१९५९) ।

१२. George Buhler, **Indische Palaeographie (**1896) in German) later translated into English, **Indian Paleography,** and into Hindi, **भारतीय पुरालिपिशास्त्र** (मोतीलाल बनारसीदास, १९६६) ।

१३. R.B.Pandey, **Indian Palaeography** (Banares, 1952), also in Hindi. Chapter I.यसका अन्य अध्यायहरूमा पुरालेखनसम्बन्धी कुनै कुरा छैन ।

१४. F. W. Thomas, "Brahmi Script in Central-Asian Sanskrit Manuscripts" **Asiatica,** 1954.

१५. अहमद हसन दानी, **पूर्वोक्त टिप्पणी** ६ ।

१६. Varanasi: Siddharth Prakashan,1970.

१७. **The Palaeography of Brahmi Script in North India** (From c.236 B.C. to c. 200 A.D.(Varanasi: Siddharth Prakashan, 1971).

१८. The **Origin of Brahmi Script.** (Delhi: D.K. Publications, 1979).

१९. Rajendralala Mitra, **The Sanskrit Buddhist Literature of Nepal** (A Descriptive Catalogue of the Collection of MSS Presented by B.H.Hodgson, Preceded by a Memoir of the Donor). Calcutta: Asiatic Society of Bengal, 1882, reprint. Calcutta, 1971).

२०. Cecil Bendall, **Catalogue of the Buddhist Sanskrit Manuscripts in the University Library, Cambridge** (Cambridge: University Press, 1883).

२१. Haraprasad Shastri, "Notes on Palm-leaf MSS in the Library of His Excellency the Maharaja of Nepal" **Journal of Asiatic Sciety of Bengal,** LXVI: 4,1897. pp 310-16; **A Catalogue of Palm-leaf and Selected Paper Manuscripts Belonging to the Durbar Library Nepal** (Calcutta: Baptist Mission Press, 1905-1915, 2

vols.); **A Descriptive Catalogue of the Sanskrit Manuscripts in the Government Collection of the Asiatic Society of Bengal** (Calcutta: Asiatic Society of Bengal, vol. I, 1917; vol.2, 1955; vol. 3, 1957 and other reports of MSS from Nepal.

२२. William J. Kirkpatrick, **An Account of the Kingdom of Nepaul Being the Substance of Observations Made During a Mission to That Country in the Year 1793** (London: William Miller,1811, reprint. New Delhi,1969).

२३. D.Wright, **History of Nepal,** Translated from Parbatiya by Munshi Shew Shunkar Singh and Pandit Sri Gunanand, etc. (Cambridge: University Press, 1877, reprint. Calcutta, 1958).

२४. Cecil Bendall, *op.cit.* note 20.सेसिल बेण्डालले चर्चा गरेको वंशावली गोपालवंशावली थियो ।

२५. S. Levi, **Le Nepal: Etude Historique d' un Royaume Hindou.** 3 vols. (Peris, 1905 and 1908).

२६. यसबारेमा सूचनाको लागि यस पुस्तकको लेखक प्रा.कमलप्रकाश मल्लको आभारी छ। यस्ता एक गुभाजुको उल्लेख प.नयराज पन्तले गरेका छन् जसबाट उनले वर्णमालाहरूको तस्वीर पाएका थिए। हेर्नुस् उनको **लिच्छविसंवत्को निर्णय** (काठमाडौं : नेपाल राजकीय प्रज्ञाप्रतिष्ठान, २०४३) उपोद्‌घात पृष्ठ ९ ।

२७. काठमाडौं : मानदास, सुगतदास, संवत् १०७३ (१९५३), र हेमराजको सो पुस्तकको अर्को संस्करण संवत् १०७७ (१९५७) मा छापिएको थियो। पन्ना प्रशाद जोशीको पुस्तकको बारेमा प्रा. कमलप्रकाश मल्लबाट जानकारी पाइएको हो ।

२८. काठमाडौं : श्री ५ को सरकार, पुरातत्त्व र संस्कृति विभाग, २०१७ ।

२९. काठमाडौं : श्री ५ को सरकार, वीरपुस्तकालय, २०२१ ।

३०. **कैलाश**, २, संख्या १ र २, १९७४ ।

३१. काठमाडौं : नेपाल राजकीय प्रज्ञाप्रतिष्ठान, २०३० ।

३२. नेपाल लिपि गुथि, **प्रचलित नेपाल लिपिया वर्णमाला** (काठमाडौं, संवत् १११२) ।

३३. रविसन शाक्य, **नेपाल लिपि वर्णमाला**, ललितपुर, २००१ ।

३४. यद्यपि जे.एफ.फ्लीटले गुप्तलिपिलाई उत्तरी र दक्षिणी प्रकारमा विभाजित गरे। पछि उत्तरी गुप्तलेखनलाई पूर्वी र पश्चिमी गरी पुन: विभाजित गरियो। तथापि ओभ्का जस्ता कतिपय लेखकहरूले क्षेत्रीय भिन्नतालाई महत्त्व दिएनन् र ब्राह्मी, गुप्त, कुटिला र नागरी जस्ता लेखनको वर्णनमा जोर दिए। समुद्रगुप्तको (मृत्युवर्ष ३७५ ई.) इलाहाबाद र एरणका स्तम्भलेखहरूमा फरक शैली छन्। हेर्नुस् अध्याय १२ ।

३५. अ.ह.दानी, **पूर्वोक्त टिप्पणी** ६, पृष्ठ १० ।

३६. लिच्छविकालको लेखनको सम्बन्ध चौथो शताब्दी ई.का गुप्तराजा समुद्रगुप्तको इलाहाबाद स्तम्भलेखको लेखनसँग रहेको दानीको विचार १९६० ई. मै

छापिइसकेको छ। हेर्नुस् अ.ह. दानी, **पूर्वोक्त टिप्पणी** ६, पृष्ठ १३७। अध्याय १३मा लिच्छविलिपिको व्युत्पत्तिको सम्बन्धमा यस बारे चर्चा भएको छ।

३७. पूर्ववर्ती लेखकहरूले नेवारीलिपिलाई जातिविशेषको भाषाको लेखन भन्ने सीमित अर्थ गरी संकुचित दृष्टिले हेरे। तिनले एकातिर नेवारीलिपिको आरम्भ दशौं शताब्दी ई.को पहिलो दशकमा भएको भने, अर्कोतिर त्यसको तुलना बाह्रौं शताब्दीपछि भारतमा विकसित मैथिली लिपिसंग गरे। यथार्थमा नेवारीलिपिलाई परिभाषित गरिएको थिएन। लक्षणहरू नकेलाइएका हुंदा यसको नामकरणमा झैं परिभाषा, मूल र आरम्भकालका बारेमा भ्रम उत्पन्न भएको हो। यस पुस्तकको लेखकले नेवारीलिपिलाई परिभाषित गरेको छ र यसको आरम्भको सम्बन्धमा भ्रमको निराकरण गर्नखोजेको छ। वास्तवमा नेवारीलिपि एघारौं शताब्दीदेखि उण्डाइसौं शताब्दी ई.सम्मको लामो कालसम्म प्रचलित नेपालको राष्ट्रिय लेखन हो। हेर्नुस् अध्याय १७।

३८. यसकारण लिच्छविलिपिलाई हेमराज शाक्यले भने झैं (**पूर्वोक्त** टिप्पणी ३१, पृष्ठ ४) ब्राह्मीलिपिको द्वितीयरूप भन्नु उपयुक्त हुदैन।

३९. गौ.ही. ओझा, **पूर्वोक्त टिप्पणी** ११ पृष्ठ ६३।

४०. हेमराज शाक्यले (**टिप्पणी** ३१ पृष्ठ ५) राजा नरेन्द्रदेवको पालादेखिको र शङ्करमान राजवंशीले (**टिप्पणी** ३० पृष्ठ ३८) अंशुवर्माको पाला देखिको लेखोटमा कुटिलाका लक्षण देखेका छन्।

४१. **पुरालेखन परिचय नेपाल** (काठमाडौं, २०४८) पृष्ठ ८० र अगाडि। यसबारे अध्याय १४मा विशद चर्चा गरिएको छ।

४२. हेर्नुस् अध्याय २१।

४३. हेर्नुस् अध्याय २२।

४४. **टिप्पणी** ४१।



## अध्याय आठ

# दक्षिण एशियामा लेखनको प्राचीनता

पश्चिमी भारत र पूर्वी पाकिस्तानको सिन्धुनदीको किनारामा ईसापूर्व दुइहजार दुईसयतिर विकसित हडप्पा वा प्राचीन सिन्धुघाटीसभ्यतामा खास किसिमको लेखनको प्रमाण पाइन्छ। यो दक्षिणएशियाको सबभन्दा पहिलो लेखन हो। सिन्धुसभ्यताको अन्त भएपछि उत्तर भारतमा वैदिक आर्यहरूको[१] सभ्यताको थालनी भएको मानिन्छ। वेद, उपनिषद्, आरण्यक र महाकाव्य जस्ता ग्रन्थहरूको विशाल पारम्परिक साहित्यबाहेक आर्यहरूको कुनै किसिमको भौतिक अवशेष पाइँदैन। केही लेखकहरूले वैदिकसाहित्यमा पाइने विभिन्न सन्दर्भहरूको आधारमा आर्यहरूमा कम्तीमा ईसापूर्व एक हजार वर्षअघिदेखि लेखनको चलन रहेको विश्वास गरेका छन्।[२] अर्का थरिका लेखकले भने भारतमा ईसापूर्व पाँच सयताका पश्चिमएशियाली लेखनका आधारमा बनाइएको लिपिको पहिलो चलन रहेको मानेका छन्।[३] सिन्धुसभ्यताको अन्त भएपछि एकैपल्ट ईसापूर्व तीन सयतिर भारतीय उपमहादेशको पश्चिमी भूभागमा यूनानी लिपि र केही पछि ती ठाउँमा खरोष्ठीलिपि र अन्यत्र ठुलो भूभागमा ब्राह्मीलिपिको चलन चलेको प्रमाण पाइन्छ।

### सिन्धु सभ्यतामा लेखन

पाकिस्तानको पंजाबको मण्टिगुमरी जिल्लामा पर्ने हड़प्पा र सिन्धको लरकाना जिल्लाको मोहेनजोदाड़ो लगायत पाकिस्तान र भारतको पंजाब, सिन्ध, हरयाणा, गुजरात र राजस्थानसहित निकै ठूलो भूभागमा सिन्धुघाटी वा हडप्पासभ्यताका भौतिकअवशेषहरू पाइएका छन्। तिनमा नानाथरिका चिह्नहरू कुँदिएका ससाना छाप वा सीलहरू पनि पाइन्छन्। ती चिह्नहरू खास आशय व्यक्त गर्न सुनियोजित ढंगले बनाइएका बुझिन्छन्।[४]

### प्रकृति र विशेषताहरू

सिन्धुलिपिका अभिलेख भन्नु नै यस्ता चिह्नहरू कुँदिएका ससाना छाप हुन्। यस्ता चिह्न वा अक्षरहरू २५० भन्दा बढी छन् र प्रायः एकै आकारका तर अनेक थरिका छन्। प्रत्येक छापमा प्रायः छवटा अक्षरचिह्नहरू पाइन्छन्। यिनमा मानवआकृति, चरा, माछा, सर्प, गँगटा जस्ता प्राणीहरू, बोट, बिरूवा र पात, पहाड, पानी जस्ता जैविक र प्राकृतिक वस्तुहरूका चित्रहरूको साथसाथ घ्याम्पो, धनु, वाण, काँइयोजस्ता मानवनिर्मित वस्तुहरूका चित्र पाइन्छन्।[५] (फलक ३६)।

मानवआकृतिहरू प्रतीकात्मक छन्। यिनमा ठाडो रेखाको माथिल्लो भागबाट दायाँबायाँ दुवैतिर ढल्केका धर्सा बनाइएका छन् जो माथि उठाइएका हात जस्ता लाग्छन् र तल्लो भागबाट यसै गरी दुवैतिर ढल्केका धर्साहरूले

फट्याइएका गोडाहरूको आशय दिन्छन् । कुनै चिह्नमा यस्ता दुइवटा आकृति आपसमा जोडिएका छन्, कुनैमा अर्कै चिह्न वा धर्सा थपिएका छन् र हातमा हात जोडेर काम गरिरहेका वा नाचिरहेका मानिस जस्ता देखिन्छन् । केहीमा दुवै हातमा पांग्रा जस्ता वस्तु लिएका मानिस देखिन्छन् । केही चिह्नमा खर्पन बोकेका र केहीमा धनुबाट वाण चलाइरहेका मानिस झैं देखिन्छन् ।

अर्का थरि चिह्नमा चरा, माछा र गँगटा बनेका छन् । कुनैमा चराको टाउको माथि फर्केको छ, कुनैमा दायाँ वा बायाँ फर्केको छ र कहीँ ती उडिरहेका छन् । विच्छु, गँगटा र अरू कीराहरू साधारण छन् भने सर्प प्रतीकात्मक किसिमले बनाइएको छ । ठाडो गरी बनाइएका माछा भिन्नभिन्न किसिमका छन् । जनावरका सींग बढी प्राकृतिक लाग्छन् । दोहोरो सर्पाकार रेखाहरूलाई पानीको प्रतीक मानिएको छ । तेर्सो रेखामाथि प्रायः तीनवटा अर्धवृत्त वा कोण भएको चिह्न पहाडको प्रतीक मानिन्छ । वनस्पतिहरूमा बोटबिरुवा, च्याउ, कमलको कोपिला र पिपलको पातका चित्र बढी पाइन्छन् ।

मानवनिर्मित वस्तुहरूमा माटाका घ्याम्पाहरू, पलंग र कुर्सी (मेच), तारबाजा अर्थात् हार्प, धनु, वाण र वाण चढाइएको धनु, छाता, कीरा समात्ने जाली, औंला सहितका हात र अनेकौं किसिमका ज्यामितीय चिह्नहरू पर्दछन् । ज्यामितीय रेखा र चिह्नहरूमा पाँग्रा (चक्र), अण्डाकार, त्रिकोण र चतुष्कोण चिह्न, धनचिह्न, गुणनचिह्न र अर्धवृत्त अर्थात् ब्राकेट जस्ता रेखा पाइन्छन् । अनेक भागमा काटिएका रेखा भएका चिह्नहरू संख्यावाचक मानिएका छन् । यीमध्ये कुनैमा एकोहोरो, कुनैमा एकै किसिमका दुईवटा चिह्न जोडिएका छन्, कुनैमा बेग्लै चिह्न वा धर्साहरू बनाइएका छन् । यी चिह्नहरूका बारेमा नानाथरिका अनुमान गरिएका छन् ।

यिनमध्ये केही चिह्नहरूका आकारप्रकार भारतका केही गाऊँमा घरको भित्ता र आँगनमा सिंगार्न हाल बनाइने बुट्टासँग मिल्दाजुल्दा छन् । केही लेखकले यिनको संबन्ध सिन्धुलिपिचिह्नसँग गाँसेका छन् ।[६] अर्काथरि लेखकले सिन्धुचिह्न हरूलाई ईसापूर्व ५०० ताकादेखि प्रचलनमा आएका थिचेर/ठोकेर बुट्टा छापिएका (पंचमार्क्ड् वा आहत) सिक्काका चिह्नहरूसँग दाँजेका छन् र चित्रलेखन भनेका छन् ।[७] केहीले सिन्धुलिपिचिह्नहरूलाई तन्त्रशास्त्रसँग सरोकार राख्ने चिह्न मानेका छन् ।[८] यो संयोगमात्र पनि हुन सक्छ । वास्तवमा ऐतिहासिक कालमा निकै पछिसम्म चलेका चिह्नहरूको सिन्धुलिपिसँगको संबन्धलाई प्रमाणित गर्ने ठोस प्रमाणको अभाव छ । सिन्धुलिपिचिह्नलाई सुमेरियाली लिपिसँग दाँजेर प्रभावित हुने लेखकहरू धेरै छन् । केही सिन्धुमानवलाई सुमेरियाली मूलका मान्दछन् र केही सुमेरियाली र आर्यलाई एकै मान्दछन् ।[९] कुनै लेखक भने स्वयं सिन्धु मानवलाई सुमेरियाली लेखनका जनक मान्दछन् ।[१०] सिन्धुलिपिमा कुन भाषा लेखिएको छ भन्ने गाँठी कुरो जान्न सकिएको छैन । कसैले सिन्धुघाटी सभ्यताका निर्मातालाई द्रविड जातिका मानेका छन् र स्वभावतः सिन्धुलिपिको भाषालाई पुरातन द्रविड वा तमिल ठानेका छन् ।[११] कसैले तिनलाई पश्चिम एशियाका प्राचीन हिट्टी वा हिट्टाइट मानेका छन् ।[१२] कसैले सिन्धुलिपिलाई

आर्यहरूको संस्कृत वा प्राकृतको मौलिक लेखन वा ब्राह्मीलिपिकी जननी मानेका छन् ।[१३] तर यीमध्ये कुनै कुरालाई प्रमाणित गर्न सकिएको छैन । सिन्धुलेखनको यथार्थ प्रकृतिसम्म पनि जान्न सकिएको छैन । डेभिड डिरिन्जरले सिन्धुलिपिलाई भाव वा आशय बताउने अक्षरात्मक लेखन (ideographic-syllabic script) मानेका छन् ।[१४] आज सम्म पढ्न सकिएको कुनै लिपिसँग सिन्धुलिपिको सादृश्य निकै कम देखा परेको छ । यसको लेखनगतिको सम्बन्धमा पनि धेरै मत छन्, शायद यो हलावर्त वा उभयगतिको लेखन थियो ।[१५]

धेरै मानिसहरूबाट सिन्धुलिपि पढ्ने प्रयास भएको छ र पढेको दाबी गरिएको छ तथापि तीमध्ये कुनैलाई पनि अरू विद्वान्हरूले मानिदिएका छैनन् ।[१६] विश्वका प्राचीन सभ्यताहरूको कोटिमा राखिएको सिन्धुघाटीसभ्यताका निर्माताहरूले आफ्नु बारेमा लेखेको यथार्थ बुझाउन सकेका छैनन् । अझै सिन्धुघाटीसभ्यता आदिइतिहासको दर्जाबाट इतिहासको दर्जामा पुग्न सकेको छैन । ईसापूर्व १५००तिर सिन्धुसभ्यताको पतनको साथसाथ सिन्धुलेखन पनि लोप भयो । वास्तवमा यस क्षेत्रको लेखनको प्राचीनताको सन्दर्भमा सिन्धुलेखनको संझना मात्र गर्न सकिन्छ, विशेष केही भन्न सकिँदैन ।

सिन्धुसभ्यताको पतनपछि उत्तर भारत वैदिक आर्यहरूको थलो भएकोले आर्यावर्त कहलायो । आर्यावर्तमा लेखनको चलन कहिलेदेखि चल्यो भन्ने बारेमा पनि वास्तविकता थाहा भएको छैन । थाहा भएको कुरा के मात्र हो भने ईसापूर्व तेस्रो शताब्दीमा झण्डै भारतीय उपमहादेशभरि एकैपल्ट समान किसिमका लेखनको चलन चल्यो । सिन्धुसभ्यताका साबिकका केन्द्रहरूको स्थिति भने भिन्न हुनुपर्छ, जहाँ ईसापूर्व ५००भन्दा केही अघिपछि कहिले ईरानको अखमनी साम्राज्यको र कहिले ग्रीस वा यूनानका विजेता राजा अलेक्जेण्डर वा सिकन्दरको प्रभाव रह्यो । ती क्षेत्रहरूमा तिनका लेखन देखिनु स्वभाविक हो ।

## वैदिक आर्यहरूमा लेखनको प्राचीनता

आर्यहरू यस्तो विशाल वैदिक साहित्यका निर्माता हुन् जो धेरै प्राचीन मानिन्छ । वैदिक साहित्यको प्रकृति भिन्नै किसिमको छ । पारम्परिक रूपमा यस्ता साहित्य श्रुति र स्मृति भनिन्छन् । सुन्नु भन्ने धातुबाट बनेको श्रुति भन्ने शब्द र सम्झनु भन्ने शब्दको आशय यस्तो साहित्यसँग हुनुपर्छ जो सुनेर कण्ठ गरेर र सम्झनाको भरमा लामो कालसम्म रहेको छ । यस साहित्यको लिखित रूप भने धेरै पछिको मात्र पाइन्छ । बृहद् साहित्यका सर्जकहरूको समाजमा लेखनको अस्तित्त्वको प्रश्न विडम्बनाको विषय भएको छ । पारम्परिक वैदिक साहित्यमा लेखनको अस्तित्त्वतिर सङ्केत गर्ने सन्दर्भ पनि पाइन्छन् तर लामो कालसम्म भारतमा कुनै किसिमको लेखनको चलन रहेको देखाउने भौतिक प्रमाण भने पाइँदैन । यस स्थितिमा लेखनको प्राचीनताबारे पत्ता लगाउन दुइवटा बेग्लाबेग्लै उपाय अपनाइएका छन् । प्राचीन साहित्यमा लेखन र ध्वनि वा उच्चारणसम्बन्धी उद्धरणहरूको परीक्षण गर्नु यौटा उपाय हो । गौरीशंकर हीराचन्द ओझाले यसै अध्ययनपद्धतिको अवलम्बन गरेका छन् ।[१७] लेखनको

वास्तविक प्रचलनबारे जिज्ञासा राख्दै त्यसको सम्बन्ध कुनै लेखनसँग हुनुपर्छ भन्ने अवधारणाको जाँच गर्नु अर्को उपाय हो। जर्ज बूलरले यसैलाई अपनाएका छन्।[१८] यसरी वैदिक आर्यहरूको समाजमा लेखनको चलन रहेनरहेको बारेमा दुई थरिका राय पाइन्छन्। दुवैले ईसापूर्व तेस्रो शताब्दीमा भारतीय उपमहादेशभरि प्राप्त लेखनको भौतिक नमुनालाई स्वीकार गरेका छन् र कतिपय लेखोटलाई त्यसभन्दा २०० वर्ष पुराना मानेका छन्।

## वैदिक कालमा लेखनको अस्तित्त्व

गौरीशंकर हीराचन्द ओझाले प्राचीन भारतीय साहित्यका लेखनसम्बन्धी उद्धरण र अन्य सन्दर्भहरू बटुल्दै लेखनको प्राचीनताको बारेमा सोच बनाएका छन्। ती सामग्रीहरूको उल्लेख यहाँ पाँच बूँदाहरूमा गरिएको छ। लेखनको प्राचीनताको समस्यालाई भिन्न किसिमले हेर्ने जर्ज बूलरले पनि तीमध्ये अधिकांश सामग्रीहरूको उपयोग गरेका छन्। यद्यपि ओझाको मतको मूल आधार रहेको पहिलो बूँदालाई बूलरले खास महत्त्व दिएका छैनन्।

## १. वैदिक र परवर्ती संस्कृत साहित्य

(**क**) निम्नलिखित तथ्य र उद्धरणहरूबाट गौरीशंकर हीराचन्द ओझा र राजबली पाण्डेयले वेदहरूको निर्माणकालदेखिनै आर्यहरूमा लेखन-ज्ञान रहेको मानेका छन्:[१९]

(१) अधिकांश वैदिक मन्त्रहरू गायत्री, अनुष्टुभ्, बृहती आदि छन्दहरूमा र केही गद्यमा रचिएका छन्। छन्दोबद्ध गर्दा ह्रस्व र दीर्घ, मात्रा वा वर्णहरूको निर्धारित संख्यालाई हेक्का राख्नुपर्छ। लेखनको अभावमा गद्यका मन्त्रहरू संझिरहन पनि गाहारो हुन्छ। यसकारण लेखनको ज्ञान रहेको हुनुपर्छ भन्ने तिनको आशय हो।

(२) **ऋग्वेद**मा गाइदानको प्रसङ्गमा'अष्टकर्णी गौ' वा 'कानमा आठ अङ्क कुँदिएको गाई'को सन्दर्भ पाइन्छ। लेखनको अभावमा अङ्कलेखन सम्भव हुँदैन।

(३) **यजुर्वेद**मा गणक (हिसाब गर्ने) व्यक्तिको उल्लेख पाइन्छ।

(४) यसैगरी **तैत्तिरीयसंहिता**मा दशदेखि दश खरबसम्मको संख्याको उल्लेख पाइन्छ।[२०]

(५) **शतपथ ब्राह्मण**मा दिन, रात, मूहूर्त्त आदिको वर्णन पाइन्छ र एक सेकेण्ड बराबर कालको १/१७ सम्मको कालखण्डको सूक्ष्म गणना गरिएको छ। यी प्रसंगहरूबाट सूक्ष्म संख्याका हिसाब गर्ने लेखनको परिचय भइसकेको अर्थ गरिएको छ।

(६) जुवा खेल्ने पाशाका उल्लेख धेरै ठाउँमा पाइन्छ। पाशामा दाउहरूका लागि सम्भवतः कुनै किसिमका अङ्क हुन्थे, भन्ने अनुमान गरिएको छ।

(७) **उपनिषद्, आरण्यक** र **ब्राह्मण**साहित्यमा अक्षर र वर्णका विशेषता बताइएको छ जस्तै :

(क) **छान्दोग्यउपनिषद्**मा अक्षर, स्वरवर्ण (**अ आ इ ई उ ऊ ए ऐ ओ औ**) स्पर्शवर्णका (**क**देखि **म**सम्मका व्यञ्जनवर्णका) अधिष्ठाता देवताहरूको उल्लेख पाइन्छ ।

(ख) **ऐतरेय आरण्यक**मा स्पर्श, स्वर र अन्तःस्थ (**य र ल व**) जस्ता व्यञ्जन र घोषका, **ण न ष र स**-को उच्चारणस्थान र आपसी भेद र सन्धिका चर्चा छ ।

(ग) **शतपथब्राह्मण**को भनाई अनुसार इन्द्रले पहिलेको अस्पष्ट र अनियमित भाषालाई व्याकरणमा बाँधेर नियमित बनाए ।

(घ) **यास्क**ले भाषा-प्रयोगका सूक्ष्म नियम बनाउने पहिलेका अनेकौं व्याकरणवेत्ताहरूका नाम गिनाएका छन् ।

(८) **रामायण** र **महाभारत**मा लिख, लेख, लेखन, लिखित जस्ता शब्द पाइन्छन् व्यासले गणेशद्वारा महाभारत लेखाएका थिए भन्ने बयान आदिपर्वमा गरिएको छ ।

(९) **कौटल्यको अर्थशास्त्र**मा लिपि, संख्या, पत्र-संप्रेषण, लेखक जस्ता शब्द पाइन्छन् ।

(१०) **वशिष्ठ धर्मसूत्र**मा 'लिखित पत्रक' को उल्लेख पाइन्छ ।

(११) पाणिनिको **अष्टाध्यायी**मा लिपि, लिवि (लेखन), लिपिकर, लेखक, यवनानी (ग्रीकलेखन), ग्रन्थ, स्वरित (उदात्त र अनुदात्तको बीचको स्वर) जस्ता शब्दहरूको उल्लेख पाइन्छ ।

## २. प्राचीन बौद्ध साहित्य र परम्परा

यिनबाट लेखनको अस्तित्त्वको सम्बन्धमा संकेत दिने निम्नलिखित सन्दर्भहरू प्रस्तुत गरिएका छन् ।[२१]

(१) **जातक** कथाहरूका विभिन्न प्रसंगहरूमा छ किसिमका पत्रहरूको उल्लेख पाइन्छ : क.व्यक्तिगत र आधिकारिक पत्र, ख. राजकीय घोषणा, ग.पारिवारिक कार्यको विवरण, घ. धार्मिक र राजनीतिक सुभाषित, ङ. ब्याज र ऋणपत्र र च. ग्रन्थका पत्रहरू ।

(२) **महावग्ग** र **जातक**मा लेख्न सिकाउने संस्था, विधि र उपकरण, लिखित पाठ्यक्रम जस्ता कुराको उल्लेख पाइन्छ ।

(३) **सुत्तान्तमा** पिठ्यूँमा वा आकाशमा औंलाले अक्षर लेखी चिनाउने 'अक्खरिका' वा अक्षरिका नामक खेल भिक्षुहरूले खेल्न नहुने बताइएको छ ।

(४) **विनयपिटक**मा 'लेखनकार्य' भिक्षुहरूको निम्ति प्रशंसनीय र गृहस्थहरूको निम्ति जीविकाको राम्रो उपाय भनिएको छ ।

(५) **ललितविस्तर**को अनुसार बुद्धले विश्वामित्रबाट लिपिशालामा चन्दनको फलक (पाटी) मा वर्णक(कलम) ले अक्षर सिके ।

## ३. प्राचीन परंपरा

विभिन्न भारतीय परम्परा, स्मृति वा धर्मशास्त्र र अनुश्रुतिका संग्रहहरूबाट पनि लेखनको प्राचीनताको आधार खोज्ने गरिन्छ :[२२]

(१) **मनुस्मृति**माथि **वृहस्पति**द्वारा लेखिएको वार्त्तिक (टीका) मा लेखिएको छ : "छ महिनापछि कुनै पनि घटनाको सम्बन्धमा भ्रम हुने हुनाले ब्रह्माले पत्र (पन्ना, पृष्ठ) माथि लेखिने अक्षरहरूको सृष्टि गरे।"[२३]

(२) **नारदस्मृति**को एक ठाउँमा भनिएको छ : ब्रह्माले उत्तम आँखाको समान लेखनको सृष्टि नगरका भए यस लोकको यस्तो शुभगति हुँदैनथ्यो।[२४]

(३) कुनैनकुनै देवता वा देवीलाई कुनैनकुनै विषयको अधिष्ठाता देव वा देवीको रूपमा कल्पित गर्ने हिन्दु र बौद्धहरूले लेखन, पुस्तक र ज्ञान-विज्ञानका अधिष्ठाताको रूपमा ब्रह्मा, सरस्वती र मञ्जुश्रीलाई मान्दैआएका छन्। बादामीको ५८० ई.को ब्रह्माको मूर्तिका चार हातहरूमध्ये एकमा ताडपत्रग्रन्थ समातेको देखाइएको छ।

(४) परंपरामा ब्राह्मीलिपिलाई ब्रह्माको सृष्टि भनिएको छ र पारंपरिक साहित्यमा लिपिहरूको उल्लेख पाइन्छ :

(क) **समवायांगसूत्र** र **पण्णवणासूत्र** जस्ता जैन ग्रन्थहरूमा ब्राह्मी र खरोष्ठी समेत १८ किसिमका लिपिहरूको सूची पाइन्छ।

(ख) संस्कृतको बौद्धग्रन्थ **ललितविस्तर**मा ब्राह्मी र खरोष्ठी सहित ६४ लिपिहरूको उल्लेख पाइन्छ।[२५]

(ग) सातौं शताब्दी ई.को मानिने चीनियाँ विश्वकोश **फा-वान- शु-लिन**मा लिपिहरूको लामो सूचीमा पहिलो नाम ब्राह्मीको पाइन्छ जसलाई भगवान् ब्रह्माद्वारा निर्मित बताइएको छ।

## ४. विदेशीहरूको वर्णन र कृति

वेलावेलामा भारत आएका विदेशीहरूका वर्णन र तिनका कृतिहरूले पनि लेखनका सम्बन्धमा प्रकाश पारेका छन् :[२६]

(क) ग्रीसको मेसिडोनियाबाट उत्तरपश्चिम भारत विजय गर्ने सिकन्दर (अलेक्जेण्डर)का साथ भारत आएका उनका सेनापति **नियार्कस**ले 'भारतीयहरू कपासबाट लेख्ने वस्तु बनाउँथे' भनी लेखेका छन्।

(ख) अर्का यूनानी लेखक **क्यू. कर्टियस**को अनुसार भारतीयहरू रूखको भित्री बोक्रामा लेख्थे। यो भनाइ भूर्जपत्र (भोजपात)लाई लक्ष गरिएको हुन सक्छ।

(ग) पाँच वर्षसम्म मौर्य राजधानी पाटलीपुत्रमा बसेका यूनानी राजदूत **मेगस्थनीज**ले पनि लेखनका प्रसङ्ग र सन्दर्भहरूको उल्लेख गरेका छन्।[२७]

(घ) सातौं शताब्दी ई.का चीनियाँ यात्री युवानच्वाङ (ह्वेन्त्सांग) ले भारतमा धेरै अगाडिदेखि लेखन चलिरहेको कुरा गरेका छन्।

(ङ) अरब यात्री **अल बेरूनी**को अनुसार भारतमा लेखनज्ञान कलियुगको आरंभमा सुरु भयो, तर कालान्तरमा सो बिर्सियो र पराशरका छोरा व्यासले दैवी प्रेरणा पाएर लेखनलाई पुन: आविष्कार गरे। अल बेरूनी एघारौं शताब्दीमा भारत आएका थिए।

## ५. पुरालेखन प्रमाण

पूर्वमा बंगालको खाडी (उडिसाका धौली, र गञ्जाम)देखि पश्चिम गिरनार (गुजरात) सम्म, उत्तरपश्चिममा अफगानिस्तानको कन्दहारदेखि दक्षिणमा आन्ध्र प्रदेशसम्म मौर्यसम्राट् अशोकका (ईसापूर्व २७४-२३७) दुई दर्जनभन्दा बढी चट्टान र स्तंभका अभिलेखहरू पाइएका छन्। यिनमध्ये अधिकांशमा ब्राह्मीलिपि र केहीमा खरोष्ठी, अरेमायक र यूनानीलिपिको उपयोग गरिएको छ। आरम्भका लेखकहरूले निम्न अभिलेखहरूलाई अशोककालभन्दा पहिलेका मानेका थिए :

(१) **अजमेरको वड्ली अभिलेख** : १९१२ मा ओझाले पत्ता लगाएको ४ पंक्तिको यो अभिलेख छ। जो स्तम्भमा कुँदिएको छ, ।[२८]

(२) **पिपरहवा (बस्ती) को अस्थिपात्र अभिलेख**: कपिलवस्तु नजिकै भारतको बस्ती जिल्लाको सिद्धार्थनगरमा पर्ने पिपरहवाको स्तूपको गर्भबाट प्राप्त ढुंगाको कलशको रिंगै कोरिएको ३७ वर्णहरूको अस्थिपात्रअभिलेख। यी दुवैलाई ओझाले ईसापूर्व पाँचौं शताब्दीको ठाने।[२९]

(३) **मध्यप्रदेशको एरणमा पाइएका सिक्काका लेख** : यिनमा ब्राह्मीका उल्टा वर्ण कुँदिएका छन्। यिनलाई बूलरले ईसापूर्व चौथो शताब्दीका माने।[३०]

(४) **भट्टिप्रोलुअभिलेख** : आन्ध्रप्रदेशको कृष्णा जिल्लाको भट्टिप्रोलुमा जम्मा दश अभिलेखहरू पाइएका छन्। यिनमध्ये नौ अभिलेख दुइवटा ढुंगाका र एकवटा फट्टिकका गरी जम्मा तीनवटा कलशमा र एकवटा फट्टिकको छकुने टुक्रामा कुँदिएका छन्। यी सबै अभिलेखहरू कुनै स्तूपभित्र पाइएका हुन्। यिनका केही वर्णहरू उल्टा छन् र केही वर्णहरू उल्टो गरी पढ्नुपर्ने जस्तो गरी कुंदिएका छन्। यिनलाई बूलरले अशोकभन्दा केही पछिका मानेतापनि यिनको उल्टो लेखनलाई ईसापूर्व पाँचौं शताब्दीको परम्परा माने।[३१]

(५) **तक्षशिलाका सिक्कालेख**: प्राचीन तक्षशिला नगर मानिएको पाकिस्तानको रावलपिण्डी जिल्लाको टाक्सिलाका अवशेषहरूमा प्राप्त केही सिक्काहरूलाई बूलरले ईसापूर्व ४००का माने।[३२]

(६) **महास्थानको शिलाअभिलेख** : बंगलादेशको बोगरा जिल्लाको महास्थान गाउँमा प्राप्त सात पंक्तिको यस खण्डित शिलालेखलाई राजबली पाण्डेयले चन्द्रगुप्त मौर्यको पालाको वा अझ पुरानो माने।[३३]

(७) **गोरखपुरको सोहगौराको ताम्रपत्र**: ढलौटे काँसको ६.४ सें.मी. x २.९ सें.मी.आकारको यस अभिलेखमा ७२ वर्ण र तीमाथि सात ओटा प्रतीकचिह्न कुँदिएका छन्। यसलाई राजबली पाण्डेयले अशोकपूर्वका माने।[३४]

(८) **परखम र पटनाका मूर्तिलेख** : उत्तरप्रदेशको मथुराको मूर्तिलेख र विहारको पटनानजिकै प्राप्त ससाना मूर्तिलेखहरूलाई का.प्र. जायसवालले ईसापूर्व ५१५ का राजा अजातशत्रुका माने ।[३५]

माथिका सन्दर्भहरूबाट गौरीशङ्कर हीराचन्द ओभ्काको विचारमा: भारतमा वैदिककालदेखिनै लेखनको चलन थियो, व्याकरणको चर्चा हुन्थ्यो, छन्दशास्त्र बनिसकेको थियो, वेदको व्याख्यान हुन्थ्यो, अंकगणितको राम्रो अवस्था थियो, हिसाब राख्नेहरू पनि थिए, जनावरहरूका कानमा र जुवा खेल्ने पाशामा अंक लेखिन्थ्यो, जुवामा हारिएको वा जितिएको धनको हिसाब राखिन्थ्यो र समयको एक सेकेण्डको सत्रौं भागसम्मको सूक्ष्म विभाग गरिन्थ्यो । ओभ्काको अनुसार "बिर्सेको अवस्थामा सहायताको लागि वेदको पुस्तक साथमै राखिन्थ्यो...सुविधाको निम्ति तिनको उपयोग हुन्थ्यो ।" उनको विचारमा कण्ठ गर्ने परम्परामा जोड दिन लेखिएको पुस्तकबाट वेद पढ्न हुँदैन भनिएको हुनुपर्छ । गौरीशङ्कर हीराचन्द ओभ्का र राजबली पाण्डेयको विचारमा लेखनका पुराना उदाहरणहरू "विस्तृत क्षेत्रमा अनुसन्धान उत्खनन नभएको र धेरैसम्म नरहने सामग्रीमा लेखिएको कारण पाउन नसकिएको हो ।"[३६]

## ईसापूर्व पाँच सयमा लेखनको आरम्भ

ईसापूर्व तेस्रो शताब्दीको अशोकको ब्राह्मी लेखोटलाई ध्यानमा राखेर जर्ज बूलरले त्यसको आरम्भ कम्तीमा दुई सय वर्ष पहिल्यै भएको हुनुपर्छ भन्ने ठहर गरे । तिनले साहित्यका लेखनसम्बन्धी उद्धरणको गम्भीरताका साथ अर्थ गरिनुपर्ने कुरामा जोड दिए । बूलरको विचारमा लेखनको जानकारी हुनु अगावै मौखिक संचारमा आधारित हिन्दुशास्त्र रचिए हुनन् । उनको युक्ति छ : वैदिक परंपरामा लेखिएका शब्दहरूभन्दा बोलिने वाणीको महत्त्व बढी मानिन्थ्यो र पुस्तकलाई सरस्वतीमुख भनी पुज्ने परिपाटी भएता पनि हिन्दुहरूमा मुखमा रहने विद्याको रूपमा वेद र शास्त्रको महिमा अभ्कै गाइन्छ ।[३७] जर्ज बूलर रामायण र महाभारतका लेखनसम्बन्धी केही सन्दर्भहरूलाई वास्तविक र जानिएको अभिलेखको कालभन्दा पुराना मान्दछन् । बौद्धसाहित्यमा पाइने छिन्दति, लिखति, लेख, लेखक, अक्खर जस्ता शब्दहरूका आधारमा बूलरले आरंभिक बौद्धसाहित्य-कालमा लेखन प्रारम्भिक चरणमा थियो र यिनबाट कडा पदार्थमा लेख्ने वा कुँद्ने कामको आरंभिक अभ्यास हुन्थ्यो भन्ने मानेका छन् ।

तर जर्ज बूलरको अवधारणामा मुख्य जोड अर्कै कुरामाथि दिइएको छ । उनको मत "आर्यहरूमा लेखनको इतिहासको आरम्भ ईसापूर्व ५०० ताका भयो जब भारतीयहरूले उत्तरी सेमिटिक वर्णमालाको आधारमा ब्राह्मीको निर्माण गरे" भन्ने मान्यतामा अधारित छ । ब्राह्मी र सेमिटिक लेखनका बीच धेरै कुरा अमिल्दा छन् र तिनलाई मिलाउन बूलरले धेरै युक्ति निकालेका छन् । ती दुईको लेखनगति पनि एक अर्कोको विपरीत छ । 'आफ्नो निर्माणकालमा ब्राह्मी पनि सेमिटिक लिपिभ्कैं दायाँबाट बायाँ वा उभयगतिमा लेखिन्थ्यो' भन्ने देखाउन बूलरले एरणका सिक्का र भट्टिप्रोलुका लेखहरू द्रविडप्रकार भनी पेश गरे ।[३८]

## छलफल

लेखनको प्राचीनताबारेका दुवै मतमा ईसापूर्व तेस्रो शताब्दीमा ठुलो भूभागमा प्रचलित रहेको ब्राह्मीलिपिलाई आरम्भविन्दु बनाइएको छ। भारतमा लेखनको चलन धेरै पहिले (शायद ईसापूर्व १५०० ताका) रहेको मान्ने ओझाले साहित्यिक प्रमाणलाई मुख्य आधार बनाए। यस समस्यालाई ब्राह्मीलिपिको निर्माणकालसँग जोड्ने बूलरले लेखनको प्राचीनतालाई ईसापूर्व ५०० तिर झारे। दुवैले साहित्यिक उद्धरणसहित अन्य प्रमाणहरू पनि बटुले र तिनबाट आफ्नु अनुकूल आशय निकाले। यिनको परीक्षणबाट चर्चा आरम्भ गरौं।

प्राचीन र पारम्परिक संस्कृत ग्रन्थहरूको मौलिक लिखित प्रति पाउनु नसकिएकोले तिनको निर्माणकाल र विभिन्न विचारहरूको विकासक्रम सधैं मतभेदको विषय हुँदै आएको छ। किनभने :

(१) मिथक, रूपक र उपमा जस्ता अलङ्कार र खास काव्यात्मक शैलीको कारण प्राचीन संस्कृतसाहित्यको सही अर्थ बुझ्न गाहारो हुन्छ। यसका अनेक किसिमले अर्थ लगाइन्छ र लगाउन सकिन्छ। प्राचीन साहित्यको प्रकृति आफैंमा जटिल र अनेकार्थी छ।

(२) कुनै ग्रन्थ सधैं एकनासको र एकै आकारको हुँदैन; समयको साथसाथ त्यसको आकार बढ्दै गएको पाइन्छ। यस स्थितिमा कुन खास अंश र विचारलाई मूल र कुन चाहिंलाई पछि थपिएको(क्षेपक) मान्ने भन्ने कुरामा सँधै मतभेद पाइनु स्वाभाविक हुन्छ।

(३) पारंपरिक ग्रन्थहरूलाई वैदिककाल, उपनिषद्काल, महाकाव्यकाल जस्ता विभाजनभित्र राख्ने र त्यस आधारमा तिनको तिथिनिर्धारण गर्ने काममा विद्वान्हरूका बीच सँधै मतभेद पाइन्छ।

(४) कुनै पनि प्राचीन ग्रन्थको मूल प्रति दुर्लभ हुन्छ। हामीले पाउन सकेका प्राचीनतम पाण्डुलिपि केही शताब्दी अघि मात्र सारिएका वा लेखिएका छन्। प्रायः कुनै ग्रन्थको रचनाकाल प्रायः श्रद्धावश निकै पुरानो बताइन्छ र प्रस्तुत गरिएका तथ्य र युक्ति सधैं पर्याप्त हुँदैनन्।

(५) प्राचीन ग्रन्थका अनेक पाठभेद पाइनु र मूल प्रति दुर्लभ हुनु जस्ता तथ्यहरूबाट ती ग्रन्थहरूको प्रकृतिबारे अनुमान गर्न गाहारो हुँदैन। लिखित साहित्यमा यस्ता लक्षण विरलै पाइन्छन्। कण्ठ गरेर रचनापरम्परा जोगाउने प्रयासमा यस्तो हुनु बढी स्वाभाविक हुन्छ।

(६) शुद्ध उच्चारणको लागि वा बिर्सेको अवस्थामा संझनाको लागि ग्रन्थको उपयोग हुन्थ्यो होला भन्ने युक्ति पनि खुद पुस्तक नपाइएको कारण संभावनामाथि आधारित अनुमान मात्र हुनआउँछ। अत एव प्राचीन साहित्यको प्रमाणबाट सही निष्कर्षमा पुग्न गाहारो छ।

प्राचीन परंपरा (माथिको बूँदा ३) को बारेमा टिप्पणी गर्नु जरुरी छैन, किनभने ती सन्दर्भहरू या त पुरालेखनप्रमाणबाट जानिएको कालका हाराहारीका हुन् या निकै पछिका। माथि बूंदा ४मा उद्धृत सुरुका तीन विदेशी यात्रीहरूको

वर्णन विचारणीय छन् जो 'अशोकभन्दा पहिले कतिपय भारतीयहरू लेख्न जान्दथे' भन्ने देखाउँछन्, चाहे त्यो जुनसुकै लेखन होस्। यूनानी र अखमनी साम्राज्यको प्रभावक्षेत्र रहेको भारतीय उपमहादेशको पश्चिमी भूभागका अनेक किसिमका लेखनका नमुना पाइन्छन्। यूनानी कन्या बिहे गर्ने चन्द्रगुप्तको दरबारमा यूनानीलिपि जान्ने मानिसहरू हुँदाहुन्। यसकारण यूनानीहरूको लेखनसम्बन्धी वर्णन ब्राह्मी जस्तो विस्तृत क्षेत्रमा प्रचलित लिपिकै बारेमा थियो भन्नसकिँदैन। भोजपत्र र कपासबाट बनेको लेखनसामग्री स्थानीयरूपमा प्रचलित थिए भन्ने कुरा बूलरले मानेका छन्।[३९] वास्तवमा मेगस्थनीज (ईसापूर्व ३००) को मौलिक पुस्तक पाइएको छैन। स्ट्राबो र एरियन जस्ता परवर्ती लखकहरूले उद्धृत गरेका मेगस्थनीजका भनाई पाइन्छन्। स्ट्राबोले (१७-२३ ई.) **जियोग्राफी** नामक पुस्तकमा मेगस्थनीजले लेखेका भनी लेखेका छन् : "...(भारतीयहरू) अलिखित कानून मात्र उपयोग गर्छन् ...तिनीहरूलाई लिखित अक्षरहरूको ज्ञान छैन र प्रत्येक (मुद्दा) संभनाको भरमा छिन्छन् ...।"[४०] मेगस्थनीजको 'संभनाबाट' भन्ने शब्दको अर्थ बूलरले स्मृति वा धर्मशास्त्र भनी लगाएका छन्। तर बूलरले समेत मेगस्थनीजको 'भारतीयहरूलाई लेखनज्ञान नरहेको' भन्ने स्पष्ट भनाइको गलत अर्थ निकालेका छन्।[४१] सातौं र एघारौं शताब्दीमा भारत आउने युवानच्वाङ र अल बेरूनीले भारतीयहरूबाट जेजे सुने, त्यसै परंपराको उल्लेख गरेका हुन्। त्यतिबेलासम्म लेख्ने चलन पुरानो भइसकेको थियो।

केही अभिलेखहरूलाई सम्राट् अशोकको (ईसापूर्व २७२-२३१) समयकाभन्दा पुराना सिद्ध गर्ने प्रयासमा ओझा र बूलर दुवै एकमत देखिन्छन्। (बूंदा ५)। दुवैले बेग्लाबेग्लै कुरामा जोड दिन भनी यसो गरे। ओझाको उद्देश्य लेखनको सबभन्दा पुरानो पुरातात्त्विक प्रमाण जुटाउनु थियो; बूलरको लागि भने 'पहिलो पल्ट भारतमा यस्तो लेखन (ब्राह्मी) को चलन फिनिशियाई-सेमिटिक प्रभावबाट ईसापूर्व ५००ताका चलेको' कुरामाथि जोड दिनु थियो। ओझाले बडलीअभिलेख र पिपरहवाको स्तूपभित्र पाइएको कलशअभिलेख गरी दुइवटा लेखोटका नमुनाहरूलाई ईसापूर्व पाँचौं शताब्दीका मानेका छन्। बडली अभिलेखमा उनले "वीराय भगवत" र "चतुरासिति व(स)" पढे। उनले महावीरनिर्वाण संवत्को चौरासियौं वर्ष भन्ने अर्थ लगाएर यसलाई ई. पू.४४३ को माने। त्यसै गरी ओझाले पिपरहवाको स्तूपभित्र पाइएको अभिलेख कुँदिएको पात्रभित्र स्वयं शाक्यमुनि बुद्धको अस्थि रहेको विश्वास गरेर त्यसलाई ईसापूर्व ४८७भन्दा केही पछिको माने। बूलरले पनि यस अभिलेखलाई अशोकभन्दा पहिलेको मानेको कुरा उनले टिपे।[४२] तर पछिको तुलनात्मक अध्ययनबाट पिपरहवा अभिलेख ईसापूर्व दोस्रो शताब्दीको र बडलीको अभिलेख ईसापूर्व पहिलो शताब्दीको देखिएको छ।[४३] यस प्रसङ्गमा राजबली पाण्डेयले महास्थान अभिलेख र सोहगौरा ढलोटलेख जस्ता अन्य लेखोटको र अरूले पटना र परखमका मूर्तिलेखको पनि उल्लेख गरेका छन्, जो हाल अशोकपछिका मानिएका छन्।[४४]

बूलरले मध्यप्रदेशको एरण भन्ने ठाउँमा पाइएको तामाको सिक्कालेख र आन्ध्रप्रदेशको भट्टिप्रोलु भन्ने ठाउँको स्तूपबाट प्राप्त अभिलेखहरूलाई बढी महत्त्व दिए। एरणको सिक्कालेखका र भट्टिप्रोलुको अभिलेखका वर्णहरू उल्टा छन् र दायाँबाट बायाँ पढ्ने गरी कुँदिएका जस्ता लाग्छन्। भट्टिप्रोलुका अभिलेखका **भ म ल ष** जस्ता वर्णहरू उल्टा छन्। बूलरले यसबाट अशोककालमा बायाँबाट दायाँतिरको लेखनगति निर्धारित हुनुअगि आरंभिक ब्राह्मी पनि सेमिटिक लेखनजस्तै दायाँबाट बायाँ लेखिन्थ्यो भन्ने व्याख्या गरे। डेविड डिरिन्जरले यस्ता अरूपनि उदाहरण दिंदै बूलरको यस विचारको समर्थन गरेका छन्।[४५] लेख्दा, कुँद्दा वा सिक्काको साँचो बनाउँदा भएको गल्तीका कारण यिनमा यस्तो उल्टो लेखनदिशामा उल्टा वर्ण कुँदिएका हुन् भन्ने विचार धेरैले गरेका छन्। एरणको सिक्कामा सिंहको आकृतिसमेत उल्टो छ। भट्टिप्रोलुका अभिलेखहरूका वर्णहरू गल्तीले उल्टा कुँदिएका मानिन्छन्। ब्राह्मी सुरुदखिनै बायाँबाट दायाँ लेखिंदै आएको छ।[४६] बूलरले एरणको सिक्कालाई ईसापूर्व ४०० को र भट्टिप्रोलुका अभिलेखलाई कम्तीमा ईसापूर्व २००का तर प्राचीनतम परिपाटिका माने। तुलनात्मक अध्ययनबाट एरणको सिक्कालेख ई. पू.दोस्रो शताब्दीको र भट्टिप्रोलुका अभिलेखहरू प्रथम शताब्दी ई.को देखिएको छ।[४७]

बूलरका अर्का उदाहरण पाकिस्तानको रावलपिण्डी जिल्लाको तक्षशिलामा प्राप्त प्राचीन सिक्कालेख हुन्, जसलाई उनी अशोकपूर्वका मान्छन्। प्राचीन सिक्काका बारेमा एस.आर.गोयलको युक्ति उपयुक्त प्रतीत हुन्छ, जसअनुसार भारतमा यूनानीहरूको प्रभावमा लेखयुक्त सिक्काको प्रचलन ईसापूर्व दोस्रो शताब्दीमा सुरु भयो।[४८] अ.ह.दानीले यी सिक्काहरूको काल ईसापूर्व दोस्रो शताब्दी मानेका छन्।[४९] राजबली पाण्डेयको अशोकपूर्व अभिलेखहरूको सूचीमा गोरखपुरको सोहगौराको ताम्रपत्र र बंगलादेशको बोगरा जिल्लाको महास्थानअभिलेख पनि पर्दछन्। वर्णहरूको बनावट र लेखनशैलीको तुलनात्मक अध्ययनबाट यी सबै ईसापूर्व २०० ताकाका देखिनआएका छन्।[५०]

अशोककालमै ब्राह्मीलेखनका क्षेत्रीय भेद वा प्रकारहरूको परिकल्पना गरेर पनि ओझा र बूलर दुवैले लेखनकलाको प्राचीनता सिद्ध गर्नखोजेका छन्। ओझाले भट्टिप्रोलुको अभिलेखलाई द्रविड प्रकारबाट विकसित मानेका छन्[५१] भने बूलरले अशोककालीन ब्राह्मीका केही वर्णहरू द्रविडशैलीबाट विकसित मानेका छन्। बूलर लेख्दछन् :“अनेक स्थानीय प्रकारहरू पाइनु र धस्काएर लेखिएका (अक्षरहरूका) स्वरूपहरूको अस्तित्त्वले अशोककालसम्म लेखनकलाको इतिहास निकै लामो रहेकोहोला र यसबाट वर्णहरू परिवर्तनका अवस्थामा थिए भन्ने सिद्ध हुन्छ।”[५२] वास्तवमा एकै केन्द्रबाट एउटै उद्देश्यले, करीब एउटै भाकाका अशोकका अभिलेखका वर्णहरूका भित्री बनावटमा भेद गर्न मिल्दैन र अशोककालीन ब्राह्मीका क्षेत्रीय भेदको कुरा उठाउनु मुनासिब देखिँदैन भन्ने कुरा पछिल्लो अध्ययनले देखाएको छ।[५३] तिनको बाहिरी बनावटमा केही फरक देखिन्छ भने त्यसको कारण कुँद्ने वा लेख्ने मानिसको अज्ञानता, भूल, हतार वा अभिलेखको माध्यमको प्रकृति आदि हुनसक्छ। राम्ररी ताछिएको र विशेष

प्रविधिमा पालिश गरिएको ठूलो बेलनाकार स्तंभ (खामो) मा कुँदिएका वर्णहरूमा जति सावधानी र शुद्धता देखिन्छ, त्यति चट्टानमा लेखिने भागको तयारी र वर्णहरूको कुँदाईमा देखिंदैन, त्यसको प्रभाव वर्णहरूको बनोट र लेखाइमा पर्नु स्वाभाविक हुन्छ। अशोकको कालभन्दा पुराना मानिएका सबै अभिलेखहरू पछिका देखिनआएका कारण भारतमा लेखनज्ञानको पहिलो पुरालेखनप्रमाण ईसापूर्व तेस्रो शताब्दीका अशोकका अभिलेखहरूनै हुनआएका छन्।

उपर्युक्त दुवै मतका आधार भौतिक प्रमाणको अभावमा कमजोर देखिएका छन्। यस सन्दर्भमा सम्राट् अशोकका (ई. पू. २७४-२३७) पूर्वमा बंगालको खाडी (उडिसाका धौली, र गञ्जाम) देखि पश्चिम गिरनार (गुजरात)सम्म, उत्तरपश्चिममा कन्दहार (अफगानिस्तान)देखि दक्षिणमा आन्ध्र प्रदेशसम्म पाइएका दुई दर्जनभन्दा बढी अभिलेखहरूनै दक्षिण एशियामा लेखनका पहिला भौतिक प्रमाण हुनआएका छन्।[५४] यिनमध्ये अधिकांशमा ब्राह्मीलिपिको प्रयोग भएको छ, जसको परम्परा हालसम्म चलिरहेको छ। आगामी अध्यायमा विचार गरिए झैं बाह्यसमानताको आधारमा ब्राह्मीलाई कुनैपनि लेखनबाट बनेको मान्न सकिँदैन, यद्यपि भारतीयहरूको सम्पर्क लेखनको अभ्यास गर्ने समाजहरूसँग थियो। प्राचीन विश्वका अन्य कतिपय लेखनको समान ब्राह्मीलिपि स्वतन्त्र रूपमा विकसित गरियो। पारम्परिक वैदिक ग्रन्थहरूको शुद्ध उच्चारणमा जोड दिने उद्देश्यले निर्मित मौखिक वर्णमाला र व्याकरणका नियमहरू पहिलेदेखिनै विद्यमान थिए।[५५] भौतिक प्रमाणले देखाए झैं अशोकको लिपि पुरानो लाग्दैन।[५६] पछिको अध्ययनअनुसार धम्मसन्देशको प्रचार गर्ने उद्देश्यले अशोककै पालामा ब्राह्मीको निर्माण गरिएको थियो।[५७] अशोकको धम्मले झैं नौलो लिपिले दक्षिणएशियाको विशाल समाजमा सांस्कृतिक एकता स्थापित गर्न महत्त्वपूर्ण भूमिका खेलेको छ।

## टिप्पणी

१. संस्कृत र त्यसबाट विकसित भाषा बोल्ने माथिल्ला तीन वर्णका (ब्राह्मण, क्षत्रिय र वैश्यका) वैदिक परम्पराका हिन्दु र आरम्भिक बौद्ध, जैन आदि धर्म मान्ने जनसमुदाय आर्य भनिएका छन्।

२. गौरीशंकर हीराचन्द ओझा, **भारतीय प्राचीन लिपिमाला** (दिल्ली: मुन्शीराम मनोहरलाल, १९५९) पृष्ठ १२। हुन त यिनले प्राचीनतम वेद ऋग्वेदको प्रसङ्ग पनि उल्लेख गरेका छन्, तथापि यजुर्वेदको लामो संख्याको उल्लेखलाई महत्त्व दिएको देखिन्छ। धेरैले मानिआएको कालक्रम बमोजिम यहाँ मोटामोटी रूपमा ईसापूर्व १००० भनिएको हो। विस्तारमा तल चर्चा गरिने छ।

३. जर्ज बूलर, **भारतीय पुरालिपिशास्त्र** (**Indische Palaeographie** को मंगलनाथ सिंहद्वारा हिन्दी अनुवाद) (मोतीलाल बनारसीदास, १९६६), पृष्ठ ३५। विस्तारमा तल चर्चा गरिने छ।

४. १९२२पछि जोहन मार्शलको निर्देशनमा भएको उत्खननबाट प्रकाशमा आएको सिन्धुलिपि आजसम्म पनि चित्तबुझ्दो ढंगले पढ्न सकिएको छैन र समस्याको रूपमा रहेको छ।

५. छापको साथसाथ केही धातुका टुक्रा, माटाका भाँडामा पनि यस्ता चिह्नहरू पाइएका छन्। १९९१मा भारतको रन अफ कच्छको दौडाबीराबाट ढुंगाको सानो अभिलेख पाइएको छ। सिन्धुलिपिको सम्बन्धमा धेरैले लेखेका छन्। यहाँ अहमद हसन दानीको वर्गीकरणको आधार लिइएको छ। हेर्नुस् : A.H.Dani, **Indian Palaeography** ( Oxford : The Clarendon Press, 1963). 17-18.

६. **उही** पृष्ठ २१मा उद्धृत।

७. **उहीमा** उद्धृत C.L. Fabri, "The Punch-marked Coins: A Survival of the Indus Civilization" **J.R.A.S.**, London, 1935. आहतसिक्कामा ती प्रतीकचिह्न मात्र लाग्दछन् र सिन्धुलेखनपद्धतिसँग पूरा पनि मेल खाँदैनन्।

८. तान्त्रिक चिह्न मान्ने धेरै छन्, जसमा प्राणनाथ, ("The Script of the Indus Valley" **J.R.A.S.**, London, 1931) स्वामी शङ्करानन्द (**The Rigvedic Culture of the Prehistoric Indus**, Calcutta, 1943-44.) र बी.एम.बरुवा ("Indus Script and Tantric Code" **Indo-Iranica,** Calcutta, Cclcutta, Vol. I, 1946) मुख्य छन्। प्राणनाथले यसबारेमा अन्य संभावनामाथि पनि विचार गरेका छन्। हेर्नुस् अ.ह.दानी, **टिप्पणी** ५ पृष्ठ १३ मा उद्धृत। भारतमा तन्त्रको विकास धेरलै पछि मध्यकालमा भएको मानेका छन्।

९. L.A.Waddel, **The Indo-Sumerian Seals Deciphered,** London, 1925. वाडेलले सिन्धुलिपिलाई सुमेरियाई भाषा मानी पढेको दाबी गरे। उनले सुमेरियाई र आर्यहरूलाई एकै मानेर सिन्धुलिपिमा वेद र महाकाव्यका नायकहरूका नाम भएका माने। प्राणनाथले पनि पछिल्लो संभावनालाई माने तर भाषा भने संस्कृत वा प्राकृत हुनुपर्ने जिकिर गरे।

१०. राजबली पाण्डेय, **भारतीय पुरालिपि** (इलाहाबाद, १९७८) पृष्ठ २९, ३७। पाण्डेय एकातिर सिन्धुलिपिबाट ब्राह्मीलिपिको उत्पत्ति भएको मान्छन् भने अर्कोतिर सिन्धुमानवलाई वेदमा उल्लिखित पणिन् (पणी) भनी तिनलाई फिनिशियाई मान्दछन्। पृष्ठ २९मा के. दीक्षित (**Prehistoric Civilization of the Indus Valley**, P.46) लाई उद्धृत गर्दै उनी भन्छन् "सिन्धुघाटीको लिपिनै सम्भवत: मौलिक थियो जो असुर र पणीहरूद्वारा अन्य देशहरूमा फैलियो।"

११. फादर एच.हेरासले सिन्धुमानवलाई द्रविड मानेर आदिद्रविडभाषाको कुरो निकाले। तर उनले सिन्धुचिह्नहरूको तुलना सुमेरियाली, पवित्रलेखन वा हियरोग्लिफिक र आदिचीनियाँ अक्षरचिह्नहरूसँग गरे। H.Heras, **Studies in Proto-Indo-Mediterranean Culture** (Bombay, 1953); दानी, उही।

१२. बी.ह्रोज्नीले सिन्धुमानवलाई भारोपेली भाषा बोल्ने पश्चिम एशियाका प्राचीन हिट्टी जातिका माने र सिन्धुलिपिलाई त्यही भाषामा पढ्ने प्रयास गरे। B. Hrozny, **Die alteste Volkerwanderung und die proto-indische Zivilisation** (Prague,1939) as reffered to by A.H. Dani. 13.

१३. प्राणनाथ, **टिप्पणी** ८, अ.ह. दानीद्वारा पृष्ठ १३मा उद्धृत। सी.जे.ग्याडले सिन्धुलिपिमा प्राचीन आर्यभाषा भएको माने। C.J.Gadd, "Seals of Ancient Indian Style found at Ur", **Preceedings of the British Academy**, London, xviii, 1932). ल्याङडन, जी.आर.हण्टर् र राजबली पाण्डेयले

सिन्धुलिपिको सम्बन्ध ब्राह्मीलिपिसँग गाँस्नखोजे । G.R.Hunter, **The Script of Harappa and Mohenjodaro and its Connection with other Scripts** (London,1934). ग्याड र ल्याङडनका लेख मार्शलको किताबमा छापिएको छ: J. Marshall, **Mohenjodaro and the Indus Civilization** (London,1931).

१४. David Diringer, **The Alphabet** (London, 1947) pp 328-29. सिन्धुलिपिलाई उनी भावात्मक अक्षरात्मक (ideographic-syllabic) भन्दछन् । पहिले फ्लिण्डर्सले पनि यसलाई भावलेखन वा (ideographs) भनेका थिए । अ.ह. दानी (**पूर्वोक्त**, पृष्ठ १७ मा) लेख्छन् Hence it seems that the nature of the Indus script is picto-phonographic or ideo-phonographic--included by David Diringer among 'transitional scripts'. आ ई. जे. गेल्ब यस प्रकारको शब्दावलीलाई अर्को तिर डोऱ्याउने वा misleading भन्छन् । भावलेखन अक्षरात्मक हुनसक्दैन भन्ने विचार प्राक्लेखनचरणको आशयलेखनअन्तर्गत विवरणात्मक-प्रतिनिधिमूलक चरणको प्रसङ्गमा गरिएको छ । हेर्नुस् माथि अध्याय २ र I.J. Gelb, **A Study of Writing** (Chicago & London: The University of Chicago Press,1965) pp. 29, 35, 65, 107. यसबाट सिन्धुलिपिको प्रकृतिसम्म पनि जान्न नसकिएको कुरा स्पष्ट हुन्छ ।

१५. अहमद हसन दानी **पूर्वोक्त**, पृष्ठ १६ ।

१६. **उही** पृष्ठ १३-१४, जहाँ उनी प्रा.फ्रिडरिचलाई उद्धृत गर्छन् "...जानिएको लिपिमा अज्ञात भाषा पढ्न सकिन्छ...तर अज्ञात लिपिमा लेखिएको अज्ञात भाषा पढ्न सकिँदैन...यस किसिमको काममा सम्पर्कका केही सूत्र आवश्यक छन् ..."

१७. गौ.ही. ओझा **टिप्पणी** २, पृष्ठ १-१६ र उनका समर्थक रा.ब.पाण्डेय **टिप्पणी** १०, पृष्ठ १-१९ ।

१८. जर्ज बूलर **टिप्पणी** ३, पृष्ठ ८-९ । तिनका विचारमा लेखनको जानकारी हुनु अगावै वैदिक साहित्य रचियो होला र सुनेर शुद्ध रूपमा उच्चारण गर्नसिकाउने नियमहरू बनाइएका होलान् ।

१९. गौ.ही. ओझा **टिप्पणी** २, पृष्ठ ६-१२, रा.ब.पाण्डेय **टिप्पणी** १०, पृष्ठ ८-१३ ।

२०. यस संहितामा दश, शत, सहस्र, अयुत (दशहजार), नियुत (लाख), प्रयुत (दश लाख), अर्बुद (करोड), न्यर्बुद (दश करोड), समुद्र (अरब), मध्य (दश अरब), अन्त (खरब) र परार्ध (दश खरब) शब्दहरू पाइन्छन् । हेर्नुस् ओझाद्वारा उद्धृत **यजुर्वेद, वाजसनेयीसंहिता** ३०.२० ।

२१. ओझा **उही**, पृष्ठ ४-६, पाण्डेय, **उही** पृष्ठ ६-८ । जर्ज बूलरले (**टिप्पणी** ३, पृष्ठ १०-१२) पनि आफ्नो मतलाई दरो पार्न साहित्यक उद्धरण दिएका छन् । ईसापूर्व ५०० ताकादेखिका ग्रन्थहरूलाई बूलर वास्तविक लेखनकालका मान्दछन् । तल हेर्नुस् ।

२२. पाण्डेय **उही** पृष्ठ ३-४ ।

२३. षाण्मासिके तु समये भ्रान्तिः सञ्जायते यतः ।
धात्त्राक्षराणि सृष्टानि पत्रारूढाण्यतः पुरा ॥

२४. नाकरिष्यद्यदि ब्रह्मा लिखितं चक्षुरुत्तमम् ।
तत्रेयमस्य लोकस्य नाभविष्यच्छुभा गतिः ॥

२५. यी सबै पारम्परिक ग्रन्थ हुन्। दुवै स्मृति मनुस्मृतिको परम्पराका हुन्। ओझाको अनुसार नारदस्मृतिको उल्लेख कवि बाणभट्टले ६२० ई. तिर गरेका छन्। समवायाङ्गसुत्तलाई ओझाले ईसापूर्व ३००को रचना मानेका छन्। पण्णवणासुत्त दोस्रो शताब्दीको मानिन्छ। ओझाको अनुसार ललितविस्तरको चीनियाँ अनुवाद ३०८ ई.मा भएको थियो। यी ग्रन्थहरूमा लिपिहरूको सूची पाइन्छ जसमा ब्राह्मीको उल्लेख पहिले आउँछ। जैनसूत्रहरूमा १८ र ललितविस्तरमा ६४ लिपिहरूका नाम पाइन्छन्।

२६. ओझा, पृष्ठ ३, पाण्डेय, पृष्ठ ४-६। जर्ज बूलरले पनि यसको चर्चा गरेका छन्, पृष्ठ १२-१३।

२७. मेगस्थनीजले अन्यत्र 'भारतीयहरू लेख्न जान्दैनन्' भनेका छन्। त्यस भनाईलाई त्यसै रूपमा कसैले उल्लेख गरेनन्। हेर्नुस् तल टिप्पणी ४०।

२८. ओझा, पृष्ठ २-३।

२९. ओझा, **उही**। यो कलश हाल कोलकाता संग्रहालयमा राखिएको छ। निकै पुराना लाग्ने वर्णहरू र बुद्धको अस्थि राखिएको विश्वासको कारण यसलाई पहिले पुरानो मानिएको हो।

३०. जर्ज बूलर, पृष्ठ १७।

३१. जर्ज बूलर, **उही** पृष्ठ १७-१८ र अन्यत्र। उनले यी अभिलेखहरूलाई ईसापूर्व २०० मानेका छन्।

३२. बूलर, **उही** पृष्ठ १८।

३३. राजबली पाण्डेय, **टिप्पणी** १०, पृष्ठ १७।

३४. राजबली पाण्डेय, **उही**। यसको लेखोट र विषय महास्थानअभिलेखको समान छ।

३५. S.P. Gupta, K.S. Ramachandran, ed. **The Origin of Brahmi Script** (Delhi: D.K. Publications, 1979) मा एस.आर.गोयलको अग्रलेख, पृष्ठ ४४। १८८३मा अलेक्जेण्डर कनिंघमले मथुराको परखम गाउँबाट सानो लेख भएको सालिक प्रकाशमा ल्याए र यस्ता केही मूर्तिलेख पटनामा पनि पाइए।

३६. ओझा, पूर्वोक्त, पृष्ठ १५-१६, रा.ब.पाण्डेय, पृष्ठ १६। ओझाको विचारमा लेख्न नजान्ने व्यक्तिले न गद्यको रचना गर्न सक्छ नपद्यको, नत ठूलठूला संख्याको हिसाब गर्नसक्छ। उनको विचारमा : ईसापूर्व छैठौं शताब्दीताका विद्यालयहरू थिए, पाणिनि र यास्कका समयमा अनेक विषयका पुस्तकहरू थिए।

३७. जर्ज बूलर **टिप्पणी** ३, पृष्ठ ८-९। वैदिककालमा पनि मौखिक शिक्षा र अरू मौकामा सहायता लिन पुस्तकको उपयोग हुन्थ्यो भन्ने तर्कलाई बूलरले महत्त्व दिएका छैनन्।

३८. बूलर, **उही** पृष्ठ १८, ३५ र अन्यत्र। यसरी बूलरको लागि भने 'पहिलो पल्ट भारतमा यस्तो लेखन (ब्राह्मी) को चलन फनिशियाई-सेमिटिक प्रभावबाट ईसापूर्व ५०० वा केही पहिले चलेको' कुरामाथि जोड दिनु थियो। त्यस समय लिखित अभिलेख पढ्न र बुझ्न सक्ने मानिसहरू भएकाले नै अशोकले अभिलेख कुँदाउने विचार गरेहुनन् भन्ने उनको युक्ति छ। बूलर भारतीय पण्डितहरूले वैज्ञानिक उपयोगको निम्ति लेखनको आविष्कार गरेका मान्छन्। यिनले पनि ओझाले दिएका प्रायः सबै प्रमाणहरूको उल्लेख गरेका छन्। जर्ज

बूलरको विचारमा प्राचीन संस्कृत साहित्यका माथिका सन्दर्भहरूमा अरू पनि थप गर्न सकिन्छन् ।

३९. बूलर, पृष्ठ १२ ।

४०. ईसापूर्व ३०५देखि ईसापूर्व २९९सम्म राजदूतकोरूपमा भारत बसेका मेगस्थनीजको ***Indica*** लाई उद्धृत गर्ने पहिलो लेखक Strabo मानिन्छन् जसको ***Geography*** नामक पुस्तकलाई प्रामाणिक मानिन्छ । हेर्नुस् S.P. Gupta, op.cit. note 35, p. 45 R.C. Majumdar, **The Classical Accounts of India,** pp. 93,270.

४१. बूलर, पृष्ठ १३ जहाँ उनले लेखेका छन् "भारतमा स्मृतिहरू पनि लिखित हुन्थे ।"

४२. ओझा, पृष्ठ २-३ ।

४३. दीनेशचन्द्र सरकारको विचारमा बडलीअभिलेखमा चौरासी भन्ने शब्द वर्ष वा संवत्को लागि आएको होइन, त्यतिखेर भारतमा संवत् लेख्ने चलनै थिएन र वीरनिर्वाणसंवत्का बारेमा कतैबाट पनि जानिएको छैन । पिपरहवाअभिलेखमा पढिएको शकियनम् वा शाक्य शब्द शंकास्पद भएको छ । सरकारले पिपरहवा अभिलेखलाई अशोकपछिको ईसापूर्व तेस्रो शताब्दीको र बडलीको अभिलेखलाई केही पछिको माने । हेर्नुस् D.C. Sircar, **Select Inscriptions, bearing on Indian History and Civilization,** Vol I. (University of Calcutta, 1965) pp. 79, 82, **note** 1. धेरैले बडलीअभिलेखलाई ईसापूर्व पहिलो शताब्दीको र पिपरहवा अभिलेखलाई ईसापूर्व दोस्रो शताब्दीको मानेका छन् । हेर्नुस् अ.ह. दानी, **टिप्पणी** ५, पृष्ठ ५६, ६३ र एस. आर. गोयलको अग्रलेख (**टिप्पणी** ३५) पृष्ठ ३३-३४, ३९-४० ।

४४. राजबली पाण्डेय, **टिप्पणी** १०, पृष्ठ १७ । सोहगौरा अभिलेखको माथिल्लो भागमा बनाइएका सातओटा प्रतीकचिह्न अलमल्याउने खालका छन् । यिनमा एउटा चिह्न मजस्तो लाग्छ । यस्ता अरू चिह्नहरू मिलाएर काशी प्रसाद जायसवालले चन्द्रगुप्त मोरिय भन्ने अर्थ गरे । (हेर्नुस् **Epigraphia Indica,** XXII मा जायसवालको लेख) । पाण्डेयले पनि यही माने । आज यो मानिँदैन । यी दुवै अभिलेखहरूलाई दीनेशचन्द्र सरकारले ईसापूर्व तेस्रो शताब्दीको तर अशोकभन्दा पछिको माने । सरकार, **उही** पृष्ठ ७९, ८२ र टिप्पणी । अहमद हसन दानीले यिनलाई ईसापूर्व दोस्रो शताब्दीका मानेका छन् । हेर्नुस् टिप्पणी ५, पृष्ठ ५६ । १८८३मा अलेक्जेण्डर कनिंघमले मथुराको परखम गाउँबाट सानो लेख भएको सालिक प्रकाशमा ल्याए र त्यसको लेखोटलाई ईसापूर्व तेस्रो शताब्दीको माने । यस्ता केही मूर्तिलेख पटनामा पनि पाइए, जसलाई कनिंघमले पहिलो शताब्दीका माने । काशीप्रसाद जायसवालले परखम मूर्तिलेखमा 'अजातशत्रु राजा सिरि' पढेर ईसापूर्व छैठौं शताब्दीको माने । यिनले पटनाका मूर्तिलेखहरूलाई पनि समकालिक माने । हेर्नुस् : K.P. Jayaswal in **JBORS,** V, pp. 550 ff VI. pp. 173 ff. तर जायसवालले पढेको नाम कसैले पढ्न सकेन । हाल यी सालिकहरू यक्षका मूर्ति मानिन्छन् । दीनेशचन्द्र सरकारले परखमको अभिलेखलाई ईसापूर्व पहिलो शताब्दीको र पटनाका नमुनाहरूलाई पहिलो शताब्दी ई.को मानेका छन् । हेर्नुस् A.Cunningham, **Reports of the Archaeological survey of India,** XV, pp 2 ff; D.C. Sircar, **note** 33, pp. 93-94.

४५. डेविड डिरिञ्जर, **टिप्पणी** १४, पृष्ठ ३३९ ।

४६. अ.ह.दानी, **टिप्पणी** ५, पृष्ठ २९ । भट्टिप्रोलुका बारेमा उनी (पृष्ठ ७०) लेख्छन् I would regard them as mistakes on his (the writer's) part rather than accept them as a new script.

४७. **उही**, पृष्ठ ६१, ७२ । भारतमा सुरुमा ब्राह्मी पनि सेमिटिक झैं लेखिन्थ्यो भन्ने अवधारणाको व्याख्या गर्न यी सिक्काहरूको साथसाथ भट्टिप्रोलुका अभिलेखहरूको उपयोग बूलरले गरे । उनको विचारमा एरणका सिक्का ईसापूर्व चौथो शताब्दीका हुनुपर्छन् । पछिल्लो अध्ययनबाट ती सिक्काको साँचो बनाउँदा र अक्षर कुँद्दा भएको गल्तीका परिणाम मानिएका छन् ।

४८. एस.आर.गोयलको अग्रलेख **टिप्पणी** ३५, पृष्ठ ३२-३३ । ब्राह्मीलेख भएको कुनै पनि सिक्का मौर्यकालमा नपाइने तथ्यले बूलरको अनुमान गलत भएको छ । कतिपय आहत वा पञ्चमार्कड सिक्काहरूलाई मौर्यकालीन मानिन्छ जसमा कुनै लेख हुँदैन ।

४९. अ.ह.दानी, **टिप्पणी** ५, पृष्ठ ६० ।

५०. **उही** पृष्ठ ५६ ।

५१. ओझा **पूर्वोक्त**, पृष्ठ ५२, जहाँ उनी लेख्छन् : भट्टिप्रोलु "लेखहरूको लिपि पिपरहवा बडली र अशोकका लेखहरूको लिपिबाट निक्लेका होइनन् बरु त्यो मूल लिपिबाट निक्लेको होला जसबाट स्वयं पिपरहवा, बडली र अशोकका लेखहरूको लिपि निक्लेको होला ।"

५२. जर्ज बूलर, **टिप्पणी** ३, पृष्ठ १६ । उनले 'अशोकका आदेशलेखहरूबाट कम्तीमा दुई, शायद तीन प्रकारहरू' पाइने चर्चा गरेका छन् : उत्तरी, दक्षिणी र उत्तरीपश्चिमी प्रकारहरू (पृष्ठ ६९-७०) ।

५३. अ.ह.दानी, **टिप्पणी** ५, पृष्ठ ४८ ।

५४. मौर्यसाम्राज्यका संस्थापक चन्द्रगुप्त मौर्यका (ई.पू. ३२२-२९८) नाती अशोकका अभिलेखहरूमा नैतिकता र सदाचारका विषय छन् । अभिलेखहरूमा अशोकलाई **देवानां पिय पियदसि राजा** अर्थात् देवताहरूका प्यारा र प्रिय देखिने भनिएको छ । यी अभिलेखहरू उच्च प्रविधिले पालिश गरिएका एकै ढुंगाका स्तंभमा र विशाल चट्टानको एक भागमा कुँदिएका छन् । त्यतिखेर चट्टानलाई छिनुले कपेर बनाइएका गुफाकोठाका भित्तामा समेत अभिलेखहरू कुँद्ने चलन देखिन्छ । पाकिस्तान र अफगानिस्तानमा पनि अशोकका अभिलेखहरू पाइन्छन् जो खरोष्ठी, अरेमायक र ग्रीक (यूनानी) लिपिमा कुँदिएका छन् । पाकिस्तानका पेशावरको शाहबाजगढी र हजाराको मनसेहराका चट्टानअभिलेखहरू दायाँबाट बायाँ गतिमा लेखिने खरोष्ठी लिपिमा कुँदिएका छन् । अशोकका अरू प्राय: सबै अभिलेखहरू ब्राह्मीलिपिका छन् । गंगा र यमुनाका किनाराका क्षेत्रहरूमा र लुम्बिनी र निग्लिहवामा गाडिएका गोल स्तंभका अभिलेखहरू बढी प्रसिद्ध छन् । अशोकका साम्राज्यका सीमा क्षेत्रहरूमा भने ढुङ्गे पहाड वा चट्टानहरूमा कुँदिएका अभिलेखहरू पाइन्छन् । अन्य तीर्थस्थलको साथसाथ आफ्नो राज्याभिषेकको बीसौं वर्षमा अर्थात् ई. पू. २५४ मा शाक्यमुनि बुद्धको जन्मस्थान लुम्बिनीमा अशोकले बुद्धको जन्मस्थलको परिचय दिंदै अभिलेखयुक्त स्तम्भ गाडे । त्यसको ६ वर्ष पहिले अर्थात् आफ्नु राज्याभिषेकको चौधौं वर्षमा (ई. पू..२६० मा) पनि अशोकले त्यस क्षेत्रको भ्रमण गरेका थिए भन्ने कुरा

निग्लिहवाको स्तम्भलेखबाट बुझिन्छ। त्यहाँ अशोकले कनकमुनि बुद्धको स्तूपलाई ठूलो गरी बनाएको कुरा लेखेका छन्।

५५. एस. आर. गोयलको अग्रलेख (**टिप्पणी** ३९) पृष्ठ १६।

५६. Thakur Prasad Verma, **The Palaeography of Brahmi Script in North India** (From c.236 B.C. to 200 A.D.) (Varanasi : Siddhartha Prakashan, 1971) P. 8. एस. आर. गोयलको अग्रलेख **उही** (**टिप्पणी** ३५)।

५७. ठाकुर प्रसाद वर्मा (उही) लेख्छन् : "The simple primitive angular form of Asokan script shows that it was not long before that this script was invented. The credit of its propogation, throughout the length and breadth of the country, goes to the missionary enthusiasm of Asoka." एस. आर. गोयल (**उही टिप्पणी** ५४) लेख्छन् : "They already possessed a highly developed *varnamala* which was at least as old as the time of Yaksa (sic. Yaska?) (5th century B.C.), the social and political necessities for a script... were also there the urge for propogating the Dhamma which Asoka so intensely felt, might have provided the immediate stimulus; and lastly, the familiarity with the idea and use of writing was also present because of India's contacts with literate Greek kingdoms and other North Wesrern regions.



# अध्याय नौ

# ब्राह्मीलिपिको परिचय

फलक - ३६

भारतीय उपमहादेशमा ईसापूर्व १५००ताका सिन्धुलेखनको चलन हराएपछि एकैपल्ट ईसापूर्व तेस्रो शताब्दीमा दुई थरिका लेखनका नमूना पाइन्छन् । तिनमध्ये भारतको ठुलो भूभागमा चलेको लेखनलाई ब्राह्मीलिपि र वर्तमान पाकिस्तानका केही जिल्लाहरूमा प्रचलित लेखनलाई खरोष्ठीलिपि भन्ने पारम्परिक नाम दिइएको छ । दुवैको लेखनगति बेग्लाबेग्लै छन् । ब्राह्मीलिपि हाल नेपाली भाषा लेख्दा प्रयोग हुने देवनागरी र अंग्रेजी लेख्न प्रयोग गरिने रोमन लिपि झैं देब्रेबाट दाहिनेतिर लेखिन्छ । ब्राह्मी भारतीय उपमहादेशमा धेरै समयसम्म प्रचलित रह्यो र यसबाट अनेकौं लेखनशैलीहरूको विकास भयो । खरोष्ठी लिपि भने दायाँबाट बायाँतिर पढ्ने गरी लेखिएको हुन्छ । खरोष्ठी धेरै ठाउँमा फैलन पनि सकेन र धेरै समयसम्म पनि चलेन ।

यी दुवै लेखनहरूलाई पहिलो पल्ट चलाउने श्रेय देवानां प्रिय प्रियदर्शी नामले ३६ वटा अभिलेख कुँदाउने सम्राट् अशोकलाई जान्छ ।[1] अशोक मौर्यसाम्राज्यका संस्थापक चन्द्रगुप्त मौर्यका नाती हुन् जसको राज्यकाल ईसापूर्व २७४–२३७ मानिन्छ ।[2] अशोकका अभिलेखहरू चट्टान र एउटै ढुंगाको बनेको गोल खामो वा स्तम्भ गरी दुई मुख्य माध्यममा कुँदिएका छन् ।[3] ठुला चट्टानअभिलेखहरू साम्राज्यको सीमाक्षेत्रमा र स्तम्भलेख मध्यभागमा पाइएका छन् । अशोकका कलात्मक ढंगले बनाइएका विशाल बेलनाकार (गोल) खाँबो वा स्तम्भका ब्राह्मीलिपिका अभिलेखहरू बढी प्रसिद्ध छन् । अशोकस्तम्भहरू विहार, उत्तरप्रदेश, दिल्ली, मध्यप्रदेश र नेपालका लुम्बिनी र निग्लीहवामा पाइएका छन् । नेपालका स्तम्भ अभिलेखहरू अशोकका लघुस्तम्भलेखहरूमध्ये गनिन्छन् । (फलक ४, ५) । उनले अफगानिस्तानमा अरेमायक र यूनानी लिपिहरूको, पाकिस्तानका हजारा जिल्लाको मनसेहरा र पेशावर जिल्लाको शाहबाजगढीका चट्टानका अभिलेखहरूमा खरोष्ठीलिपिको र अन्य सबै ठाउँमा ब्राह्मीलिपि प्रयोग गरेका छन् । मौर्यसाम्राज्यको अन्त भएपछि दक्कन र कलिंगका सातवाहन, मध्य र पूर्वोत्तर भारतका शुङ्ग, मथुरा र पश्चिम भारतका शक (क्षत्रप), विशाल भूभागका कुषाण र गुप्त वंशका शासकहरूका संरक्षणमा ब्राह्मीलिपिले अनेक नाम र स्वरूपमा आफ्नु विकास गर्दैगएको पाइन्छ । यसरी ब्राह्मी ईसापूर्व तेस्रो शताब्दीदेखि लगातार लोकप्रिय हुँदैगयो र अनेकौं स्थानीय लेखनशैलीहरूको उत्पत्तिको कारण बन्यो । ब्राह्मीलिपिबाट कालान्तरमा भारतका क्षेत्रीय लिपिहरूको साथसाथ लिच्छविलिपि, नेवारीलिपि नागरी र देवनागरीको विकास भएको हो ।

ब्राह्मी र खरोष्ठी दुवै नाम पारम्परिक हुन् । अशोकले ती लिपिहरूका यस्ता नाम कतै लेखेका छैनन् । उनले त आफ्ना अभिलेखलाई धंमलिपि वा धर्मलिपि भनेका छन् जसबाट उनको आशय शायद धर्मसन्देशसँग हुनुपर्दछ ।

स्पष्ट छ यो ब्राह्मी वा खरोष्ठीका खास नाम होइन । जैन र बौद्ध परम्परामा १८ वा ६४ लिपिहरूको सूचीमा पहिलो नाम ब्राह्मीको र दोस्रो वा चौथो नाम खरोष्ठीको आउँछ।[४] चराचर जगत्को सृष्टिकर्ता ब्रह्मालाई लिपिको पनि निर्माता मानिनु हिन्दु परम्परामा स्वाभाविक कुरा हो। लेखनको यस नामले ब्राह्मीलिपिको बारेमा हिन्दुहरूको धारणा स्पष्ट पारेको छ। ब्राह्मणहरूले प्रयोगमा ल्याएको कारण वा ब्रह्म भैं पूर्ण मानिएको कारण ब्राह्मीले यस्तो नाम पाएको पनि हुनसक्छ।[५] सातौं शताब्दी ई. ताका चीनमा प्रचलित बौद्धपरम्परामा पनि बायाँबाट दायाँ लेखिने लिपिलाई ब्रह्माको रचना भनिएको छ।[६] यी सबै कुराको आधारमा पुरालेखनविद्हरू बायाँबाट दायाँ लेखिने लिपिलाई ब्राह्मी र दायाँबाट बायाँ लेखिने लिपिलाई खरोष्ठी भन्दैआएका छन्।[७]

संस्कृतमा 'खरोष्ठी' शब्दको अर्थ गधाको जस्तो ओठ भन्ने हुन्छ। चीनियाँ परम्परामा किअ-लु-से-टो (खरोष्ठी?) को अर्थ पनि यही बताइएको छ।[८] खरोष्ठीलिपिको मूल थलो अफगानिस्तानको गान्धार र पाकिस्तानको तक्षशिला रहेको छ। यी क्षेत्रहरूमा चौथो शताब्दीसम्म खरोष्ठीलिपि धातुपत्र, सिक्का, छाला र भोजपत्रमा लेखिएका उदाहरण पाइएका छन्।[९] अधिकांश लेखकहरूले खरोष्ठीलाई लेखनचिह्नहरूको बनावट र दायाँबाट बायाँतिरको लेखनदिशाका आधारमा सेमिटिक लेखनको अरेमायक भनिने शाखाबाट विकसित लिपि मान्दछन्। यस लिपिको चलन उपर्युक्त क्षेत्रबाहेक अन्यत्र बिरलै पाइन्छ। ब्राह्मीमाभैं खरोष्ठीमा पनि भिन्नभिन्न व्यञ्जन र स्वरवर्ण, मात्रा-व्यवस्था र संयुक्ताक्षरको चलन छ। खरोष्ठीमा व्यञ्जनको अन्तमा ससाना धर्सा भएका मात्राहरूको प्रयोग गरिन्छ। स्वतन्त्र स्वरवर्ण भने खरोष्ठीमा **अ** मात्र छ। **अ** वर्णकै माथि, तल, अगाडि र पछाडि धर्सा जोडेर **इ उ ए** र **ओ** जस्ता स्वरवर्ण बनाइन्छन्।

**ब्राह्मी**लिपि खरोष्ठीभन्दा बढी विकसित र बहुप्रचलित लिपि हो। ब्राह्मीलिपिमा ह्रस्व, दीर्घ, गुणस्वर (ए र ओ) र वृद्धिस्वर (ऐ औ)को स्पष्ट उच्चारण गर्ने व्यवस्था छ, मात्राचिह्नहरूको माध्यमले स्वरको साथ व्यञ्जनको उच्चारण गर्न सकिने र अनेक व्यञ्जनहरूको उच्चारणको व्यवस्था छ। व्यञ्जनमा स्वर जोड्ने मात्रापद्धति र व्यञ्जनमा व्यञ्जन जोड्ने संयुक्ताक्षरपद्धति ब्राह्मीलिपिका खास विशेषता हुन् जो ब्राह्मीबाट विकसित सबै लिपिमा पाइन्छन्। यी विशेषताहरूको कारण ब्राह्मीलिपि संस्कृत र त्यसबाट विकसित भाषालेखनका लागि आदर्श लिपि भएको छ। ब्राह्मीलिपिका विशेषताहरूको चर्चा अन्यत्र गरिएको छ। अशोकका अभिलेखहरूमा मगधमा (पटनाको आसपास) बोलिने मागधी प्राकृत वा पाली भाषाको उपयोग गरिएको छ जो शायद राजकीय भाषा थियो।[१०] अशोकको समयको ब्राह्मीलिपिलाई अशोकब्राह्मी वा प्रारम्भिक ब्राह्मी भनिन्छ। यहाँ अशोकब्राह्मीको वर्णमाला र लेखनपद्धतिका विशेषताहरूको परिचय पाउनु प्रासङ्गिक हुने छ।

## वर्णपरिचय

अशोकब्राह्मीमा ६ स्वर : **अ आ इ उ ए ओ**; ३३ व्यञ्जनहरू : **क ख ग घ च छ ज झ ञ ट ठ ड ढ ण त थ द ध न प फ ब भ म य र ल व श ष स ह** तथा **लड**को साथसाथ **आ इ उ ए ओ**का मात्राचिह्न र अनुस्वारको चिह्न पाइन्छन् । यसरी अशोकब्राह्मीमा **ई ऊ ऐ औ ऋ ॠ लृ** जस्ता स्वरवर्ण र **ङ** व्यञ्जन पाइँदैनन् र मराठी र दक्षिण भारतीय भाषामा उपयोगमा आउने **लड** ध्वनिको थप व्यञ्जन (ळ) पाइन्छ ।(फलक २) ।

## स्वरवर्ण

**अ** सामान्यतया **अ** देवनागरीको डीको नभएको **स** अथवा उल्टो फर्केको रोमन क्यापिटल K को समान हुन्छ । ऊर्ध्वरेखाको देब्रेतिर तल र माथि जाने भुजा कतै वक्र र कतै सोझा हुँदा **अ**का अनेक किसिम देखिन्छन् । जर्ज बूलरले बाह्य स्वरूपका आधारमा आठ प्रकारको अको चर्चा गरेका छन् ।[११] वास्तवमा **अ** देब्रेतिरका दुवै भुजा वक्र भएको, दुवै भुजा सोझा बनाइएका र माथिल्लो भुजा वक्र र तल्लो भुजा सोझो भएको गरी तीन मुख्य किसिमको देखिन्छ ।[१२]

**आ अ**को ठाडो रेखामा बीचमा दायाँतिर जाने छोटो तेर्सो रेखा जोडेर अर्थात् **अ**मा आकारको मात्रा थपेर **आ** बनाइएको छ । कहींकहीं अको शिरोभागमा यस्तो रेखा जोडिएको पनि पाइन्छ ।

**इ** त्रिकोण रेखाका तीन कुनामा त्रिविन्दु मात्र कायम गरिएको चिह्नलाई **इ** पढिन्छ ∴ । धेरैजसो तल दुइतिर तेर्सो गरी दुइ विन्दु र माथि वीचमा एक विन्दु बनाइएका पाइन्छन्; तर त्रिविन्दुका शीर्षविन्दु नियमित नरहेका पनि उदाहरण पाइन्छन् ।

**उ** ठाडो रेखाको तल्लो भागमा दायाँतिर जाने सोझो तेर्सो रेखा बनाई जोडिएको चिह्न **उ** भनिन्छ । यो दायाँतिर खुल्ने कोण भएको रोमन क्यापिटल एल L आकारको हुन्छ, तर यसको ऊर्ध्वरेखा लामो हुन्छ र कहिलेकाहीं विशुद्ध कोणको ठाउँ गोलोपनले लिएको उदाहरण पनि पाइन्छ ।

**ए** असावधानीले बनाइएको त्रिभुज, △ जसको शीर्षविन्दु तल्लो भागमा बिरलै हुन्छ ।

**ओ** दायाँतिर खुल्ने **उ**को कोणको शीर्षभागमा देब्रेतिर जाने तेर्सो रेखा जोडेर ओ बनाइएको पाइन्छ, जो शायद माथिबाट लेख्न सुरु गरिएको र एकैझट्कामा लेखिएको कारण ऊर्ध्वरेखा ढल्केको हुन्छ र झण्डै रोमन Z को आकारप्रकारको बन्छ ।

## व्यञ्जन वर्ण

**क** लामो वा छोटो ऊर्ध्वरेखा भएको धनचिह्न वा क्रसको समान चिह्न : + ।

**ख** देब्रेतिर मोडिएको उल्टयाइएको बल्छी वा अङ्कुशको स्वरूपको **ख** दुइ मुख्य प्रकारको पाइन्छ : लामो अङ्कुशको तल्लो अन्तमा सानो विन्दु अथवा वृत्त। अर्को प्रकारमा अङ्कुश मात्र हुन्छ।

**ग** तलतिर खुल्नेगरी निर्मित कोण जसका दायाँबायाँ ढल्केका दुईवटा ठाडा रेखाहरूलाई माथिल्लो भागमा जोडिन्छ ^। कोणको ठाउँमा गोल बनाइएको अर्को प्रकारको **ग** पनि पाइन्छ जो उल्टयाइएको रोमन U जस्तो आकारप्रकारको हुन्छ। कोणात्मक र गोल दुवै प्रकारका **ग** माथिबाट सुरू गरी एकै झट्कामा बनाइन्थेहोलान्।

**घ** गोल प्रकारको गलाई उल्टयाई अर्थात् सुल्टो रोमन U बनाई बायाँतिरको भुजालाई लम्ब्याई तल्लो गोलाईको बीचमा भित्रपट्टि सानो ऊर्ध्वरेखा जोडेर **घ** बनाइएको प्रतीत हुन्छ।[१३] तल्लो भागलाई बढी चौडा बनाइएको **घ** पनि पाइन्छ।

**च** ठाडो रेखाको तल्लो देब्रे भागमा अर्धवृत्त जोडेर सानो रोमन d को स्वरूपको **च** बनाइएको छ। यसका तीन मुख्य प्रकार पाइन्छन्। पहिलोमा अर्धवृत्त बनाएपछि मात्र ठाडो रेखा खिंचिएको लाग्छ। दोस्रोमा ऊर्ध्वरेखा तानेपछि हात नउठाउँदै बायाँतिर फर्काई अर्धवृत्त बनाइएको प्रतीत हुन्छ, यसैकारण शायद अर्धवृत्त राम्ररी बनेको हुँदैन। बढी लोकप्रिय प्रकार यही हो। यस्तो प्रकार धस्काएर लेख्दा कोणात्मक हुनगएको छ, जसलाई तेस्रो प्रकार भन्नसकिन्छ।[१४]

**छ** च को दाहिनेतिर अर्को अर्धवृत्त जोडेर **छ** लेखिन्छ। कहिंलेकाँही तल्लो भागमा पहिले पूरा वृत्त बनाई त्यसको बीचबाट ठाडो रेखा तानिएको जस्तो देखिन्छ।

**ज** सानो लेटिन अक्षर इ ε को आकारप्रकारको र रोमन क्यापिटल E जस्तो बनाइएका वक्र र कोणात्मक गरी दुई प्रकारका **ज** पाइन्छन्। यिनैलाई धस्काएर लेखिएका स्वरूप समेत गरी जका चार अरू प्रकार पाइन्छन्। यिनमध्ये एउटाको स्वरूप ग्रीक सिग्मा Σसँग मिल्नआउँछ।[१५]

**झ** ठाडो रेखाको बीचमा दायाँतिर शीर्षभागसम्म माथि जाने वक्ररेखा तानेर **झ** बनाइएको छ। यसको मुख माथितिर खुल्छ र यसको आकारप्रकार देवनागरीको उल्टो अर्थात् दाहिनेतिर पेट फर्केको पजस्तो हुन्छ।

**ञ** ञको स्वरूप झको ठीक उल्टो हुन्छ। यसमा ठाडो रेखाको बीचबाट दायाँतिर तानिएको वक्ररेखा झमा झैं माथि नलगी, तलतिर फर्काइन्छ र ठाडो रेखाको माथिल्लो टुप्पोबाट बायाँतिर जाने छोटो तेर्सो रेखा बनाइन्छ।

**ट** दाहिनेतिर खुल्ने अर्धवृत्त, जो रोमन c जस्तो हुन्छ। यो कहिलेकाहीं लम्बवत् हुन्छ जो अर्धवृत्त भन्न सुहाउँदैन।

**ठ** पूर्ण वृत्तलाई **ठ** पढिन्छ : O

**ड** छोटो ऊर्ध्वरेखाको तल्लो टुप्पोलाई सीधा दायाँ लगी कोण बनाई तल झारी लेखिएको लाग्ने **ड** कोणात्मक खुड्किलो झैं देखिन्छ।

**ढ** ब्राह्मी **ढ** आश्चर्यजनक रूपमा देवनागरीको **ढ** जस्तै छ तर यसमा डीको हुँदैन। **ड**को टुप्पोलाई दाहिने भित्रपट्टि लगी एकै झट्कामा गाँठो बनाई **ढ** लेखिन्थ्योहोला।

**ण** रोमन क्यापिटल आईको समान I ठाडो रेखाको तल्लो र माथिल्लो भागमा साना समानान्तर तेर्सा रेखा खिंची **ण** बनाइन्छ।

**त** केही ढल्केको सीधा रेखाको झण्डै बीचबाट क्रमशः देब्रे र दाहिनेतिर रेखा खिंची तल खुल्ने कोण बनाउँदा **त** बन्छ। यसको स्वरूप मूल ल्याटिनको सानो एल λ सँग मिल्नआउंछ। ऊर्ध्वरेखा बायाँ वा दायाँ ढल्केको वा सीधा पनि हुनसक्छ। कुनैकुनै **त** सीधा ऊर्ध्वरेखाको तल्लो भागमा तल खुल्ने कोण वा वक्ररेखा जोडेर बनाइएको जस्तो लाग्छ। एकै अभिलेखमा विभिन्न प्रकारका **त** पाइने भएकाले स्थानीय आधारमा यसको भेद गरिनु उचित हुँदैन।[१६]

**थ** पूर्णवृत्तको बीचमा (ठ भित्र) एक विन्दु थपी **थ** बनाइन्छ।

**द** देब्रेतिर खुल्ने अर्धवृत्त बनाई त्यसको माथिल्लो र तल्लो भागमा ससाना ठाडा रेखा थपेर **द** बनाइन्छ। यसरी **द**को पिठ्यूं देवनागरीको द को ठीक उल्टो दिशामा फर्केको हुन्छ। **द**को अर्को प्रकारमा वृत्तलाई कोणको रूप दिएको पाइन्छ। कुनैमा शायद माथिबाट सुरू गरी एकै झट्कामा लेख्नखोज्दा **द**को तल्लो भाग धस्काएर तानिएको जस्तो लाग्छ। **द**को बाह्यस्वरूप ६ किसिमको देखिएको छ।[१७]

**ध** बढी प्रचलित **ध** रोमन डी D को समान हुन्छ, तर त्यसको ठीक उल्टो दिशातर्फ फर्केको **ध** पनि पाइन्छ।

**न** ठाडो खिंचिएको रेखाको तल्लो भागमा बराबर हुने गरी तेर्सो रेखा जोडेर बनाउँदा **न** बन्छ। यसरी **न** तेर्सो रेखाको बीचबाट माथितिर गएको ठाडो रेखाको संयोजन हुन्छ, यसको माथिल्लो भागमा पनि बराबर हुने गरी तेर्सो रेखा जोडेमा **ण** बन्नजान्छ।

**प** ठाडो रेखाको तल्लो टुप्पालाई दायाँतिर अंकुश झैं गोल आकारमा घुमाई केही माथि लगी **प** बनाइएको हुन्छ। यसको कोणात्मक स्वरूप बिरलै पाइन्छ।

**फ** पको अंकुशको दायाँतिरको टुप्पोलाई भित्र लगी बटारिएको हुन्छ।

**ब** समचतुष्कोण वा सामान्य चतुष्कोण : □ ▯ **ब** हुन्छ।

**भ** उल्टो दिशातर्फ फर्केको झलाई **भ** पढिन्छ। यो देवनागरीको डीको नभएको कोणात्मक **त**जस्तो देखिन्छ। **भ**को अर्को प्रकारमा दाहिने तिरको ठाडो रेखा बीचमा खण्डित हुन्छ र तल्लो रेखा केही देब्रेतिरबाट तल तानिएको हुन्छ।

**म** देवनागरीको ४ को अङ्क जस्तो लाग्ने चिह्न ब्राह्मीमा **म** पढिन्छ। देब्रे भागबाट सुरू गरी लेख्दा यसका दुवै भुजा समान रूपमा बाहिर फैलिएका वा देब्रे भुजाको अग्रभाग केही भित्र मोडिएको र अर्को भुजा केही बाहिर फैलिएको हुनसक्छ। कहिलेकाही वृत्त बनाएपछि त्यसमाथि दुइवटा अर्धवृत्त जोडिएको जस्तो देखिन्छ। यसरी **म**का अनेक प्रकार देखिन्छन्।

**य** नतोदर अर्धचन्द्रको बीचमा माथिजाने ऊर्ध्वरेखा तानेर **य** लेखिन्छ। अर्धचन्द्रको ठाउँमा दुईवटा माथि फर्केका अङ्कुशको बीचमा ऊर्ध्वरेखा भएको **य** पनि हुन्छ। कहींकहीं यो बाण जस्तो कोणात्मक बनेको हुन्छ।

**र** सीधा वा सर्पाकार ठाडो रेखा जो धस्काएर लेख्दा किसिमकिसिमका बनेका छन्।

**ल** माथिबाट सीधा तानिएको ठाडा रेखाको तल्लो भागलाई देब्रेतिर अङ्कुश झैं घुमाएर माथि बीचभागसम्म ल्याई टुप्पोमा या त देब्रेतर्फ जाने छोटो तेर्सो रेखा जोडिन्छ या भित्रतिर गाँठो वा फन्दा (लुप) बनाउँदै देब्रेतर्फ फर्काइन्छ। यसैलाई दाहिने फर्काएमा **ह** बन्दछ।

**व** ठाडो रेखाको अन्तमा बीचमा वृत्त जोडी **व** लेखिन्छ। शायद माथिबाट हात नउठाई एकैपल्ट पूरा वर्णलेख्ने कोशिशमा तल्लो वृत्त लाम्चो वा अण्डाकार बनेको पनि हुन्छ।

**श** माथिल्लो भागमा कोण भएको गको स्वरूप बनाएर तल फैलेका दुई रेखाहरूमध्ये देब्रेतिरको भुजामा सानो ठाडो रेखा जोडेर अर्थात् ठूलो कोणभित्र सानो कोण बनाएर **श** लेखिन्छ। ठूलो कोणलाई कहिलेकाहीं गोल रूप दिएको पनि देखिन्छ।

**ष** सीधा ठाडो रेखालाई दायाँतिर गोल घुमाउँदै अंकुश बनाएर (अर्थात् ब्राह्मीको **प** बनाएपछि) त्यसमा माथि जाने अर्को अङ्कुश थपेर **ष** बनाइएको पाइन्छ। यो **स**बाट बनेको हुनसक्छ।

**स** यसै गरी ब्राह्मी **प** लेखी देब्रेपट्टि तल्लो भागमा तल खुल्ने अङ्कुश थपी **स** बनाइन्छ। कहिलेकाहीं तल खुल्ने अंकुश कोणात्मक हुनपुगेको छ।

**ह** ब्राह्मी **ल**को ठीक विपरीत दिशामा अर्थात् दाहिनेतिर (**प**मा झैं) बनाइएको अंकुशको टुप्पोलाई भित्रपट्टि बटारेर गांठो बनाई बाहिर फर्काइएको चिह्नलाई **ह** पढिन्छ। अर्को प्रकारमा गाँठो नबनाइकन अङ्कुशको टुप्पोलाई सीधा दाहिने फर्काइएको हुन्छ।

हाल हिन्दीमा **ड** अक्षरबाट कठोर (ल्ड्)ध्वनि पैदा गर्न जसरी **ड**को तल बिन्दु दिइन्छ त्यसै गरी अशोकका केही अभिलेखहरूका **ड**को तल बिन्दु लगाइएको पाइन्छ।[१८]

## मात्राका नियम

**आ ा** जसरी माथि **आ** लेख्दा अको दाहिनेतिर सानो तेर्सो रेखा बनाइएको देखियो, त्यसैगरी व्यञ्जनमा प्राय: शीर्षभागमा **आ**कारको मात्रा लगाइएको पाइन्छ। **ट ठ थ ज ब म** जस्ता व्यञ्जनहरूमा भने दायाँतिर बीचमा यस्तो मात्राचिह्न लगाइएको हुन्छ।

**इ ि** ह्रस्व **इ**को मात्रा दुई किसिमले बनाइएको देखिन्छ : (१) एउटै ठाडो रेखाबाट सुरु हुने व्यञ्जनहरूका शीर्षभागमा दायाँतिर छोटो तेर्सो रेखा बनाई सीधै माथि जाने छोटो ऊर्ध्वरेखा तान्ने। तर **ख ग ग ठ थ** जस्ता केही व्यञ्जनहरूमा यस्तो मात्राचिह्न शीर्षभागभन्दा केही तल वा मध्यभागमा लगाइन्छ। (२) **ज ट** जस्ता बनावटका व्यञ्जनहरूमा शीर्षभागमाथि सानो ऊर्ध्वरेखा तानेर **इ**को मात्रा बनाइन्छ।

**ई ी** दीर्घ **ई** बनाउन **इ**कारको मात्रामा एक अर्को ठाडो रेखा थपिन्छ।

**उ ु** व्यञ्जनहरूको बनावट हेरी तीन किसिमले उकारको मात्रा बनाइन्छ : १. पुछारमा ठाडो रेखा नहुने **ख च ज थ न प ब म य ल व स ह** जस्ता व्यञ्जनको तल्लो टुप्पोमा तलतिर जाने सानो ठाडो धर्सो जोडेर, २. ठाडो रेखामा अन्त हुने व्यञ्जनको तल्लो भागबाट दायाँतिर जाने छोटो तेर्सो रेखा तानेर र (३) कहिलेकाहीं यस्ता ठाडा र तेर्सा रेखा ढल्केका हुन्छन् जो असावधानीले धस्काएर बनाइएका देखिन्छन्।

**ऊ ू** ह्रस्व **उ**को मात्राको ठाडो, तेर्सो वा ढल्केको रेखामा एउटा अर्को समानान्तर रेखा थपेर दीर्घ **ऊ** बनाइन्छ।

**ए े** अधिकांश व्यञ्जनमा शीर्षभागमा देब्रेतिर तेर्सो रेखा थपेर **ए**कारको मात्रा बनाइन्छ। तर **ज ट ठ ण थ ध ब म** जस्ता केही व्यञ्जनहरूमा यो मात्रा देब्रेतिर बीचभागमा तानिएको पनि पाइन्छ।

**ऐ ै** **ए**को मात्रामा देब्रेतिर अर्को समानान्तर रेखा थपेर **ऐ**को मात्रा बनाइन्छ।

**ओ ो** देवनागरीको समान ओकारको मात्रामा **आ**को निम्ति र **ए**को निम्ति निर्धारित दुवै चिह्नहरूको संयोजन हुन्छ। यसमा व्यञ्जनको शीर्षभागबाट दाहिने जाने आकारको तेर्सो रेखाभन्दा देब्रे जाने एकारको तेर्सो रेखा प्राय: केही माथि बनाइन्छ।

**आ ौ** अशोककालमा 'औ' मात्राको उपयोग भएको देखिँदैन। यसको सामान्य नियम ओ मा देब्रेतिर एक अर्को एकारको रेखा थप्ने देखिन्छ। यसरी ब्राह्मीको मात्रापद्धतिमा मूल रूपमा आकार, इकार, उकार र एकारका स्वतन्त्र चिह्नहरू छन्।

**अनुस्वार** ं व्यञ्जनको दायाँतिर विन्दु वा थोप्लो बनाई अनुस्वार वा **म्**को उच्चारण गर्ने चिह्न बनाइन्छ। अशोकका अभिलेखमा **विसर्ग** (:) **पाइँदैन**।

ब्राह्मीको मात्रापद्धतिमा मूल रूपमा आकार, इकार, उकार र एकारका स्वतन्त्र चिह्नहरू छन् ।

## ब्राह्मी लेखनपद्धति

(१) **व्यञ्जनमा स्वरको मेल** : संस्कृतव्याकरणमा उच्चारण गर्न सजिलो होस् भनी व्यञ्जनको अन्तमा **अ** स्वर भएको मानिन्छ, सो नभएमा व्यञ्जन स्वररहित वा हलन्त हुन्छ । मात्रा जोडिएमा व्यञ्जन **अ** रहेको मानिँदैन र मात्राचिह्नले संकेत गरेको स्वरसहित व्यञ्जनको उच्चारण गरिन्छ । ब्राह्मी र त्यसबाट विकसित सबै लेखनमा यो नियम पाइन्छ ।

(२) **व्यञ्जनमा व्यञ्जनको मेल** : दुइ वा अधिक व्यञ्जन जोडेर लेख्ने र बोल्ने चलन अर्थात् **संयुक्ताक्षर**को चलन ब्राह्मीबाटै चलेको हो । अशोकका अभिलेखमा दुई व्यञ्जनहरू जोडिएका उदाहरण धेरै पाइन्छन् । तिनमा पहिले उच्चारण गरिने व्यञ्जनको तल्लो भागमा पछि उच्चारण गरिने व्यञ्जन झुण्ड्याइएको हुन्छ । उच्चारण गर्दा माथिल्लो व्यञ्जन स्वररहित (हलन्त) बोलिन्छ भने पछिल्लो (ब्राह्मीमा तल जोडिने) व्यञ्जन मात्रा नलागेको स्थितिमा **अ** स्वरमा अन्त हुने किसिमले र मात्रा लागेको अवस्थामा त्यसैबमोजिम उच्चारण गरिन्छ । अशोकब्राह्मीमा माथिको व्यञ्जन प्रायः आफ्नो पूर्ण रूपमा र तल्लो व्यञ्जन धस्काएर र प्रायः सानो आकारमा लेखिएको हुन्छ । ब्राह्मीबाट विकसित भएका देवनागरीसहित सबै लेखनहरूमा यी विशेषताहरू पाइन्छन् । यो पद्धति ब्राह्मीलिपिको देन हो । (फलक २) । **संयुक्ताक्षर** अशोकब्राह्मीमा **य व र** जोडिएका संयुक्ताक्षर बढी पाइन्छन् :

**य** निम्नलिखित व्यञ्जनहरूको तल्लो भागमा पछि उच्चारण हने **य** को सानो, सोझो वा टेढो स्वरूप जोडिएको पाइन्छ: **क ख ग च त ध न भ म व स ह** ।

**व** प्रायः निम्नलिखित अक्षरहरूको तल्लो दाहिने वा देब्रे वा सीधा भागमा पूरा **व** वा त्यसको तल्लो वृत्तमात्र झुण्ड्याइएको पाइन्छ: **त द र श स ह** ।

**र रको** जोडमा नियमितता देखिँदैन । **क त द प व** र **स**मा **र** जोडिएको पाइन्छ तर यिनमा पहिले आफ्नु पूरा स्वरूपमा सर्पाकार **र** लेखिन्छ र त्यसैमा उपयुक्त व्यञ्जनको सानो आकार वा खण्डित अक्षर जोडिन्छ । यसरी यिनलाई क्रमशः **र्क र्त र्द र्प र्व र्स** पनि पढ्नसकिन्छ ।

अशोकका अभिलेखहरूमा थोरै संख्यामा पाइने अन्य संयुक्ताक्षरहरूमा भूलले **रमा स** जोडिएको तर **स्र** पढ्न खोजिएको, **ट**मुनि **स** जोडिएको तर **स्ट** पढ्न खोजिएको, **पमा त** जोडिएको तर **त्प** पढ्न खोजिएका उदाहरणहरू पाइन्छन् । **स्य स्म ह्म** भने नियमित रूपमा लेखिएका पाइन्छन् । गिरनारको अशोकको अभिलेखमा **व्य** को ठाउँमा **य्व** लेखिएको छ । यसै अभिलेखमा दाहिने भाग खण्डित गरी लेखिएको **ब**लाई ओझाले **ब्र** पढेका छन्, जो विवादको विषय बनेको छ ।[१९]

अशोककालीन ब्राह्मीका वर्णहरूको बनावट हेर्दा ती अनेक प्रकारका जस्ता देखिन्छन्, मात्राका चिह्नहरू र संयुक्ताक्षर पनि एकैनासका पाइँदैनन्। यसै कारण जर्ज बूलरले अशोककालीन ब्राह्मीलिपिलाई स्थानीयताको आधारमा भेद गरेका हुन्। कहिलेकाहीं एकै अभिलेखमा एउटै वर्ण भिन्नभिन्न किसिमले लेखिएको पाइन्छ। शीघ्रताले (चाँडै) लेख्ने कोशिशमा धस्काएर लेख्ने अभ्यासले पनि केही वर्णहरूको स्वरूप बेग्लाबेग्लै देखिनसक्छ। तरपनि एउटै कार्यालयबाट जारी गरिएका एउटै उद्देश्य र सन्देश भएका अशोकका ठाउँठाउँका अभिलेखहरू भिन्नाभिन्नै प्रकार वा शैलीका थिए भनी मान्नु ठीक छैन।[२०] वर्णहरूको आन्तरिक बनावटमा फरक नपाइने भएकोले अशोककालीन ब्राह्मीलाई क्षेत्रीय भेद र प्रकारहरूमा विभाजन गर्नु मुनासिब छैन। लेखनको माध्यम र उपकरणमा फरक हुनु र लेख्ने, सार्ने वा कुँद्ने व्यक्तिको वैयक्तिक छाप, हतार वा गल्तीका परिणामस्वरूप अशोकब्राह्मी वर्णहरूको बाह्य बनावटका फरक भएको हुनसक्छ। कलात्मक ढंगले बनाइएको स्तंभमा र खस्रो चट्टानमा कुँदिएका वर्णहरू फरकफरक लाग्नसक्छन्। अशोकका अभिलेखहरूको विषय, उद्देश्य र प्रकृति एकनाशका देखिएकाले तिनका भाखा राजधानीमै तयार गराई संबन्धित ठाउँहरूमा कुँद्नपठाइएका हुनसक्छन्।

## ब्राह्मीलिपि कसरी पढियो ?

१७८४ ईसवीमा सर विलियम जोन्सले भारतमा एशियाटिक सोसाइटीको स्थापना गरेपछि प्राचीन ग्रन्थ, अभिलेख र सिक्काहरू नियमित रूपमा खोजिनलागे। १७८५मा दशौं शताब्दीको बंगाल र विहारका पालवंशी राजाको अभिलेख पढियो। १७८९सम्म चौथो र पाँचौं शताब्दीका गुप्तकालीन अभिलेखहरूका आधा जति वर्णहरू पढ्नसकिए। धेरैको प्रयासपछि १८३७मा गुप्तशासकका अभिलेखहरू सफलतासाथ पढिए।[२१]

१८२६ मा पाकिस्तानका सीमावर्ती क्षेत्रमा शासन गर्ने इण्डो-बैक्ट्रियन राजा अगाथोल्कीजका सिक्काको ब्राह्मीलेख पढियो। तर थोरै वर्णहरूको जानकारीको भरमा अशोकका पूरा अभिलेख पढ्ने प्रयास लामो समयसम्म सफल भएनन्। १८३४-३५मा इलाहाबादका अशोकका स्तम्भलेखका छापा लिएर दिल्लीको स्तभंलेखसँग सो मिलान गरेपछि प्रिन्सेपले तिनमा एउटै पाठ रहेको कुरा जाने। उनले यिनको मात्रा-पद्धति गुप्तलेखनसँग मिल्ने कुरा समेत पत्ता लगाए। अशोकका अभिलेखको भाषा संस्कृत नै थियो कि भन्ने भ्रमले धेरै अल्मल्यायो। अशोकको भाषा मागधीप्राकृत वा पाली रहेको जानकारी भएपछि १९३७ मा जेम्स प्रिन्सेपले यसलाई पढ्ने सफलता पाए। जर्ज बूलरले ब्राह्मीको सम्पूर्ण वर्णमाला बनाउने काम गरे। त्यसपछि ब्राह्मीलिपिनै दक्षिण एशियाका अधिकांश लेखनकरूको मूल रहेको तथ्य स्पष्ट भयो।

## टिप्पणी

१. पहिले ब्राह्मी लेखोटका केही नमुनाहरूलाई अशोककोभन्दा पहिलेको मानिन्थ्यो, आज ती सबै पछिका मानिन्छन्।

२. हेर्नुस् K.A.Nilakanta Sastri, G.Srinivasachari, **Advanced History of India.** Allied Publishers, 1982, pp. 99ff.

३. नेपाल, पाकिस्तान र अफगानिस्तानमा समेत गरी अशोकका ३६ अभिलेखहरूमध्ये उत्तरपश्चिममा अफगानिस्तान र पाकिस्तान, पश्चिममा जूनागढ(गुजरात), दक्षिणमा महाराष्ट्र, आन्ध्र, कर्नाटक र तमिलनाडु तथा पूर्वमा पुरी (उडीसा) को ढौली जस्ता सीमान्त क्षेत्रका अभिलेख चट्टान वा पहरोमा कुँदिएका छन्। यद्यपि केही लघु चट्टानलेख विहार, मध्यप्रदेश र राजस्थानमा पनि पाइएका छन्। साम्राज्यको मध्यभागमा भने शायद यसैनिम्ति कलापूर्ण ढंगले तयार गरिएको एउटै ढुंगाको विशाल बेलनाकार स्तम्भमा अभिलेख कुँदिएका छन्। ठुला स्तम्भलेखहरूमा हाल दिल्लीमा रहेका मेरठ र टोपराका स्तम्भलेख, हाल इलाहाबादमा रहेको कोसमको स्तम्भलेख, विहारको चम्पारण जिल्लाका लौरिया अराराज, लौरिया नन्दनगढ र रामपुरवाका स्तम्भलेख पर्दछन्। लघुस्तम्भलेखहरूमा साँची (मध्यप्रदेश), सारनाथ (वाराणसी, उत्तरप्रदेश) तथा लुम्बिनी र निग्लीहवा (नेपाल) पर्दछन्।

४. जैनग्रन्थ पण्णवणासूत्र र समवायांगसूत्रमा १८ लिपिहरूको सूची पाइन्छ, जसमा पहिलो नाम बंभी (ब्राह्मी) को र चौथो नाम खरोट्ठी वा खरोष्ठीको छ। ललितविस्तर नामक संस्कृत बौद्धग्रन्थमा ६४ लिपिहरूको सूचीमा ब्राह्मी र खरोष्ठीलाई क्रमशः पहिलो र दोस्रो लिपिका रूपमा गणना गरिएको छ। सातौं शताब्दीको चीनियाँ विश्वकोशमा भारतमा प्रचलित लिपिहरूको सूचीमा पहिलो र दोस्रो नाम क्रमशः ब्राह्मी र खरोष्ठीको पाइन्छ। यी सन्दर्भहरूका लागि हेर्नुस् : गौरीशंकर हीराचन्द ओझा, **भारतीय प्राचीन लिपिमाला** (दिल्ली : मुन्शीराम मनोहरलाल, १९५९) पृष्ठ १७। ललितविस्तरमा अधिकतर नाम कल्पित छन् भन्ने ओझाको भनाई ठीक देखिन्छ। (त्यसै पृष्ठको टिप्पणी ३)।

५. गौरीशङ्कर हीराचन्द ओझा, पृष्ठ २८-२९। ओझाले ब्राह्मी नाम रहनुका अरू संभावनाहरू देखाएका छन् जस्तैः ब्राह्मणहरूले उपयोग गरिएको देखिएर, अथवा ब्रह्म झैं पूर्ण स्वरूपको मानिएर। तर ओझाले देखाएका पुराना लेखोटहरूमध्ये एउटा पनि ब्राह्मणको लेख पाइएको छैन। अशोक ब्राह्मणेतर हुन्। कमसेकम अशोकब्राह्मी त पूर्ण अवश्य थिएन। संस्कृत लेख्न आवश्यक १८ ध्वनिहरू केही शताब्दीपछिमात्र थपिएका पाइन्छन्। जर्ज बूलरले आफ्नु एक पुस्तकको शीर्षकमा ब्राह्मीलाई ब्राह्म भनेका छन् हेर्नुस् :जर्ज बूलरको पुस्तक **On the Origin of the Brahma Alphabet** (1895, reprint Varanasi, 1963).

६. ओझा **उही** पृष्ठ १८। ललितस्तिरको चीनियाँ अनुवाद र ६६८ ई.को चीनियाँ विश्वकोशमा ब्राह्मीको सम्बन्ध ब्रह्मासँग गाँसिएको छ। आरम्भका केही लेखकले ब्राह्मीलाई पालीलिपि वा लाट(स्तम्भ)लिपि पनि भनेका छन्।

७. ओझा, **उही**। ब्याक्ट्रियाका यूनानी शासकका सिक्काहरूमा देखिएको कारण खराष्ठीलाई पहिले ब्याक्ट्रियाली र इण्डोब्याक्ट्रियन तथा अफगानिस्तानमा देखिएकोले काबुलियन, एरियानियन वा गान्धारी भनियो। तेस्रो शताब्दीको ललितविस्तर नामक ग्रन्थको आधारमा अशोकका अभिलेखहरूका लेखनहरूलाई ब्राह्मी र खरोष्ठी भनी पहिचान गरी ती नाम चलाउने श्रेय जर्ज बूलरलाई जान्छ। जर्ज बूलर, **भारतीय पुरालिपिशास्त्र** (Indische Palaeographie को हिन्दी अनुवाद) (मोतीलाल बनारसीदास,१९६६) पृष्ठ ३-४, ३६-३७।

८. ओझा **उही** । यस लिपिको यस्तो नाम निर्माताको नाउँबाट किंवा लेखोटको स्वरूपबाट रहनगयो केही भन्नसकिँदैन । निर्माताको नाउँ खरोष्ठ थियो, वा त्यसको ओठ गधाको जस्तो थियो र लिपिको यस्तो नाम चल्यो भन्ने अनुमान प्रचलित छन् । खरोष्ठी नामको सम्बन्ध फारसी भाषामा गधाको छाला भन्ने अर्थ लाग्ने **खरपोस्ट** शब्द वा गधा र ऊंटको अर्थ लाग्ने **खरउस्तर** भन्ने शब्द वा लेख्नु वा कुद्नु भन्ने अर्थमा प्रयोग गरिने अरेमायक भाषाको शब्द **हरूत्थासँग** भएको होला भन्ने पनि अनुमान गरिएको छ । पुरालेखनमा खरोष्ठी नामको प्रयोग गर्ने पहिला व्यक्ति बूलर हुन् । हेर्नुस् माथिल्लो टिप्पणी ।

९. जर्ज बूलर **टिप्पणी** ७, पृष्ठ ३७ ।

१०. अन्य भाषाको प्रयोग गरिएको अशोकका अभिलेख कन्दाहारमा पाइएको छ जो ग्रीक र अरेमायक भाषाका छन् ।

११. जर्ज बूलर **पूर्वोक्त** पृष्ठ १३ ।

१२. Ahmad Hasan Dani, **Indian Palaeography**. (Oxford: The Clarendon Press, 1963) P.36.

१३. **उही** पृष्ठ ३८-३९ ।

१४. **उही** ।

१५. S.R.Goyal, "Brahmi – An Invention of the Early Mauryan Period" in S.P.Gupta, K.S.Ramachandran, ed. **The Origin of Brahmi Script** Delhi:D.K.Publications, 1979 P.8.

१६. अहमद हसन दानी, **पूर्वोक्त**, पृष्ठ ४१ ।

१७. एस.आर.गोयल, **उही** (**टिप्पणी** १५) ।

१८. अशोकका अभिलेखहरूमा केवल तीन शब्दहरू लेख्दा वैकल्पिक रूपमा यस व्यञ्जनको प्रयोग भएको छ : **एळक, दुळी र पम्नळस**। हेर्नुस् : दानी पूर्वोक्त, पृष्ठ ४३ ।

१९. अहमद हसन दानी, **पूर्वोक्त**, पृष्ठ ४४-४५ ।

२०. उही पृष्ठ ४८ । अघि जर्ज बूलरले ब्राहमीका दुई वा तीन प्रकार र गौरीशंकर हीराचन्द ओझाले दुई भेद मानेका थिए । हेर्नुस् जर्ज बूलर टिप्पणी ७, पृष्ठ ६८-७०, ओझा टिप्पणी ४, पृष्ठ ५२ । दानी उपर्यृक्त पृष्ठमा लेख्छन् : ...No regional classification is possible.

२१. अहमद हसन दानी, **पूर्वोक्त**, पृष्ठ १-११ ।



# अध्याय दश
# ब्राह्मीलिपिको मूल

**ब्राह्मी** भन्ने पारम्परिक नाम पाएर तेईस सय वर्षदेखि दक्षिण एशियामा प्रचलित लिपिको मूलको बारेमा अनेक थरिका अनुमान गरिएका छन्। यससम्बन्धी विभिन्न मतहरूलाई दुई मुख्य समूहमा राख्न सकिन्छ : विदेशी उत्पत्तिको मत र स्वदेशी मूलको मत। एकथरि लेखकहरू ब्राह्मीलिपिको मूल खोज्न विश्वको कहींको पुरानो भनी कहलिएको कुनै लेखनतिर हेर्नेगर्छन् भने अर्काथरि लेखकहरूले ब्राह्मीलिपिको मूललाई प्राचीन भारतीय साहित्यमा हेर्नखोजेका छन्। पहिलो समूहमा जर्ज बूलर मुख्य छन्। दोस्रो समूहमा भने गौरीशङ्कर हीराचन्द ओझाको नाउँ आउँछ।

## १. विदेशी उत्पत्तिको मत

जेम्स प्रिन्सेप, अट्फ्राइड म्यूलर जस्ता सुरुका केही लेखकले केही वर्णहरूको समानता र देब्रेबाट दाहिनेको लेखनदिशाको आधारमा ग्रीक (यूनानी)वर्णहरूबाट ब्राह्मीलिपि बनेको भन्ने ठाने।[१] अर्का एक लेखकले ब्राह्मीलिपि ग्रीक, अरेमायक र खरोष्ठीको वर्ण वा अक्षरचिह्नहरूको मेलबाट बनेको मिश्रित लेखन भन्ने माने।[२] तर यी सबै लिपिहरू उत्तरपश्चिम भारत र पाकिस्तानमा सँगसँगै चलिरहेका थिए[३] र ग्रीस(यूनान)सँगको भारतको संपर्कको इतिहास धेरै पुरानो रहेको देखिएन। यस किसिमको विचारले केही लेखकहरूलाई ब्राह्मीको उत्पत्तिको विचार गर्दा सेमिटिक वा शामेली लेखनतिर हेर्ने प्रेरणा दियो। ग्रीक, अरेमायक र खरोष्ठी लिपिहरूका स्रोत पनि सेमिटिक नै थियो। भूमध्यसागर क्षेत्रका एशियालीअफ्रिकी मूलका हिब्रू, असीरियाई, अरब र फिनिशियाई जाति, भाषा र संस्कृति सेमिटिक वा शामेली कहलिन्थ्यो। सेमिटिक समाजले मेसोपोटामियाई र मिश्री लेखनका विभिन्न चिह्नहरू लिई ईसापूर्व एक हजार वर्षभन्दा पहिलेनै अक्षरात्मकलेखनको विकास गरिसकेका थिए भन्ने कुराको चर्चा माथि भएको छ।[४]

### सेमिटिक (शामेली) उत्पत्ति

सुरुका केही लेखकले **दक्षिणी सेमिटिक** लेखनलाई ब्राह्मीको मूल माने। डीकेको विचारमा कुनै प्राचीन दक्षिणी सेमिटिक चिह्नहरूको मार्फत असीरियाको कीलाक्षर (क्यूनिफर्म) लेखनबाट ब्राह्मीलिपि बनेको थियो।[५] त्यसै गरी आइज्याक टेलरले ब्राह्मीलाई कुनै नजानिएको दक्षिणी सेमिटिक लेखनबाट बनेको माने।[६] दक्षिणी सेमिटिक लेखनको अर्थ अरबको लेखन थियो। कुनचाहीं दक्षिणी सेमिटिक लेखनबाट कसरी ब्राह्मी बन्नगयो भन्ने कुराको खुलासा गरिएन। ईसवीको छैठौं शताब्दीभन्दा पहिले भारतको अरब देशहरूसँग संपर्कको प्रमाण पाइँदैन। यी आपत्तिहरूको कारण यी मत चलेनन्।

## उत्तरी सेमिटिक वा फिनिशियाई उत्पत्तिको मत

सर विलियम जोन्सले **उत्तरी सेमिटिकलाई** ब्राह्मीको मूल माने।[७] वेबरले उत्तरी सेमिटिक र ब्राह्मीलेखनको बीच केही समानता देखाए।[८] भूमध्यसागरको पूर्वी किनारामा आजका सिरीया र लेबनानमा रहेको प्राचीन फिनिशियाका व्यापारीहरूका कारण त्यहाँको लेखनको प्रभाव अन्यत्र पर्ने संभावना थियो। ग्रीक वा यूनानीहरूले ई. पू. ९०० ताका फिनिशियाई लेखनका अक्षरचिह्नहरू अपनाएर तिनबाट स्पष्ट स्वर र व्यञ्जनहरू भएको वर्णमाला विकसित गरेका थिए। पछि सेमिटिकजगत्मा पनि वर्णमालात्मक पद्धति विकसित भयो। सेमिटिक लेखनको पढ्ने र लेख्ने गति दायाँबाट बायाँ थियो। आरम्भमा ग्रीकहरूले पनि यसै गरी लेखे, तर पछि लेखनदिशा बायाँबाट दायाँ निर्धारित गरियो। यसो गर्दा केही मूल वर्णहरूको चिह्न उल्टोपट्टि पर्न गयो र यसरी वर्णहरूको स्वरूपमा पनि फरक हुन गयो। कालान्तरमा ग्रीक लेखनबाट यूरोपमा हाल प्रचलित रोमन र अन्य अनेक वर्णमालाहरू विकसित भए।[९] उत्तरी सेमिटिकमूलको मतलाई जर्ज बूलरले बढी विस्तारसँग र जोडदार ढंगले व्याख्या गरे।[१०]

जर्ज बूलरको विचारमा ब्राह्मीका २२ वटा वर्णहरू उत्तरी सेमिटिक अक्षरचिह्नहरूबाट बनाइए। तीमध्ये केही अक्षर आरम्भिक फिनिशियाई थिए, केही ई. पू.आठौं शताब्दीको मोअबका राजा मेशाको अभिलेखका थिए र पाँच अक्षर असीरियाका ढकमा कुँदिएका थिए। तर ती अक्षर भारतीय भाषाको ध्वनि व्यक्त गर्न पर्याप्त थिएनन्। यसकारण, जर्ज बूलरको विचारमा, अन्य आवश्यक स्वर र व्यञ्जनवर्णहरू तिनकै आधारमा बनाइए।[११] उत्तरी सेमिटिक र ब्राह्मीलेखनमा जस्ताको त्यस्तै मिल्ने अक्षर ज्यादै कम थिए। धेरैजसो उत्तरी सेमिटिक अक्षरचिह्नहरूको माथिल्लो भाग भारी हुन्थ्यो जहाँ ठाडा तेर्सा रेखाहरू, त्रिकोण, चतुष्कोण, अर्धवृत्त र वृत्त बनाइएका हुन्थे। तिनको तल्लो भाग छरितो हुन्थ्यो। आफ्नो बनावटमा ब्राह्मी वर्ण तिनका ठीक उल्टा थिए। केहीलाई छोडेर ब्राह्मी वर्णहरूको माथिल्लो भाग प्रायः छरितो हुन्छ। तिनको तल्लो भागमा भने वृत्त, अर्धवृत्त, अंकुश जस्ता विभिन्न किसिमका रेखा र चिह्नहरू दायाँबायाँ झुण्ड्याइएका हुन्छन्। एक लेखनबाट अर्कोमा लिइएका अक्षरचिह्नहरूको तुलनाको निम्ति बूलरले तीन कुराहरूको विचार गर्नुपर्ने आवश्यकता माथि जोड दिए : एक, सबभन्दा पुरानो मौलिक र पूर्ण लेखनस्वरूपको उपयोग गरिनु पर्दछ, ती दुवै एकै समयका हुनुपर्दछन्। दुई, कुनै समाजले विदेशी लेखन अपनाउँदा नमिल्ने अक्षरहरूलाई (असमान समीकरणलाई) कसरी मिलाउन खोजेको छ, यसको तुलना गर्नसकिन्छ, र तीन, मौलिक शैलीहरूबाट निकै फरक देखिएमा त्यो मिलाउन अपनाइएको कुनै निर्धारित सिद्धान्त देखाउनुपर्छ, जसको आधारमा चिह्नहरूमा परिवर्तन गरिए।[१२]

बूलरको विचारमा भारतीय पण्डितहरूले आफ्ना (क) पाण्डित्यपूर्ण रूढिवादिता,(ख) सीधा पंक्ति बनाउन सजिलो हुने किसिमका वर्ण बनाउने इच्छा, र (ग) माथिल्लो भाग स्थूल (भारी) हुने अक्षरलाई मन नपराउने प्रवृत्ति जस्ता कारणले सेमिटिक अक्षरचिह्नहरूलाई सोझा र ठाडा रेखा (ऊर्ध्वरेखा) भएका,

समान उंचाई भएका र माथिल्लोभाग छरितो र तल्लो भाग भारी वा स्थूल भएका ब्राह्मीवर्णका रूपमा परिवर्तित गरे। यसरी बूलरको अनुसार भारतीय पण्डितहरूले आफ्नु रुचि र प्रवृत्तिको साथसाथ व्याकरण र ध्वनिशास्त्र बमोजिम सेमिटिक अक्षरचिह्नलाई तलबाट माथि उल्ट्याइदिए, ठाडा रेखालाई तेर्साए, तेर्सोलाई ठड्याए, कोणलाई खोलिदिए र माथिल्लो भाग छरितो भएका ब्राह्मी वर्णहरू बनाए। यसको साथसाथ दायाँबाट बायाँतिर लेखिने सेमिटिक लेखनलाई बायाँबाट दायाँ लेखिने लेखनको रूपमा अपनाउँदा कतिपय मूल चिह्नहरू पनि दाहिनेबाट देब्रे सारिए।[१३] बूलरले आरम्भमा ब्राह्मी पनि सेमिटिक जस्तै दायाँबाट बायाँ गतिमा वा उभयगतिमा लेखिन्थ्यो भन्ने माने र उल्टा वर्ण कुँदिएका केही लेखोटलाई उदाहरणको रूपमा पेश गरे। यिनमा वर्णहरू उल्टा आकारका छन् र लेखनगति दायाँबाट बायाँ भएको बुझिन्छ।[१४]

बूलरको अनुसार २२ वटा उत्तरी सेमिटिक अक्षरचिह्नहरूबाट भारतीयहरूले ब्राह्मीका मूल वर्णहरूको साथसाथ अन्य आवश्यक वर्ण र अक्षरचिह्नहरू कसरी बनाए भन्ने कुरा देखाएका छन्। सेमिटिक अक्षर र कोष्ठभित्र ब्राहमी वर्ण र उच्चारण दिइएको छ : **अलेफ्** (अ), **बेथ्** (ब), **गिमेल्** (ग), **दालेथ** (ध), **हे** (ह), **वाव्** (व), **जईन्** (ज), **चेथ्** (घ), **थेथ्** (थ), **योद्** (य), **काफ्** (क), **लामेद्** (ल), **मेम्** (म), **नून्** (न), **सामेख्** (स, ष), **अईन्** (ए) **पे** (प), **त्सादे** (च), **कोफ्** (ख), **रेश्** (र), **शिन्** (श) **र ताव्** (त)।[१५] बूलरको अनुसार कतिपय मूल वर्णहरूका आधारमा अन्य सजातीय वर्णचिह्नहरू यसरी बनाइए :[१६] **अ** र **उ**बाट आकार र उकारको **मात्रा**, **ए**बाट **इ**, **ई**, **ऐ** र **ओ**, **ग**बाट **घ**, **च**बाट **छ**, **ज**बाट **झ**, **ड**बाट **ढ**, **न**बाट **ङ**, **ञ**, र **ण**, तथा **ब**बाट **भ** बनाइयो (फलक ३)।

जर्ज बूलरले ईसापूर्व आठौं शताब्दीभन्दा पहिल्यै भारतमा सेमिटिक लेखनको प्रवेश भएको र ईसापूर्व पाँचौं शताब्दीभन्दा पहिल्यै ब्राह्मीको विकास भइसकेको मानेका छन्। डेविड डिरिञ्जर र अहमद हसन दानीले पनि सेमिटिकउत्पत्तिको मतको समर्थन गरेका छन्।[१७] यिनीहरूको विचारमा आर्यहरूले पहिलेदेखि निर्धारित ध्वनिशास्त्र र व्याकरणका नियमहरूलाई ध्यानमा राखी वैदिक ग्रन्थहरूको पाठ गर्न विशेष उपयोगी संभेर विकसित गरे।[१८] राजबली पाण्डेय भारतीय उत्पत्तिको मत मान्छन् तथापि उनी फिनिशियाई लेखनसँग ब्राह्मीको समानतालाई नकार्दैनन् बरु फिनिशियाईलाई वेदमा उल्लिखित पणी वा पणिन् मानेर समस्याको समाधान खोज्छन्।[१९]

## २. भारतीय आर्यउत्पत्तिका मत

गौरीशङ्कर हीराचन्द ओझाको पाण्डित्यपूर्ण नेतृत्वमा विद्वान्हरूको अर्को समूह ब्राह्मीलाई भारतीय आर्यहरूद्वारा भारतमै निर्मित लिपि मान्दछ। ओझाभन्दा पहिलेका एडवर्ड थमस्, प्रो. डसन्, जनरल कनिंघम र प्रो.लसन् जस्ता लेखकहरू पनि यसै समूहमा पर्दछन्। एडवर्ड थमस[२०] ब्राह्मीलिपिको सरलताबाट प्रभावित छन् र त्यसलाई भारतवासीहरूले बुद्धिमानीपूर्वक बनाएका मान्छन्। प्रो. डसन्[२१] ब्राह्मीलाई "स्वतन्त्र आविष्कार" मान्छन्। यसैगरी लासेन् र ए. कनिंघमले ब्राह्मीलिपिलाई भारतीयहरूले वस्तु

बुझाउने प्रतीक चिह्नहरूबाट विकसित गरेका भन्ने मानेका छन् ।[२२] केहीले कल्पित द्रविड लिपिबाट ब्राह्मीको उत्पत्ति भएको मानेका छन् ।[२३] यस मतअनुसार उहिल्यै भारतभरि बसोबास गर्ने द्रविडहरूको लेखनलाई पछि आर्यहरूले ब्राह्मीको रूपमा विकसित गरे ।[२४] द्रविडहरूको मूल स्थानबारे अनेक मत हुनु, ब्राह्मीको प्राचीनतम नमुना दक्षिणमा नभई उत्तरभारतमा पाइनु, ब्राह्मी र तमिलको बीचमा ध्वनि संरचना बेग्लै हुनु र प्राचीन द्रविडलिपिको बारेमा केही नजानिनुजस्ता कारणले गर्दा यो मत चलेन ।

सिन्धुलेखनको बारेमा जानकारी भएपछि ग्याड, ल्याङडन् र राजबली पाण्डेय जस्ता केही लेखकहरूको ध्यान त्यतातिर गयो । यिनीहरू सिन्धुलिपिबाट ब्राह्मीको विकास भएको भन्ने अनुमान गर्छन् ।[२५] राजबली पाण्डेयको विचारमा ब्राह्मी चित्रलेख वा आशय लेखनका ध्वन्यात्मक चिह्नहरूबाट उत्पन्न भयो जसको प्राचीनतम नमुना सिन्धुलेखनमा पाइन्छन् ।[२६] सिन्धुलिपि र ब्राह्मीको बीचमा लामो अन्तराल हुनु, अझै पढ्न नसकिएको सिन्धुलिपिको बारेमा जानकारीको अभाव हुनु र सिन्धुलिपिको लेखनदिशा शायद ब्राह्मीको विपरीत रहेको अनुमानका कारण यो मत चलेन ।[२७]

## ओझाको मत

गौरीशङ्कर हीराचन्द ओझा बूलरको मतको खण्डन गर्दै आफ्नो भारतीय उत्पत्तिको मतको स्थापना गर्छन् ।[२८] उनको विचारमा उत्तरी सेमिटिक चिह्नहरूको बनावट एकदमै फरक भएकाले ब्राह्मी तिनबाट बनेको हुनसक्दैन । ओझाको अनुसार सेमिटिक अक्षरचिह्नहरूको बनावटसँग तुलना गर्न असंभव भएकाले बूलरले चिह्नहरूको स्थानपरिवर्तनको कल्पना गर्नुपरेको हो । यसरी चिह्नको स्थानपरिवर्तन गरेर हेर्ने हो भने कुनै पनि लिपिको उत्पत्ति जुनसुकै लिपिबाट सिद्ध गर्नसकिन्छ भन्दै ओझाले अरमायक र रोमनबाट ब्राह्मीका केही 'अक्षर'हरूको व्युत्पत्तिको नमुना देखाएका छन् ।[२९] ओझाको विचारमा आदर्श लिपिमा हुनुपर्ने सबै गुण ब्राह्मीमा छन्, जबकि सेमिटिक लेखन अपूर्ण र 'दरिद्र' छ र ब्राह्मीमा आफ्नो लामो भारतीय परम्परा जनाउने प्रौढता पाइन्छ । ओझाले ब्राह्मीवर्णमालाका गुण र विशेषताहरूको लामो सूची दिएका छन् र सेमिटिकमा तिनको अभावको चर्चा गरेका छन् ।[३०]

ओझाको विचारमा ब्राह्मी सधैं दाहिनेबाट देब्रे लेखिन्थ्यो । आरम्भमा ब्राह्मी सेमेटिकको समान वा उभयगतिमा लेखिन्थ्यो भनी बूलरले औंल्याएका उल्टो लेखोटका नमुनाहरूलाई ओझाले गल्तीका परिणाम मानेका छन् ।[३१] अठार ध्वनिको उच्चारण गर्ने बाइसवटा सेमिटिक चिह्नहरूको रूप परिवर्तन गरेर तिनबाट अनेक स्वर, व्यञ्जन र मात्राचिह्न बनाई तिनको ध्वनि र उच्चारणस्थान निर्धारित गरेर पूर्ण वर्णमाला बनाउनसक्ने सभ्य जातिले स्वयं स्वतन्त्ररूपमा लिपि बनाउन नसकेर अर्कोको मुख ताक्नु पर्ने संभावनाप्रति ओझा सन्देह गर्छन् । उनी भन्छन् :"ब्राह्मी भारतवर्षमा आर्यहरूको आफ्नै खोजको....मौलिक आविष्कार हो....जसको फिनिशियाईसँग कुनै सम्बन्ध छैन ।"[३२]

ओझाले सेमिटिकउत्पत्तिको समानान्तर विकल्प सुझाएका छैनन् र अधिकांश पृष्ठ जर्ज बूलरको खण्डनमा खर्च गरेका छन्। ओझाले बडली (अजमेर) र पिपरहवाका अभिलेखहरूलाई ईसापूर्व पाँचौं शताब्दीका मानेका छन् जो उनको दृष्टिमा पाइएकामध्ये प्राचीनतम नमुना हुन्। तर उनको विचारमा ब्राह्मीको निर्माण 'बहुत प्राचीन' समयमा भएको हो। ओझाले वैदिक साहित्यमा गरिएको ध्वनि, उच्चारण र अक्षरको विवेचनलाई ब्राह्मीलिपिमा आधारित मानेका छन्।

## संस्कृत व्याकरण र ब्राह्मीवर्णको बनावट

ब्राह्मीको बनावटमा ध्वनिशास्त्रका सिद्धान्तहरूको कतिसम्म अनुसरण गरिएको छ भन्ने कुरा हेर्नु यहां सान्दर्भिक हुने छ। वर्णहरूका उच्चारणस्थान, अल्पप्राण र महाप्राणको आपसी सम्बन्ध, मात्रापद्धति र संयुक्ताक्षरपद्धतिका शास्त्रीय नियमलाई ध्यानमा राखी ब्राह्मीको बनावटको जाँच गर्नसकिन्छ। यसो गर्न सबभन्दा पुरानो अर्थात् अशोककालीन ब्राह्मीलिपिको आधार लिइँदै छ :

### (१) उच्चारणस्थान र ब्राह्मीवर्ण

(क) कण्ठ्चस्थानको स्वरवर्ण **उ**लाई बूलरले **व**बाट बनेको मानेका छन्।[३३] तर बनावटमाथि विचार गर्दा यो तालव्यस्थानको **इ** ∴ को नजिक देखिन्छ।

(ख) कण्ठ्यस्थानीय **ङ**को बनावट, (जसलाई बूलरले दन्त्य स्थानीय **न**बाट बनेको माने), तालुस्थानीय **ज**को नजिक छ।

(ग) मूर्धन्य **ट ठ ड ढ** व्यञ्जनहरू दन्त्यस्थानीय **थ**का नजिक छन्।

(घ) मूर्धन्य **ष** आफ्नु बनावटमा दन्त्य **स**को नजिक छ।

(ङ) दन्त्यस्थानीय **न**को बनावट मूर्धन्य **ण**को नजिक छ।

### (२) ब्राह्मीव्यञ्जनमा अल्पप्राण र महाप्राणको अन्तर्संबन्ध

| | अल्पप्राण | महाप्राण | अन्तर्सम्बन्ध |
|---|---|---|---|
| १. | **क** | **ख** | छैन |
| २. | **ग** | **घ** | छैन |
| ३. | **च** | **छ** | देखिन्छ |
| ४. | **ज** | **झ** | स्पष्ट छैन |
| ५. | **ट** | **ठ** | स्पष्ट छ |
| ६. | **ड** | **ढ** | देखिन्छ |
| ७. | **त** | **थ** | छैन |
| ८. | **द** | **ध** | स्पष्ट छैन |
| ९. | **प** | **फ** | देखिन्छ |
| १०. | **ब** | **भ** | स्पष्ट छैन (फलक ३ ख) |

### (३) ब्राह्मीको मात्रापद्धति र संस्कृत व्याकरण

संस्कृतव्याकरणमा व्यञ्जनको अन्तमा **अ** स्वर भएको मानिन्छ, सो नभएमा व्यञ्जन स्वररहित वा हलन्त हुन्छ। मात्रा जोडिएमा व्यञ्जन **अ** रहेको

मानिँदैन र मात्राचिह्नले संकेत गरेको स्वरसहित व्यञ्जनको उच्चारण गरिन्छ। ब्राह्मीको मात्रापद्धतिमा आकार, इकार, उकार र एकारका स्वतन्त्र चिह्नहरू छन्। जर्ज बूलर र अहमद हसन दानीले मात्राचिह्नमा पनि मूल स्वरवर्णकै सिद्धान्त रहेको मानेका छन्।[३४] दानीको विचारमा मुख्य स्वर **अ इ उ**बाटै व्याकरणकारहरूले मात्राचिह्नहरू बनाएका हुन्। **ए** र **ओ** क्रमशः **अइ** र **अउ**का गुणस्वर भएकाले तिनमा **इ** र **उ**को पनि चिह्न हुनुपर्छ। उनको अनुसार **ए**मा **इ**को ठाडो रेखा हटाइयो र **ओ**मा **उ**को तल्लो भागको तेर्सो रेखा माथि सारिएको हो। तर वास्तवमा व्याकरणको नियमबमोजिम गुणसन्धिमा **अ/आइ+ई**को ठाउँमा **ए** हुन्छ र **अ/आ+उ/ऊ**को ठाउँमा **ओ** हुन्छ। व्याकरणको नियमबमोजिम **ए** र **ओ**मा क्रमशः **आ+इ /ई** र **आ+उ। ऊ**का चिह्न आवश्यक देखिँदैनन्, बरु तिनका ठाउंमा **ए** र **ओ** का स्वतन्त्रचिह्न हुनुपर्छ, जो ब्राह्मीमा छन् पनि।

## (४) संयुक्त व्यञ्जन (जोडको अक्षर) र व्याकरण

मात्रापद्धतिको चर्चा गर्दा भनिए झैं दुइ वा अधिक व्यञ्जन जोडिँदा सुरूका व्यञ्जन/हरू हलन्त वा स्वररहित मानिन्छन् तर पछिल्लो व्यञ्जन भने मात्रा नलागेमा नियमानुसार अस्वरसहित र मात्रास्वर जोडिएमा त्यसै बमोजिम उच्चारण हुन्छ। वर्तमान देवनागरीमा धेरैजसो व्यञ्जनहरूमा व्याकरणका नियमबमोजिम जोडका सुरूका व्यञ्जनलाई स्वररहित भनी चिनाउन वाक्य, शब्द, तन्नम आदिमा झैं खण्डित गरी लेखिन्छ। तर प्रारम्भिक ब्राह्मीलिपिका संयुक्तव्यञ्जनका धेरैजसो उदाहरणहरूमा पहिले उच्चारण हुने स्वररहित व्यञ्जन आफ्नो पूरा रूपमा र पछि स्वरसहित उच्चारण गरिने व्यञ्जन भने खण्डित रूपमा वा धस्काएर तल्लो भागमा झुण्ड्याएर लेखिएको हुन्छ। केही संयुक्तव्यञ्जनमा क्रम नमिली गलती भएका पनि पाइन्छन्। यो व्याकरणसम्मत होइन भन्नुपरोइन। यी बूँदाहरूबारे तल विचार गरिँदैछ।

## छलफल

ब्राह्मीलिपिको मूलको संबन्धमा यी मतहरूमध्ये कुनैले पनि समस्याको जरो फेलापार्न सकेको छैन। लेखन समाजको गतिविधिसँग सम्बन्धित हुन्छ। लेखन किन जरूरी भयो, कसरी र कहाँबाट त्यसको विचार, सिद्धान्त र प्रेरणा आयो भन्नेजस्ता सवालहरूमाथि कोई गम्भीर देखिँदैनन्। यद्यपि 'किन' भन्ने प्रश्नको उत्तर सतही तौरमा सबैले एउटै दिएका छन्। भारतीयहरूले आफ्नो भाषा लेख्न ब्राह्मीको विकास गरेको कुरामा सबै सहमत छन्। तथापि अनेकौं सवालहरू अनुत्तरित छन्।

एक थरिले विश्वमा पुरानो कहलिएको कुनै लिपिसँग ब्राह्मीको नाता जोर्नखोजे भने अर्का थरिले वैदिक साहित्यका लेखनसम्बन्धी उद्धरणको जाँचमा जोड दिए। ब्राह्मीको मूलको अध्ययन गर्दा लेखनगतिविधिको लामो इतिहास बोकेको क्षेत्रतिर नंजर दौडाउनु अप्रासङ्गिक पक्कै होइन। विश्वको कुनै ठाउँमा विकसित भएको लेखनले व्यापारिक संपर्कको माध्यमले अरू ठाउँमा विस्तार

पाएको उदाहरण पाइएका छन् ।[३५] वैदिक आर्यहरूलाई निरक्षर मान्ने लेखकहरूले पनि तिनीहरू साक्षर समाजका संपर्कमा थिए भन्ने कुरा मानेका छन् । ब्राह्मीको उपयोग गर्ने समाज सेमिटिकजगत्को लेखनसँग परिचित थिएन भन्न गाहारो छ । तर जान्नुको अर्थ नक्कल गर्नु होइन । एकले कसरी भारतीयहरूले सेमिटिक अक्षरहरूको नक्कल गरे भन्ने कुरामा रुचि लिएको छ भने अर्कोले भारतीयहरूको सेमिटिक संस्कृतिसँगको परिचय भएनभएको कुरामा समेत वास्ता गरेको छैन ।

ब्राह्मीलिपि कसरी र कहाँबाट विकसित भयो भन्ने मूल प्रश्नका सबै उत्तररू तथ्यपरक कम र काल्पनिक अधिक छन् । जर्ज बूलरले तीन ठाउँको सेमिटिकलेखनको बाह्य स्वरूपसँग तुलना गर्दै ब्राह्मीलिपिमा मात्र होइन यसको लेखनगतिमा समेत सेमिटिक प्रभाव देखेका छन् । तर उनले ब्राह्मी र सेमिटिक लेखनपद्धतिमा रहेको भिन्नतालाई देख्यानदेख्यै गरेका छन् । भारतमा भारतीयहरूले बनाएको आदर्श लिपि मान्ने ओझाले ब्राह्मीका गुण र विशेषताहरू संभ्रेर सेमिटिकमा तिनको अभावको चर्चा गरेका छन्, तर ब्राह्मीको स्रोतको कुनै चर्चा गरेका छैनन् ।

ब्राह्मीलिपिको बनावटमा खास गरी वर्णहरूको उच्चारणस्थान, अल्पप्राण र महाप्राणको अन्तर्सम्बन्ध, सन्धि र मात्रा र संयुक्ताक्षरपद्धतिसम्बन्धी व्याकरणका नियमहरू पूर्ण रूपमा पालन भएको देखिँदैन । कुनै निर्धारित सिद्धान्तका आधारमा संस्कृतका पण्डितहरूले गढेको भनिएको लिपिमा यस्तो हुनुनपर्ने हो । उच्चारणस्थानमाथि ध्यान नजानु र अल्पप्राण र महाप्राणवर्णको सम्बन्ध नदेखिनु जस्ता कुराले शायद अर्कै कुराको सङ्केत गर्छ । केही वर्णहरू आयात गरिएका भएमा यस्तो हुन सक्छ । जस्तै क र खमध्ये कुनै एक र **त** र **थ**मध्ये कुनै एक वा दुबै आयातित भएमा त्यसको समकक्ष अल्पप्राण वा महाप्राण वर्णको अर्न्तसम्बन्ध अस्पष्ट हुनसक्छ । यदि त्यस्तो हो भने ब्राह्मीमा सकेसम्म व्याकरणका नियम मिलाउने प्रयास भएको मान्नुपर्छ ।

जर्ज बूलर र गौरीशंकर हीराचन्द ओझाका बीच एउटा कुरामा समानता देखिन्छ । दुवैले ब्राह्मीलाई लिखित प्रमाणको आधारमा पुरानो देखाउन दुई युक्तिको सहारा लिएका छन् : एक, दुवैले कतिपय अभिलेखहरूलाई अशोकपूर्वका या पुरानो परिपाटिका मानेका छन् ।[३६] दुई, केही वर्णहरूको बनावटको व्याख्या गर्दा दुवैले आरंभिक ब्राह्मीका दक्षिणी वा द्रविडी जस्ता क्षेत्रीय प्रकारहरू रहेका मानेका छन् । दुवैले भट्टिप्रोलुका अभिलेखहरूको लेखोटलाई द्रविडी प्रकार मानेका छन् । यिनका वर्णहरू उल्टा छन् र उल्टो गतिले पढिने जस्तो गरी लेखिएका छन् ।[३७] आज यी दुवै कुरा मानिँदैनन् । पहिले अशोकपूर्वका मानिएका अभिलेखहरू तुलनात्मक अध्ययनले पछिका ठहरिएका छन् ।[३८] अशोककालीन ब्राह्मीमा कतिपय वर्णहरूका दुई वा तीन स्वरूप अवश्यै पाइन्छन् । तथापि उत्तरी प्रकारका भनिएका केही वर्ण दक्षिणमा र द्रविडी भनिएका केही वर्ण उत्तरमा पनि पाइन्छन् । कहिलेकाहीँ यस्ता विभिन्न 'प्रकार'का वर्ण एउटै लेखोटमा समेत पाइन्छन् । यस कारण त्यस्ता प्रकार खास क्षेत्रमा विकसित होइनन्, यी त लेखक वा उत्कीर्णको गल्ती वा नीजी शैलीको परिणाम हुन् ।

पछिल्लो अध्ययनले देखाएबमोजिम अशोकब्राह्मीमा क्षेत्रीय प्रकार वा भेदको कल्पना गरी त्यसलाई खास क्षेत्रमा सीमित गर्नु गलत हुने छ।[३९]

उत्तरी **सेमिटिकमूलको मत**लाई निम्नलिखित तथ्यहरूले कमजोर बनाइदिएका छन् :

(१) **ईसापूर्व पाँचौं शताब्दीभन्दा पहिले लेखन थियो भन्ने प्रमाणको अभाव :**[४०] सेमिटिकबाट ब्राह्मी बनाइएको भन्ने मानेमा मनमा उठ्ने पहिलो सोधाई हुन्छ : ब्राह्मीको निर्माण गर्नुभन्दा पहिले भारतीयहरू सेमिटिक जान्दथे भने उपयोग पनि गर्थेहोलान्, तर यसको पक्षमा कुनै पुरातात्विक प्रमाण किन पाइँदैन? कथित निर्माण कालको ब्राह्मीकै नमुना किन पाइँदैन ? अशोकब्राह्मीमा क्षेत्रीय भेदको विचार जसआधारमा ब्राह्मीको प्राचीनताको व्याख्या हुनसक्थ्यो आजभोलि गलत मानिएको छ।

(२) **दुई लेखनहरूमा समानताको अभाव** : अक्षरहरूको बाह्य बनावटमा समानताको बारेमा धेरै कुरा गरिएको छ तथापि तुलना गर्न सकिने अर्थात् जस्ताकोत्यस्तै मिल्ने वर्णहरू ज्यादै कम छन्।[४१] यथार्थमा बूलरले ब्राह्मी वर्णको तुलना स्वयं उत्तरी सेमिटिक अक्षरहरूसँग होइन बरु ती अक्षरहरूका तल माथि दायाँ र बायाँ स्थानपरिवर्त्तन गरी कल्पित चिह्नहरूसँग गरेका हुन्। यसकारण बूलरको मतको आधार युक्तिपूर्ण भएतापनि काल्पनिक र कृत्रिम हुनगएको छ।[४२] वर्णहरूको आन्तरिक अर्थात् ध्वनिमूल्यको पक्षमा कम ध्यान दिइएको छ।

(३) **पद्धतिमा असमानता** : ब्राह्मीका व्यञ्जनमा व्यञ्जन (संयुक्ताक्षर) र व्यञ्जनमा स्वरमिलाउने (मात्रा) जस्ता पद्धतिको स्रोत सेमिटिक देखिँदैन। व्यञ्जनमा स्वर मिलाउने इथोपियाई लेखनको यस पद्धतिलाई भारतीय लेखनको प्रभाव मानिएको छ।[४३]

(४) **आरम्भमा ब्राह्मी दायाँबाट बायाँ लेखिन्थ्यो भन्ने अवधारणमा प्रमाणको अभाव** : प्रमाणको रूपमा पेश गरिएका नमुना त्रुटियुक्त छन्। बायाँबाट दायाँ लेखनगति ब्राह्मीको नियम हो, अपवाद होइन। बुँदा (२) र (४) बारे ओझाको कथन चित्तबुझ्दो छ।

अब वैदिक साहित्यमा आधारित **ओझाको मत**बारे विचार गरौं, जो विश्वका पुरानो साहित्यमा गनिन्छ। प्राचीन कालमा हिन्दुहरूमा सुनेर कण्ठ गर्ने चलन रहेको कारण **श्रुति** भनिएको पारम्परिक वैदिक साहित्यका उद्धरणहरू र तिनमा चर्चा गरिएका वर्ण र ध्वनिसम्बन्धी विचारलाई अगि सारेर ओझाले ब्राह्मीलिपिको उत्पत्तिको प्राचीनता देखाउने प्रयास गरेका हुन्। ओझाको **भारतीय वैदिकमूलको मत**लाई निम्नलिखित तथ्यहरूले कमजोर बनाइदिएका छन् :

(१) **'ईसापूर्व पाँचौं शताब्दीभन्दा पहिले' ब्राह्मी प्रचलित रहेको देखाउने प्रमाणको अभाव** : यथार्थमा अशोकका अभिलेखभन्दा पुरानो कुनैपनि ब्राह्मी लेखोट पाइँदैन। सुन्ने, कण्ठ गर्ने र सुनाउने परम्परामा लामो

कालसम्म जीवित वैदिक साहित्यको लिखित प्रति कथित रचनाकालभन्दा धेरै पछिमात्र लिपिबद्ध गरिएको पाइन्छ। यस कारण साहित्यका उद्धरणहरूलाई वैदिककालदेखि बौद्धकालसम्मको इतिहासका स्रोत मान्ने कुरामा विवाद रहँदैआएको छ। यजुर्वेदमा ठुलो संख्याको गणना र उपनिषद्हरूमा अक्षर, वर्ण र मात्राको उल्लेखलाई[४४] ब्राह्मीलेखनको अस्तित्त्वको अन्तिम प्रमाण मान्नसकिँदैन। यस्तो अवस्थामा सँधै त्यस्ता उद्धरणहरूलाई समर्थन गर्ने अन्य सामग्रीको आवश्यकता हुन्छ जसको चर्चा गरिएको छैन। वैदिककालमा लेखनको चलन थियो र त्यो ब्राह्मीलिपि थियो भन्नु दुई भिन्नाभिन्नै कुरा हुन् र यी दुवै कुराको पुष्टि गर्ने कुनै भौतिक प्रमाण नपाइनु चाहीं तथ्य हो।

यथार्थमा लेखक, लेखापित (लेखाइएको), अख्खरिका (पिठचूँमा वा हावामा अक्षर लेख्ने खेल), लिखितक चोर (दर्तावाल चोर), लेखनी (कलम), लेखसिप्प (लेख्ने सीप), पोत्थक (पुस्तक) र फलक (पाटी) जस्ता शब्दहरू लेखनसम्बन्धी वास्तविक उद्धरण हुन्, जो पालीभाषाका बौद्ध साहित्यमा पाइन्छन्।[४५] ब्राह्मी वा बम्भी भन्ने नाम पहिलोपल्ट आरम्भिक बौद्ध र जैनसाहित्यमा पाइन्छ। अशोकका बाजे सम्राट् चन्द्रगुप्तको समयको यूनानी राजदूत मेगास्थनीजको भनाइलाई उद्धृत गर्दै स्ट्राबोले लेखेका छन् "..(भारतीयहरू) अलिखित कानून मात्र उपयोग गर्छन्...तिनीहरूलाई लिखित अक्षरहरूको ज्ञान छैन र प्रत्येक (मुद्दा) संझनाबाट (संझनाको भरमा) छिन्छन् ...।"[४६] बूलरले 'संझना'बाट यहाँ मेगास्थनीजको तात्पर्य स्मृतिसाहित्यसँग रहेको मानेका छन्।[४७] यस कारण आरम्भिक बौद्ध र जैनसाहित्य शायद अशोककालपछि लिपिबद्ध भएको हुनुपर्छ।[४८] यस स्थितिमा वर्ण र ध्वनिकाबारेमा संस्कृत साहित्यमा गरिएको चिन्तनका दुई कारण हुन सक्छन् : या त त्यो बोलिने भाषालाई लक्ष गरी बनाइएको होला या त्यसको विकास संस्कृतलेखन आम भइसकेपछि भएको होला। पहिलो विकल्पमा धेरैको मत परेको छ।[४९] उच्चारणको शुद्धतामा महत्त्व दिने आर्यहरूले वैदिक ग्रन्थ शुद्ध र मौलिक रूपमा कण्ठस्थ गरियोस् भन्ने उद्देश्यले अक्षर, वर्ण र मात्रामाथि विचार गर्नसक्थे। यदि यो सत्य हो भने लिखित वर्णमालाको विकास हुनुअघि मौखिक वर्णमालाको चलन रहेको हुनुपर्छ।[५०] यथार्थमा ईसापूर्व तेस्रो शताब्दीभन्दा पहिलेको ब्राह्मीको इतिहास अज्ञात छ। भारतमा ब्राह्मीलिपिको इतिहास किन स्पष्ट छैन भन्ने सवाल ओझाले उठाएका छैनन्। ओझाले ब्राह्मी "भारतको प्राचीन इतिहास घोर अन्धकारमा लुकेको" र "त्यसका अनुसन्धान आरंभिक अवस्थामा रहेको" भन्ने कुरा उठाएर ब्राह्मीका सुरुका नमूना भूँइमा दबेकाले नपाइएका भन्ने कुराको सङ्केत दिएका छन्।[५१] यो अनुमानमा आधारित संभावना हो भन्ने कुराको गाँठी खोल्नु जरुरी छैन। ब्राह्मीको उत्पत्तिको वास्तविक समय जानिएको छैन भनी ओझा एक ठाउँमा स्पष्ट लेख्छन्।[५२] यथार्थ यही हो।

(२) **ब्राह्मीको बनावटमा ध्वनिशास्त्र र संस्कृत व्याकरणको नियमको पूर्णतया अनुसरण गरेको नपाइनु** : निस्सन्देह आर्यहरूको लेखनको निर्माण गर्ने लियाकतमा सन्देह गर्न सकिँदैन। संस्कृतव्याकरणका धेरै नियमहरूलाई ब्राह्मीले अङ्गीकार गरेको छ। ब्राह्मीमा संस्कृतका पण्डितहरूको अतुलनीय योगदानका बारेमा सबै सहमत छन्। ब्राह्मीमा आदर्श लिपिमा हुनुपर्ने धेरै गुण छन् भन्ने कुरामा ओझासँग सहमत हुनसकिन्छ।[५३] तर तथ्य के पनि देखिन्छ भने भारतीय पण्डितहरूले बनाइएको भनिएको ब्राह्मीको बनावटमा संस्कृतका ध्वनिशास्त्र र व्याकरणका सिद्धान्तको पूरा पालना भएको छैन। संस्कृतमा ६३ वा ६४ वर्णहरूको चर्चा पाइन्छ,[५४] जबकि ब्राह्मीका आरम्भिक लेखोटमा जम्मा ४५चिह्नहरू छन्। यस तथ्यले ब्राह्मीको निर्माण संस्कृत व्याकरणकारहरूले संस्कृत लेख्न भनी गरेको देखाउँदैन। पाइएको लेखनको कालक्रमको आधारमा भन्नुपर्दा संस्कृत लेख्न आवश्यक पर्ने कतिपय वर्ण र ध्वनिहरू ब्राह्मीमा पछि मात्र थपिए र व्याकरणसंबन्धी नियम यथाशक्य मिलाउने प्रयत्न गरिए भन्ने मान्नुपर्छ। अहमद हसन दानी ब्राह्मीलाई भारतीय व्याकरणकारको विशुद्ध आविष्कार मान्दैनन्।[५५]

(३) **समानान्तर विकल्पको अभाव** : ओझाले ब्राह्मीको व्युत्पत्तिको कुनै आधार सुझाएका छैनन्। ब्राह्मीको निर्माण 'बहुत प्राचीन' समयमा कुनै चित्रलिपिबाट गरिएको थियो या सुरूमै ध्वनिसूचकचिह्न बनाइए भन्ने कुरा निश्चयका साथ भन्न नसकिने कुरा एक ठाउँमा ओझाले स्वीकारेका छन्।[५६]

(४) ब्राह्मीको बनावटमा पुरानोपनको अभाव। ओझाले ब्राह्मीमा आफ्नो लामो भारतीय परम्परा जनाउने प्रौढता पाइन्छ भनेका छन्, तर ब्राह्मीको बनावटको कुन कुरामा उनल सो देखेका हुन् त्यसबारेमा खुलासा गरेका छैनन्। यथार्थमा अशोककालको ब्राह्मी आफ्ना लाम्चा र कोणात्मक वर्णहरूको कारण आदिम र आरम्भिक प्रतीत हुन्छ।[५७] ब्राह्मीको लामो परम्परा रहेको अर्थ्याउन ओझाले बूलरले झैं आरम्भिक ब्राह्मीका स्थानीय प्रकारहरूको उपस्थितिको अनुमान गरेका छन्। यद्यपि यसबारे ओझा बूलरको समान दृढ देखिँदैनन्।[५८] अर्को ठाउँमा उनी लेख्छन् : "ब्राह्मीलिपिको आविष्कार कसरी भयो र हामीले पाएको पाको रूपमा यो कुन परिवर्तन पछि पुग्यो निश्चयपूर्वक भन्न सकिँदैन।"[५९] शायद यही सत्य हो। हालका पुरालेखनविद्हरू अशोककालीन ब्राह्मीमा क्षेत्रीयभेद रहेको मान्दैनन्।[६०]

सिन्धुसभ्यताको पतनसँगै लुप्त भएको सिन्धुलेखनसँग झण्डै पन्ध्र सय वर्षपछि देखिएको ब्राह्मीलिपिको कुनै स्पष्ट संबन्ध देखिंदैन। त्यसैगरी ब्राह्मीलिपि नत सेमिटिक लेखनको प्रचलित पद्धतिसँग मेल खान्छ, न यो संस्कृत ध्वनिसिद्धान्तसँग पूर्णरूपमा अनुसरण गरी बनाइएको देखिन्छ। अन्य शब्दमा

भन्ने हो भने ब्राह्मी सेमिटिकलेखनको प्रत्यक्ष प्रभावमा बनेको लेखन होइन, न यो संस्कृत ध्वनिशास्त्रीहरूले संस्कृत लेख्न भनी गरेको 'आविष्कार' हो।[६१]

यस समस्याको समाधान शायद लेखनको उद्देश्यमा खोज्नुपर्छ। धेरैले ब्राह्मीलिपिको निर्माण संस्कृतसाहित्य लेख्न गरिएको मानेका छन्। यथार्थमा संस्कृतभाषा लेखिएको ब्राह्मीको आरम्भिक नमुना पाइएको छैन। ब्राह्मीका प्रारम्भिक लेखोटहरूमा मागधी प्राकृत भाषा पाइन्छ। यथार्थमा अशोक नै प्रथम व्यक्ति देखापर्छन् जसले ब्राह्मीलाई आफ्नो जनभाषाको धम्मलिपि अर्थात् धर्मसन्देशको संवाहक बनाए। यसरी ईसापूर्व तेस्रो शताब्दीमा पहिलो लेखोटको प्रमाण पाइएको ब्राह्मीको लेखनको उद्देश्यबारे अनुमान गर्न गाहारो छैन।[६२] माथि भनिसकिएको छ, अशोककालीन ब्राह्मीका वर्ण कोणात्मक र लम्बवत् छन् जो आदिम प्रकारका प्रतीत हुन्छन्। तथापि ब्राह्मीको निर्माणमा संस्कृत व्याकरणकारको भूमिकालाई नकार्न सकिँदैन। आखिर दुवै भाषा एकै परिवारका हुन्। पहिलो शताब्दी ई.पछिका अधिकांश लेखोटमा संस्कृत भाषानै पाइन्छ, जसमा जरुरत भएबमोजिम अनेकौं नौला चिह्नहरू थपिएका छन्।

मौर्यसाम्राज्यको सीमाक्षेत्रमा खरोष्ठी, अरेमायक र यूनानीलिपिहरूको उपयोग गर्ने अशोकले खास भारतमा जनभाषा अर्थात् मागधी प्राकृतभाषा लेख्न ब्राह्मीको प्रयोग गरेको हुनु तथ्य हो। कहीँबाट प्रेरणा पाई स्वतन्त्र ढंगले लिपिको निर्माण गरिएको उदाहरण इतिहासमा पाइन्छ।[६३] मौर्य साम्राज्यको पश्चिमी सीमापारी ईरानको अखमनी साम्राज्य र मेसिडोनिया र सीमावर्ती यूनानी राज्यहरूसँग व्यापार र संस्कृतिको सम्बन्ध थियो। पश्चिमएशियाली क्षेत्रहरू बीचमा पर्थे। अशोकका बाजेले यूनानी राजकन्या बिहे गरेका थिए। मौर्यकालीन भारतीयहरूका लागि यी राज्यहरू ज्ञानविज्ञानको प्रेरणाको स्रोतका राम्रा र नजिकका माध्यम हुन सक्थे। भारतीयहरूले त्यहाँबाट लेखनको प्रेरणा पाउने संभावनालाई नकार्न सकिँदैन। स्वयं अशोकको पालाको स्तम्भ र अन्य वास्तुकलालाई कलाविद्हरू ईरानी प्रभाव मान्छन्।[६४] अशोकका अभिलेखका आरम्भिक बेहोरा ईरानका अखमनी सम्राट्हरूका राजकीय अभिलेखको बेहोरासँग मिल्दोजुल्दो छ।[६५] यसको साथसाथ मौर्यकालीन भारतीयहरूका सामुन्ने अगिदेखिनै सोचिएका संस्कृतका मौखिक वर्णमाला र त्यसका ध्वनिशास्त्रीय विशेषताहरूको बलियो आधारशिला छँदैथियो जसलाई ब्राह्मीमा समावेश गर्ने यथाशक्य प्रयास गरिएको पाइन्छ।

आ ई. जे. गेल्बले भिन्न लेखनका अक्षर वा वर्णहरूको बाह्य स्वरूपको सतही तौरमा गरिने तुलनालाई उचित मान्दैनन्। विभिन्न विद्वान्हरूले महत्त्व दिँदै आएको सेमिटिकसँग कुनैपनि लेखनको बाह्य स्वरूपको समानतालाई मात्र संयोग मान्छन्।[६६] तिनले खरोष्ठी र इथियोपियाई लेखनहरूमा पनि व्यन्जनमा स्वर मिलाउने (मात्राका) पद्धति पाइने कुराको उल्लेख गर्दै

यिनलाई एकै समूहमा राखेका छन्। गेल्बको विचारमा इथियोपियाई र संस्कृतलेखन मिश्री वा इजिप्सियन अक्षरहरूको आदर्शमा कुनै सिमिटिक अक्षरसमूहबाट विकसित भएका हुन्। उनले इथियोपियाई स्वरपद्धतिको विकासमा भारतीयलेखनको प्रभाव देखेका छन्।[६७] गेल्बले सेमिटिकसमूहभन्दा बाहिरका लेखनहरूका सम्बन्धमा छवटा सम्भावनाहरूको उल्लेख गर्दै ब्राह्मीलाई बाल्टी, सेल्टिबेरियन, कोरियाली र अन्य लेखनहरूको समूहमा राखेका छन्। उनको विचारमा ती लिपिहरूका नौलो ध्वनिमूल्य कायम गरिएका वर्णहरू स्वतन्त्र रूपमा आविष्कार गरिएका हुन्।[६८] पुरालेखनविद्को यस भनाईमाथि शङ्का गर्नुपर्ने कुनै कारण देखापर्दैन। यस अवस्थामा ईसापूर्व तेस्रो शताब्दीका पण्डितहरूले कसैको प्रेरणा पाई लामो कालदेखि मौखिक रूपमा प्रचलित संस्कृतको वर्णमाला र ध्वनिसिद्धान्तलाई ध्यानमा राखी खास लेखनपद्धतिको विकास गरेहुनन्। ठाकुर प्रसाद वर्मा र एस.आर. गोयल जस्ता पछिल्ला अनुसन्धाताहरू भारतमा लेखनको आरम्भ मौर्यकालमा भएको मान्दछन्। यस मतको विरोधमा अभौतिक प्रकृतिको प्राचीन साहित्यको 'प्रमाण' बाहेक अन्य केही उपलब्ध छैन। अन्य वास्तविक सबूत नपाउञ्जेल यही मत मान्नु उपयुक्त हुनेछ। यस प्रसङ्गमा एस.आर. गोयलले ए. कनिंघमको मतको संझना गरेका छन्[६९] जसअनुसार कुनै वस्तुको चित्र बनाई त्यसलाई बताउने शब्दको पहिलो अक्षरबाट वर्णचिह्न बनाइयो र त्यसैअनुरूप नाम राखियोहोला।[७०] राम्ररी परीक्षण नगरी यस सम्बन्धमा केही भन्नसकिँदैन। तथापि यस अनुमानले स्वतन्त्र रूपमा लेखनको निर्माण गर्न सकिने सम्भावनातिर सङ्केत गरेको छ भन्ने कुरामा कसैको दुई मत नहोला।

## टिप्पणी

१. गौरीशंकर हीराचन्द ओझा, **भारतीय प्राचीन लिपिमाला** (दिल्ली : मुन्शीराम मनोहरलाल,१९५९) पृष्ठ १८मा उद्धृत।
२. उही पृष्ठमा उद्धृत **जर्नल एशियाटिक**, १८८५ मा हलवेको लेख।
३. अफगानिस्तानका दुई भाषामा कुँदिएका अशोकका अभिलेखहरूमा ग्रीक वा यूनानीलिपिको उपयोग गरिएको छ। यसबाट पनि ग्रीकलिपि ब्राह्मीको आदर्श नभएको स्पष्ट छ। Terrain de la Couperie भन्ने लेखकले चीनियाँ चित्रलिपिबाट ब्राह्मीलिपि बनेको मानेका थिए। यो मत अनेक कारणले चलेन।
४. हेर्नुस् माथि अध्याय २।
५. ओझा, **उही** पृष्ठ १९मा उद्धृत।
६. **उही**। डीके, टेलर र ह्वीज डेविड्स्ले ब्राह्मी दक्षिणीसेमिटिक क्युनिफर्मबाट विकसित मानेका थिए।
७. **Indian Antiquary,** Vol. 35. P. 253.
८. ओझा उही पृष्ठ १९मा उद्धृत।

९. ग्रीक वर्णमाला विश्वमा पहिलो वर्णात्मक लेखन मानिन्छ, हेर्नुस् अध्याय २ ।

१०. George Buhler, "On the Origin of The Indian Alphabet and Numerals" **Indian Antiquary,** Vol.11 (1882) ; **Indische Palaeographie** (1896) ; **On the Origin of The Indian Brahma Alphabet.** Strassburg, 1898 reprint. Varanasi, 1963. यीमध्ये १८९६को जर्मन ग्रन्थलाई जे.एफ.फ्लीटले अंग्रेजीमा अनुवाद गरी **इण्डिएन एण्टिक्वेरी**, ३३ मा १९०४मा छापे । यो पछि भिन्न पुस्तकको रूपमा छापिएको छ । यसको **भारतीय पुरालिपिशास्त्र**को नाममा मंगलनाथ सिंहले गरेको हिन्दी अनुवाद (मोतीलाल बनारसीदास, १९६६) उपलब्ध छ ।

११. हेर्नुस् बूलरको **भारतीय पुरालिपिशास्त्र**को पृष्ठ १९-३५ । बूलरले मेशाको अभिलेखको साथसाथ सीरियाका ढकमा कुँदिएका कतिपय अक्षरहरूमाथि पनि विचार गरेका छन् । मेशाको अभिलेखको समय ईसापूर्व ८९० मानिन्छ । यस आधारमा बूलरले ईसापूर्व ८०० तिर भारतीयहरू सेमिटिक लेखनसँग परिचित भइसकेका थिए भन्ने अनुमान गरे ।

१२. जर्ज बूलर, **उही** पृष्ठ २१ ।

१३. **उही**, पृष्ठ २२ ।

१४. **उही**, पृष्ठ १७ । मध्यप्रदेशको एरणमा पाइएका केही सिक्काहरू र आन्ध्रप्रदेशको भट्टिप्रोलुका अभिलेखहरूमा कतिपय वर्णहरूको स्वरूप उल्टो छ र दायाँबाट बायाँ पढिने गरी लेखिएको बुझिन्छ । एरणका सिक्कामा '**एरकन्य**' लेख माथिबाट तल र केहीमा माथिल्लो किनारामा बायाँबाट दायाँ लेखिएको छ, केहीमा '**धमपालस**' लेख तीन किनारामा दायाँबाट बायाँतिर उल्टा वर्णहरूले लेखिएको छ । डेविड डिरिञ्जरले यस्ता उल्टा लेखनदिशा भएका अरू अभिलेखहरूको उल्लेख गरी बूलरको समर्थन गरे । दक्षिण भारत र श्रीलंकाका केही अभिलेखहरूमा पनि यस्ता उल्टा वर्ण र उल्टो लेखनगति पाइन्छन् । हेर्नुस् David Diringer, **The Alphabet.** London, 1949. P. 339. साँचो बनाउँदा गल्तीले सोझा वर्णहरू लेखिएमा तिनको छापा टकमा उल्टो आउँछ । एरणको सिक्कालाई बूलरले अशोककालभन्दा पहिलेका मानेका छन् । तर पछिको अध्ययनले यी क्रमशः ईसवीको पहिलो शताब्दी र ईसापूर्व पहिलो शताब्दीका हुन् भन्ने देखाएको छ ।

१५. **बूलर**, पृष्ठ २४-२७ ।

१६. **उही**, पृष्ठ २७ र अगाडि ।

१७. डिरिञ्जरले ब्राह्मीका **अ ए ख ग ज त थ प य ल श** जस्ता केही वर्णहरूको बनावट र उत्तरी सेमिटिक तथा आरंभिक फिनिशियाई **अलेफ्, अयिन्, कोफ्, गिमेल्, जयिन्, ताव्, थेथ्, पे, योद्, लामेद्** र **शिन्**मा समानता देखाएका छन् । हेर्नुस् डिरिञ्जर, **टिप्पणी** १४, Ahmad Hasan Dani, **Indian Palaeography.** Oxford : The Clarendon Press, 1963, pp. 23ff. दानीले प्रत्यक्षमा बूलरको मतको आलोचना गरेका छन् तथापि उनले ब्राह्मीको सेमिटिकसँग बाह्य स्वरूपको तुलनालाई महत्त्व दिँदै डिरिञ्जरको व्युत्पत्तिमा खास रुचि लिएका छन् ।

१८. जर्ज बूलर **टिप्पणी** ११, पृष्ठ ३४-३५ जहाँ उनी लेख्छन् "यो वर्णमाला ध्वनिशास्त्रको सिद्धान्तबमोजिम बनाइएको छ । डेविड डिरिञ्जर **टिप्पणी** १४,

पृष्ठ २१६, ३३६। डिरिन्जर लेख्छन्: " स्वर र व्यञ्जन ध्वनिहरूको विशुद्ध ...चिह्नहरूद्वारा व्यक्त गर्ने विचार पश्चिम एशियाबाट लिइएको थियो।" "भारतीय वर्णमाला .... भारतीयहरूको स्वतन्त्र आविष्कार होइन, तथापि अरूबाट लिइएको ऋणलाई भारतीयहरूले आश्चर्यजनक मात्रामा विकसित गरे।" दानी **उही** पृष्ठ २९-३० मा उद्धृत।

१९. भारतीय उत्पत्तिको मतबारे तल हेर्नुस्। राजबली पाण्डेय, **भारतीय पुरालिपि** (Indian Palaeography (1952)को हिन्दी अनुवाद। इलाहाबाद, १९७८ पृष्ठ ४४, ४६। पृष्ठ ३७मा पाण्डेय के. एन. दीक्षितलाई (**Prehistoric Civilization of the Indus Valley,** P.46) उद्धृत गर्दै लेख्छन् :"सिन्धुघाटीको लिपिनै सम्भवत: मौलिक थियो जो असुर र पणीहरूद्वारा अन्य देशहरूमा फैलियो।"

२०. **Numismatic Chronicle,** No. 3.1883, गौ.ही. ओभ्का, **टिप्पणी** १, पृष्ठ २९मा उद्धृत।

२१. **Journal of Royal Asiatic Society,** 1881.P. 102 र **Indian Antiquary,** 35, P.253 ओभ्का, **उही** पृष्ठमा उद्धृत।

२२. A.Cunningham, ed. **Coins of Ancient India,** Vol. 1,P.52, र लसन्, ओभ्का **उही**। यस मतलाई वैदिक वा आर्य उत्पत्तिको मत पनि भनिन्छ। टेलरको विचारमा यस्तो तन्काउन सकिने पद्धतिले जेपनि स्थापित गर्न सकिन्छ, अथवा केही पनि सकिँदेन। अर्का लेखक शामाशास्त्रीले तन्त्रशास्त्रका आधारमा देवताहरूलाई सङ्केत गर्ने प्रतीक र चिह्नहरूबाट ब्राह्मीको विकास भएको र पछि देवनागरी भनिएको मानेका छन्। तर तान्त्रिक ग्रन्थहरू निकैपछिका मानिएका छन्। ओभ्का पृष्ठ ३०मा उद्धृत।

२३. एडवार्ड थोमस र टी.एन. सुब्रह्मण्यन्को विचारको उल्लेखको लागि हेर्नुस् : S.P. Gupta, K.S.Ramachandran, ed. **The Origin of Brahmi Script** Delhi :D.K. Publications, 1979. P.xix (Intro.).

२४. **उही**।

२५. **उही**, पृष्ठ xx मा उल्लिखित।

२६. राजबली पाण्डेय, टिप्पणी १९, राजबली पाण्डेयले तालिका बनाई ब्राह्मीलिपिसँग सिन्धुलेखनको सम्बन्ध देखाएका छन्।

२७. S.P.Gupta, K.S.Ramachandran, **टिप्पणी** २३।

२८. ओभ्का **पूर्वोक्त** पृष्ठ १७-३१।

२९. ओभ्का **उही** पृष्ठ २५-२६।

३०. ओभ्का **उही** पृष्ठ २९। अपर्याप्त स्वरचिह्न रहेको, स्वर र व्यञ्जनमा स्पष्ट भेद नरहेको १८/ ध्वनि व्यक्त गर्ने २२ चिह्नहरूको सेमिटिकलेखन विकसित ब्राह्मीलिपिको तुलनामा, ओभ्काको शब्दमा "दरिद्र" थियो।

३१. **उही** पृष्ठ २७-२८। त्यहाँ उनले यसै आशयको विचार गर्ने हुल्श (Hultzch, **Indian Antiquary,** Vol. 26,P.336) र फ्लीट (बूलरको पुस्तकको अंग्रेजी अनुवादको भूमिका, पृष्ठ ३-४)लाई उद्धृत गरेका छन्।

३२. ओभ्का **उही** पृष्ठ २८।

३३. बूलर, **टिप्पणी** ११, पृष्ठ २४।

३४. बूलर, **उही** पृष्ठ ३०, अहमद हसन दानी, **पूर्वोक्त टिप्पणी** १७, पृष्ठ ४६-४७। मात्राचिह्नको बारेमा ओभ्काले केही भनेका छैनन्।

३५. उदाहरणार्थ यूनानी लिपिको विकास व्यापारीहरूको कारण भएको मानिएको छ । हेर्नुस् I.J.Gelb, **A Study of Writing** (Chicago & London : The University of Chicago Press, 1963),P. 178. सिन्धुलिपिको संबन्ध पश्चिमएशियाका सांस्कृतिक केन्द्रहरूसँग रहेको कुरामा धेरैको विश्वास रहेको छ । स्वयं बाहिरबाट आएका मानिएका आर्यहरू ज्ञानविज्ञानको प्रसारको विषयमा त्यति संकीर्ण मनोवृत्तिका देखिँदैनन् ।

३६. हेर्नुस् माथि अध्याय ८ । ओझाले अजमेर जिल्लाको बडली भन्ने ठाउँबाट प्राप्त अभिलेख र लुम्बिनीनजिकैको बस्ती जिल्लाको सिद्धार्थनगरको पिपरहवामा स्तूपभित्रबाट प्राप्त अस्थिपात्र अभिलेख गरी दुइवटालाई अशोकपूर्वका माने, हेर्नुस् ओझा **उही** पृष्ठ २-३ । बूलरले मध्यप्रदेशको एरण र वर्तमान पाकिस्तानको तक्षशिलाका सिक्काहरूका समाना लेखोटलाई अशोकपूर्वका माने, **टिप्पणी** ११, पृष्ठ १७-१८ । बूलरले स्वयं भट्टिप्रोलुका अभिलेखहरूलाई अशोकपूर्वका मानेका छैनन् तर तिनको र एरणको लेखनप्रकारलाई कम्तीमा ईसापूर्व पाँचौं शताब्दीको परम्पराको माने, **उही** पृष्ठ १८ । राजबली पाण्डेयले अशोकपूर्वका मानिएका यी सहित सात अभिलेखहरूको सूची दिएका छन् । हेर्नुस् **टिप्पणी** १९, पृष्ठ १६ र अगाडि ।

३७. जर्ज बूलर उही पृष्ठ १३- १६, ओझा उही पृष्ठ ५२ । ब्राह्मीका क्षेत्रीय भेदको कुरामा ओझा बूलरजस्ता दृढ देखिँदैनन् । तथापि द्रविडलिपिको सम्बन्धमा भने ओझाको विचार बूलरको समान छ । ओझाले पनि भट्टिप्रोलुका अभिलेखहरूको लेखनलाई द्रविडप्रकार माने, जो उनको विचारमा अशोकपूर्वको परम्पराको थियो । यसो गर्न जर्ज बूलरले भट्टिप्रोलुको उल्टो लेखोटलाई मुख्य आधार बनाए भने ओझाले त्यसको साथसाथ "**ललितविस्तर**" नामक बौद्धग्रन्थको सहारा लिए जसमा द्रविडलिपिको उल्लेख छ ।

३८. Ahmad Hasan Dani, ***note***,17 pp.54, 56, 60,51.

३९. ***ibid.*** P.48.

४०. S.P.Gupta & K.S. Ramachandran ***op.cit. note*** 23, P.xvii.

४१. वास्तवमा ओझाले (**पूर्वोक्त** पृष्ठ २२) भने झैं सेमिटिक र ब्राह्मीमा जस्ताकोतस्तै गरी मिल्ने **गिमेल्** र **ग** मात्र हो ।

४२. ओझाले (उही पृष्ठ २६) **इन्साइक्लोपिडिया ब्रिटानिका**लाई उद्धृत गर्दै लेखेकाछन् "यद्यपि बूलरको भनाईमा पाण्डित्य र बठ्याइँ छ, तथापि त्यसले बढी निश्चय दिँदैन भन्ने कुरा मान्नुपर्छ...।"

४३. I.J. Gelb. ***note*** 35, P. 188.

४४. हेर्नुस् माथि अध्याय ८ ।

४५. विनयग्रन्थहरूमा लेखक लेखापित अख्खरिका र लिखितक चोरको साथसाथ जातक र निकाय साहित्यमा लेखनी, लेखसिप्प, पोत्थक र फलकको उल्लेख पाइन्छ । S.P.Gupta & K.S. Ramachanran *op.cit.* note. 23, P.xiv.

४६. **उही**मा एस.आर. गोयलको लेख पृष्ठ ४-५ ।

४७. बूलर **उही** पृष्ठ १३, गोयलको लेख उही पृष्ठ ५ ।

४८. **उही** गोयलको लेख, पृष्ठ २२-२३ ।

४९. बूलर पृष्ठ ३४-३५, डी. डिरिञ्जर **टिप्पणी** १४ पृष्ठ २१६, अहमद हसन दानी टिप्पणी १७ पृष्ठ २४ र गोयल **उही** पृष्ठ १५ ।

५०. Thakur Prasad Verma, **The Palaeography of Brahmi Script in North India (From c.236 B.C. to c. 200 A.D.)** (Varanasi : Siddharth Prakashan, 1971) P.4. वर्माको विचारमा निरुक्तकार यास्कको समयभन्दा अगावै पूर्ण वर्णमाला बनिसकेको थियो । अन्य कतिपय प्राचीन संस्कृत ग्रन्थहरूमा झैं पाणिनीयशिक्षामा "त्रिषष्ठि:चतु:षष्ठिर्वा वर्णा: शम्भुमते मता:" र कौटल्यको अर्थशास्त्रमा "अकाराद्यो वर्णा: त्रिषष्ठि:" वर्णहरूको संख्या बताइएको छ । यहाँ लिखित वर्णमालाको होइन मौखिक वर्णमालाको उल्लेख भएको कुरा मानिएको छ । हेर्नुस् **टिप्पणी** २३ मा गोयलको लेख, पृष्ठ २७-२८ ।

५१. ओझा, पृष्ठ २९-३० ।

५२. उही पृष्ठ ३० ।

५३. जस्तै (क) प्रत्येक उच्चारणको लागि निश्चित सङ्केत छन् र यसमा जस्तो बोलिन्छ त्यस्तै लेखिन्छ । (ख) ब्राह्मीमा स्वर र व्यञ्जन पूरा छन्, स्वरहरूमा ह्रस्व र दीर्घ प्रकार छन् र उच्चारणस्थानअनुसार वैज्ञानिक क्रममा छन् । (ग) व्यञ्जनहरूमा मात्राचिह्नको माध्यमले स्वर व्यक्त गर्ने विशेषता ब्राह्मीबाहेक अन्य कुनैपनि लिपिमा पाइदैन । ओझा **उही** पृष्ठ २९ ।

५४. हेर्नुस् टिप्पणी ५० । ठाकुर प्रसाद वर्मा, पृष्ठ ५ ।

५५. Ahmad Hasan Dani, *ibid.* pp.26, तथापि दानी ब्राह्मीलाई उत्तरी सेमिटिक अक्षरहरूको आधारमा बनेको मान्दछन्, अन्धानुकरण मान्दैनन् । यस लेखकको विचारमा यहाँ 'भारतीय व्याकरणकार'को ठाउँमा 'संस्कृत व्याकरणकार' भनिनु शायद बढी उपयुक्त हुने छ ।

५६. ओझा, पृष्ठ ३० ।

५७. Thakur Prasad Verma, note 50, P.8. यहाँ उनले अशोकब्राह्मीलाई सरल, आदिम र कोणात्मक आकारका भनेका छन् ।

५८. तर ओझाले पनि बूलरले झैं द्रविडलिपिलाई मूल लिपि मानेका छन्, जसबाट, उनको विचारमा पिपरहवा, बडली र अशोकका लेखहरूको लिपि बनेको हो । हेर्नुस् पृष्ठ ४१-४२, ५२ ।

५९. ओझा पृष्ठ २९-३० । भारतमा ब्राह्मीलिपिको इतिहास किन स्पष्ट छैन भन्ने सवाल ओझाले उठाएका छैनन् । "भारतको प्राचीन इतिहास घोर अन्धकारमा लुकेको" र "त्यसका अनुसन्धान आरंभिक अवस्थामा रहेको" भन्ने कुरा उठाएर ब्राह्मीका सुरुका नमूना भूँइमा दबेकाले नपाइएका भन्ने कुराको सङ्केत दिएका छन् ।

६०. Ahmad Hasan Dani, *op.cit.* pp.48; Thakur Prasad Verma, *note* 50, P.9.

६१. ठाकुर प्रसाद वर्मा (**उही** टिप्पणी ५०, पृष्ठ ५) लेख्छन् : To the question why a fully developed *varnamala* of 64 or 63 letters was partially adapted to a script having 45 signs only our answer is that perhaps the newly created script was mainly for the purpose of writing the Prakrit languages having many less sounds than the Sanskrit.

६२. S.P.Gupta & K.S. Ramachandran ***op.cit. note*** 23, S.R.Goyal's paper, pp. 5,45; T.P. Verma, *note* 50, P.8.

६३. सातौं शताब्दीको तिब्बती राजाले यसै गरी लिपिको जरुरत महशूश गरी तिब्बती भाषा लेख्न लिपिको विकास गरेको कुरा एस. आर. गोयलले (टिप्पणी २३, पृष्ठ १८-१९) संभ्रेका छन् ।

६४. Percy Brown, **Indian Architecture (Buddhist and Hindu Periods)** (Bombay : D.B. Taraporevala Sons & Co.Private Ltd., 1965) P.8.

६५. S.P.Gupta & K.S. Ramachandran ***op.cit. note*** 23, S.R.Goyal's paper, pp. 17-18.

६६. I.J Gelb note 35, pp.144,

६७. उही पृष्ठ १८६-८८ । पृष्ठ २०१ मा उनले लेखेका छन् : "...both the Ethiopic and Sanskrit writings are further developments from a Semitic syllabary, which, in turn, is a creation following the model of the Egyptian syllabary."

६८. उही पृष्ठ १४३-४४ ।

६९. S.P.Gupta & K.S.Ramachandran ***op.cit. note*** 23, S.R.Goyal's Paper, P. 17.

७०. A.Cunningham, ed. **Corpus Inscriptionum Indicarum** Vol. I, pp.53 ff. उदाहरणार्थ, कर्तरि वा कृपाण अर्थात् तरबारको चित्रलाई **क** मानियो, गगन (आकाश) लाई ग, चमस् (चम्चा) लाई **च**, त्रि अर्थात् तीनलाई **त**, धनुलाइ **ध**, नासिका (नाक) लाई **न**, पाणि (हात) लाई **प**, मत्स्य (माछा) लाई **म**, रज्जु (डोरी)-लाई र, वेत्र (बेत)लाई **ब**, सर्पलाई **स** तथा लाङ्गल र हल (हलो) लाई क्रमशः **ल** र **ह** बनाइयो ।



# अध्याय एघार
# ब्राह्मी लिपिका विशेषताहरू

माथिका विभिन्न प्रसङ्गहरूबाट ब्राह्मीलिपिका कतिपय विशेषताहरूबारे हामी परिचित भइसकेका छौं। ब्राह्मी वर्णमालामा पर्याप्त स्वर र व्यञ्जनवर्णहरू छन्। यसमा ह्रस्व, दीर्घ (आ ई ऊ), गुणस्वर (एओ) र वृद्धिस्वर (ऐऔ)को स्पष्ट उच्चारण गर्ने व्यवस्था छ, मात्राचिह्नहरूको माध्यमले स्वरको साथ व्यञ्जनको र संयुक्त व्यञ्जनहरूको उच्चारणको व्यवस्था छ। व्यञ्जनमा स्वर जोड्ने मात्रापद्धति र व्यञ्जनमा व्यञ्जन जोड्ने संयुक्ताक्षरपद्धति ब्राह्मीलिपिका खास विशेषता हुन् जो ब्राह्मीबाट विकसित सबै लिपिमा पाइन्छन्। यी विशेषताहरूको कारण ब्राह्मीलिपि संस्कृत र त्यसबाट विकसित भाषालेखनका लागि आदर्श लिपि भएको छ।[१] कतिपय गैरसंस्कृत मूलका भाषा लेख्न पनि ब्राह्मीबाट विकसित लिपिहरूको उपयोग भएको छ।[२]

## अक्षरात्मक वा वर्णमालात्मक ?

ब्राह्मी अक्षरात्मक वा सिलेबिक लेखन हो वा वर्णमालात्मक अर्थात् अल्फाबेटिकल हो भन्ने बारेमा विद्वान्हरूमा मतभेद छ। अक्षरात्मकलेखनमा सामान्यतया कुनै एउटा चिह्न भाषाको एक वा बढी अक्षरको लागि निर्धारित गरिएको हुन्छ। शब्दचिह्नहरूको साथसाथ अक्षरचिह्नहरूको उपयोग गरिने पहिलो चरणको तुलनामा कम संख्याका अक्षरचिह्नहरूको मात्र उपयोग गरिने यो पद्धति निकै छरितो र सजिलो त छ तर यसमा स्वरको व्यवस्था कमजोर हुन्छ। भाषाको समान ध्वनिको लागि निर्धारित वर्ण भएका कारण ब्राह्मीको तुलना 'स्वरको फरकलाई व्यक्त गर्न नसक्ने' पुरानो सेमिटिक लेखनसँग कदापि गर्न मिल्दैन। ब्राह्मी अक्षरात्मक चरणभन्दा विकसित छ। अन्यत्र अक्षरात्मक चरणपछि लेखनको वर्णमालात्मक चरणमा विकास भएको छ। भाषाको एक वा बढी समान ध्वनिको लागि कुनै चिह्न निर्धारित गरिएको लेखन वर्णात्मक, वार्णिक वा वर्णमालात्मक भनिन्छ, जसमा पर्याप्त स्वरहरू हुन्छन् र निर्धारित वर्णहरूको समूह वा वर्णमाला हुन्छ। ब्राह्मीमा पर्याप्त स्वरहरू छन्; स्वर र व्यञ्जनमा स्पष्ट भेद छ; स्वरको सहायताले सही रूपमा लेख्नपढ्न सकिन्छ र निर्धारित वर्णहरूको समूह वा वर्णमाला छ। यस अर्थमा ब्राह्मीमा वर्णात्मक लेखनका कतिपय विशेषताहरू पाइन्छन्।[३] तथापि दुवै पद्धतिको लेखनका माथिको परिभाषा ब्राह्मीलिपिमा पुरा लागु हुँदैन। अंग्रेजीको **सी**को उच्चारण **क** र **स** दुवै हुनसक्छ, ब्राहमीमा यस्तो हुँदैन। यस्तो वर्णमालात्मक लेखनको लक्षण ग्रीक र रोमनसँग त मिल्छ तर ब्राह्मीसँग मिल्दैन। ब्राह्मीमा एक चिह्न एउटै ध्वनिको लागि निर्धारित छ। अर्को व्यञ्जनचिह्न नजोडिएसम्म ब्राह्मीमा प्रत्येक चिह्नको स्वयंको उच्चारण हुन्छ। व्यञ्जनमा मात्रा जोडी भिन्नाभिन्नै स्वरको उच्चारण गरिने हुँदा पनि केही लेखकले ब्राह्मीलाई अक्षरात्मक वा अर्धवर्णात्मक

भनेका छन्।[४] व्यञ्जनमा केही फेरफार गरी स्वरको फरकलाई व्यक्त गर्ने ब्राह्मी र खरोष्ठीको मात्रापद्धतिको विशेषताले यसबारे ठुलो भूमिका खेलेको छ। स्वरको भेदलाई स्पष्ट गर्न हिब्रू र अरबी जस्ता पछिल्ला सेमिटिक लिपिहरूका व्यञ्जनमा बेग्लै ध्वनिनिर्देशकचिह्न (डियाक्रिटिक चिह्न) जोडिन्छ। ब्राह्मी र खरोष्ठीको मात्रापद्धतिसँग मिल्दोजुल्दो व्यवस्था भएको एउटै लिपि इथोपियाई हो। यूथोपियाई लिपिलाई भारतको पुरानो लिपिको आधारमा ३५० ई. तिर विकसित लिपि मानिन्छ।[५] आई. जे.गेल्बले वर्णमालात्मक लेखनपद्धतिहरूको प्रसङ्गमा ब्राह्मी र इथोपियाई लिपिको चर्चा गरेका छन् तर यिनलाई वर्णमालात्मक, अक्षरात्मक वा के भन्नु उचित होला भन्ने समस्या भविष्यमा समाधान हुने आशा गरेका छन्।[६] यस स्थितिमा ब्राह्मीलिपिलाई जे भने पनि हुन्छ तर यसबारे विचार गर्दा ब्राह्मीका ती विशेषताहरूलाई मनमा राख्नुपर्छ जो अन्यत्रका अक्षरात्मक वा वर्णात्मक लेखनमा पाइँदैनन्। ध्वनि, उच्चारण, अक्षर, वर्ण र वर्णमाला सबै संस्कृतका शब्द हुन् जो यहाँ ब्राह्मीलिपिका प्रसङ्गमा प्रयोग भएका छन्।

## १. ब्राह्मीलेखनपद्धतिमा संस्कृत ध्वनिसमूह

ब्राह्मीलेखनपद्धतिले संस्कृत व्याकरणका ध्वनिसम्बन्धी अधिकांश नियमहरूको अनुसरण गरेको छ। संस्कृत ध्वनिसमूहलाई संक्षेपमा यस प्रकार रेखाङ्कित गर्न सकिन्छ :

संस्कृतसाहित्यका निरुक्त र व्याकरणका ग्रन्थहरूमा वर्ण र ध्वनिका बारेमा सूक्ष्मरूपमा अध्ययन भएको छ। ओझाले ऋग्वेदमा ६४ र यजुर्वेदमा ६३ ध्वनिहरू रहेको चर्चा गरेका छन्।[७] भाषावैज्ञानिकहरू वैदिक ध्वनिसमूहमा १३ स्वर र ३९ व्यञ्जनहरू गरी जम्मा ५२ ध्वनिहरूको गणना गर्छन् :

**स्वर** : नौवटा समानाक्षर: **अ आ इ ई उ ऊ ऋ ॠ ऌ** र चारवटा सन्ध्यक्षर (सन्धिका स्वर): **ए ओ ऐ औ** गरी जम्मा १३ स्वरवर्णहरू।

**व्यञ्जन** : **क**देखि **ह**सम्मका ३३ तथा जिभ्रो मोडेर **ड** र **ढ** बोल्दा **ढ** र **ढह्** उच्चारण हुने ध्वनिहरू गरी ३५ व्यञ्जनहरू। **क्ष त्र ज्ञ** स्वतन्त्र व्यञ्जन नभई संयुक्तव्यञ्जन हुन्: **क्ष् = क्ष, त्र् = त्र** र **ज्ञ् = ज्ञ**। एक अनुस्वार र तीन किसिमका विसर्ग समेत जोड्दा जम्मा व्यञ्जन ३९ हुनआउँछन्।

**अनुस्वार** : **अं**को उच्चारण हुने अनुनासिक ध्वनि।

**विसर्ग** : प्राणध्वनि मानिने ह्को उच्चारण हुने ध्वनि जो समान्य, जिह्वामूलीय र उपध्मानीय गरी तीन किसिमका छन् : **क** र **ख**को पहिले जिभ्रोको मूल(जरो) बाट उच्चारण हुने विसर्ग जिह्वामूलीय, तथा **प** र **फ**को पहिले उच्चारण गरिने विसर्ग उपध्मानीय भनिन्छ। यी बाहेक व्यञ्जनहरूलाई अनेक भागहरूमा विभाजित गरिएका छन् :

**वर्ग** : **क**देखि **म**सम्मका २५ वर्णहरू **कवर्ग**, **चवर्ग**, **टवर्ग**, **तवर्ग**, **पवर्ग** गरी जम्मा पांच वर्गमा बाँडिएका छन्।

**अन्तःस्थ** : स्वर र व्यञ्जनका बीचका वर्णहरू : **य र ल व**।

**ऊष्म वा संघर्षी** : **श ष स ह** । हलाई **प्राणध्वनि** पनि भनिन्छ ।

**उच्चारणस्थान** : संस्कृतव्याकरणबमोजिम कुनैपनि वर्णको उच्चारण गर्दा घाँटी, तालु, मूर्धा, दाँत र ओठको उपयोग गरिन्छ । यस आधारमा विभिन्न वर्णहरूको उच्चारणस्थान यसरी देखाइएको छ :

**कण्ठ्य** अर्थात् घाँटीबाट उच्चारण हुने वर्ण : **अ क ख ग घ ङ ह**, विसर्ग र जिह्वामूलीयविसर्ग ।

**तालव्य** : तालु अर्थात् माथिल्ला दाँतको जरोभन्दा माथिको भागमा जिभ्रोको टुप्पोले छुँदा उच्चारण हुने वर्णहरू : **इ च छ ज झ ञ य श** ।

**मूर्धन्य** अर्थात् मुखभित्रको माथिल्लो बीचको भागमा जिभ्रोको टुप्पोले छुँदा बोलिने वर्णहरू : **ऋ ट ठ ड ढ ण ष** ।

**दन्त्य** : जिभ्रोको टुप्पोले माथिल्लो दाँतको जरोमा छुँदा उच्चारण हुने वर्णहरू: **लृ त थ द ध न ल स** ।

**ओष्ठ्य** : ओठहरूको संयोगले उच्चारण हुने वर्णहरू : **उ प फ ब भ म व** र उपध्मानीयविसर्ग **:प**, **:म** इत्यादि ।

**प्राण** : उच्चारण गर्दा फोक्सोबाट आउने श्वासको कमी र बेसी तथा नाकतिरबाट श्वास जाँदा हुने उच्चारणका आधारमा व्यञ्जनहरू तीन समूहमा विभाजित गरिएका छन् :

**अल्पप्राण** : उच्चारण गर्दा फोक्सोबाट कम मात्रामा श्वास आउने प्रत्येक वर्गको पहिलो, तेस्रो र पाँचौं व्यञ्जनहरू : **क ग ङ, च ज ञ, ट ड ण, त द न, प ब म** र अन्तःस्थवर्णहरू: **य र ल व** ।

**महाप्राण** : उच्चारण गर्दा फोक्सोबाट बढी मात्रामा श्वास आउने सबै वर्गहरूका दोस्रा र चौथा व्यञ्जनहरू अर्थात् **ख घ, छ झ, ठ ढ, थ ध, फ ध भ** तथा **स ह** ।

**अनुनासिक** : प्रत्येक वर्गको पाँचौं व्यञ्जन : **ङ ञ ण न म** जसको उच्चारण गर्दा कोमल तालु तल झुकी मुखविवर बन्द भएको कारणले नाकतिरबाट श्वास जाने भएकोले अनुनासिक (नाकको पछि लाग्ने)भनिन्छ ।

## २. ब्राह्मीलेखनपद्धतिका मुख्य विशेषताहरू

लेखनपद्धति र लेखनका आन्तरिक र बाह्य विशेषताहरू गरी तीन मुख्य आधारमा ब्राह्मीलिपिका विशेषताहरूलाई रेखाङ्कित गर्न सकिन्छ, जस्तै :

(१) **पर्याप्त उच्चारणचिह्न** : अशोककालीन ब्राह्मीमा ४५ र विकसित ब्राह्मीमा ६४ वा ६३ उच्चारणचिह्न छन् । तिनमा कसैको सहयोगविना उच्चारण गरिने स्वरहरूको पुरा समूह छ, स्वरको साथमा मात्र बोल्नसकिने ३३ वा ३४ व्यञ्जनहरू छन्,[८] व्यञ्जनको उच्चारणमा सहयोग गर्ने मात्रा छन् र अनेक व्यञ्जनहरूको एकसाथ उच्चारणको व्यवस्था छ ।

(२) **व्यञ्जनको उच्चारण** : संस्कृतव्याकरणबमोजिम व्यञ्जनमा स्वर हुँदैन । स्वरको उच्चारण गर्ने उपकरण भएकोले यसलाई व्यञ्जन

भनिएको हो। उच्चारण गर्न सजिलो होस् भनी सामान्य अवस्थामा व्यञ्जनको अन्तमा **अ** स्वर भएको मानिन्छ, त्यसैकारण हामी **क**लाई **क** भन्छौं। सो नभएमा व्यञ्जन स्वररहित वा हलन्त हुन्छ अर्थात् **क्** पढ्नुपर्ने हुन्छ। यो ब्राह्मीलेखनपद्धतिको विशेषता बनेको छ।

(३) **मात्रापद्धति** : व्यञ्जनमा स्वरको मेललाई मात्रापद्धति भनिएको हो। यस्तो चलन इथोपियाई लिपिमा पनि पाइन्छ।[९] मात्रापद्धति ब्राह्मीको मुख्य विशेषता बनेको छ। मात्रा जोडिएमा व्यञ्जन **अ** रहेको मानिँदैन र मात्राचिह्नले संकेत गरेको स्वरसहित व्यञ्जनको उच्चारण गरिन्छ। मात्राहरू अनेक छन्। बढी प्रचलित संख्या १२ भएकाले (अ) आ इ ई उ ऊ ए ऐ ओ औ अनुस्वार (अं) र विसर्ग (अः) समेत गरी **बाह्र अक्षर, बाह्रखरी** वा **द्वादशाक्षरी** भनिन्छ।

(४) **संयुक्ताक्षरपद्धति** : संयुक्ताक्षर भनेको व्यञ्जनमा व्यञ्जनको मेल हो। यसमा दुई वा अधिक व्यञ्जन जोडेर लेख्ने र बोल्ने गरिन्छ। उच्चारण गर्दा पहिलो व्यञ्जन स्वररहित (हलन्त) बोलिन्छ भने पछिल्लो अर्थात् आखिरी व्यञ्जन मात्रा नलागेको स्थितिमा **अ** स्वरमा अन्त हुने किसिमले र मात्रा लागेको अवस्थामा त्यसैबमोजिम उच्चारण गरिन्छ।

## ३. ब्राह्मीलिपिका देनहरू

संस्कृतका यी नियमहरू ब्राह्मीलेखनपद्धतिका विशेषता भएका छन्। ब्राह्मीबाट विकसित भएका देवनागरीसहित सबै लेखनहरूमा ब्राह्मीलिपिका यी देनहरू पाइन्छन्। चौबिस सय वर्षदेखि प्रचलनमा आइरहेको ब्राह्मी वर्णमालाको बाह्य स्वरूपमा खासै परिवर्तन आएको छ। बाहिरबाट हेर्दा आजका देवनागरीको साथसाथ भारतका अनेकौं प्रान्तीय लिपिहरू भिन्नाभिन्नै आकारप्रकारका लाग्दछन्। समय बित्दै जाँदा विभिन्न ठाउँमा ब्राह्मीको मुहार फेरिएको छ। तर लेखनपद्धतिमा कुनै अन्तर आएको छैन। बाह्यस्वरूप कहिल्यै एकनासको नरहेतापनि गहीरिएर हेरेमा कतिपय वर्णहरूको आन्तरिक बनावटमा खासै फरक आएको देखिँदैन। देवनागरीका कतिपय वर्णहरूमा ब्राह्मीको मूल स्वरूप खोज्नसकिन्छ, जस्तै **क**मा धनचिह्न, खमा **रव** जस्ता चिह्न, दुइधर्के **ग** आदि।

## ४. आरम्भिक ब्राह्मी वर्णहरूका बाह्य स्वरूपका विशेषताहरू

विभिन्न ठाउँमा विकसित लेखनशैलीहरूका प्रसङ्गमा तिनका कतिपय विशेषताहरूको चर्चा यथास्थानमा भएको छ। यहाँ आरम्भिक अर्थात् अशोककालीन ब्राह्मीवर्णमालाका कतिपय बाह्य स्वरूपका विशेषताहरूतिर हेरिँदै छ। ब्राह्मीलिपिलाई सेमिटिकलेखनबाट व्युत्पन्न भएको मान्ने जर्ज बूलर [१०] र भारतीय उत्पत्तिको मान्ने गौरीशंकर हीराचन्द ओझाले[११] आरम्भिक ब्राह्मीवर्णहरूका निम्नलिखित विशेषताहरू रेखाङ्कित गरेका छन् :

क. ब्राह्मी बायाँबाट दायाँ गतिमा लेख्नेपढ्ने गरिन्छ ।

ख. ब्राह्मीमा भारतीयहरूका रुचि, प्रवृत्ति र आवश्यकता देखिन्छ ।

ग. ब्राह्मीमा स्वर र व्यञ्जन पुरा छन् र प्रत्येक उच्चारणको लागि अन्य सङ्केत छन् । यसमा जस्तो बोलिन्छ त्यस्तै लेखिन्छ । उच्चारण गरिने ध्वनिकै आधारमा वर्णहरूको नामकरण गरिएको छ ।

घ. उच्चारणस्थानअनुसार व्यञ्जनहरू वैज्ञानिक क्रममा छन् ।

ङ. संस्कृतव्याकरण र ध्वनिसिद्धान्तको यथाशक्य अनुसरण गरिएको छ ।

च. पूरा भारतीय उपमहादेश र बाहिरसम्म ब्राह्मीको प्रभावक्षेत्र कायम रहेको छ ।

छ. अधिकांश वर्णहरू एकै ठाडो (ऊर्ध्व)रेखामा आधारित हुन्छन् । तिनको तल्लो टुप्पामा, कहिलेकाहीं बीचमा दायाँतिर रेखा, वृत्त, अर्धवृत्त, वा अंकुश जस्ता चिह्न जोडिएका हुन्छन् । तर माथिल्लो भाग प्राय: छरितो हुन्छ ।

ज. ब्राह्मी वर्णको माथिल्लो भागमा प्राय: एउटै ऊर्ध्वरेखा र कुनैकुनैमा छोटो तेर्सो रेखा हुन्छ; तर तलतिर खुल्ने कोण कमै हुन्छ । माथितिर उठ्ने दुइ भुजा भएका वर्ण **म** र **झ** गरी दुइवटा मात्र हुन् ।

झ. **ट ठ थ ब** जस्ता केही व्यञ्जनहरूलाई छोडेर सबै वर्णहरू संभव भएसम्म सीधा र बराबर अग्ल्याइमा राखिएका हुन्छन् ।

ञ. **ट ठ थ ब** आकारमा साना छन् । तीबाहेक सबै वर्णहरू लाम्चा, कोणात्मक र साधारण किसिमका छन् जो प्रारम्भिक प्रतीत हुन्छन् ।

ट. प्रारम्भिक ब्राह्मीको शीर्षभाग खालि हुन्छ । तेस्रो शताब्दी ई.मा त्यसको आधार वा डीकोको विकास भएको छ र ठाउँठाउँमा वेलावेलामा अनेक प्रकारका डीकाहरूको प्रयोग भएको छ ।

## टिप्पणी

१. देवनागरी, बंगाली, गुजराती आदि वर्तमान भारतीय प्रान्तीय लिपिहरू ब्राह्मीबाट विकसित भएका हुन् । यिनमा यस पद्धतिका प्राय: सबै विशेषताहरू पाइन्छन् ।

२. दक्षिण भारतका तमिल, तेलगु, कन्नड र मलयालम जस्ता गैर संस्कृतमूलका द्रविड भाषाहरू लेख्न विकसित गरिएका लिपिहरूको मूल ब्राह्मी नै हो ।

३. हेर्नुस् I.J. Gelb, **A study of writing** (Chicago & London : The University of Chicago Press, 1965) pp.187-188.

४. David Diringer, **The Alphabet** (London, 1947) P. 329.

५. हेर्नुस् I.J. Gelb, note 3, P. 188.

६. उही, पृष्ठ १८८ ।

७. गौरीशंकर हीराचन्द ओझा, **भारतीय प्राचीन लिपिमाला** (दिल्ली, १९५९), पृष्ठ ४६ । पाणिनीयशिक्षामा वर्णहरूको संख्या ६३ वा ६४ बताइएको छ : **त्रिषष्ठिः चतुःषष्ठिर्वा वर्णाःशम्भुमते मताः** । कौटल्यको अर्थशास्त्रमा वर्णहरूको संख्या ६३ भनिएको छ : **अकाराद्यो वर्णाः त्रिषष्ठिः** ।

८. **क**देखि **म**सम्मका २५, **य**देखि **ह**सम्म ८ गरी ३३ व्यञ्जन हुन्छन् । खासगरी द्रविड भाषामा उपयोग हुने लड ध्वनिको व्यञ्जन समेत गरी यो संख्या ३४ हुनजान्छ ।

९. आ ई. जे.गेल्ब, **पूर्वोक्त टिप्पणी** ४, पृष्ठ १८८ ।

१०. जर्ज बूलर, **भारतीय पुरालिपिशास्त्र** (हिन्दी) (दिल्ली मोतीलाल बनारसीदास, १९६६) पृष्ठ २१-२२ ।

११. ओझा पूर्वोक्त **टिप्पणी** ७, पृष्ठ २९ ।



# अध्याय बाह्र

# ब्राह्मीलिपिको विकास

**(ईसापूर्व दोस्रो शताब्दीदेखि ईसवीको चौथो शताब्दीसम्म)**

अशोकको मृत्युपछि स्वतन्त्र भएका अनेक राज्यहरूमा लेखनको प्रचार-प्रसार बढ्दैगयो। विभिन्न राज्यहरूमा व्यक्तिगत दानपत्रको साथसाथ राजकीय दानपत्र, प्राशासनिक लेख, प्रशस्तिका साथसाथ ससाना परिचयात्मक लेखहरू कुँदाइए। विभिन्न राज्यका सिक्काहरूमा समेत ब्राह्मीले आफ्नु ठाउँ बनायो।[१] अब लेखोटको प्रकृति र उद्देश्य एउटै रहेन। अभिव्यक्तिको माध्यममा पनि फरक आयो, संस्कृतमा अभिलेख लेखिनथाले। भिन्नभिन्न भाषिक र सांस्कृतिक पृष्ठभूमि भएका व्यक्तिहरूले आफ्नै पाराले लेखन अपनाउँदा ब्राह्मीले विभिन्न क्षेत्रहरूमा भिन्नभिन्न स्वरूप पाउँदैगयो। ब्राह्मीको विकासमा नयाँ आयाम थपियो। क्षेत्रीय लेखनको विकासको मार्ग प्रशस्त भयो।

सुरुका पुरालेखनविद्हरूले अशोकको लेखनलाई अनेक प्रकारमा विभाजित गरे तथा शुंग, सातवाहन, शक क्षत्रप, कुषाण र गुप्त जस्ता राजवंशका नाममा पछिल्ला क्षेत्रीय लेखनशैलीहरूको नामकरण गरे। अशोकब्राह्मीको कुनै क्षेत्रीय भेद थिएन भन्ने कुरा माथि गरिसकिएको छ। वर्णहरूको बाह्य समानताको आधारमा गरिने तुलनाले पनि धेरै भ्रमको सिर्जना भएको छ।[२] यसै गरी एकै राजवंशका कालमा विभिन्न क्षेत्रहरूमा प्रचलित लेखनशैलीहरूको अध्ययन गर्न नसकिने भएकोले यस्तो वर्गीकरण वैज्ञानिक थिएन। लिपिको अध्ययन गर्दा स्थान र कालको महत्त्व बुझ्नु बढी आवश्यक संझिएको छ। ४५० ई.सम्म ब्राह्मीको विकासको गति र प्रकृतिको परिचय पाउने उद्देश्यले क्षेत्रीय विकासका विशेषताहरूको छोटकरीमा चर्चा गरिँदै छ। यस अध्ययनले लिच्छविलिपिको स्रोत पैल्याउन मात्र होइन लिच्छविलिपिको प्रवृत्ति र विकासको गतिको साथसाथै विभिन्न चरणहरूमा विकसित विशेषताहरू खुट्याउन समेत मदत गर्ने छ। यहाँ राजनीतिक इतिहासको छोटो पृष्ठभूमिबाट विषयप्रवेश गरिँदै छ।

अशोकको मृत्युपछि कमजोर हुँदैगएको मौर्यसाम्राज्यको अन्त ईसापूर्व १८५मा शुंगहरूको हातबाट भयो। शुंगहरूलाई कण्वहरूले मध्यप्रदेशको विदिशामा भाग्न बाध्य गरे। अन्तमा शुंगहरू ईसापूर्व पहिलो शताब्दीमा दक्षिणका आन्ध्रवंशका सातवाहन राजाहरूबाट पराजित भए। पूर्वी भारतको कलिङ्ग (उडीसा) मा पहिलो शताब्दीका खारबेल चेटी वा चेदीवंशका प्रतापी राजा भए, जसको पुरीनजिकै उदयगिरिको हाथीगुम्फाको अभिलेख प्रसिद्ध छ।[३] औरङ्गावाद जिल्लामा (पश्चिमी दक्कनमा) आन्ध्र जातिका सातवाहन राजवंशले स्वतन्त्र राज्य स्थापना गऱ्यो र शुंगहरूसँग संघर्ष गर्दै महाराष्ट्र, मालवा (मध्यप्रदेश)सम्म राज्यविस्तार गऱ्यो। सातवाहन राजाहरूले पटकपटक पश्चिमी शकक्षत्रपहरूसँग संघर्ष गरेर १९९ ई.सम्म आफ्नु राज्य कायम राखे।[४]

पहिले सिकन्दर (अलेक्जेण्डर)ले जितेको पाकिस्तानसहित भारतको उत्तर-पश्चिमी भूभाग ईसापूर्व २००सम्म ब्याक्ट्रिया र पार्थिया गरी दुइ राज्यहरूमा विभाजित भइसकेको थियो, जो विदेशी आक्रामकहरूको भारत पस्ने नाका थिए। यतैबाट यूनानी, पह्लव (पार्थियन), शक (सिथियन), कुषाण र हूणहरू भारत पसे। घूमन्तू जातिका शक र कुषाणहरू पश्चिमी चीनबाट मध्य एशियामा अनेकौं जातिहरूसँग संघर्ष गर्दै बस्ने ठाउँको खोजीमा यहाँ आइपुगेका थिए। निकैसम्म ब्याक्ट्रियामा बसेपछि शकहरू भिन्नाभिन्नै बाटाहरूबाट पटकपटक गरी भारत पसे। सिन्धुनदी पारीका राज्यहरूबाट भूभाग खोसेर ईसापूर्व पहिलो शताब्दीमा तिनले पञ्जाब, गान्धार र कपिशामा राज्य खडा गरे। मायस र एजेस प्रथम प्रतापी शक राजा भए। पहिलो शताब्दीको मथुराको शकक्षत्रप राज्य महत्त्वको थियो। शकजातिका क्षहरातवंशका भूमकले सातवाहनहरूबाट खोसेर मालवामा पश्चिमीशकक्षत्रप राज्यको जग हाले। भूमकका उत्तराधिकारी नहपानले गुजरात, काठियाबाड र महाराष्ट्र जिते। नहपानको मृत्युभएपछि अर्कै परिवारका चष्टन र पछि उनका नाती रुद्रदामा महाक्षत्रप भए। जूनागढमा अशोकको अभिलेख भएको चट्टानमा कुँदिएको रुद्रदामाको अभिलेख प्रसिद्ध छ।[५] चौथो शताब्दीमा गुप्तसम्राट् चन्द्रगुप्त द्वितीय विक्रमादित्यले पराजित नगरूञ्जेल पश्चिमी क्षत्रप राज्य कायम रह्यो।

चीनबाट शकहरूको पछिपछि भगाइएका यूह्ची नामका घूमन्ते आदिवासीको एक शाखा कुइशाउङ्ग (कुषाण) निकैसम्म ओक्सस नदीको किनारमा शकहरूको अधीनमा बसे। पहिलो शताब्दीको पूर्वार्धमा कडफिसेस (प्रथम) को नेतृत्वमा कुषाणहरूले सिन्धुनदीको पश्चिममा ब्याक्ट्रिया राज्यमा पर्ने काबुलघाटी र अराकोसियामा राज्य स्थापित गरे। पहिलो शताब्दीको उत्तरार्धमा हाल पाकिस्तानको पेशावरलाई राजधानी तुल्याई कनिष्क कुषाण राजा भए जसको साम्राज्य पञ्जाबदेखि पटनासम्म, दक्षिणमा सिन्ध र मालवासम्म र पार्थियन राज्यका प्रदेश, खोटान, यारकन्द र कासगरसम्म फैलिएको थियो। बौद्धधर्मको विकासमा कनिष्कको ठूलो योगदान रह्यो।[६] पश्चिममा ईरानीहरूसँगको संघर्ष र पूर्वमा बढ्दै रहेको गुप्तहरूको शक्तिका कारण चौथौ शताब्दी ई.मा कुषाणसाम्राज्यको अन्त भयो। हिन्दु र बौद्ध संस्कृतिको उत्थानको साथसाथै ब्राह्मीलिपिको विकासमा शक र कुषाणहरूको भूमिका महत्त्वपूर्ण रहेको छ।[७]

सुदूर दक्षिणमा तेस्रो शताब्दी ई.सम्म चेर, चोल र पाण्डय नामक राजवंशहरूले तमिड राज्यहरूको स्थापना गरिसकेका थिए। यहाँ रोमको पहिलो साम्राज्यकालमा ठूलो व्यापार हुनेगर्थ्यो। उत्तर भारतमा विकसित हिन्दु र बौद्धसंस्कृति लगायत ब्राह्मीलिपिलाई अपनाएर तमिड राज्यहरूले सुदूर पूर्व एशियासम्म सांस्कृतिक प्रभाव फैलाउने काम गरे।

राजा चन्द्रगुप्तले वैशालीगणतन्त्रका लिच्छविहरूको मदतले पटनामा स्थापना गरेको गुप्तराज्यलाई उनका छोरा समुद्रगुप्त (मृत्युवर्ष ३७५) ले ठूलो भूभाग जितेर साम्राज्यको दर्जा दिलाए। उनको इलाहाबादस्तम्भको प्रशस्तिमा कोसेली पठाई खुशी पार्ने सीमावर्ती राज्यहरूमध्ये नेपालको उल्लेख पाइन्छ।[८]

समुद्रगुप्तका छोरा चन्द्रगुप्त (द्वितीय) (३८०-४१४) ले पश्चिमी शकक्षत्रपराज्य सखाप पारी शकारि र विक्रमादित्य भन्ने उपाधि लिए। यिनैलाई विक्रमसंवत्का प्रवर्तक मानिन्छ। कुमारगुप्त (४१४-४५५ ई.) र स्कन्दगुप्त (४५५-४६७) अन्तिम गुप्तसम्राट् भए। आक्रामक हूणजातिसँग संघर्ष गर्ने स्कन्दगुप्तको मृत्युपछि गुप्तसाम्राज्यको विघटन सुरु भयो। यता नेपालमा ४६४मा आफ्नो जीतबाजीको बयान गर्ने मानदेव राजा भए।

यसप्रकारको राजनीतिक उतारचढाउसँगसँगै ब्राह्मीलिपिले लामो यात्रा गर्दै अनेकौं सांस्कृतिक पृष्ठभूमि भएको समाजको हातबाट आफूमा विविधता थुपार्दै विकास गर्दै गयो। ब्राह्मीलिपिको विकासको अध्ययनको प्रयोजनको लागि ४५० ई.सम्मको ब्राह्मीको विकासलाई दुई कालखण्डमा विभाजित गरी अध्ययन गरिँदै छ :[९] **प्रथम काल** : ईसापूर्व दोस्रो शताब्दीदेखि ईसवीको पहिलो शताब्दीको पूर्वार्धसम्म र **द्वितीय काल** : पहिलो शताब्दी ई.देखि पाचौं शताब्दी ई.को पूर्वार्धसम्म।

## प्रथम काल

यस कालमा विभिन्न ठाउँहरूमा भिन्नभिन्न प्रकृतिको लेखोट जारी रह्यो, लेखनको प्रचारप्रसार बढ्नगयो र विस्तारै क्षेत्रीय लेखनशैलीको जग बस्यो। यस कालको लेखनमा पुरानो परंपराको अनुसरणनै बढी देखिने भएता पनि विभिन्न भाषिक र सांस्कृतिक पृष्ठभूमिका स्थानीय लेखकहरूको व्यक्तिगत छाप पैल्याउन सकिन्छ। यस्ता व्यक्तिगत छापहरूले शैलीको निर्माणमा र क्षेत्रीय लेखनको विकासमा ठूलो योग दिए। प्रथम कालका लेखनलाई यसरी विभाजित गरिएको छ; पूर्वी भारत, उत्तरपश्चिम भारत, उत्तरपश्चिम दक्कन र दक्षिण भारत।

## पूर्वी भारत

अशोकका नाती दशरथ मौर्यका विहारराज्यको नागार्जुनगुफाका ससाना अभिलेखहरू, बोधगयाका अभिलेख, उत्तरप्रदेशका बस्ती जिल्लाको पिपरहवा स्तूपको अस्थिपात्रअभिलेख, गोरखपुरको सोहगौराताम्रपत्र, कौशाम्बी, अयोध्या र पभोसाका अभिलेख, मध्यप्रदेशका भारहुतस्तूपका अभिलेखहरू र छत्तीसगढको रामगढअभिलेख लगायत बंगलादेशको बोगरा जिल्लाको महास्थानअभिलेख[१०] र खारवेलका हाथीगुम्फा अभिलेखहरूलाई यस समूहमा राखिएको छ।[११] दशरथमौर्यका तीनओटा अभिलेखहरूमा **अ य र व** जस्ता केही वर्णहरू धस्काएर लेखिएका छन् र **श**को ठाउँमा **स**को प्रयोग भएको छ। पिपरहवा अभिलेखका वर्णहरू निकै भद्दा छन् र अशोककालमा झैं सावधानीसँग कुँदिएका छैनन्। **क त** लम्ब्याइएका छन्; यसमा उल्टो रोमन डी जस्तो **ध** पाइँदैन र मात्राचिह्न पुरानै किसिमका छन्। बंगलादेशको महास्थानअभिलेख र छत्तीसगढको रामगढ अभिलेखहरूमा **प ल स ह** जस्ता वर्णहरू कोणात्मक छन् र पूर्णविरामको लागि दण्ड वा ऊर्ध्वरेखाको उपयोग गरिएको छ। यी विशेषताहरूका आधारमा यिनलाई ईसापूर्व दोस्रो शताब्दीको मानिन्छ।[१२] भारहुतका स्तूपहरूका रेलिङ र

तोरण वा मूलद्धारमा कुँदिएका ससाना लेखहरूमध्ये रेलिङका लेखहरूमा पुरानोपन पाइन्छ र यिनलाई ईसापूर्व पहिलो शताब्दीको मानिएको छ। पभोसा र अयोध्याका अभिलेखहरूमा मथुराको क्षत्रपपकालमा सुरू गरिएको मोटो कलमको नयाँ प्रविधि अपनाइएको छ र वर्णहरूको लम्बाई बराबर गरिएको छ। हाथीगुम्फा र बोधगयाका अभिलेखहरूमा पनि यस प्रविधिको भद्दा अनुसरण गरिएको छ। यी सबै अभिलेखहरू ईसवीको पहिलो शताब्दीका मानिन्छन्।[१३]

## उत्तरपश्चिम भारत

तक्षशिला, मथुरा र मालवाका विभिन्न राज्य र गणराज्यहरूका सिक्कालेखहरूको साथसाथ मध्यप्रदेशको विदिशा, अजमेरको बडली,[१४] साँची र मथुराका अभिलेखहरूलाई यस समूहमा राखिएको छ। यस कालका सिक्कालेखहरूमा तक्षशिलाका सिक्काहरू, मथुराका शकक्षत्रपका सिक्का, एरणका सिक्काको साथ यौधेय, अर्जुनायन, कुणिन्द, पाञ्चाल र वृष्णि जस्ता गणजातिहरूका सिक्काहरू चर्चित छन्। तक्षशिलाका सिक्काका वर्णहरू निकै भद्दा छन्। एरणमा पाइएका केही सिक्काहरूका चार र पाँच वर्णहरूका लेख उल्टा र उल्टा गतिमा छापिएका छन्। तक्षशिला र एरणका सिक्काहरूलाई ईसापूर्व दोस्रो शताब्दीको मानिएको छ।[१५] यौधेय र अर्जुनायन गणराज्य, मथुरा र कन्नौजका सिक्काहरूमा इण्डोग्रीक सिक्काको प्रभाव पाइन्छ। यिनका वर्णहरूमा कोणात्मकताको विकासका साथसाथ **ग त** र **श**मा गोलोपन पाइन्छ। मथुराका शकक्षत्रपहरू लगायतका सिक्काहरूमा खासगरी **घ प ल स ष ह**मा ऊर्ध्वरेखा बराबर गरिएको छ र वर्णहरूका माथिल्लो भाग मोटो बनाइएको छ। यी सिक्काहरू ईसापूर्व पहिलो शताब्दीदेखि पहिलो शताब्दीका बीचका मानिन्छन्।

मालवाका शुंग राजा भागभद्रका दरबारमा पठाइएका तक्षशिलाका यूनानी राजाका राजदूत हेलियोडोरसको बेसनगर गरुडस्तंभअभिलेखमा **प ल व स ह** जस्ता वर्णहरू कोणात्मक छन्; तर मात्राचिह्न भने अशोककालका समान छन्। यसलाई ईसापूर्व दोस्रो शताब्दीको मानिन्छ। अजमेरको बडलीको लेखाई भद्दा छ, वर्णहरू लम्ब्याइएका छन् र हेलियोडोरसको अभिलेखभन्दा पछिको प्रतीत हुन्छ। चित्तौरगढको घोसुण्डी र राजा भागवतको भिल्साका अभिलेखहरूका वर्णहरू राम्ररी लेखिएका छन्। भिल्साको अभिलेखमा **क**को ऊर्ध्वरेखा लम्ब्याइएको छ र **प स** जस्ता वर्णहरूमा ऊर्ध्वरेखाको मोटाई एकनासको देखिन्छ। घोसुण्डी र भिल्साका अभिलेखहरूमा **व** को वृत्त झण्डै तीनकुने स्वरूपको छ। यस समूहका सबै अभिलेखहरू ईसापूर्व पहिलो शताब्दीका मानिन्छन्। मध्यप्रदेशको साँचीका स्तूपहरूका बाहिरी रेलिङ र स्तूपभित्रका अस्थिपात्रका लेखहरूमा अन्तर पाइन्छ। रेलिङका अधिकांश अभिलेखहरू र स्तूप नं.३को अस्थिपात्रअभिलेखका वर्ण हेलियोडोरसको अभिलेखसँग मिल्दाजुल्दा छन्। स्तूप नं. २को अस्थिपात्र र रेलिङका लेखहरूका अधिकांश वर्णहरूमा कोणात्मकता पाइन्छ र ऊर्ध्वरेखा छोट्याइएको छ। स्तूप नं.३को अस्थिपात्रअभिलेखबाहेक सबै अभिलेखहरूमा मथुराका शकक्षत्रपलेखनका लक्षण

पाइन्छन् । यी पहिलो शताब्दीमा ई.मा राखिएका छन् । मथुराका शकक्षत्रपहरूका अभिलेखहरूमा नयाँ प्रविधिको नौलो लेखन पाइन्छ ।

## उत्तरपश्चिम दक्कन

उत्तरपश्चिम दक्कनका भाजा, नासिक, अजन्ता, कोण्डाने र कार्लेका सबै गुफालेखहरू ससाना छन् । नानाघाटको लामो अभिलेखमा ऊर्ध्वरेखाको लम्बाईमा खास ध्यान गएको देखिँदैन भने केही वर्णहरूको लम्बाई छोट्याइएको छ । तर केही वर्णहरू नयाँ किसिमले लेखिएका छन् । कहींकहीं **प फ म व स ह**मा कोणात्मकता देखिन्छ । उल्टो रोमन **डी**को स्वरूपको **ध** पाइन्छ । **भ**मा ऊर्ध्वरेखा सीधा तानिएको छ । अशोकको गिरिनारको अभिलेखमा जस्तो **म**मा **आ ए र ओ**को मात्रा धेरैजसो वर्णको बीचमा र कतै माथिल्लो भागमा दायाँबायाँ बनाइएका छन् । अन्यत्र माथिल्लो भागमा सीधा तेर्सो रेखाको **ओ**को मात्रा पाइन्छ । **क**को ऊर्ध्वरेखा लम्ब्याइएको छ । तीन किसिमका **ख**, कोणात्मक र गोलो गरी दुवै किसिमको **ग** र गोलो **द** पाइन्छन् । अरू अभिलेखहरूमा शकक्षत्रपको प्रभाव पाइन्छ । यी सबै ईसवीको पहिलो शताब्दीका मानिन्छन् ।

## दक्षिण भारत

कृष्णा जिल्लाको भट्टिप्रोलु र अमरावतीका अभिलेखहरूका साथसाथ मदुरा, तिन्नवेली, सिट्टनवसनका गुफालेखहरू मौर्यकालपछिका ब्राह्मीका नमूना हुन् । भट्टिप्रोलुका बौद्ध पाली लेखहरूमा **घ ज भ म ल र ष** नयाँ आकारप्रकारका छन् । भट्टिप्रोलुका वर्णहरू उल्टा र अशुद्ध लेखिएका हुनाले नौलो स्वरूपका जस्ता देखिन्छन् ।[१६] **भ**को पाता देब्रेतिर फर्कनुपर्नेमा दाहिनेतिर फर्केको छ । देवनागरीको ४ अंक जस्तो **म**को तल हुनुपर्ने गाँठो माथिपट्टि बनेको छ । यसैगरी **घ ल ष** बेग्लै किसिमले उल्ट्याइएका छन् र **ज**को बीचको तेर्सो रेखा हराएको छ । यीबाहेक अरू वर्णहरू भने शुद्ध र नियमित छन् र केहीमा पहिलो शताब्दी ई.मा उत्तरपश्चिमी दक्कनमा विकसित विशेषता देख्न सकिन्छ । यिनमा **क**को ऊर्ध्वरेखा लम्ब्याइएको छ, कोणात्मक र गोलो गरी दुवै किसिममको **ग**, तीनकुने वा चारकुने स्वरूपको **च** र सोभ्रो ऊर्ध्वरेखा भएको **भ** पाइन्छन् । भट्टिप्रोलुको स्फटिकअभिलेख लगायत दक्षिणका कुनै अभिलेखमा यस्ता उल्टा वर्ण पाइँदैनन् । अमरावतीका बौद्ध अभिलेखहरूमा पनि द्रविडभाषा नभई प्राकृतभाषा पाइन्छ । यसकारण यिनका लेखनको स्रोत उत्तर भारतनै देखिनआउँछ । उल्टा वर्णहरू अज्ञानताका परिणाम लाग्छन् । पहिलो शताब्दीको नानाघाट अभिलेखमा देखिने केही विशेषताहरू यसमा पनि देखिएका छन् । अमरावतीका अभिलेख पश्चिमी दक्कनका अन्तिम समूहका अभिलेखहरूसँग मेल खान्छन् । यहाँ **म**को गाँठो तीनकुने बनेको छ; ऊर्ध्वरेखाको लम्बाईमा खास नियम अपनाइएको देखिँदैन र **प स ह** बढी कोणात्मक बनेका छन् । यसैगरी मदुरा, तिन्नवेली र सिट्टनवसनका गुफालेखहरूका भद्दा वर्णहरू पहिलो शताब्दी ई.का मानिएका छन् ।

## प्रथम शताब्दीसम्म विकसित ब्राह्मीका विशेषताहरू

माथि चर्चा गरिएका विभिन्न क्षेत्रहरूको लेखनबाट सबै ठाउँमा लेखनका विशेषता र विकासको गति एकनास नरहेको तथ्य स्पष्ट भएको छ। अतः कुनै कालमा विकसित ब्राह्मीका विशेषताहरूलाई सामान्यीकरण गर्नु गाहारो काम हो। तैपनि प्रथमकालमा विकसित ब्राह्मीलिपिका विशेषताहरूलाई मोटामोटी रूपमा यसरी रेखाङ्कन गर्न सकिन्छ :

(१) निम्नलिखित वर्ण र मात्राचिह्नहरू यस कालमा थप भएका देखिन्छन् :

**ई** : त्रिकोणस्वरूपको त्रिविन्दुमा एक विन्दु थपेर चारकुने रूपको दीर्घ **ई** बनाइएको छ।

**ऊ** : **उ**को दायाँतिर बीच भागमा सानो तेर्सो रेखा थपेर दीर्घ **ऊ** बनाइएको छ।

**ऐ** : स्वरवर्ण **ए**को त्रिकोणको माथिल्लो देब्रे भागमा माथि उठेको धर्सा जोडेर **ऐ** बनाइएको छ।

**ऋ** : यस स्वरवर्णको स्वतन्त्र रूप अझै पाइँदैन; तर **व**को तल्लो देब्रे भागमा ढल्केको सीधा रेखा जोडेर **वृ** बनाइएको पाइन्छ।

**औ** मात्राचिह्न : यस कालमा पहिलोपल्ट **ओ**को मात्रामा बायाँतिर माथिल्लो भागमा तेर्सो रेखाको अर्को **ए**को मात्रा थपेर **औ**को मात्राचिह्न बनाइएको छ।

**विसर्ग**: वर्णको दाहिने तलमाथि ठाडो गरी बनाइएका दुईवटा विन्दुहरूको विसर्ग यसैकालमा सुरु भएको पाइन्छ।

(२) अशोकका अभिलेखहरूमा झैं लेखाईमा खास मापक (स्ट्याण्डर्ड) र सावधानी अपनाइएको पाइँदैन।

(३) आ-आफ्नो प्रकृति अनुसार वर्णहरू कुनै ठूला-लाम्चा, साना-होचा पाइन्छन् जसमा ऊर्ध्वरेखा बराबर गरिएका छैनन्। जस्तै : अधिकांश ठाउँहरूमा **क** र **त**को ऊर्ध्वरेखा लम्ब्याइएको पाइन्छ र **थ ब** निकै होचा र साना छन्। पछिका सिक्काहरूमा भने वर्णहरूको लम्बाइ घटाइएको पाइन्छ।

(४) केही वर्णहरूमा भने कोणात्मकता र केहीमा गोलोपन वा वक्रताको विकास भएको छ, जस्तै **ग**को शीर्षभाग गोलो र कोणात्मक दुवै किसिमको पाइन्छ, **ख**को वृत्तको ठाउँमा त्रिकोणस्वरूप बढी पाइन्छ। बढी गोलो पीठचूँको **द**को मुख अझै देब्रेतिरै खुलेको छ। **घ**को देब्रेतिरको ठाडो रेखा घटाइएको छ र तल्लो भाग कोणात्मक बनाइएको छ। **ङ**को माथिल्लो ठाडो रेखा छोट्याइएको छ, तल्लो भाग लम्ब्याइएको छ र बीचको तेर्सो रेखालाई गोलोरूप दिइएको छ।

(५) कतिपय ठाउँहरूमा **अ य व** जस्ता वर्णहरू धस्काएर लेखिएका कर्सिभ छन्।

(६) मात्राचिह्नहरूमा खासै फरक आएको छैन। ई. पू.पहिलो शताब्दीताकाका सिक्काहरूमा मात्राचिह्न वक्र वा गोल छन्। **ओ**कारको पुरानो मात्राचिह्नको साथसाथ कतैकतै शीर्षभागबाट माथि जाने ढल्केका रेखा वा अर्धचन्द्राकार रेखा पाइन्छ।

(७) जोडका व्यञ्जनमा पहिले जस्तो अनियमितता देखिँदैन। व्यञ्जनको माथिल्लो भागमा ठाडो रेखाको रको जोड (**रेफ) को** चलन चलेको पाइन्छ। पछि उच्चारण हुने **र** सर्पाकार स्वरूपको हुन्छ जो व्यञ्जनको तल्लो भागमा जोडिएको हुन्छ।

## शकक्षत्रपलेखनशैली

मथुराका शकक्षत्रपहरूको संरक्षणमा प्रथम शताब्दीमा विकसित लेखनले ब्राह्मीको विकासमा नयाँ आयाम थपेको छ। अहमद हसन दानीले यसलाई नयाँ प्रविधिको कारण आएको परिवर्तन मानेका छन्।[१७] यस शैलीका विशेषता यस प्रकार छन् :

(१) मोटो टाँकाको कलमले खास विधि अपनाई तानिएको माथितिर मोटो र तलतिर क्रमशः पातलिँदै गएको ऊर्ध्वरेखा सीधा टाँकाले माथिबाट सुरू गरी टाँकालाई घुमाउँदै तल लैजाँदा बनेको हुनुपर्छ। यो विशेषता **अ आ च छ ड त भ य र ल स ह** जस्ता वर्णहरूमा बढी स्पष्ट देखिन्छ। ऊर्ध्वरेखाको माथिल्लो भाग मोटो हुँदा वर्णहरूको स्वरूपमा नौलोपन आएको देखिन्छ। अर्कोतिर यसले पछि डीको बनाउने प्रेरणा दिएको देखिन्छ। केही यस्ता उदाहरण पनि पाइएका छन् जसमा मोटो टाँकाको कलमको उपयोग गरेको त देखिन्छ तर कलम घुमाई लेख्न नजानेको कारण घोसुण्डीको अभिलेखमा जस्तै ऊर्ध्वरेखा बराबर मोटाईको बन्न गएको छ। नानाघाट र अरिकमेडुका लेखहरूमा मोटो कलमले लेख्ने अनुकरण निकै भद्दा किसिमले गरिएको छ।

(२) चौडाईको अनुपातमा वर्णहरूको लम्बाई घटाउनु शकक्षत्रपलेखनको अर्को विशेषता हो। यो क्रमिकरूपमा आएको परिवर्तन नभई शायद सिक्कालेखनबाट विकसित भएको थियो। सिक्काको सीमित ठाउँमा आवश्यक संख्यामा ठूला-लामा वर्णहरू अटाउन संभव हुँदैन। ईसापूर्व दोस्रो शताब्दीदेखिका इण्डोग्रीक सिक्काहरूमा ग्रीक वर्णहरू बराबर गरी छोट्याइएका पाइन्छन्। शक क्षत्रपहरूले इण्डोग्रीक र पार्थियनहरूको अनुकरण गरी मुद्रा छपाएका थिए। ब्राह्मीलिपिको उपयोग गर्ने शासकहरूले आफ्ना मुद्रामा त्यही विधि अपनाई वर्णहरूका भुजाहरूलाई बराबर गरी लेख्न थालेको भएमा आश्चर्य मान्न सकिँदैन। दुई भुजा भएका **घ प य श ह ल**मा यो विशेषता स्पष्ट देखिन्छ। यस विशेषताले ब्राह्मीको विकासमा महत्त्वको भूमिका खेलेको छ। यसले गर्दा वर्ण समानुपातिक बने र सीधा पंक्तिमा लेख्न सकिने गुणको विकास भयो।

कालान्तरमा यी दुवै विशेषताहरूले प्रान्तीय लेखनशैलीहरूमा पाइने अनेकौं नयाँ प्रवृत्तिहरूलाई जन्म दिए ।

(३) शकक्षत्रप शैलीको अर्को विशेषता केही वर्णहरूमा कोणात्मकताको विकास हो । यस कालमा विकसित **ख घ ज ट प फ म य व ष स ह** जस्ता वर्णहरूको कोणात्मता धेरै ठाउँमा कायम रह्यो र यसले पछि विकसित प्रान्तीय लेखनमा निकै ठूलो प्रभाव पाऱ्यो । (फलक ५)

## दोस्रो काल

पहिलो शताब्दीको उत्तरार्धदेखि चौथो शताब्दीसम्मको कुषाणकालमा ब्राह्मीका अनेकौं क्षेत्रीय शैलीहरूको विकास भयो । कौशाम्बी, सहेतमहेत र सारनाथमा पाइएका कनिष्कका अभिलेखहरू भिन्नभिन्न शैलीहरूमा लेखिएका छन् । कनिष्कको वर्ष १४को अभिलेख र हुविष्कको वर्ष ३३को अभिलेखमा मथुराक्षेत्रमा कुषाणकालमा विकसित शैलीका लक्षण पाइँदैनन् । मथुराका आरंभिक अभिलेखहरूको लेखन त्यहींका कुषाणकालका अभिलेखहरूकाभन्दा बढी पश्चिमी शकक्षत्रपहरूका आरंभिक अभिलेखहरूको लेखनसँग मिल्दाजुल्दो छ । गुजरात र पश्चिमी मालवाका पछिल्ला शकक्षत्रपहरूको लेखनमा भने कुषाणकालीन मथुरामा विकसित शैलीका लक्षण पाइन्छन् । पूर्वी मालवामा अर्कै अलंकृत शैलीको विकास भएको पाइन्छ । त्यसको प्रभाव पश्चिमी दक्कनमा सातवाहनको लेखन लगायत दक्षिण भारतको लेखनमा समेत परेको देखिन्छ । मध्यप्रदेशका अरू भागमा भने गंगाउपत्यका र दक्कन गरी दुवै ठाउँको प्रभाव देखापर्छ । आरंभिक गुप्तकालीन लेखनहरू पनि खास क्षेत्रहरूमा विकसित भिन्नभिन्न शैलीका छन् ।

## मथुरा

पहिलो शताब्दीको पूर्वार्धसम्म मथुरामा शकक्षत्रपशैलीकै लेखनका नमुनाहरू पाइन्छन्, जसमा केही नयाँ विशेषताहरू थपिएका छन् । अनुस्वारको लागि उपयोग हुने विन्दुको ठाउँ सानो तेर्सो धर्काले लिएको र **ख म व** त्रिकोण स्वरूपका बनेका देखिन्छन् । अन्य वर्णहरू र लेखाईमा खासै फरक पाइँदैन । तर यसै शताब्दीको उत्तरार्धदेखिको कुषाणकालमा निकै फरक आएको छ । यस कालमा व्यक्तिगत अभिलेखहरू धेरै छन् । लेखनको लोकप्रियताको साथ ऊर्ध्वरेखाको माथिल्लो मोटो भागको ठाउँमा तेर्सो सानो धर्साको डीकोको प्रवेश कुषाणलेखनको मुख्य विशेषता बनेको छ । कनिष्क र हुविष्कका एक एकवटा अभिलेखहरू भने अपवाद मानिएका छन् जसमा केही वर्णहरूका स्वरूप बेग्लै छन् र आरंभिक गुप्तहरूका केही अभिलेखहरूसँग मिल्दाजुल्दा छन् । यस आधारमा कसैले कनिष्कको वर्ष १४ को अभिलेखमा १०० को अंकचिह्न गल्तीले छुट भएको भन्ने समेत अनुमान गरे । तर यी दुवै अभिलेखहरूका जस्ता वर्णहरू त्यसै ताकाको कौशाम्बी लेखनमा देखिएका छन् ।[१८] यी बाहेक मथुराका कुषाण अभिलेखहरूको लेखनमा प्रायः एकरूपता पाइन्छ । मथुराको कुषाणलेखनमा दुइ

प्रकारका **अ** पाइन्छन् । इका तीन विन्दुहरूले तेर्सो धर्साका रूप लिएका छन् र कतै भने अन्तिम तेर्सा रेखाको ठाउँमा ठाडो रेखा बनेको पाइन्छ। **उ**को तेर्सो रेखाको टुप्पो तलतिर झुकेको छ; **उ**को मात्राचिह्नमा पनि झुकेको विशेषता पाइन्छ। **ए**को शीर्षविन्दु देब्रेतिर फर्काइएको छ। **ओ**को ऊर्ध्वरेखा ढल्केको छ। **क**को तेर्सो रेखा दुवैतिर तल झुकेको छ। **ख**को त्रिकोण स्पष्ट छ। **च**को चरिचुच्चो बनको छ। **ण** र **न**को तेर्सो रेखा तलतिर झुकेका छन्। **ण**को अर्को स्वरूप इटालिक x जस्तो छ। **द**को पिठयूँ गोल छ र यसको मुख दायाँतिर फर्केको छ। **प** कोणात्मक छ। **भ**को चौडाई बढेको छ र दुवै भुजा वक्र छन् र देब्रे भुजाको माथिल्लो भाग केही भित्र पसेको छ। **य**को देब्रे भुजा चौडा छ र माथितिर घुमिर्किएको छ र कतै यसले गाँठोको रूप लिएको छ। दुवै प्रकारमा दाहिनेतिरको ऊर्ध्वरेखा सोझो छ र तल्लो भाग कोणात्मक छ। पछि उच्चारण हुने गरी जोडिएको **य** भने प्रायः अंकुशे प्रकारको पाइन्छ। ढल्केको तेर्सो रेखा भएको **ष**को साथसाथ दाहिनेतिरको ऊर्ध्वरेखासम्म नजोडिएको सीधा तेर्सो रेखाको **ष** पनि पाइन्छ। मात्राचिह्नहरूमा केही वक्रता आएको छ। संयुक्ताक्षरमा धेरै फरक पाइँदैन।

## पूर्वी शैली

पूर्वी क्षेत्रमा यसकालमा दुई किसिमका शैलीहरू पाइन्छन्। पहिलो शैली कनिष्कका कोसम, सहेतमहेत र सारनाथका अभिलेखहरूमा पाइन्छ। अर्को शैली इलाहाबाद म्युनिसिपल म्युजियमको संवत् २३को अभिलेख र अश्वघोषको संवत् ४०को सारनाथको अलंकृत अभिलेखमा देखिन्छ। यस शैलीको छाप भीटा, बसाढ र सहेतमहेतका सील (छाप)का लेख, सहेतमहेतको ढुंगाको अभिलेख र गुप्तकालीन सिक्काहरू समेत गरी झण्डै पाँचौ शताब्दीसम्मका लेखहरूमा पाइन्छ। पूर्वी क्षेत्रका कुषाण अभिलेखहरूका अधिकांश वर्ण र मात्राचिह्नमा मथुराक्षत्रप लेखनका लक्षण पाइन्छन्। पूर्वी शैलीमा ऊर्ध्वरेखा क्षत्रपहरूकै समान पाइन्छ; तेर्सो डीको पाइँदैन; पुरानो र कुषाणकालीन **अ**, गोलो **द** र मथुराक्षत्रपको **द** गरी दुवै **द** पाइन्छन्। **य**को देब्रे भुजामा गाँठो पाइँदैन र जोडमा उपयोग हुने अंकुशे **य** पाइँदैन। यसै गरी दोस्रो शैलीमा पनि केही अंशमा कुषाणप्रभाव पाइएता पनि पुराना विशेषताहरू कायमै छन्। सहेतमहेतको ढुंगे अभिलेखमा गाोल पिठयूँ भएको दायाँतिर मुख खुल्ने **द** र अंकुशे **ह** कौशाम्बीक्षेत्रका प्रकारसँग मिल्दाजुल्दा छन्।

## कौशाम्बी शैली

इलाहाबादबाट ४५ कि.मी.पश्चिममा यमुनाको किनारामा बसेको प्राचीन नगर कौशाम्बी वा कोसममा पाइएका माघ शासकहरूका अभिलेखहरूमा अलग्गै शैलीको लेखन पाइन्छ। यी अभिलेखहरूमा वर्ष ५२ दखि वर्ष १३९ पाइन्छन् र यिनलाई शकसंवत्का वर्ष (१३०-२१७) मानिएको छ। यस शैलीमा माथिबाट तलतिर पातलिँदै गएको ऊर्ध्वरेखा लगायत मात्राचिह्न शकक्षत्रपको मथुरा

शैलीका छन्, यद्यपि कहींकहीं पुराना मात्राचिह्न पनि देखापर्छन्। तर कौशाम्बीशैलीको मुख्य विशेषता **ण न म ल स ह**को बनावटमा पाइन्छ, जो एकदम नयाँ छन्।[१९] दुइतिर फर्केको इटालिक एक्स χ जस्तो वा तलमाथि दुवैतिर वक्र रेखा भएको **ण**को ठाउँमा माथितिर मुख खुलेको **ण**, तल्लो तेर्सो रेखा झुकेको मथुराको **न**को ठाउँमा गाँठो परेको **न**, मुख खुलेको पुच्छरे **म**, बराबर भुजा भएको **ल**को ठाउँमा अंकुशे **ल**, अंकुशे **स**को ठाउँमा गाँठो परेको **स** र अंकुशे **ह** प्रचलनमा आए। पहिलो कालमा **ण**का तल र माथिका रेर्सा रेखा वक्र भए र धस्काएर लेख्ने प्रयासमा इटालिक्स एक्स χ जस्तो भएको थियो। कलम नउठाई चाँडै लेख्ने प्रयासमा दुईतिर फर्केको अर्धवृत्त टाढियो र बायाँतिरको अर्धवृत्तको तल्लो टुप्पोमा गाँठो बनाउँदै बीचमा तेर्सो रेखा बन्नगयो। यसरी मुख खुलेको **ण**को विकास भयो। हात नउठाई एकै झट्कामा चाँडै लेख्ने कोशिशमा **न**को तल्लो वक्र रेखाको देब्रे भागमा गाँठोको विकास भयो। कहींकहीं **ण** र **न**का पुराना स्वरूप नयाँ वर्णहरूका साथसाथ प्रयोग गरिएका पाइन्छन्। **म**को तल्लो त्रिकोण गाँठो थ्याप्चिँदै गएपछि शीघ्र लेख्ने कोशिशमा गाँठोको मुख माथितिर खुल्नगयो। केहीमा देब्रे भागमा गाँठोको अवशेषका रूपमा भित्र पसेको कोणात्मक रेखा र केहीमा ढल्केको सीधारेखा र देब्रेतिर छोटो पुच्छर हुन्छ। **ल**को अंकुश लामो भयो र देब्रतिरको टुप्पो क्रमशः दाहिने मोडियो। यसैगरी **ह**को टुप्पो मोडियो। धस्काएर लेख्ता बराबर भुजाको **स**को देब्रतिरको अंकुशको ठाउँमा गाँठोको विकास भयो। यसरी लेख्ता कलम उठाइरहनुपर्दैनथ्यो। संयुक्ताक्षरमा पछि उच्चारण हुने गरी जोडिएको **य** अंकुशे प्रकारको छ जो कुषाण प्रभाव हो। माथिका वर्णहरू शीघ्र लेख्ने प्रयासमा धस्काएर कर्सिभ ढंगले लेख्ने अभ्यासको कारण बनेका भन्ने विश्वास गरिएको छ। **चौथोशताब्दीको समुद्रगुप्तको इलाहाबाद स्तंभलेखको लेखनलाई कौशाम्बीशैलीको** पछिल्लो उदाहरण मानिन्छ। यो शैली गंगाउपत्यकामा पाँचौ शताब्दीसम्म प्रचलित रहेको पाइन्छ।[२०] (फलक ५)

## पूर्वी मालवा लेखन

यहाँका अभिलेखहरूको लेखनमा उल्लेखनीय विशेषता पाइँदैन। यिनमा कतै तेर्सो पातलो डीको र कतै तल पातलिँदै जाने ऊर्ध्वरेखा पाइन्छ। वर्णहरूका आकारप्रकार र मात्राशैलीमा नियमितता पाइँदैन। यहाँ सुरुमा मथुराक्षत्रपहरूको र पछि कुषाणशैलीको प्रभाव पाइन्छ। अझ पछि पश्चिमी क्षत्रप र सातवाहनहरूको संघर्षस्थल रहेको पूर्वी मालवामा खास लेखनको विकास भयो। तेस्रो शताब्दीताकाका साँचीका यूपअभिलेखहरू र नजिकैको कनखेराको शक अभिलेखहरूमा दक्कनको प्रभाव पाइनथाल्छ। यिनमा नानाघाट र सातवाहन लेखनमा पाइने सीधा धर्साका **आ ए ओ**का मात्राचिह्न पाइन्छन्। तेस्रो शताब्दीको पूर्वी मालवा लेखनको खास विशेषता तेर्सो मोटो रेखाको डीको र मात्राचिह्नमा अलंकरण देखिनु हो, जसलाई दक्कनी प्रभाव मानिएको छ। यस लेखनमा त्रिकोणस्वरूपको **ख**, चरिचुच्चे **च**, अर्धवृत्त **त**, गाँठो प्रकारको **य**, दाहिने

भुजा लामो भएको **श** र जोडको अंकुशे **य** पाइन्छन् जो उत्तरी भारतका विशेषता हुन्। यसरी पूर्वी मालवालेखनमा दक्कनी र उत्तर भारतीय लेखनको मिश्रण पाइन्छ। उत्तरपूर्वी राजस्थानको विजयगढका चौथो शताब्दीसम्म यौधेय र अन्य स्थानीय शासकका अभिलेखहरूमा अधिकांश वर्ण र मात्राचिह्नहरूमा अलंकरणको प्रचुर विकास भएको पाइन्छ; गाँठो प्रकारको **ण** र **न**मा दक्कनी प्रभाव र मुख खुलेको **ण**मा कौशाम्बीको प्रभाव पाइन्छ।

## गुजरात र पश्चिमी दक्कन

यस क्षेत्रको दोस्रो शताब्दीसम्मको लेखनमा नानाघाटलेखनका धेरै विशेषताहरू पाइन्छन्। डीकोको अभाव, ऊर्ध्वरेखाको लम्बाईमा ध्यान नजानु र पुरानै किसिमका मात्राचिह्न हुनु यस क्षेत्रको लेखनका विशेषता हुन्। कार्लेका नहपान र गौतमीपुत्र शातकर्णीको लेखनमा केही नयाँपन पाइन्छ, जस्तै ऊर्ध्वरेखा बराबर गरिएको छ; स्पष्ट कोणात्मकता देखिन्छ, मात्राचिह्न केही फरक छन् र बढ़ी अलंकृत छन्। यसरी यहाँको लेखन दोस्रो शताब्दीसम्म मथुरा र कुषाणशैलीको प्रभावबाट मुक्त रहेको छ। चष्टनका गुजरात र काठियाबाडका अभिलेखहरूमा पश्चिमी दक्कनको पुरानो शैलीको भन्दा बढी मालवा र कौशाम्बीशैलीहरूको प्रभाव पाइन्छ। यिनमा डीकोमा ध्यान गएको पाइन्छ र पातलिँदै गएको ऊर्ध्वरेखा हराएको छ। दोस्रो शताब्दीको रूद्रदामाका अभिलेखमा तेर्सो छोटो रेखाको डीको र केही नयाँ किसिमका वर्णहरू पाइन्छन्।

## पूर्वी र दक्षिण पश्चिम दक्कन

अमरावती, नागार्जुनीकोण्डा, जोगेचयपेटा, घण्टसाला र सालिहुन्दम आदिका बौद्ध अभिलेखहरूमा अमरावतीको अभिलेख सबभन्दा पुराना हुन्। यिनमा नानाघाटको लेखनको प्रभाव पाइन्छ। यिनमा कतै डीको छ, कतै छैन र **ड त भ** जस्ता वर्णहरू पश्चिमी दक्कनका पाइन्छन्। परवर्ती सातवाहनअभिलेखहरूमा पूर्वी र पश्चिमी दक्कनका अलंकारयुक्त लेखनमा फरक पाइन्छ। नागार्जुनीकोण्डाको लेखन परवर्ती सातवाहन लेखनबाट विकसित देखिन्छ जसमा ठोस त्रिकोण डीको, बराबर गरिएका वर्ण, अलंकारका वक्र रेखाहरू र निकै लामा ऊर्ध्वरेखा पाइन्छन्। यिनमा मध्य गंगाक्षेत्रका पनि प्रभाव पाइन्छ। तेस्रो शताब्दीका यहाँका अभिलेखहरूमा लेखनकला खस्केकोछ। दक्षिणपश्चिम दक्कनका वनवासी, मालवल्ली र बेलारीका अभिलेखहरूमा सादा तेर्सो रेखाको डीको छ र केही वर्णहरूको ऊर्ध्वरेखा नागार्जुनीकोण्डामा भन्दा बढी लम्ब्याइएको छ।

## आरंभिक गुप्तकालीन लेखन

आरम्भिक गुप्तअभिलेखहरूमा समुद्रगुप्तका इलाहाबाद र एरणका स्तम्भलेख, चन्द्रगुप्त द्वितीयका उदयगिरिका अभिलेखहरू, गढवा, साँची र मथुराका अभिलेखहरू तथा भीटा, सहेतमहेत र बसाढको ध्रुवस्वामिनीको माटाका

छाप (सील) लेखहरू पर्दछन्। पहिलेका पुरालेखनविद्हरूले 'गुप्तलिपि'का पूर्वीप्रकारका भनी बयान गरेका केही खास वर्णहरू निकै पहिलेदेखिनै कौशाम्बीमा प्रयोग भएका र त्यसको प्रभाव कनिष्क र हुविष्कका मथुराका अभिलेखहरूका साथसाथ **स ह** जस्ता केही वर्णहरूका स्वरूप सहेतमहेतमा समेत देखिएको कुरा माथि परेको छ। यसको अर्थ गुप्तलिपिको पूर्वी शैलीका केही विशेषताहरू धेरै पहिले कौशाम्बीमा विकसित भइसकेका थिए।[२१] वास्तवमा कनिष्कको मथुराशैली साँचीसम्म देखिन्छ। मात्राचिह्नको मात्र कुरा गर्ने हो भने मथुराको मात्रा कनिष्कका कोसम, सारनाथ, र सहेतमहेतका अभिलेखहरूमा समेत देख्नसकिन्छन्। अन्यत्रका अभिलेखहरूमा स्थानीय लेखन पाइन्छ। मालवामा चौथो शताब्दीसम्म पश्चिमी क्षत्रप र सातवाहन लेखनको प्रभाव पाइन्छ। इलाहाबाद स्तंभअभिलेख र भीटाको सील (छाप) लेख कौशाम्बीशैलीका हुन्। सहेतमहेतको लामो अभिलेख र बसाढको ध्रुवस्वामिनीको सील अलग्गै पूर्वी शैलीका छन् जसको विशेषता सारनाथको अश्वघोषको अभिलेखमा देख्नसकिन्छ। समुद्रगुप्तको एरण र साँचीका अभिलेख र उदयगिरिको एक अभिलेख मालवाशैलीका छन्। चन्द्रगुप्त द्वितीयको मथुराका अभिलेखहरू मथुराशैलीका छन्।

विशाल क्षेत्रमा फैलिएको गुप्तसाम्राज्यमा अनेकौं स्थानीय लेखनशैलीहरू प्रचलित रहे। गुप्तलिपिको अर्थ गुप्तसाम्राज्यभित्र प्रचलित लेखनशैलीहरूको समष्टि हुन सक्छ तर स्थानीय लिपिविशेष भने हुनसक्दैन। समुद्रगुप्तका इलाबादस्तंभलेख र मध्यप्रदेशको एरणको अभिलेखमा भिन्नभिन्न ढंगका लेखन पाइन्छन्। इलाहाबाद स्तंभलेखको लेखन सादा छ; वर्णहरूमा सीधा तेर्सो रेखाको डीको छ; शीघ्रतासँग धस्काएर लेखिने विशेषता छ र यसकारण केही वर्णहरू एकदमै नयाँ छन्, जो अन्यत्र देखिँदैनन्। एरण अभिलेखका सबै वर्णहरू पुरानै छन्; **क र** जस्ता केही वर्णहरूका लामा ठाडा रेखाको तल्लो भाग देब्रेतिर मोडिएको हुन्छ र ठोस चारकुने बाकस भैं डीको छ।[२२] इलाहाबादको लेखन कौशाम्बीशैलीको र एरणको लेखन पूर्वी मालवाशैलीको हो भन्ने कुरा माथि परिसकेको छ। त्यसै गरी चन्द्रगुप्त द्वितीयका उदयगिरि र साँचीका अभिलेखहरूमा भिन्दाभिन्दै शैली पाइन्छन्। पाँचौ शताब्दीमा गंगाउपत्यकामा कौशाम्बीशैली निकै लोकप्रिय रह्यो।

## दोस्रो कालमा विकसित ब्राह्मीका विशेषताहरू

दोस्रो कालका ब्राह्मीका विभिन्न शैलीहरूमा नयाँ वर्ण, मात्राचिह्न लगायत लेखाईमा अनेकौं परिवर्तनहरूको उल्लेख माथि गरिएको छ। यहाँ केही साझा विशेषताहरूको चर्चा गरिँदै छ;

### (१) नयाँ वर्ण र चिह्नहरू

दक्षिण भारतमा पहिलो शताब्दीमा पहिलोपल्ट देखिएको दुइ विन्दुहरूको बीचमा ठाडो रेखाको दीर्घ **ई** यस कालमा उत्तर भारतमा पनि देखिन्छ। पहिले

मात्राको रूपमा मात्र देखिने ऋ स्वरवर्ण पहिलोपल्ट दोस्रो शताब्दीको पश्चिमी शकक्षत्रपको अभिलेखमा देखिन्छ। यो गुणनचिह्नको स्वरूपको छ। यसैगरी पहिलो पल्ट ङ पाइन्छ जसको स्वरूप देवनागरीको ८ अंकचिह्न जस्तो छ। यस कालमा जिह्वामूलीय अर्थात् कभन्दा पहिलेको विसर्ग र उपध्मानीय अर्थात् पभन्दा पहिलेको विसर्ग पाइन्छन्। पहिलोमा ठाडो डमरूको तल्लो त्रिकोणको दाहिने तल्लो दाहिने भागमा क जोडिएको छ। पको देब्रे भुजामाथि तेर्सो गरी जोडिएका दुइ वृत्तहरूको चिह्न उपध्मानीय विसर्ग मानिएको छ। अन्य व्यञ्जनको तुलनामा सानो आकारको व्यञ्जन लेखेर हलन्त वा खुट्टा काटेको जनाउने चलन चलेको पाइन्छ।

### (२) धस्काएर लेख्दा बनेका वर्णहरूका नयाँ कर्सिभ स्वरूप

शीघ्रताले धस्काएर लेख्ने प्रयासमा यस कालमा केही वर्णहरूका स्वरूप बदलेका छन्। पहिलो कालको अन्तमा यसरी लेख्दा **द**को देब्रेतिर खुल्ने मुख दाहिनेतिर खुल्नगयो। संयुक्ताक्षरमा पछि उच्चारण हुने मथुरामा विकसित अंकुशे **य** पनि यसैगरी धस्काएर लेख्ता बन्नगएको हो। गाँठो प्रकारको **न** जस्तै स्वरूपको दक्कनी **त** पनि यसै गरी बन्नगएको देखिन्छ। यस विशेषताले अन्य कतिपय अक्षरहरूमा आएको परिवर्तनको बारेमा कौशाम्बीशैलीको प्रसङ्गमा भनिसकिएको छ।

### (३) मात्रा चिह्नको विकास

कुषाणकालमा भएको मात्राचिह्नको विकास महत्त्वको थियो। यसमा **आ ए ओ** जस्ता मात्राहरू ढल्केर माथि उठेका छन्। पूर्वी शैली र पश्चिमी क्षत्रपका लेखनमा भने डीकोरेखामा तेर्सो रेखा थपी **आकार**को मात्रा बनाइएको हुन्छ। कुषाणलेखनमा डीकोरेखाबाट माथि उठी देब्रेतिर वक्र हुँदै ढल्केको रेखाले **ह्रस्व** इकारको मात्रा र दुई रेखाहरूले दीर्घ ई बनाइएका छन्। व्यञ्जनको तल्लो टुप्पोबाट ठाडो वा तेर्सो रेखा कमबेसी मोडेर **उ** बनाइएको पाइन्छ; दीर्घ **ऊ**मा देब्रे भागमा एक अर्को धर्सो तानिएको हुन्छ। पूर्वी दक्कन, र विजयगढका अभिलेखहरूमा अलंकरणको लागि मात्रारेखा निकै मोडिएका हुन्छन्। चौथो शताब्दीको इलाहाबादस्तंभलेखमा वर्णको बनावटबमोजिम तीन किसिमले **उकार**को मात्रा बनाइएका छन्: एक, तल्लो भागमा ठाडो रेखा जोडेर, दुई, दाहिने भुजालाई माथितिर मोडेर र तीन, देब्रे फर्किने अंकुश बनाएर। दीर्घ **ऊ**मा यसै गरी यस्तो एक अर्को रेखा वा अंकुश थपिएका हुन्छन्। स्वरवर्ण **इ**का र अनुस्वारका विन्दुहरू केही समयसम्म मथुराको कुषाणलेखनमा तेर्सा रेखाका रूपमा परिवर्तित भएतापनि पछि पुनः विन्दु नै कायम भएका छन्।

### (४) डीकोको विकास

शकक्षत्रप शैलीका वर्णको ऊर्ध्वरेखाका शीर्षभागले लेखकहरूको ध्यान आकर्षित गऱ्यो र उत्तर भारतमा छोटो तेर्सो रेखाको डीको चलनमा आयो।

कालान्तरमा पूर्वी मालवामा शायद दुइतीनपल्ट डीकोरेखालाई कोर्ने प्रवृत्तिले गर्दा डीको मोटो हुनगयो, जसबाट चारकुने डीकोको विकास भयो। मालवाका आरंभिक गुप्त अभिलेखहरूमा ठोस चारकुने डीको र वाकाटक र अन्य शासकहरूका अभिलेखहरूमा खोक्रो चारकुने बाकस जस्तो डीको पाइन्छ। विजयगढ र नागार्जुनीकोण्डाका लेखोटमा अर्धचन्द्राकार डीको पाइन्छ। दानीले यसैबाट त्रिकोण डीको वा किलाटाउके डीकोको विकास भएको मानेका छन्। तर त्रिकोण डीकोको बीज स्वयं मथुराको शकक्षत्रप वर्णहरूका खास किसिमको ऊर्ध्वरेखामा पाइन्छ। मोहेनजोदाडोको कुषाणस्तूपमा प्राप्त माटाको भाँडामा कुँदिएका केही वर्णहरूको डीको खोक्रो त्रिकोणात्मक छ। पूर्वी दक्कनका अभिलेखहरू, साँचीको एक अभिलेख, मथुराको चन्द्रगुप्त द्वितीयको अभिलेख, सुसुनियाअभिलेख, शोरकोटको अभिलेख र महाराज हस्तिन्को मझगाँव ताम्रपत्रलेखमा त्रिकोण डीको पाइन्छ। यसरी दोस्रो कालमा विभिन्न ठाउँहरूमा सात प्रकारका यस्ता डीकाहरू विकसित भए:[२३] १. मोटोटाउके, २. छोटो तेर्सो, ३.छोटो मोटो, ४.ठोस चारकुने, ५.अर्धचन्द्राकार, ६. खाली त्रिकोण र ७. ठोस त्रिकोण। डीकोको विकासले वर्णका स्वरूप फेरिएको भैं लाग्छ। वर्णहरूलाई सीधा पंक्तिमा लेख्न मदत गरेकोले डीकोको कारण लेखनमा समानुपातिताको गुण स्पष्ट देखिन्छ।

## (५) अलंकरणप्रवृत्ति

मात्राचिह्न, र वर्णहरूका ऊर्ध्वरेखा र मात्राचिह्नलाई लम्ब्याएर, घुमाएर, घुमुर्काएर र लामो ठाडो रेखाको टुप्पोलाई प्राय: दायाँ माथितिर मोडेर अलंकारको प्रभाव पैदा गरिएको पाइन्छ। लेखाइलाई सुन्दर रूप दिने प्रयासको विकास पूर्वी दक्कनका नागार्जुनीकोण्डा र जोगेचयपेटामा पाइन्छ। अलंकरणको कारण वर्णहरूको आन्तरिक बनावटमा खासै फरक आएको पाईंदैन। बरु तल र माथिका वक्र र धुमावदार रेखाहरूका बीचमा मूलवर्णहरूमा पंक्तिबद्धता बनिरहेको लाग्दछ। पूर्वी मालवा हुँदै यो विशेषता राजस्थानसम्म पुगेको पाइन्छ।

## टिप्पणी

१. भारतमा सर्वप्रथम थिचेर चिह्न अङ्कित गर्ने प्रविधिले निर्मित आहत वा पञ्चमार्कड सिक्का प्रचलित थियो। अलेक्जेण्डरको आक्रमणपछि पहिलोपल्ट उत्तरपश्चिम भारतमा यूनानी लिपिको लेखभएका र ईसापूर्व दोस्रो शताब्दीदेखि खरोष्ठी र ब्राह्मीमा लेख भएका सिक्काहरूको चलन चलेको पाइन्छ।

२. कैयौं लेखोटहरूलाई पहिले ईसापूर्व तेस्रो शताब्दीका अशोकका पालाका भन्दा पुरानो मानिन्थ्यो। वर्तमान उडीसा राज्यमा पर्ने कलिङ्गका शासक खारवेलको पुरी नजिकैको उदयगिरिको हाथीगुम्फा अभिलेखलाई ईसापूर्व दोस्रो शताब्दीको र अजमेरको बडलीमा पाइएको अभिलेखलाई ईसापूर्व पाँचौ शताब्दीको मानियो। हाल हाथीगुम्फा अभिलेखलाई पहिलो शताब्दी ई.को र बडलीको

अभिलेखलाई ईसापूर्व पहिलो शताब्दीको मानिन्छ। बडलीको अभिलेखको चर्चा अध्याय ८ र १०मा भएको छ।

३. हाथीगुम्फा अभिलेखमा कुनै तिथिमिति छैन र लेखाई निकै पुरानो लाग्छ र अस्पष्ट छ। यस आधारमा खारबेलको समय ठुलो मतभेदको विषय भएको छ। हाल सबै पुरालेखनविद्हरूले यसलाई पहिलो शताब्दीको मानेका छन्। हेर्नुस् : Ahmad Hasan Dani, **Indian Palaeography** (Oxford : Clarendon Press, 1963) P. 58; T.P.Verma, **The Palaeography of Brahmi Script in North India** (Varanasi : Siddharta Prakasan, 1971) pp.86 ff.

४. यस वंशका अन्तिम राजा यज्ञश्री शातकर्णी थिए, जसको राज्यकाल १७०-१९९ ई.मानिन्छ। हेर्नुस् K.A. Nilakanta Sastri, G. Srinivasachari, **Advanced History of India** (Allied Publishers, 1982) pp.146-47, 807.

५. **उही,** पृष्ठ १६४-६५। यसमा राजाले सुदर्शन नामक बाँध बनाएको कुरा छ। काव्यमय प्रौढ संस्कृतको यस अभिलेखमा रुद्रदामाको बहादुरीको तारीफ गरिएको छ। हेर्नुस् **Epigraphia Indica,** viii, 36-49.

६. उत्साही धर्मप्रचारक कनिष्कलाई बौद्धहरू दोस्रो अशोक मान्छन्। यिनलाई चौथो बौद्धसम्मेलनको आयोजना गर्ने, पेशावरमा भव्य स्तूप बनाउने र शकसंवत् चलाउने श्रेय दिइन्छ। यसै वेलादेखि बौद्धहरूले संस्कृत भाषा अपनाएको बुझिन्छ। त्यस बौद्धसम्मेलनले **महाविभाषा** नामक बौद्धदर्शनको विश्वकोश तयार गरेको विश्वास गरिन्छ। हेर्नुस् **उही,** पृष्ठ १५९-६०।

७. यिनीहरूले आफ्ना सिक्कामा ग्रीक देवताहरूका साथसाथ हिन्दु देवता र बुद्धका मूर्ति बनाए; हिन्दु र बौद्धधर्म र संस्कृति अपनाए तथा ब्राह्मीलिपिको विकासमा ठूलो योगदान दिए। तिनका शासनकालमा पहिलोपल्ट बुद्ध र बोधिसत्वका प्रस्तर मूर्तिहरू बने।

८. J.F.Fleet, ed. *Inscriptions of the Early Gupta Kings, Corpus Inscriptionum Indicarum,* Vol. III, 1-17. अशोकको इलाहाबाद-कोसम स्तम्भमा कुँदिएको समुद्रगुप्तको प्रशस्तिमा विजयअभियानको वर्णन छ। नेपालको उल्लेख गर्ने यो पहिलो लेखोट हो। यसै अभिलेखको लेखावटसँग लिच्छविकालको लेखनको उत्पत्तिको सम्बन्ध रहेको कुरा अध्याय १३मा सविस्तर बताइने छ।

९. यो अहमद हसन दानीको अध्ययनमा आधारित छ। हेर्नुस् **टिप्पणी** ३, पृष्ठ ५१-१०४।

१०. पिपरहवा अस्थिपात्रअभिलेख, गोरखपुरको सोहगौरा ताम्र (ढलोट)पत्र र बंगलादेशको बोगरा जिल्लाको महास्थानअभिलेखहरू पहिले अशोकको पालाकाभन्दा पुराना मानिन्थे। हेर्नुस् : अध्याय ८ र १०।

११. खारवेलका हाथीगुम्फा अभिलेखको तिथिको बारेमा हेर्नुस् माथि **टिप्पणी** ३।

१२. अ.ह.दानी **टिप्पणी** ३, पृष्ठ ५६।

१३. **उही** पृष्ठ ५८-५९।

१४. यसलाई ओझाले ईसापूर्व पाँचौं शताब्दीको मानेका थिए। हेर्नुस् अध्याय ८।

१५. एरणका केही सिक्काहरूमा **'एरकन्य'** लेख माथिबाट तल र केहीमा माथिल्लो किनारामा बायाँबाट दायाँ लेखिएको छ, केहीमा **'धमपालस'** लेख तीन किनारामा

दायाँबाट बायाँतिर उल्टा वर्णहरूले लेखिएको छ। तक्षशिलाका सिक्काहरूका साथ एरणका सिक्काहरूबाट बूलरले ब्राह्मीको उत्पत्तिको समाधान खोजे। यथार्थमा एरणका सिक्का साँचो बनाउँदा भएको गल्तीको परिणाम थियो। शातकर्णीको एक सिक्कामा पनि उल्टा वर्ण कुँदिएका छन्। यसको विस्तृत चर्चा अध्याय ८ र १०मा भएको छ।

१६. भट्टिप्रोलुका अभिलेखलाई ईसापूर्व दोस्रो शताब्दीको मान्दै बूलरले दक्षिण भारतमा पहिलेनै भिन्न स्रोतबाट ब्राह्मीको द्रविड प्रकारको विकास भएको र अशोककालीन केही वर्णहरू त्यसैबाट विकसित भएको अनुमान गरेका थिए। हेर्नुस् अध्याय ८ र १०।

१७. दानी **टिप्पणी** ३, पृष्ठ ६३-६४। यसमा मोटो टाँकाको कलमको उपयोगको साथसाथ त्यसको खास प्रयोगको पनि महत्त्व देखिन्छ।

१८. दानी, **उही,** पृष्ठ ८५-८६।

१९. दानी, **उही,** पृष्ठ ९०।

२०. चौथो शताब्दीको समुद्रगुप्तको इलाहाबाद अभिलेखमा र पाँचौं शताब्दीको लिच्छविलिपिमा पनि यस किसिमले धस्काएर लेखिएका वर्णहरू पाइन्छन्। यसको सम्बन्ध लिच्छविकालको लेखनको उत्पत्तिको साथ रहेको कुरा अध्याय १३मा सविस्तर बताइने छ।

२१. दानी, पृष्ठ १००। फ्लीट, होएर्नले जस्ता पुराना पुरालेखनविद्हरूले 'गुप्तवर्णमालाका क्षेत्रीय प्रकारको' चर्चा गरेका छन्। आरंभमा सीमित साधनका आधारमा गुप्तकालमा प्रचलित सबै ठाउंको लेखनलाई गुप्तलिपि भनियो। पछि 'गुप्तलिपि'लाई उत्तरी र दक्षिणी प्रकारमा र अझ पछि पूर्वी र उत्तरी गरी अनेक प्रकारमा विभाजित गरियो। दानी लेख्छन् : त्यस अध्ययनविधिको अनुसरण गर्ने हो भने आज उत्तरभारतमा प्राप्त भएका दोस्रो शताब्दीदेखि चौथो शताब्दीका अभिलेखहरूको लेखनको व्याख्या गर्न सकिँदैन। यसकारण दानीले पुरानो अध्ययनविधिमा परिवर्तनको जरुरत महसुस गरेका छन्।

२२. उही पृष्ठ १०३।

२३. उही पृष्ठ ७९-८२।



# अध्याय तेह्र
# लिच्छविलिपि

४५९ ई.देखि काठमाण्डौ उपत्यका र वरिपरिका क्षेत्रहरूमा प्रायः नियमित रूपमा लेखनका उदाहरणहरू पाइनथाल्छन्।[1] सुरुका अभिलेखहरूमा राजा मानदेवको (४५९-५०५ ई.) नाम पाइन्छ जसका वंशजहरूले आफ्नु परिवारलाई लिच्छवि भनेका छन्।[2] आठौं शताब्दीसम्मको लिच्छविकालका राजाहरूमा वसन्तदेव (५०६-५३२), शिवदेव प्रथम (५९०-६०४), अंशुवर्मा (६०५-६२१), जिष्णुगुप्त (६२४-६३३), विष्णुगुप्त (६३३-६४१) नरेन्द्रदेव (६४३-६७९), शिवदेव द्वितीय (६७९-७०५) र जयदेवका (७१३-७३३) अभिलेखहरू विशेष महत्त्वका छन्। यस कालका १९५ जति अभिलेखहरू ससाना लेख भएका नानाथरिका तामाका सिक्काहरू र केही ताडपत्रका ग्रन्थहरू पुरालेखनअध्ययनका महत्त्वपूर्ण स्रोत र साधन हुन्। लिच्छविलिपि केही परिवर्तनको साथ १००० ई.सम्म जारी रहेको पाइएको छ। ७३३ ई.मा लिच्छविशासन टुंगेतापनि त्यसबेलासममको लेखनलाई यहाँ यो नाम दिइएको हो। यस लेखनको उत्पत्ति र नाम यहाँ सरोकारको विषय भएको छ।

## उत्पत्तिको प्रश्न

सीधै अशोककालीन ब्राह्मीबाट नेपालभित्रै लेखनको विकास भएको तथ्यको कुनै प्रमाण पाइँदैन। यसैले लिपिको मूल समकालीन लेखनहरूमा कतै खोज्नु पर्छ। राजा मानदेवको समयभन्दा एक शताब्दी पहिलेदेखि विशाल गुप्तसाम्राज्यमा प्रचलित नानाथरिका लेखनशैलीहरूलाई गुप्तलिपि भन्ने नाम दिइएको छ।[3] तीमध्ये कुनै एक स्वाभाविक रूपमा नेपाली लिपिको उत्पत्तिको कारण हुनसक्छ, सबै होइन। यस कारण लिच्छविकालमा प्रचलित लिपिलाई गुप्तकालीन लिपिको एउटा प्रकार भन्नु धेरै गलत हुँदैन।[4]

चौथो शताब्दीको पूर्वार्धमा चन्द्रगुप्त प्रथमद्वारा भएको गुप्तसाम्राज्यको निर्माणमा विहार राज्यको वैशालीका लिच्छविहरूको ठुलो योगदान रहेको मानिन्छ। चन्द्रगुप्तले ज्वाईंको नाताले लिच्छविहरूबाट सहयोग पाएका थिए।[5] त्यहाँ ईसापूर्व छैठौं शताब्दीदेखिनै लिच्छविहरूको आपसमा चुनेर राज्य गर्ने गणतन्त्र व्यवस्था रहेको बुझिएको छ।[6] नेपालका लिच्छविहरू पनि कुनै समयमा वैशालीबाटै आएका मानिन्छन्। चन्द्रगुप्तका छोरा समुद्रगुप्तले आफ्नो इलाहाबादस्तंभअभिलेखमा सम्राट्लाई कर वा कोसेली पठाई खुशी तुल्याउने सीमावर्ती राज्यहरूको सूचीमा नेपालको उल्लेख गरेका छन्।[7] यसबाट नेपालमा गुप्तहरूको कुनै किसिमको राजनीतिक प्रभाव रहेको बुझिन्छ। यद्यपि त्यो कुन प्रकृतिको थियो र कुन समयसम्म रह्यो भन्ने कुरा जनाउने कुनै साधन पाइएको छैन। त्यसको १०० वर्ष बित्दानबित्दै नेपालमा गुप्तकालीन भारतको समान संस्कृत भाषामा अभिलेख लेखाउने र सिक्का (टक) प्रसारित गर्ने चलनको

साथसाथ हिन्दु र बौद्धधर्म, कला र संस्कृतिको विकास भइरहेको देखाउने प्रशस्त प्रमाण पाइन्छ। यसलाई संयोग मात्र भन्न मिल्दैन। राजा मानदेवभन्दा पहिलेको नेपालको इतिहास अज्ञात छ र त्यतिखेर यहाँ बलियो लिच्छविराज्य रहेको कुनै प्रमाण पाइँदैन।

गुप्तसम्राट् स्कन्दगुप्तले (४५५-४६७) हूणहरूसँगको युद्धमा सम्पूर्ण शक्ति लगाउनु परेको वेलामा[८] नेपालमा मानदेवको शासन सुरू भएको देखिन्छ। त्यसै वेलादेखिको नेपालको लेखनमा भारतको कुनै खास शैलीमा विकसित विशेषताहरू देखापर्छन्। ती विशेषताहरू गुप्तसाम्राज्यमा प्रचलित सबै लेखनशैलीहरूमा पाइदैनन्। नेपालको उल्लेख गर्ने समुद्रगुप्तको इलाहाबादस्तम्भ अभिलेख अशोकको अभिलेखयुक्त स्तंभमा कुँदिएको छ। त्यो अशोकस्तम्भ कौशाम्बी वा कोसमबाट पछि इलाहाबाद ल्याई गाडिएको बुझिन्छ। त्यस लेखनमा केही वर्णहरूका स्वरूप सर्वथा बेग्लै भएका छन् जो शीघ्रताले धस्काएर लेख्ता अर्थात् कर्सिभ लेखनका कारण बनेका मानिन्छन्। यो विशेषता भारतमा पहिलोपल्ट कौशाम्बीशैलीमा देखापर्छ।[९] समुद्रगुप्तको उक्त स्तम्भअभिलेखको लेखनलाई कौशाम्बीशैलीको गुप्तकालीन विकास मानिएको छ।[१०] नेपालको उल्लेख गर्ने उक्त अभिलेखमा लिच्छविलिपिको आधार खोज्नु अनेक दृष्टिले उपयुक्त देखिन्छ। (फलक ७)।

## नामकरण

भारतको गुप्तराजवंशको शासनकालमा प्रचलित लेखनसँग मिल्दोजुल्दो भएकोले पुरालेखनविद्हरूले लिच्छविकालमा प्रचलित लेखनलाई गुप्तलिपि भने।[११] नेपालसरकारको पुरातत्त्वविभागले वि.सं.२०१७मा लिच्छविकालीन लेखनलाई 'लिच्छविलिपि' भन्ने नाम दियो।[१२] यस नयाँ नामको सम्बन्धमा पुरालेखनसम्बन्धी कारण देखाइएको छैन। नेपालमा प्रचलित आरम्भिक लेखन कौशाम्बीशैलीको चौथो शताब्दीको गुप्तकालीन लिपिबाट विकसित हो। तथापि यसमा कतिपय थप विशेषताहरू पनि पाइन्छन्। त्रिकोण डीकोमा कौशाम्बी वर्णहरू समकालिक केही पूर्वी भारतीय लेखोटमा पनि पाइन्छन्। अन्यत्र यो विशेषता लोप भइसकेपछि पनि यहाँ अरू कैयौं थप स्थानीय विशेषताहरूका साथ लामो समयसम्म कायम रहेको छ। भौगोलिक रूपमा विकट रहेको कारण पनि यहाँ यसो भएकोहुनु संभव छ। अन्यत्र छोटो समयमै कुनै क्षेत्रीय लेखनमा अर्को शैलीको प्रभाव पाइने उदाहरण धेरै पाइन्छन्। यी विशेषताहरूलाई रेखाङ्कित गर्न पाँचौं शताब्दीदेखि आठौं शताब्दीसम्मका लिच्छविकालीन अभिलेखहरू र त्यसै परम्परामा १००० ई.सम्म यहाँ विकसित लेखनलाई भिन्न नाम दिनु ठिक हुन्छ। यसको साथसाथै निम्नलिखित तथ्यहरूका आधारमा विचार गर्दा त्यसको लागि लिच्छविलिपि भन्ने नाम उपयुक्त देखिन्छ :

(१) गुप्तकालीन भारतमा चलेको कुनै लेखनशैलीबाट विकसित भएता पनि यसका आफ्नै विशेषता छन्, जसको आधारमा अरू लेखनशैलीहरूबाट यसलाई छुट्याउन सकिन्छ।

(२) यो लेखन एउटै राजवंशको संरक्षणमा सीमित क्षेत्रभित्र आफ्नै स्वाभाविक गतिमा विकसित भएको छ ।

(३) यो लेखन अरू लेखनहरूको तुलनामा खास किसिमको मात्र होइन दीर्घजीवी पनि छ । लिच्छविलिपि लिच्छविशासनको अन्त भएपछि पनि झण्डै दुई शताब्दीसम्म अर्थात् झण्डै छ सय वर्षसम्म केही परिवर्तित हुँदै चलिरह्यो र कालान्तरमा अनेक शैलीहरूको उत्पत्तिको कारण बन्यो ।

## तुलनात्मक वर्णमाला

इलाहाबादको स्तम्भलेखको लेखन र मानदेवको समयको नेपालको लेखनको तुलना गर्नु निकै चाखलाग्दो हुनेछ ।[१३] यसै निहुँले हामी लिच्छविवर्णमाला र मात्राशैलीसँग पनि परिचित हुने छौं । यसरी तुलना गर्दा मानदेव समुद्रगुप्तभन्दा एक शताब्दी पछिका हुन् भन्ने तथ्य बिर्सनु हुँदैन । यस कारण केही वर्णहरूका बाह्य स्वरूप, डीको र लेखाइमा फरक पाइन्छ । (फलक ९) ।

**अ** दुवै ठाउँको **अ**को देब्रेतिरको तल्लो भुजा वक्र हुँदै ऊर्ध्वरेखातिर झुकेको छ ।

**इ** तलमाथि गरी दुइ विन्दु र दायाँतिर ऊर्ध्वरेखा भएको इलाहाबादको **इ**का विन्दुहरूका ठाउँमा नेपालमा मसिना वृत्तहरू पाइन्छन् । यसै गरी अनुस्वार र विसर्गमा पनि यहाँ विन्दुका ठाउँ साना वृत्तहरूले लिएका छन् ।

**ए** नेपालमा **ए**को त्रिकोणका शीर्षविन्दुका स्थानपरिवर्तन भई देब्रेतिर गोलो छ ।

**क** धनचिह्नको स्वरूपको **क**को तेर्सो रेखा दुवैतिर झुकेको छ ।

**ख** इलाहाबादको दाहिनेतिर लंबवत् त्रिकोण र देब्रेतिर तल झर्ने छोटो ऊर्ध्वरेखा भएको **ख** नेपालमा बढी सुडौल र सन्तुलित बनेको छ ।

**ग** दायाँ भुजा लामो भएको **ग** मानदेवको पालामा देब्रे भुजाको मोटो र कोणात्मक रेखान्तको कारण बढी सन्तुलित भएको छ ।

**घ** इलाहाबादको प्रायःसमान भागमा विभाजित रहेको कोणात्मक **घ** नेपालमा बायाँ भाग गोल भई दायाँ भाग कोणात्मक भएको छ । **ङ** दुवै ठाउँमा संयुक्ताक्षरमा देखिने **ङ** नेपालमा बढी कोणात्मक भएको छ ।

**च छ** देब्रेतिर केही चुच्चो परेको वृत्ताकार **च** र दुई वृत्तहरूको दोहोरो गाँठो भएको **छ**मा धेरै फरक पाइँदैन ।

**ज** इलाहाबादको सोझो ऊर्ध्वरेखामा जोडिएका सोझा तेर्सा रेखाहरूको **ज**को ठाउँमा लिच्छवि **ज**को ऊर्ध्वरेखा बीचमा बाँगिएको छ र दाहिनेतिरका भुजाहरू तल ढल्केका छन् ।

**झ ञ** प्रायः संयुक्ताक्षरमा कम उपयोग गरिने **झ** र **ञ**मा खास फरक देखिँदैन । प्रारम्भिक लिच्छवि **ञ** र ७को अङ्कचिह्नमा अद्भुत समानता छ ।

**ट ठ ड ढ** अर्धवृत्ताकार **ट**, वृत्ताकार **ठ**, लम्बवत् **ड** र कुकुरपुछ्रे **ढ** नेपालमा बढी कोणात्मक बनेका छन् ।

**ण** इलाहावादको समान दाहिनेतिर गाँठोभएको र गाँठोरहित दुवै किसिमका **ण** नेपालमा पाइन्छन् ।

**त** गोल **त**को दाहिने भुजा नेपालमा झन् लम्ब्याइएको छ ।

**थ** वृत्तभित्र तेर्सो रेखा भएको इलाहावादको **थ**को देब्रेतिरको बीचको भाग यहाँ कहिलेकाहीं भित्र पसेको पाइन्छ । संयुक्ताक्षरमा तेर्सो रेखा ऊर्ध्वरेखामा परिणत भएको पाइन्छ ।

**द** इलाहावादको अर्धवृत्तात्मक **द**को पृष्ठभाग नेपालमा कोणात्मक बनेको छ ।

**ध** झण्डै अण्डाकार **ध** इलाहावाद र नेपालमा प्रायः समान छ । तथापि यहाँ देब्रेतिरको बीचको भाग केही भित्र पसेको हुन्छ ।

**न** तल्लो भागमा गाँठो परेको इलाहाबाद स्तंभलेख र मानदेवको पालाको **न**मा लेखाइको पद्धतिको कारणबाहेक खास फरक देखिँदैन ।

**प** इलाहाबादको माथितिर मुख खुल्ने सादा **प**को ठाउँमा यहाँ देब्रे भाग बढी गोल र दाहिने तल्लो भाग कोणात्मक हुने गरी दुई स्वरूपमा विकसित भएको छ ।

**फ प**को दाहिने भुजालाई भित्रपट्टि मोडेर बनाइएको **फ**मा विशेष फरक देखिँदैन ।

**ब** इलाहाबाद र नेपालमा प्रचलित लेखनमा **ब**को आकारप्रकारमा खास फरक देखिंदैन, यद्यपि यहाँ यस वर्णको दाहिने भाग केही बढी भित्र पसेको पाइन्छ ।

**भ** झण्डै देवनागरीको डिको रहित **त**को आकारको इलाहाबादको **भ**को दाहिने ऊर्ध्वरेखा नेपालमा केही लामो छ र बायाँतिरको रेखान्त मोटो छ ।

**म म**को विकासको इतिहास चाखलाग्दो छ । देवनागरीको ४ अङ्कचिह्न जस्तो ब्राह्मी **म**को पुरानो स्वरूप सामान्य परिवर्तनको साथ मालवा, गुजरात, दक्कन, मैसूर, महाराष्ट्र, आन्ध्र, दक्षिणभारत र श्रीलंका लगायत दक्षिणपूर्व एशियाका विभिन्न क्षेत्रहरूमा झण्डै सातौं शताब्दीसम्म प्रचलित रहेको छ । कौशाम्बीको दोस्रो-तेस्रो शताब्दीको लेखनमा माथितिर मुख खुल्ने नौलो किसिमको **म**को विकास भएको छ । **म**को अर्को प्रकारमा देब्रेतिर छोटो पुच्छर पाइन्छ । यसै शैलीको इलाहाबादको समुद्रगुप्तको स्तंभलेखमा स्वाभाविक रूपमा पुच्छ्रे **म**को उपयोग भएको छ । मानदेवको पालाका अभिलेखहरूमा दुवै

किसिमको कौशाम्बी **म** पाइन्छ। यहाँ **म**को तल्लो तेर्सो रेखा दायाँतिर ढल्केको छ। अर्को प्रकारको **म**मा पुच्छर बढी लामो हुन्छ र देब्रेतिर मोडिएको हुन्छ। नेपालमा ४ अङ्कचिह्न जस्तो **म** अशोकका अभिलेखहरूमा बाहेक कहीं पाइदैन।

**य** माथिपट्टि फर्केको अर्धवृत्तको देब्रे भुजा भित्रपट्टि मोडिएको, देब्रेतिरको ठाडो रेखा कोणात्मक रहेको र बीचमा लामो ऊर्ध्वरेखा भएको इलाहाबादको **य** मानदेवको पालामा निकै परिष्कृत भएको छ। यो यहाँ कम लम्बाइको र बायाँ भाग गोल र दायाँभाग कोणात्मक भएको छ।

**र** ऊर्ध्वरेखाको **र** इलाहाबाद र नेपालमा खास फरक छैन, तथापि यहाँ रेखान्तमा ध्यान दिइएको र त्रिकोण डीकोको कारण विशिष्ट बनेको छ।

**ल** पहिलो शताब्दी ई.मा लम्बवत् **ल** कसरी छोटियो र समान भएको भुजाको देब्रे टुप्पालाई अंकुशको रूप दिइयो भन्ने कुरा माथि गरिएको छ। त्यस प्रकारको **ल** पश्चिमी दक्कन, गुजरात, मालवा र काठियाबाडदेखि इण्डोनेशिया, श्रीलंका लगायत दक्षिणपूर्व एशियाका विभिन्न क्षेत्रहरूमा सातौं शताब्दीसम्म पनि कायम रहेको पाइन्छ। दोस्रो शताब्दी ई.देखिका कौशाम्बीका अभिलेखहरू र इलाहाबादको समुद्रगुप्तको स्तंभलेख र नेपालमा लामो ऊर्ध्वरेखाको टुप्पो अंकुशको रूपमा देब्रे फर्केको **ल** उपयोगमा आएको पाइन्छ।

**व** इलाहाबादको त्रिकोण स्वरूपको **व**को देब्रे भाग मानदेवको पालामा गोल बनेको छ। **श** इलाहाबादको सादा **श** नेपालमा बढी कोणात्मक र सन्तुलित बनेको छ।

**स ष** ब्राह्मीको **स**को विकासको चर्चा चाखलाग्दो छ। पहिलो शताब्दीमा शकक्षत्रप शैलीमा माथि दुई भुजा हुने कतिपय वर्णहरू समानुपातिक बनेपछि मथुरामा पहिलोपल्ट **स**को देब्रेतिर तल झुक्ने अङ्कुशको ठाउंमा गोल गाँठोको विकास भयो। यो **स** कौशाम्बीमा स्थिर रहेको छ र इलाहाबादस्तम्भलेखमा पनि पाइन्छ। यो शाायद धस्काएर लेख्दा बनेको स्वरूप थियो जो गंगायमुना क्षेत्रहरूमा प्रचलित रह्यो। मध्यभारत, राजस्थान, काठियाबाड, पूर्वी मालवा, महाराष्ट्र, दक्कन, मैसूर, आन्ध्र, दक्षिणभारत, श्रीलंका, जाबा, सुमात्रा बोर्नियो, मलाया, बर्मा, अराकान र सियामसम्म ईसवीको सातौं शताब्दीसम्म पनि लेखाइमा सामान्य स्थानीय परिवर्तनको साथ पुरानो अंकुशे **स** कायम रहेको छ। नेपालका पाँचौ शताब्दीका अभिलेखहरूमा उपयोग हुने **स** इलाहाबाद स्तंभलेखको **स**भन्दा केही फरक छ। यहाँको **स**को गाँठो इलाहाबादको समान गोल नभई त्रिकोणात्मक बनेको छ। लिच्छविलेखनमा इलाहाबादको गोल गाँठोको वर्ण पनि कायम रहेको छ जो **ष**कोलागि निर्धारित गरिएको छ। यसरी यहाँ दायाँतिर गोल गाँठो भएको इलाहाबादको **स**लाई **ष** र गाँठोलाई त्रिकोणात्मक रूप दिई दन्त्य **स** निर्धारित गरिएको छ। **स** र **ष** जस्ता भिन्नाभिन्नै व्यञ्जनहरूको मिल्दाजुल्दा आकारप्रकारमा विकास हुनु उल्लेखनीय छ। यहाँ **प**को बीचमा तेर्सो रेखा थपेर बनाइएको मूर्धन्य **ष** पहिलोपल्ट सातौं शताब्दीमा देखापर्छ। यस भेदको बारेमा चाल नपाएका अहमद हसन दानीले नेपालमा बंगालमा झैं सातौं शताब्दी

ईसवीभन्दा पहिले **ष** ज्ञान नभएको मानेका छन् ।[१४] यो सत्य होइन भन्नु परोइन ।

**ह ह**को विकासकथा पनि उल्लेखनीय छ । **ह**को पुरानो स्वरूपमा लम्बाई कम गरिएको, माथितिर दुइ ठाडा भुजा भएको र दायाँ भुजाको टुप्पो घुमाएर तल झुकाइएको हुन्छ । यस प्रकारको **ह** मालवा, गुजरात, दक्कन, महाराष्ट्र, मैसूर, आन्ध्र र दक्षिण भारतको साथ साथ मथुरा, उत्तर पश्चिमी भारत, मध्यभारत र राजस्थान जस्ता धेरैजसो ठाउँमा झण्डै आठौं शताब्दीसम्म प्रचलित रह्यो । पहिलोपल्ट कौशाम्बीका **ल**को झैं **ह**को विकास लाम्गे अंकुशको रूपमा भयो । यस प्रकारको **ह**मा लामो ऊर्ध्वरेखाको तल्लो टुप्पो केही दाहिने गई तल झुक्दै अंकुशको समान देब्रेतिर फर्केको हुन्छ । स्वभावत: इलाहाबाद स्तंभलेख र नेपालमा पनि अंकुशे ह पाइन्छ । तर नेपालका आरम्भिक अभिलेखहरूमा हको ऊर्ध्वरेखा केही दायाँतिर ढल्केको छ ।

## मात्राचिह्न

इलाहाबादस्तंभलेख र आरम्भिक लिच्छविलेखनमा मात्राचिह्नहरूको शैली यस प्रकार छ :

**आ ा ख ग ढ ण थ ध ब ज ट** बाहेक सबै व्यञ्जनहरूको डीकोरेखाबाट दायाँतिर जाने तेर्सो रेखाको आकारको मात्राचिह्न दुवै ठाउंमा पाइन्छ । तर यहाँ यसको टुप्पो केही तलतिर झुकेको छ । दुवै ठाउँहरूमा व्यञ्जनहरूको बनावटअनुरूप क्रमश: अङ्कुश र ऊर्ध्वरेखाको उपयोग गरी अन्य दुईवटा आकारका मात्राचिह्नहरू यसरी विकसित भएका देखिन्छन् : एक, **ख ग ठ ण थ ध** र **ब** मा दाहिने भागमा, बीचमा वा तल अङ्कुश लगाई आकारको मात्रा बनाइएको छ । दुई : **ज**को बीचको तेर्सो रेखाबाट तथा **ट** र **ङ**को माथिल्लो दाहिने टुप्पाबाट छड्के ऊर्ध्वरेखा जोडेर **ङा जा टा** र बनाइएका छन् । **थ ध ब ज ट**मा यी मात्राचिह्नहरू यहाँ निकैसम्म चल्यो । लिच्छविलिपिविकासको चौथो चरणदेखि आकारको मात्राचिह्नमा एकरूपता आएको कुरा तल देखाइएको छ ।

**इ ि** शीर्षभागबाट माथि उठी देब्रेतिर तल झुक्ने कौशाम्बीशैलीको इको मात्रामा लिच्छविलेखनमा तलतिर बढी झुक्ने प्रवृत्ति बढेको पाइन्छ ।

**ई ी** दीर्घ ईकारको मात्रामा इलाहाबाद र लिच्छविलेखनमा फरक पाइन्छ । नेपालमा यसको विकास बेग्लै किसिमबाट भएको छ । इलाहाबाद स्तंभलेखनमा डीकोरेखाबाट अङ्कुश झैं बायाँभन्दा दायाँ लामो हुने गरी दुई रेखाहरू माथि उठाइएका हुन्छन् । तर **श्री**मा भने **श**को बीचको तेर्सो रेखा बाहिरसम्म बढाई त्यसको दुवै टुप्पोबाट माथि जाने ऊर्ध्वरेखा बनाइएको पाइन्छ । नेपालमा भने श्रीलगायत सबै व्यञ्जनहरूमा देब्रेतिरको रेखा घुमुर्क्याउँदैं माथि लगी दाहिनेतिर तल झारिन्छ । योसँग मिल्दोजुल्दो ईकारको मात्राचिह्न मथुरा र उत्तरपश्चिम क्षेत्रका पाँचौं शताब्दीका केही गुप्त अभिलेखहरूमा पनि पाइन्छ । बंगालमा भने यस्तो ईकारको मात्रा पहिलोपल्ट सातौं शताब्दीमा पाइन्छ ।[१५]

**उ ु ऊ ू** वर्णहरूको बनावट हेरी इलाहाबाद र काठमाडौं उपत्यका दुवै ठाउँमा उकार र ऊकारको मात्रा तीन किसिमले बनाइएका छन् :

(क) **ख घ च छं ज न प म य ल व स ष ह** जस्ता व्यञ्जनहरूको तल्लो दायाँ भागबाट सानो ऊर्ध्वरेखा जोडी उकारको मात्रा बनाइएको हुन्छ। **ऊ** बनाउन **उ**को ऊर्ध्वरेखाको तल्लो टुप्पाबाट देब्रेतिर केही तल झुक्ने तेर्सो रेखा थपिन्छ।

(ख) **ग त द भ श** जस्ता दुइ भुजाहरू भएका व्यञ्जनहरूमा दायाँतिरको भुजाको तल्लो टुप्पोलाई माथितिर फर्काई मात्रा बनाइएको हुन्छ। लिच्छविलिपिमा यो टुप्पो निकै माथिसम्म गएको हुन्छ। यस प्रकारको उकारको मात्रालाई दीर्घ बनाउन माथि जाने भागमा तल झर्ने अङ्कुश थपिएको हुन्छ।

(ग) **क र र**मा देवनागरीको उकारको मात्रा झैं ठाडो रेखाको तल्लो टुप्पोबाट देब्रे फर्कने अङ्कुश बनाइएको हुन्छ र दीर्घ बनाउन त्यसको माथिल्लो भागमा अर्को अङ्कुश थपिएको छ।

**ए े ऐ ै ओ ो औ ौ** डीको रेखाबाट देब्रेतिर ढल्केर माथि उठेको रेखा र देब्रेतिर जाने तेर्सो रेखा गरी दुवैले **ए**कारको मात्रा जनाउंछन्। इलाहाबादमा झैं लिच्छविलिपिमा दुवैको बराबर उपयोग भएको छ। दुईवटा एकारका चिह्न हुने **ऐ**को र **औ**को मात्रामा दुवै ठाडो र तेर्सो रेखा दुवैको एकसाथ उपयोग भएको पाइन्छ।

## संयुक्तव्यञ्जन

अशोककालीन ब्राह्मीमाझैं पहिले उच्चारण गरिने व्यञ्जनको तल्लो भागमा पछि मात्रास्वरसहित पछि उच्चारण हुने व्यञ्जन प्राय: धस्काएर सानो आकारको बनाउने चलन कौशाम्बी र लिच्छवि दुवै लेखनहरूमा पाइन्छ। संयुक्ताक्षरमा पहिले उच्चारण हुने खास गरी **ञ र** भने आकारमा सानो वा धस्काएर लेखिएका हुन्छन्। दुवै ठाउँको संयुक्ताक्षरमा बढीमा तीनओटा व्यञ्जनहरूसम्म पाइन्छन् : र्व्व, क्ष्णा (क्ष्णा), य्र्चा, र्द्ध (र्द्ध), स्त्र(स्त्र), आदि।

यस प्रकार आरम्भिक लिच्छविलिपिका अधिकांश विशेषताहरू समुद्रगुप्तको इलाहाबादस्तंभलेखको लेखनसँग बढी नजिक देखिन्छन्, तथापि यहाँ ती बढी विकसित र प्रौढ छन्। झण्डै एक सय वर्ष पछिको लिच्छविलिपिमा भएको विकासको अधिकांश मूल प्रवृत्ति इलाहाबाद स्तंभलेखमै पाइन्छन्। त्यसबाहेक लिच्छविलिपिमा मोटो टाँकाको लेखाई, सुडोल वर्णहरू, त्रिकोण डिको र स्पष्ट रेखान्त यस्ता विशेषताहरू हुन् जो संभवत: स्थानीय लेखकहरूको व्यक्तिगत रुचि, कलाप्रियता र अभ्यासका परिणामस्वरूप यहीँ विकसित भएका हुन्। यी विशेषताहरू एकसाथ अन्यत्र कतै पाइदैनन् जो स्वभावत: समुद्रगुप्त (मृत्युवर्ष ३७५ ई.) र मानदेवको (आरम्भ ४५९ ई.) बीचको १०० वर्षको अन्तरालमा विकसित भएका देखिन्छन्। लिच्छवि **श** र **ष**को साथसाथ अन्य

कतिपय वर्णहरूको विकासको एक महत्त्वपूर्ण कारण शीघ्रताले धस्काएर लेख्ने प्रवृत्ति प्रतीत हुन्छ। यो प्रवृत्ति स्वयं कौशाम्बीशैलीको विशेषता हो र नेपालमा पनि मुखर रह्यो।

## व्युत्पत्तिको प्रक्रिया

यहाँको लेखनमा कतिपय कुरामा देखिने भिन्नताले नेपालमा पाँचौं शताब्दीको उत्तरार्धदेखिमात्र लेखनको चलन चलेको भन्ने कुरामा शङ्का उब्जाउंछ। यस अवस्थामा दुईवटा सम्भावना देखापर्छन् : या त नेपालमा प्रवेश गर्नुअघि त्यस लेखनको अभ्यास कतै भइरहेको थियो या नेपालमा कुनै किसिमको प्रभाव स्थापित गर्ने समुद्रगुप्तकै पालामा लेखनको प्रवेश भइसकेको थियो। अहमद हसन दानीको विचारमा कौशाम्बीलेखनले बंगाल हुँदै नेपालमा प्रवेश गरेको थियो।[१६] उनले बंगालमा कौशाम्बीलेखन छैठौं शताब्दीसम्म पाइने तथ्यको उल्लेख गरेका छन्, जबकि त्यसशैलीका विशेषता नेपालमा धेरैसम्म रहे। विभिन्न प्रसङ्गहरूमा आफ्नो मतको समर्थनमा अहमद हसन दानीले व्यक्त गरेका मुख्य तर्कहरू हुन् :

(१) मानदेवको पालाको लेखनमा मुख्य वर्णहरूका आकारप्रकार कौशाम्बीलेखनबाट व्युत्पन भएता पनि दीर्घ **ई** बाहेक अन्य मात्राचिह्नहरूमा बंगालका ताम्रपत्रहरूको लेखनको प्रभाव देखिन्छ।[१७]

(२) आरंभमा बङ्गालमा झैं **ष**को चलन नेपालमा थिएन र सातौं शताब्दीदेखि यस व्यञ्जनको उपयोग भएको देखिन्छ।[१८] बंगालका चौथो शताब्दीको चन्द्रवर्माको सुसुनिया चट्टानलेख र पाँचौ शताब्दीका गुप्तकालीन ताम्रपत्रहरूको[१९] लेखनमा इलाहाबादस्तंभलेखको लेखनको स्पष्ट प्रभाव देखापर्छ। पाँचौ शताब्दी ई.का ताम्रपत्रहरूमा समेत कतिपय वर्णहरूको स्वरूप र मात्राचिह्नहरूको साथै लेखाइमा खासै फरक पाइँदैन, जस्तै : तिनमा **घ**को तेर्सो आधाररेखा सोझो छ, **ज**का ऊर्ध्वरेखा र तेर्सा भुजाहरू सोझा छन्, **द**को पिठँचू गोल छ, **प** गोल छ र **य** अझै पुरानो छ। गाँठोवाल स पाइन्छ तर **ष** छँदैछैन। सुसुनिया चट्टानलेखमा कतिपय वर्णहरूमा त्रिकोण डीको पाइन्छ र यही महत्त्वका कुरा हुन्। त्रिकोण स्वरूपको डीको समुद्रगुप्तका छोरा चन्द्रगुप्त द्वितीयको (राज्यारोहण ३८० ई.) उदयगिरिअभिलेखमा[२०] पाइन्छ भने उनैका संवत् ८८ (४०८ ई.) को गढवाअभिलेख र गढवाकै कुमारगुप्त (४१४-४५५ ई.)का अभिलेखहरूमा[२१] भने अर्धचन्द्राकार डीको पाइन्छ। यसबाट अर्धचन्द्राकार डीकोभन्दा पहिले ठोस त्रिकोण डीकोको विकास भएको देखिन्छ।[२२] लिच्छविलिपिको त्रिकोण डीकोको स्रोत भने स्पष्ट छैन।

**छैठौं** शताब्दीका बंगाली ताम्रपत्रहरूमा विशेष गरी **ध ज प य ष**को बनावट र ह्रस्व इकारको मात्रामा केही परिवर्तन देखिन्छ। आरम्भिक लिच्छवि लिपिको समान **घ**को पुरानो स्वरूपको ठाउँमा दायाँ भाग कोणात्मक र बायाँ भाग गोल बनेको छ; **ज**को ऊर्ध्वरेखा सोझो छ तर तल्लो भुजा केही ढल्केको छ;

**प**को स्वरूप कोणात्मक छ, दायाँ कोणात्मक र बायाँ गोल भएकोले पुरानो स्वरूपको **य** बढी सन्तुलित छ र **य**को दुई रेखा भएको नयाँ स्वरूप पनि साथसाथ चलेको छ। यहाँ यस प्रकारको **य**को विकास लिच्छविलिपिको विकासको चतुर्थचरण (६४३-७३३ ई.) मा देखापर्छ। छैठौं शताब्दीका बंगाली ताम्रपत्रहरूमा पहिलोपल्ट **ष** देखापर्छ, जसको स्वरूप इलाहाबादको समान छ। नेपालमा भने यस प्रकारको पेट चिरेको **ष** सातौं शताब्दीदेखि मात्र पाइनथाल्छ। बंगालमा **ग त**का दुवै भुजा प्रायः बराबर छन्। अन्य मात्राचिह्नहरू झैं दीर्घ ईको मात्रा पुरानै छ, तर ह्रस्व इकारको मात्रा प्रायः तलसम्म झरेको छ।

**ख ग ण ध र ब**को देब्रेतिर तल्लो भागमा अङ्कुशप्रकारको आकारको मात्रा लगाउने आरम्भिक गुप्तचलन बंगालमा झैं नेपालमा चल्नुमा कुनै आश्चर्य छैन। यो चलन नेपालमा निकै लामो अवधिसम्म चलेको छ। बंगाल र नेपालमा ह्रस्व इकारको मात्रा वक्र हुँदै बायाँतिर ढल्कने प्रवृत्तिको मूल खोज्न अन्त जानु पर्दैन, यो इलाहाबाद अभिलेखमै पाइन्छ। छैठौं शताब्दीका बंगालको लेखनमा व्यञ्जनको पुरै तल्लो देब्रे भागसम्म पुग्ने गरी वक्र रेखा खिंचिएको छ जो त्यस समय नेपालका कतिपय व्यञ्जनमा पनि देखिन्छ। यसकारण यसलाई कौशाम्बीशैलीकै प्रवृत्तिअनुरूप दुवै ठाउँमा स्वतन्त्र रूपले विकसित संयोग मान्नुपर्छ।[२३] दीर्घ ईको मात्रामा नेपालको र इलाहाबादका लेखनका बीच अन्तर पाइन्छ। माथि जाने दुई रेखाहरूमध्ये देब्रेभन्दा दाहिने लामो रहेको इलाहाबादको ईकारको मात्राको ठाउंमा नेपालमा आरम्भदेखि नै देब्रेतिरको रेखा लामो छ र गोल रूपमा माथितिर मोडिदैं दायाँतिर तल ढल्केको छ। दानीले "बंगालमा यस्तो अभ्यास सातौं शताब्दीमा आरम्भ" भएको उल्लेख गरेका छन्।[२४] वास्तवमा नेपालको यो पद्धति कौशाम्बी र बंगालको निम्ति नोलौ हो। पाँचौं शताब्दीको पूर्वार्धको मथुराको कुमारगुप्तको अभिलेखमा भने नेपालको समान दीर्घ ईको मात्राचिह्न पाइन्छ।[२५] यसरी हेर्दा इलाहाबादस्तम्भलेख र नेपालका आरम्भिक अभिलेखहरूमा दीर्घ ईको मात्रा बाहेक अन्य मात्रा-पद्धतिमा मौलिक अन्तर पाइँदैन। नेपालमा आरम्भिक **य**को देब्रेभागमा भित्रतिर गाँठो बनेको र बाहिरबाट घुर्मुकिई गाँठो बनेको गरी दुई किसिमको पाइन्छ। बाहिरतिर घुर्मुकिएको **य**को आफ्नै विशेषता छ, जो पाँचौ शताब्दीमा भारतमा अन्यत्र कतै देखिंदैन।[२६] भौगोलिक र सांस्कृतिक दृष्टिले पाँचौ शताब्दीमा नेपालको बंगालसँगको सम्बन्ध रहेको हुनसक्छ तर लेखनको विकासमा त्यहाँको लेखनको प्रत्यक्ष प्रभावको व्याख्या गर्नसकिंदैन।

## मालीगाउँको मूर्तिलेख

वि.सं.२०४९मा काठमाडौंको मालीगाउंमा पाइएको मूर्तिलेखले[२७] यस अनुमानलाई निकै हदसम्म पुष्ट गरेको छ। यसको लेखनमाथि विचार गर्नु यहाँ आवश्यक छ। (फलक ८)। विचित्र वेशभूषामा उभिएको १.७१ मीटर अग्लो मानवकदको मालीगाउंमा पाइएको धर्मनिरपेक्ष मूर्तिको ४० से.मीटर लामो

पादपीठमा एक पंक्तिमा २१ वर्णहरू कुंदिएका छन्, जो यस प्रकार पढिएका छन् :

(१) संवत् १०० ७ श्रीपरमदेव [ ङ्ग ]महाराजस्[ य ]जयवर्म [णः] [२८]

(२) संवत् १०७ श्रीपञ्चदेवप्क महाराजस्य जयवर्मण [२९]

(३) संवत् १०० ७ श्रीपरमदेव प्क महाराजस जयवर्मः[३०]

(४) संवत् २०० ७ ग्री प [७] [दि]व ४ म[हा][राज[स्य जयवर्मणः] [३१]

यसमा कतिपय अक्षर र मात्रा स्पष्ट छैनन् र भिन्नभिन्न लेखकहरूले अलगअलग पाठ सुझाएका छन्। एकबाहेक सबैले संवत् १०७ र छैठौं अक्षरलाई **श्री** पढेका छन्। त्यसपछिका अक्षरहरूलाई दुई जनाले **परमदेव** र एक जनाबाहेक सबैले एघारौं अक्षरलाई **प्क** पढेका छन् र बाँकिका अक्षरहरूमा विवाद छैन। अभिलेखको एक सयको अङ्कचिह्न झुक्याउने खालको छ, तर नजिकैबाट परीक्षण गर्दा यो १०० नै रहेको देखिन्छ। **पाठ** (४) मा छैठौं, आठौं र नवौं अक्षरहरूलाई क्रमशः **ग्री**, **७**, र **दि** पढेर "ग्रीष्मऋतुको सातौं पक्षको दिन" भन्ने अर्थ गरिएको छ।[३२] यस पद्धतिमा वर्षमा आठआठ पक्षका तीन याम मानेर तिथि लेख्ने चलन पहिलो-तेस्रो शताब्दीका प्राकृत भाषाका अभिलेखहरूमा पाइन्छ। गुप्तकालीन संस्कृत अभिलेखमा भने यस पद्धतिमा तिथि लेख्ने चलन कतै पाइँदैन।[३३] **पाठ** (२) **मा** यी अक्षरहरूलाई **पञ्चदेव प्क** पढेर पाँचौं महिना अर्थात् फाल्गुनको शुक्लपक्षको ४ भन्ने अर्थ गरिएको छ।[३४] **ञ्च** चित्तबुझ्दो पाठ होइन, अर्थ गराई झन् नमिल्दो छ। तिथिको अगाडि **श्री** जस्तो आदरार्थी शब्दको औचित्यबारे पनि प्रश्न उठ्छ। बाह्रौं अक्षर चार अङ्कचिह्नको रूपमा उपयोगमा आउने **प्क** हुनसक्छ, तर त्यसको यथार्थ आशय निस्कँदैन। यंस लेखकले **ङ्ग** सुझाएर श्रीमानाङ्क झैं देवाङ्क लेखिएको तर ऊर्ध्वरेखा दुर्घटनावश लम्बिनगएको होला भन्ने अनुमान गरेको हो। अब यस अभिलेखका वर्ण र मात्राचिह्नहरूको विश्लेषण गरिदैं छ।[३५]

यसका **ज त द म व स ह** व्यञ्जनहरू प्राचीन भारतमा प्रचलित विभिन्न शैलीहरूमध्ये कौशाम्बीशैलीको लेखनका नजिक देखिन्छन् र समुद्रगुप्तको इलाहाबाद स्तंभलेख र मानदेवका पालाका लेखनसँग तुलनीय छन्। जस्तै :

**स** मालीगाउँ मूर्तिलेखको **स** बायाँतिर गोल गाँठो भएको इलाहाबादस्तंभलेखको समान छ। यहाँ यो गाँठो केही ठूलो छ र झट्ट हेर्दा भित्रबाट गाँठो खुलेको जस्तो लाग्छ। सको तल्लो रेखा दायाँतिर ढल्केको छ र यो विशेषता मानदेवको पालाको हो। तर त्यतिखेर यस प्रकारको गोल गाँठो भएको व्यञ्जन **ष** निर्धारित भएको छ र पातलो **स**को लागि त्रिकोण गाँठो भएको स्वरूप विकसित भएको छ। मालीगाउँ मूर्तिलेखमा दुई ठाउँमा उपयोग भएको गोल गाँठो भएको वर्ण **स** हो; मानदेवको पालाको झैं **ष** होइन। यसकारण बनावटको दृष्टिले यो मानदेवको पालामा त्रिकोण गाँठोको विकास हुनुभन्दा पहिलेको हुनुपर्छ। यस मूर्तिलेखमा मूर्धन्य षको उपयोग भएको छैन।[३६] **सं**को अनुस्वारको चिह्न ठुलो अर्धवृत्तात्मक (झण्डै इकारको मात्रा जस्तो) बनेको छ।

**व** मालीगाउँको मूर्तिलेखमा तीन ठाउँमा दुई किसिमले लेखिएको **व** इलाहाबादको झैं त्रिकोणात्मक स्वरूपको छ तर यसमा शीर्षविन्दुहरूको दिशामा परिवर्तन भएको छ। यसका दोस्रो र बीसौं वर्णका रूपमा लेखिएको **व**को दायाँ भाग केही ढल्केको छ भने एघारौं वर्णका रूपमा लेखिएको **व**को दाहिने रेखा सोझो छ। मानदेवको पालामा **व**को दायाँ भाग कोणात्मक र बायाँ भाग गोल भएको छ।

**त** मालीगाउँको एकमात्र **त**का दुई भुजाहरूको मूलभाग कोणात्मक छ, जबकि समुद्रगुप्त र मानदेवको **त**को मूलभाग गोल छ। तर पनि दुवै लेखनको समान मालीगाउँको **त**को दाहिनेतिरको भुजा बढी लामो छ। यहाँ पनि डीकोरेखाभन्दा तल सानो व्यञ्जनले हलन्त जनाइएको छ।

**१००** मालीगाउँ मूर्तिलेखको एक सयको अङ्कचिह्न अचम्मको देखिन्छ। कौशाम्बीका अभिलेखहरूमाझैं मानदेवका अभिलेखहरूमा पनि तत्कालीन **अ** वा देवनागरीको डीको नभएको **स**जस्तो चिह्न १०० को लागि उपयोग गरिएको छ। मालीगाउँ मूर्तिलेखको १००को अङ्कचिह्नको बीचको तेर्सो रेखामा दुइवटा वृत्त झैं बनेका छन् जो पछि बिग्रेको हुनसक्छ। त्यसैमा आकारको मात्रामा झैं दायाँतिर जाने तेर्सो रेखा थपेमा २०० र अर्को एकवटा धर्को थपेमा ३०० हुनजान्छ। यहाँ डीकोको दायाँतिर तेर्सो रेखा बनको छ। यस स्थितिमा **पाठ (४) मा** पढिए झैं यसलाई २०० मान्नुपर्छ।[३७] नजिकैको परीक्षणबाट यो रेखा पछि दुर्घटनावश बन्नगएको प्रतीत हुन्छ। अन्य सबैले यसलाई १०० पढेका छन्।

**७** सातको अङ्कचिह्न इलाहाबादस्तंभलेखसँग मिल्नआउँछ र देवनागरीको इकारको मात्राचिह्नको स्वरूपको छ। मानदेवका अभिलेखमा यस चिह्नको तल्लो भुजाको टुप्पो देब्रेतिर मुडेको छ र झण्डै तल्लो भाग नजोडिएको रोमन **B** सँग मिल्नखोज्दछ। **पाठ (४) मा** ७को अङ्कचिह्न दुई ठाउँमा पढिएको छ। अधिकांश लेखकहरूले सुझाएको **परम**को ठाउँमा **प**पछिको अक्षरलाई त्यहाँ अर्को ७ र त्यसपछिको **देव** पढिएका अक्षरहरूलाई **दिव** पढ्नुपर्ने सुझाव विचारणीय छ।[३८] झट्ट हेर्दा **प**पछिको ऊर्ध्वरेखाको शिरोभागमा दायाँतिर देवनागरीको २ अङ्क जस्तो चिह्न जोडिनगई माथि ७ पढिएको चिह्नको आकारप्रकारसँग मिल्नआउँछ। तथापि नजिक गएर परीक्षण गर्दा त्यो **र** तथा **म** हुने सम्भावना बढी देखिन्छ। यो पाठ तीन मुख्य ऋतुहरूमध्ये एक, पक्ष र चान्द्र तिथिको रूपमा मिति लेख्ने खास पद्धतिसँग सम्बन्धित छ। यो चलन यस भेगमा कतै नदेखिएकोले पनि यो सम्भावना क्षीण देखिन्छ।

**श्री** यस अभिलेखमा स्वतन्त्र **श** छैन। धेरैले छैठौं अक्षरलाई **श्री** पढेका छन्। यसको चौडा माथिल्लो भाग कौशाम्बीको **श** झैं छ। **श्र्**मा **ई**कारको मात्राले बनाइने **श्री**मा **श** र मात्रा दुवै अस्पष्ट छन्। यहाँ बीचको तेर्सो रेखा देखिँदैन, तल्लो भागमा हुनुपर्ने जोडको **र**को तेर्सो रेखा स्पष्ट छैन र ईकारको मात्राचिह्न विचित्रको छ। बीचमा तेर्सो रेखा नभएमा यो **ग** हुनजान्छ। यस कारण **पाठ (४) मा** यसलाई **ग्री** पढिएको हो।[३९] धेरैले यसलाई मध्यरेखा बिग्रेको

**श्री** पढेका छन्। इलाहाबादस्तंभलेखमा **श्र**मा ईकारको मात्रा अन्य व्यञ्जनमाभन्दा भिन्न पद्धतिले अर्थात् **श**को बीचको तेर्सो रेखा दायाँ र बायाँ दुवैतिरबाट बाहिर निकाली मोडेर माथि लगी बनाइएको हुन्छ, जबकि अन्य व्यञ्जनमा भने शिरोभागबाट माथि जाने देब्रेभन्दा दाहिने लामो हुने दुई ठाडा रेखा खिंचिएका हुन्छन्। मानदेवका सबै व्यञ्जनमा एकै किसिमको ईकार मात्रा पाइन्छ, जसमा शिरोभागमाथिबाट तानिएको छोटो ठाडो रेखाको तल्लो टुप्पोलाई देब्रेतिर लगी माथि उठाई दायाँतिर तल झर्ने गरी मोडिएको हुन्छ। मालीगाउँको यस अक्षरमा ईकारको चिह्नमा देब्रेतिर जाने दुई धर्साहरू भने स्पष्ट छन्, जसमा दाहिनेतिरको धर्सा सीधा माथि उठी देब्रेतिर मोडिएको छ।

**प र** यहाँ **प** तथा **र**को बनावटमा खास फरक देखिँदैन। मानदेवको **प**सँग अद्भुत समानता भएको मालीगाउँको पको तल्लो भाग भित्रपसेको वा खुँडे (notched) प्रकारको छ। दुई ठाउँका **र**मध्ये एकमा ऊर्ध्वरेखा निकै लामो बनेको छ। धेरैले पढेको **परम**को ठाउँमा **पाठ** (२) **मा** सुझाइएको **पञ्च** उपयुक्त पाठ होइन। **प**पछिको चिह्न बरु ७ को स्वरूपसँग मिल्दोजुल्दो सिंगो **ञ** भन्न सुहाउँछ, चको कुनै अंश यहाँ छँदैछैन।

**म** मालीगाउँ मूर्तिलेखमा तीन ठाउँमा लेखिएको दुई प्रकारको **म** कौशाम्बीशैलीको छ। तेह्रौं वर्णको रूपमा उपयोगमा आएको **म**ले कौशाम्बीको बायाँ भाग मोडिएको र मुख खुलेको **म**को संझना गराउँछ। नवौं र बीसौं अक्षरका रूपमा रहेको अर्को प्रकारको **म**को तल्लो तेर्सो रेखा दायाँतिर ढल्केको छ, जो मानदेवको पालाको **म**को विशेषता हो। माथि भनिएझैं कसैले नवौं व्यञ्जनलाई ७ अङ्कको दाहिनेतिरको चिह्न मानेर **र** तथा **म** पढिएको ठाउँमा एउटै सिंगो अङ्कचिह्न ७ माने। व्याकरणको नियम र लेखाईको हिसाबले पछिल्लो अक्षर रेफसहितको संयुक्त **र्म्म** हुनुपर्छ। यहाँ दाहिने ऊर्ध्वरेखा निकै लामो छ जसको तल्लो टुप्पोबाट देब्रेतिर छड्के धर्सो बनेकोछ। यो अर्को **म**को तल्लो भाग हुनुपर्छ जसको टुप्पोमाथि छोटो ऊर्ध्वरेखा मेटिएको हुनसक्छ।

**द** मालीगाउँको अर्धवृत्तात्मक **द** इलाहाबादको **द**सँग बढी मेलखान्छ तर यहाँ मानदेवको पालाको कोणात्मक पीठयूँको विकास देख्न सकिंदैन। हाल यसमा कुनै मात्राचिह्न देखिँदैन र अर्थ मिल्ने कारणले एमात्राको अनुमान गरिएको हो। **पाठ** (४) **मा** यसै गरी **दिव** पढ्न इकारको मात्राको अनुमान गरिएको हो।

**क क**को उर्ध्वरेखा निकै लामो छ। अगाडि जोडिएको व्यञ्जनको साथसाथ तल्लो भागको तेर्सो रेखाले यो अक्षर अस्पष्ट भएको छ र **प्क** वा **ङ्क** अनुमान गरिएको छ। तल्लो तेर्सो रेखा दुर्घटनावश बन्नगएको हुनसक्छ।

**ह** यस मूर्तिलेखको **ह** इलाहाबादस्तंभलेखको समान ऊर्ध्वरेखाको टुप्पोमा अंकुश बनेको प्रकारको छ तर मानदेवको पालामा विकसित दायाँतिर ढल्कने ऊर्ध्वरेखा पनि यसमा अनुभव गर्न सकिन्छ।

**ज** समुद्रगुप्तको स्तंभलेखको सोझो ऊर्ध्वरेखाको **ज** मानदेवको पालामा बीचमा दाहिनेतिर ढल्केको छ र तल्ला दुवै भुजाहरू तलतिर झुकेका छन् । मालीगाउँको **ज**मा यी दुवै विशेषता पाइन्छन् ।

**य** मालीगाउँको **य**को स्वरूप इलाहाबादस्तंभ लेखकोभन्दा विकसित र मानदेवका अभिलेखहरूको भन्दा केही भद्दा देखिन्छ । यसको कोणात्मक दायाँ भाग र घुमुर्केको देब्रे भागले यही कुरो जनाउँछ ।

**णः** अन्तिम अक्षर **णः** हुनुपर्छ जो अस्पष्ट छ ।

मालीगाउँ मूर्तिलेखमा **आ ई** र एका मात्राचिह्नहरू हुनुपर्छन्; तर प्रायः सबै ठाउँमा यी अस्पष्ट छन् । **आ**कारको मात्रा हुनु पर्ने व्यञ्जनहरू हुन् **वा हा** तथा **रा** । ईकारको मात्राचिह्न **श्री**मा हुनुपर्छ, जो अचम्मको देखिन्छ । **ए**कारको मात्राचिह्न **द**मा हुनुपर्ने देखिन्छ, तर त्यो पनि स्पष्ट छैन । यस मूर्तिलेखमा **श्री, ङ्क** वा **प्क स्य** र **र्म्म** गरी चारवटा संयुक्ताक्षर छन् । प्रायः सबै अस्पष्ट छन् । '**प्क**' पढ्ने गरी **क**को माथिल्लो बायाँ भागमा **प** जोडिएको हो भने यो संयुक्ताक्षरको लेखाई नियमित छ । तर **ङ्क** पढ्न **क**मा **ङ** जोडिएको हो भने माथिसम्म गएको **क**को ऊर्ध्वरेखा नियमित छैन । यस लेखकको अनुमानमा **क**को ऊर्ध्वरेखा दुर्घटनावश माथिसम्म गएकोले **ङ्क प्क** जस्तो बन्न पुगेको होला । चार अङ्कलाई व्यक्त गर्ने चिह्न **प्क** अक्षरसँग मिल्दोजुल्दो भएकोले धेरैले यसलाई त्यही पढेका छन् र अनेक अर्थ गरेका छन् । **स्य**मा **स**को तल रहने अंकुशे स्वरूपको **य**को तल्लो तेर्सो रेखा मेटिएको मान्नुपर्छ । यहाँ गोलगाँठो भएको **स** मानिएको वर्णलाई **ष** मान्नसकिँदैन । संवत्मा यही **स**को उपयोग भएको छ । **र्म्म**मा अर्को **म**को अनुभव गर्न सकिन्छ, तर रेफ स्पष्ट छैन । इलाहाबाद स्तंभलेखमा मसिना विन्दुका रूपमा व्यक्त गरिएका अनुस्वार र विसर्गका चिह्नहरू मानदेवको नेपालमा वृत्तका रूपमा विकसित भएका छन्, जबकि मालीगाउँको **सं**.मा यो वृत्त निकै ठूलो र देब्रेतिर नजोडिएको अर्धवृत्तात्मक देखिन्छ ।

धेरै लेखकहरूले मालीगाउँको मूर्तिलेखका जयवर्मालाई वंशावलीहरूमा चर्चिएका जयदेव (प्रथम) र संवत् १०७ लाई मानदेवका अभिलेखहरूकै संवत्का वर्ष मानेका छन् ।[४०] यसलाई शकसंवत् मान्दा यो लेखन १८५ ई.को हुनआउँछ । घटना घटेको १५०० वर्षपछि संग्रह गरिएको वंशावलीको आधारमा स्थापित यो मान्यता खासा लोकप्रिय हुनसक्छ ।[४१] पुरालेखनले तयार गरेको भौतिक आधारमा विचार गर्दा मालीगाउँ मूर्तिलेखलाई दोस्रो शताब्दीमा राख्नसकिँदैन । यसका **म स ह**जस्ता वर्णहरूको स्रोत कौशाम्बीशैली हो भन्ने कुरा माथि स्पष्ट भइसकेको छ । समुद्रगुप्तभन्दा पहिलेनै यहाँ कौशाम्बीशैलीको लेखनको प्रवेश भइसकेको थियो भन्ने कुरा मान्ने कुनै आधार पाइँदैन । मालीगाउँ मूर्तिलेखका प्रौढ वर्णहरूको तुलना चौथो शताब्दीभन्दा पहिलेको भारतको कुनै लेखनसँग गर्नसकिँदैन । यसका कतिपय वर्णहरू इलाहाबाद स्तंभलेखकाभन्दा विकसित र मानदेवका अभिलेखहरूकाभन्दा पहिलेका प्रतीत हुन्छन् । अर्कोतर्फ मोटो रेखा र त्रिकोणात्मक डीकौ जस्ता लिच्छविलिपिका केही विशेषता यहाँ पनि देखिन्छन् ।

यसकारण यो मूर्तिलेख इलाहाबादको स्तंभलेख (अन्दाजि ३६० ई.भन्दा पछिको र मानदेव (४५९ ई.) भन्दा अघिको हुनुपर्छ। १०७ कुन संवत्को वर्ष हो भन्नेबारेमा हाल यकीनको साथ केही भन्ने आधार पाइँदैन। लेखनको दृष्टिले यो लेखोट घटीमा पाँचौं शताब्दी ई.को पूर्वार्धको हुनुपर्छ।[४२] यसरी लिच्छविलिपि र आरम्भिक गुप्तलेखनको कौशाम्बीशैलीमा समानता र समुद्रगुप्तको नेपालसँगको सम्बन्ध जस्ता तथ्यहरूका आधारमा लिच्छविलिपिको व्युत्पत्तिको व्याख्या गर्नसकिन्छ। समुद्रगुप्त र मानदेवका बीचमा एक शताब्दीको अन्तरालमा नेपालमा मोटो कलमको उपयोगले कतिपय वर्णहरूलाई गोलो र कोणात्मक रूप दिई ठोस त्रिकोण डीकोको प्रौढ लेखाई विकसित भएको हुनुपर्छ। कौशाम्बीशैलीका वर्णहरूलाई मोटो कलमले यसरी लेखिएको उदाहरण त्यस कालमा सीमावर्ती क्षेत्रमा बिरलै देखिन्छ। नेपालको लेखनमा कतिपय कुरामा देखिने भिन्नताले यहाँ पाँचौ शताब्दीको उत्तरार्धदेखिमात्र लेखनको चलन चलेको भन्ने कुरामा शंका उत्पन्न गर्छ।[४३]

## टिप्पणी

१. पशुपतिमन्दिरको प्रांगणमा प्राप्त मानदेवको एक खण्डित अभिलेखमा संवत् ३८१ कुँदिएको छ। हेर्नुस् श्यामसुन्दर राजवंशी, "पशुपतिनाथप्राङ्गणमा प्राप्त अप्रकाशित लिच्छवि अभिलेख" **प्राचीन नेपाल**, १३५, पृ.१-२। संवत् ३८६को चांगुनारायण स्तम्भलेख मानदेवको प्रसिद्ध अभिलेख हो।

२. मानदेवलाई लिच्छवि भन्ने पहिलो साक्ष्य विजयवतीको शिवलिङ्गअभिलेख हो। उनले त्यहाँ आफ्ना पिता मानदेवलाई लिच्छविकुलको आकाशका पूर्णचन्द्र (लिच्छविकुलाम्बरपूर्णचन्द्रः) भनेकी छन्। हेर्नुस् धनवज्र वज्राचार्य सम्पादित **लिच्छविकालका अभिलेख** (काठमाडौं : त्रि.वि.,२०३० वि.सं.) पृष्ठ ८२-८३। त्यसपछि ५९० ई.देखि राज्य गर्ने राजा शिवदेव प्रथमले स्वयंलाई लिच्छविकुलकेतु (लिच्छविवंशका झण्डा) भन्ने उपाधिको चलन चलाए जो पछिका राजाहरूले पनि जारी राखे।

३. ३२० ई.देखि ४६७ ई.सम्म उत्तर भारतको विस्तृत राज्यका गुप्त शासकहरूको कला र संस्कृतिको इतिहासमा ठुलो योगदान रहेको छ। गुप्तकालीन परम्परा पछिसम्म कायम रहेको कारण यस दृष्टिले छैठौं शताब्दीसम्मको काललाई गुप्तकाल मान्ने साधारण चलन चलेको छ। त्यसकालमा लेखनशैलीहरूले पनि यही नाम पाएको हो।

४. अनेक लेखकहरूले तत्कालीन नेपाली लेखनलाई यही नाम दिएका छन्।

५. हेर्नुस् K.A. Nilakanta Sastri, G.Sriniasachari, **Advanced History of India**. (Allied Publishers Pvt.Ltd. 1982).184 मानदेव राजा हुनुभन्दा १४० वर्ष पहिले गुप्तसम्राट् चन्द्रगुप्त प्रथमले लिच्छविशासककी छोरी कुमारदेवीसँग वैवाहिक सम्बन्ध गाँसेर लिच्छविहरूको सहयोग लिई भारतमा गुप्तसाम्राज्यको जग बसाए। गुप्तहरूले लिच्छविहरूसँगको सम्बन्धलाई निकै महत्त्व दिएका छन्। चन्द्रगुप्त प्रथमको सिक्कामा एकातिर राजाको साथ रानी

कुमारदेवींका नामसहित चित्र र अर्कोतिर **लिच्छवयः**लेख कुँदिएको छ जसको अर्थ लिच्छविहरू भन्ने हुन्छ। इलाहाबादस्तम्भलेखमा समुद्रगुप्तले आफूलाई **लिच्छविदौहित्र** अर्थात् लिच्छविकी छोरीका छोरा भनेका छन्। गुप्तसाम्राज्यको निर्माणमा यस सम्बन्धले ठुलो भूमिका खेलेको मानिन्छ।

६. **उही** पृ. ६८-६९ आरम्भिक **बौद्धसाहित्यमा** लिच्छवि र वज्जिहरूको संघीय गणराज्यको गौरवपूर्ण कथा पाइन्छ। ईसापूर्व पाँचौं शताब्दीमा मगधका राजाबाट यिनको राज्यको अन्त भयो। यिनीहरू चुनावको माध्यमले शासकीय नेतृत्वको बाँडफाँड गर्थे। तर लिच्छविहरूले पुनः शक्तिसञ्चय गर्दै चौथो शताब्दी ई.सम्म बलियो राज्य खडा गरे। लिच्छविहरूले चन्द्रगुप्त प्रथमलाई छोरी दिई गुप्तसाम्राज्यको निर्माणमा सहयोग गरेको हुन सक्छ।

७. **समतट-डवाक-कामरूप-नेपाल-कर्त्तृपुरादि-प्रत्यन्तनृपतिभिः..** हेर्नुस् यस अभिलेखका बाइसौं र तेइसौं पंक्तिहरू D.C.Sircar, **Select Inscriptions Bearing on Indian History and Civilizations,** Vol. I, (Calcutta, 1965). pp 265-266. नेपालको उल्लेख गर्ने यो पहिलो अभिलेख हो।

८. शास्त्री र श्रीनिवासाचारी **पूर्वोक्त टिप्पणी** ५, पृ.१९३। गुप्तसाम्राज्यको विघटन सुरु भएको वेलामा मानदेवको जीतबाजीको बयान गर्ने अभिलेख पाइनुबाट त्यसबेला नेपाल गुप्तहरूको प्रभावबाट मुक्त भइसकेको अनुमान गर्नसकिन्छ।

९. Ahmad Hasan Dani, **Indian Palaeography** (Oxford: The Clarendon Press, 1963) P.90.

१०. ***ibid.*** P. 137 .अहमद हसन दानीले मानदेवको पालाको लेखनलाई समुद्रगुप्तको उक्त अभिलेखको लेखनबाट प्रभावित रहेको कुरो उठाएका छन्।

११. आर.नोलीले लिच्छविकालीन अभिलेखहरूको आफ्नो संग्रहको नाममै गुप्तअक्षर भनेका छन् : R.Gnoli, **Nepalese Inscriptions In Gupta Characters** (Rome, 1956).

१२. शङ्करमान राजवंशी, "नेपाली लिपिविकास", **कैलाश**, वर्ष २, अङ्क १-२ (१९७४), पृ.२४।

१३. यस प्रयोजनको लागि यहाँ चांगुनारायणस्तम्भलेखलाई मुख्य आधार बनाइएको छ।

१४. Ahmad Hasan Dani, *op.cit.,* P. 139. वास्तवमा यो दानीको भ्रम हो। उनले त नोलीलाई समेत संस्कृत व्याकरणको अनुसरण गरेर सलाई **ष** पढेको भन्ने समेत आरोप लगाएका छन्। यथार्थमा नोलीले ठीक पढेका हुन्। इलाहाबादको दायाँतिर गोल गाँठो भएको **सलाई** नेपालमा **ष** र गाँठोलाई त्रिकोणात्मक रूप दिइएकोलाई दन्त्य **स** निर्धारित गरिएको छ।

१५. हेर्नुस् **उही,** Plates Xa 2, Xb 2, Xa 4, Xb 4. र पृ. १३८।

१६. **उही**, पृ. १३७।

१७. **उही**। दानीको विचारमा अङ्कुश लगाई **ख ग ण**मा आकारको मात्रा लगाउने कौशाम्बीको चलन बंगालमा जारी रह्यो (हेर्नुस् पृ.१२९-३०)। अर्को प्रसङ्गमा (पृ. १३८) उनी लेख्छन् : नेपालमा उपर्युक्त व्यञ्जनहरूको साथसाथ **था धा**मा पनि यो पद्धति जारी रह्यो र **बा**मा भने एक शताब्दीसम्म कायम रह्यो।

यसबाट दानीको आशय यो मात्रापद्धति नेपालमा चाहीं बंगालबाट आयो भन्ने देखिन्छ ।

१८. **उही**, पृ.१३९ । हेर्नुस् माथि टिप्पणी १४ ।

१९. **उही**, पृ. १०१, १३०-३१;, Plate XI.1; **Epigraphia Indica** xiii. 133, xvii. 347-8; xv. 130 ff.; *ibid.* 133 ff.; ibid. xxi. 81 ff.; xx. 61ff.; xv. 135 ff.

२०. J.F.Fleet, ed. **Corpus Inscriptionum Indicarum**, Vol.III, 1963. Plate iv A.

२१. ***ibid.*** Plates iv B and iv C.

२२. यस तथ्यबाट अर्धचन्द्राकार डीकोबाट त्रिकोण डीकोको विकास भएको होला भन्ने दानीको अनुमान कमजोर हुनजान्छ । A.H.Dani, *op.cit.* P.81.वास्तवमा त्रिकोण डीकोको स्वरूप पहिलो शताब्दी ई.का मथुराका शकक्षत्रपहरूको लेखनशैलीबाट भएको मानिन्छ । मथुराको उक्त लेखनशैली अन्य विशेषताहरूको अतिरिक्त माथि मोटो र तल क्रमशः पातलिंदै गएको मोटो टाँकाको लेखाई पाइन्छ । यसैबाट प्रेरणा पाई विभिन्न ठाउँहरूका लेखकहरूले भिन्नभिन्न प्रकारका डीकोको विकास गरे ।

२३. पाँचौं शताब्दीको कुमारगुप्तको मथुराअभिलेखमा इकारको मात्रास्वरूप यस्तै देखिन्छ । हेर्नुस्***ibid.*** Plate XII.2; **Epigraphia Indica.** ii, 210.

२४. A.H.Dani, *ibid.* P. 138.

२५. *ibid.* Plate XII.2; **Epigraphia Indica.** ii, 210.

२६. **Dani**, *ibid.* P. 138.

२७. **गोरखापत्र**, जेठ २, २०४९ (मे १५,१९९२) मा समाचारको रूपमा प्रकाशित ।

२८. दिनेशचन्द्र रेग्मी, मालीगाउँको मूर्तिलेख," **गोरखापत्र**, जेठ १७, २०४९ (मे ३०,१९९२)स "जयवर्मा वंशावली र पुरालेखन", **मधुपर्क**, २५.५, असोज २०४९, (सेप्टेम्बर-अक्टोबर, १९९२) पृ.४२-४६ ।

२९. श्यामसुन्दर राजवंशी, **गोरखापत्र**, जेठ १२, २०४९ (मे २५, १९९२) ।

३०. हेमराज शाक्यको सुझाव जो काशीनाथ तमोटको "निगुगु शताब्दिया लिच्छवि जुजु जयवर्मम्हसिके", **राजमति**, जेठ १२ र १९मा प्रकाशित छ ।

३१. Angelo Andrea Di Castro and Reccardo Garbini, "An Inscribed Statue of Year 207 from Maligaon, Kathmandu", **East and West**, Vol.46. Nos. 3-4(December 1996). Pp.299-315. अरूले श्री सुझाएर श पढेको व्यञ्जनको मध्यभागमा तेर्सो रेखा नभएको कारण यिनीहरूको सुझाव सर्वथा अमिल्दो छैन ।

३२. ***ibid.*** pp.309,311.

३३. ***ibid.*** P. 313, जहाँ उनले उद्धृत गरेका छन् : A.Agrawala, 'The Date of the Bodh Gaya Bodhisattva Image: A Re-Appraisal" **AION**, 54, pp.156-62.

३४. श्यामसुन्दर राजवंशी, **उपर्युक्त**, **टिप्पणी** २९ ।

३५. यहाँ **पाठ** (१)का आधारमा यसो गरिँदै छ ।

३६. **गोरखापत्र** (जेठ २, २०४९) मा पुरातत्त्वविभागद्वारा प्रकाशित समाचार प्रतिवेदनमा ...**महाराजेषु** ..प्रकाशित भएको थियो ।

३७. डि कास्ट्रो र गार्बिनी, **उपर्युक्त**, **टिप्पणी** २९, पृ. ३०९, ३११ ।

३८. **उही**, पृ. ३१०,३११ ।

३९. **उही**, पृ. ३०९,३११ ।

४०. काशीनाथ तमोट, "जयवर्मा दोस्रो शताब्दीको हुनसक्ने एक आधार" **गोरखापत्र**, जेठ ३१, २०४९; यहाँ लेखकले हेमराज शाक्यको समान विचार रहेको कुरा लेखेका छन्। हेर्नुस् **टिप्पणी** २८। ७६ ई.मा लिच्छविसंवत् चलेको मान्ने श्यामसुन्दर राजवंशीले यसलाई १८४ ई.को मानेका छन्। हेर्नुस् : **लिच्छविकालीन संवत्को निश्चय**, काठमाडौं : गिरीन्द्रमान राजवंशी, चन्द्रकिरण राजवंशी, २०५२ वि.सं., पृ.२१२ ।

४१. दिनेशचन्द्र रेग्मी, **मधुपर्क**, २५.५ (**टिप्पणी** २६), पृ.४३-४४। इतिहासलाई सकेसम्म पर लग्नखोज्नु राष्ट्रिय इतिहासकारहरूको ध्येय हुनसक्छ। तर यसमा पुरालेखनपक्षलाई उपेक्षा गरिएको छ ।

४२. नेपालका शासकले गुप्तसम्राट्लाई कोसेली पठाएजस्तै गरी उनको संवत् अर्थात् ३२० ई.मा चलेको गुप्तसंवत्को उपयोग गरेका त होइनन् ? यस्तो भएमा वर्ष १०७ ईसवीको ४२७ हुनआउंछ, जो लिपिविकासको दृष्टिले अमिल्दो हुँदैन। यद्यपि यसलाई प्रमाणित गर्न सकिने आधार पाउन अझै बांकि छ। यथार्थमा संवत्को समस्याको समाधान अझै हुनसकेको छैन ।

४३. हेर्नुस् **उही**, **टिप्पणी** ४१, पृ.४४-४५ ।



# अध्याय चौथ

# लिच्छविलिपिको विकासक्रम

पाँचौ शताब्दी ईसवीदेखि तीन सय वर्षसम्म लिच्छविकालीन शासकहरूका अभिलेख र सिक्काहरू पाइन्छन्। आठौं शताब्दीमा लिच्छविशासनको अन्त भएपछि लेखनको नयाँ माध्यमको विकास भयो जो ताडपत्र वा तालपत्र थियो। अभिलेखको ठाउँ ताडपत्र ग्रन्थहरूले लिएता पनि दशौं शताब्दीसम्मको नेपाली लेखनका मूल प्रवृत्ति प्रायः समान रहेका कारण त्यति वेलासम्मको लेखनलाई लिच्छविलिपि भनिएको हो। समय बित्तैजाँदा लेखनमा फरक आउनुका अनेकौं कारणहरू हुनसक्छन्, जस्तैः नौलो लेखन-प्रविधि र लेखन-उपकरणको प्रवेश, शीघ्रताले धस्काएर लेख्ने वा अलंकरणप्रवृत्ति, लेखक र उत्कीर्णकको भाषिक, शैक्षिक र सांस्कृतिक परिवेश, व्यक्तिगत ढब वा रुचि, आदि। घन र छिनोको उपयोगले कुँदिएका अक्षर र हलुको हातले कलम समाती लेखिएका अक्षरहरूको बनावटमा फरक हुनेनै भयो। लेखनमा यस्ता केहीनकेही अन्तरहरू निरन्तर पाइन्छन्। परिवर्तनको यस्तो शृङ्खलालाई काटेर विकासचरण ठम्याउने प्रयास यहाँ गरिँदै छ। हाल प्रचलित विकासचरणको विश्लेषणबाट विषयको थालनी गरिँदै छ।

## दुई विकासचरणको मत

सामान्यतया पूर्वलिच्छवि र उत्तरलिच्छवि गरी लिच्छविलिपिलाई दुई विकासकालमा विभाजित गर्ने चलन छ। यहाँ पूर्वलिच्छविलिपिको अर्थ प्राक्लिच्छवि नभई प्रारम्भिक लिच्छविलिपि र उत्तरलिच्छविलिपि भन्नाले परवर्त्ती लिच्छविलिपि भन्ने बुझ्नु पर्छ। 'अक्षर वा मात्रामा 'कुटिलता' 'वा कुटिललिपि' देखा पर्न थाल्नुलाई यस विभाजनको आधार मानिएको छ। मगधको पुरालेखनको अध्ययनमा झण्डै दुई शताब्दीदेखि चल्तीमा आएको कुटिलाक्षर भन्ने शब्दलाई नेपालको सन्दर्भमा परिभाषित गरिएको छैन। कहिलेदेखि नेपाली लेखनमा यो विशेषता देखिनलाग्यो भन्ने विषयमा लेखकहरूका बेग्लाबेग्लै राय छन्। कसैले यो विशेषता लिच्छवि राज्यको पुनर्स्थापनाकाल (अर्थात् ६४३ ई.) देखिका लेखोटमा देखेका छन्[१] भने कसैले अंशुवर्माको राज्यकाल (६०५ ई.) देखिका लेखोटमा।[२] तर यस विभाजनको आधार र कालका बारेमा पुराना लेखकहरू स्पष्ट छैनन्। यहाँनेर 'अक्षरको कुटिलता' र 'कुटिलतालिपि' को परिचय पाउनु सान्दर्भिक हुनेछ।

**कुटिललिपि/कुटिलाक्षर** : उण्डाइसौं शताब्दीको उत्तरार्धदेखि भारतीय पुरालेखनमा यस शब्दको प्रयोग हुँदैआएको छ।[३] जोहन फेथफुल फ्लीटले सातौं शताब्दीका मगधका राजा आदित्यसेनको अफसड अभिलेखबारे लेख्दै त्यसका वर्णका सीधा ऊर्ध्वरेखाको अन्तिम टुप्पो पुच्छरको समान दाहिनेतिर वक्र वा टेढो हुँदै मोडिएको हुनुलाई कुटिलअक्षरको लक्षण माने।[४] गौरीशङ्कर हीराचन्द्र

ओभ्राको विचारमा कुटिर्लालिपिमा अक्षरहरूका ठाडा रेखा तल्लो भागमा मोडिएका हुन्छन्, मात्राहरू अधिक बाँगाटिंगा र लामा हुन्छन् र यसमा माथिल्लो भागमा दुई भुजा हुने वर्णका दुवै ठाडा रेखाका शिरोभागमा डीको हुन्छ।[५] अहमद हसन दानीले दायाँ ऊर्ध्वरेखा भित्रपट्टि भ्रुकेको वर्णलाई 'कुटिल' भनेका छन्।[६] कुटिललिपिका उदाहरणहरूमा सामान्यतया आदित्यसेन, हर्षवर्द्धन, र अंशुवर्मा सहितका उत्तर भारतका अभिलेखहरूलाई सम्मिलित गर्नेगरिन्छ। दानीको विचारमा छैठौं शताब्दीदेखि कलमको खास घुमावको कारण मोटोमसिनो रेखाले गर्दा मात्राचिह्न विशेष प्रकारका बनेका छन्। साँच्चि भन्ने हो भने लेखकहरू नेपालको प्रसंगमा तथाकथित 'कुटिलप्रवृत्ति' बारेमा अस्पष्ट देखिन्छन्। दानीले एकातिर बंगालको लेखनको मात्रामा देखा पर्ने वक्रताले नेपालका अक्षरको बायाँतिर भ्रुक्ने वा कुटिल हुने प्रवृत्तिलाई जन्म दिएको अनुमान गरेका छन्[७] भने अर्कोतिर सातौं शताब्दीमा नेपालको लेखनमा मध्यगंगाक्षेत्रको कुटिल प्रभाव परेको चर्चा गरेका छन्।[८] एउटै मूल स्रोतका दुइ लेखनहरूमा केही नकेही समानता नपाइने कुरा छैन, तर नेपालको लिपिविकासको प्रवृत्तितिर ध्यान दिएमा त्यस प्रकारको विकासको बीउ यहीं पाइन्छ। कुटिललिपिको अवधारणालाई स्वीकारेर पनि दानीले अर्को प्रसंगमा यस यथार्थलाई यसरी व्यक्त गरेका छन्, "तर यहाँ स्थानीय आकारप्रकार पूर्णतः त्यागिएका थिएनन् जो यस कालको अन्तसम्म बनिरहे।"[९] यहीनै यथार्थ हो।

जर्ज बूलर 'कुटिलअक्षर'को ठाउँमा "न्यून कोणयुक्त" (acute angled) वर्ण भन्ने शब्दको उपयोग गर्छन्। ढल्केको अक्षर हुनु, त्यसको तल्लो भाग वा बायाँतिर कोणात्मकता वा फुलेको मोटोपन हुनुलाई उनले यसो भनेका हुन्।[१०] कोणयुक्त वर्ण र वर्णको ठाडोरेखाको अन्तिम भाग (रेखान्त) मोटो बनाउने चलन नेपालमा आरम्भदेखि नै पाइन्छ। कतै यो रेखान्त दाहिनेतिर पातलो हुँदै चुच्चिने त्रिकोणवत् बनाइएको हुन्छ। कलम उठाउनु अगि देब्रेतिर केही दबाब दिई यस्तो रेखान्त बनाइएको प्रतीत हुन्छ। संभवतः यसै कारण सातौं शताब्दीका केही उदाहरणहरूमा केही वर्णहरूका दाहिने ऊर्ध्वरेखा देब्रे (भित्र)पट्टि ढल्केका भ्रैं प्रतीत हुन्छन्। यहाँका अक्षरको दाहिने अंग केही अपवादलाई छोडेर सदा सीधा रहन्छ। इकारको र एकारको मात्रामा वक्रता अकस्मात् देखिएको विशेषता वा बाह्यप्रभाव नभएर नेपालमा नै क्रमशः देखिँदै आउने विकासको परिणाम देखिन्छ। नेपालमा आरम्भदेखि नै त्रिकोण डिकोको चलन पाइन्छ जो केही नगण्य अपवाद बाहेक दुई ऊर्ध्वरेखाका वर्णहरूमा देब्रेतिरको मात्र रेखाको शिरोभागमा बनाइएको हुन्छ। गहिरिएर हेरेमा उत्तर भारतका अभिलेखहरूबाट अंशुवर्माका अभिलेखहरूलाई सजिलैसँग छुट्टयाउन सकिन्छ। यिनका आफ्नै भिन्न विशेषताहरू छन्।[११] जोहन फेथफुल फ्लीट स्वंयले 'कुटिलाक्षर' लिपिको विशिष्ट नाम नभई लेखनको प्रशंसामा दिइएका विशेषण हुनसक्ने सम्भावना प्रकट गरेका छन्।[१२]

'नेपाल हर्षवर्धन (६०६-६४३ ई.) को साम्राज्यभित्र थियो र अंशुवर्माको राज्यकालदेखि प्रचलित संवत् हर्षसंवत् थियो' भन्ने मान्यताको व्याख्याको

सन्दर्भमा पनि कुटिललिपिको कुरा उठाइन्थ्यो। अहमद हसन दानीले समेत नेपालमा कुटिललिपिको साथसाथ हर्षसंवत् प्रचलित रहेको मान्छन्। उनी लेख्छन्, "मध्यगंगा उपत्यकामा हर्षवर्धनको शासनकालको नयाँ परम्परा त्यस क्षेत्रबाट नेपाल पुग्यो। तर परिवर्तन अचानक भएको थिएन।"[१३] अंशुवर्मा स्वतन्त्र राजा थिए र उनको संवत्सँग हर्षको सम्बन्ध थिएन भन्ने कुराको समर्थनको निम्ति हाल निकै सामग्री पाइएका छन्।[१४] हर्षको सांस्कृतिक प्रभावको रूपमा हर्ष संवत् र लिपिगत विशेषता यहाँ आएको भन्ने सोचाईको कुनै आधार पाइँदैन।

भौगोलिक र सांस्कृतिक दृष्टिले नजिकै रहेको मगधको सांस्कृतिक प्रभाव नेपालमा पर्ने संभावनालाई इन्कार गर्न सकिँदैन। तथापि एघारौं शताब्दीभन्दा पहिले नेपाली संस्कृतिमा मगध र बंगालको प्रभावको बारेमा सोच्ने कुनै स्पष्ट आधार पाइँदैन। हर्षको नेपालसँग कुनै सम्बन्ध नरहेको र नेपालमा हर्षसंवत् नचलेको भन्ने मान्दा नेपालमा कुटिललिपिको अवधारणा स्वतः कमजोर हुनगएको छ। यसको अर्थ नेपालमा लिपिविकासको गति सर्वथा भिन्न छ भन्ने होइन। एउटै मूल स्रोतका दुइ लेखनहरूमा केही नकेही समानता नपाइने कुरा छैन, तर नेपालको लिपिविकासको प्रवृत्तितिर ध्यान दिएमा त्यस प्रकारको विकासको बीउ यहीं पाइन्छ। यसबारेमा विचार गर्नुपर्ने अर्को कुरा पनि छ। सानो क्षेत्रमा सीमित रहेतापनि लेखनमा विविधता लिच्छविलिपिको विशेषता रहेको छ। सातौं शताब्दीका केही लेखोटमा यस्ता विशेषताहरू देखिएका छन् जो कुटिललिपिका माथिका कतिपय लक्षणहरूसँग मिल्दछन्। उदाहरणको रूपमा ६६६ ई.को बलम्बूको अभिलेख लगायत कतिपय लेखोटहरूमा यस्ता केही विशेषता पाइन्छन्। बलम्बूअभिलेखमा अफसड अभिलेखमा झैं केही वर्णमा दाहिने ऊर्ध्वरेखा दायाँतिर पनि ढल्केका छन्। **क** र **त** मा यो स्पष्ट देखिन्छ।[१५] यस्ता उदाहरण निकै कम पाइन्छन्। कुटिलाक्षर परवर्त्ती लिच्छविलिपिको मूल लक्षण भने कहिल्यै रहेन। त्यसैगरी नवौं शताब्दीदेखिका केही लेखोटमा पनि यो विशेषता कहींकहीं देख्नसकिन्छ। यसका अनेक कारण हुनसक्छन्, यो साझा मूलको लिपिको विकासको साझा प्रवृत्तिको साझा परिणाम हुनसक्छ।[१६] तर यसले लिच्छविलिपिको मूलप्रवाहलाई भने प्रभावित गरेको देखिँदैन। केही नेपाली लेखकले पछिल्लो कालको लेखनलाई 'सिद्धमात्रिका' पनि भनेका छन्।[१७] नेपालको लिपिको अध्ययनमा यस शब्दको पनि प्रयोग गर्नु आवश्यक देखिँदैन।

## पाँच विकासचरणको मत

यसरी लिच्छविलिपिको कालविभाजनको मुख्य आधार रहिआएको कुटिललिपिको अवधारणा सन्देहास्पद देखिएपछि अन्य कुनै आधार खोज्नुपर्ने भएको छ। यसो गर्दा मानदेवको पालादेखि एउटै गतिमा लिपिविकास भएको तथ्यलाई ध्यानमा राखिनुपर्छ, यसरी मात्र क्रमशः विकसित विशेषताहरूको ऐतिहासिक दृष्टिले व्याख्या गर्न सकिन्छ। जहाँसम्म लिच्छविलिपिका दुई विकासचरणको विभाजनको प्रश्न छ, त्यो ठीक छ। वर्णमालाको बाह्य स्वरूपको

आधारमा विचार गर्दा पनि यस्तो विभाजन उपयुक्त देखिन्छ। तर लिच्छविकालको लेखनमा आएको परिवर्तनको मुख्य कारण स्थानीय विकासनै देखिन्छ। यसकारण सीमित रूपमा रहेको कुटिललिपिलाई लिच्छविलिपिको विकासको आधार मान्नसकिँदैन। अब कुन समयदेखिको लेखनलाई पछिल्लो लिच्छविलिपि मान्ने भन्ने सवाल आउँछ। ग्रन्थलेखनको लोकप्रियतासँगसँगै वर्णहरूको बाह्य रूपरेखामा अन्तर स्पष्ट देखापर्छ। त्यो काल नवौं शताब्दी हो। लेखनका माध्यम, प्रविधि र उपकरणमा आएको परिवर्तनको कारण नवौं शताब्दीको लेखनमा स्पष्ट भिन्नताको अनुभव गर्न सकिन्छ। यस प्रकार लिच्छविलिपिलाई आरम्भिक (पाँचौं शताब्दीदेखि आठौं शताब्दीसम्म) र परवर्ती (नवौं र दशौं शताब्दी) गरी दुई मुख्य चरणहरूमा विभाजन गर्नसकिन्छ।

वेलावेलामा विकसित लेखनका विशेषताहरूको विस्तृत अध्ययन गर्न दुई विकास कालको मतले पर्याप्तरूपमा सघाउन नसक्ने भएकोले आठौं शताब्दीसम्मका शिलालेखहरूको आधारमा लिपिलाई चार विकासचरणहरूमा अध्ययन गर्नु यहाँ बढी ठीक संझिएको छ। नवौं शताब्दीपछि खासगरी पाण्डुलिपिमा कायम रहेको लेखनलाई पाँचौ चरण वा सन्धिकाल भन्न सकिन्छ; किनभने यस चरणमा लिच्छविलेखनका पारम्परिक विशेषताहरूका साथसाथ थप भएका नौला विशेषताहरूसमेतका कारण नागरी र नेवारीलिपिका अनेक शैलीहरूको विकासको मार्ग प्रशस्त भएको छ।

**पहिलो चरण** (अन्दाजि ४५९ ई.देखि ५०५ ई.) :

मानदेवको शासनकालका २० जति अभिलेखहरू प्रारम्भिक लेखनअभ्यासको परिचय दिन्छन्।[१८] (फलक ९)। चौथो शताब्दीको कौशाम्बी लेखनले नेपालमा कसरी चोला फेऱ्यो र स्थानीय विकासको गतिलाई कसरी आफ्नै किसिमले अगि बढायो यस कालमा विकसित लेखाइले स्पष्ट पार्छ। आरम्भदेखि नै मोटो टाँकाको उपयोगले यहाँ लिपिविकासलाई नयाँ आयाम दियो। त्रिकोण डिको, कोणात्मक र मोटो रेखान्तका कारण यहाँका वर्णहरू बढी सुगठित छन्। सुरूदेखि नै यहाँ **स** र **ष**मा स्पष्ट भेद छ। व्यञ्जनको स्वरूप हेरी तीन किसिमका **आ**कार र **उ**कारको मात्राचिह्न प्रचलित छन्। (फलक १० र ११)। यस चरणको लेखनको बारेमा इलाहाबादस्तंभलेख र मानदेवको पालाको लेखनको अन्तर्सम्बन्धको प्रसंगमा धेरै कुरा परिसकेको छ। कौशाम्बीलेखन बंगाल हुँदै नेपालमा प्रवेश गरेको भन्ने दानीको अनुमानको सम्बन्धमा माथि नै विचार गरिसकिएको छ।[१९]

**दोस्रो चरण** (५०६-६०४ ई.) :

यस चरणमा वसन्तदेव, मनुदेव, वामनदेव, रामदेव, गणदेव, गंगादेव र शिवदेव प्रथमका अभिलेखहरू पर्दछन्।[२०] (फलक १२ र १३) यस चरणको लेखनमा पहिलेको अपेक्षा बढी मौलिकता पाइन्छ। स्वरवर्ण **अ**मा सामान्य परिवर्तन आएको छ। **ए**को त्रिकोणको माथिल्लो भाग थ्याप्चो (सोझो) भएको छ

र देब्रेभाग गोल बनेको छ। **आ**कारको अंकुशे मात्राचिह्नको उपयोग कम हुँदै गएको छ, तर पूरा हटेको छैन। **इ**कारको मात्रामा देब्रेतिर अरू तल झार्ने प्रवृत्ति बढिरहेको छ र **ति धि भि**मा स्पष्ट देख्न सकिन्छ। पहिलो चरणदेखि नै उकारको ठाडो रेखाको टुप्पो अर्थात् रेखान्तलाई मोटो बनाउने चलन थियो, जो यस कालमा जारी रहेको छ। ५०६ ई.देखि राजशासकीय अभिलेख पाइन्छन्, जसको आरंभ ॐस्वस्तिबाट गरिएको हुन्छ। ॐको स्वरूप झण्डै देवनागरीको ७ अङ्कको समान छ, तर वृत्ताकार गाँठो विरलै पाइन्छ। देब्रेबाट दाहिनेतिर कम र बढी गरी घुर्मिएका ॐका दुई स्वरूप पाइन्छन्। शङ्करमान राजवंशीले देवनागरीको **ञं** जस्तो स्वरूपको ॐ को नमुना देखाएका छन्। तीन भुजाका **ज**को माथिल्लो भुजा डीको रेखामा र तलका भुजाहरू क्रमश: तल झुक्दैगएका छन्। अर्धवर्त्तुल **ट**को माथिल्लो भागबाट झुक्दै दायाँ जाने तेर्सो रेखा वा टिक स्पष्ट भएको छ। टमा आकारको मात्रा बनाउँदा यसै टिकको टुप्पोलाई कोण बनाई माथि फर्काइएको हुन्छ। **ट**मा अर्को **ट** जोड्दा देब्रेतिर वा तलतिर मुख खुल्ने अर्धवृत्त जोडिएको हुन्छ। **ण**को देब्रेतिरको तल्लो गाँठो लोप भएको छ, तल्लो तेर्सो रेखा दायाँतिर ढल्किनपुगेको छ र दाहिने अङ्कुशे भुजा तलैसम्म झरेको छ। **ण**मा आकारको अङ्कुशे मात्रा लगाउने पुरानो चलनको साथसाथ यस चरणमा तलसम्म झरेको दाहिने भुजालाई माथि लगी **णा** बनाइएको छ। **थ** र **ध** लम्बवत् छन् र कहिलेकाहीँ देब्रेभाग बीचमा भित्र पसेको खुँडे भएको छ। अण्डाकार **ध** पनि पाइन्छ। दोस्रो व्यञ्जनका रूपमा जोडिएको **थ** को बीचको तेर्सो रेखा ठाडो रेखामा परिणत भएको पाइन्छ। भित्रपट्टि फर्किएको वृत्ताकार गाँठो भएको र बाहिरपट्टि घुमुर्किएको गरी तीनधर्के **य**का दुइ प्रकार पाइन्छन्। **क र** जस्ता वर्णहरूमा देब्रेतिर रेखान्त स्पष्ट भएको छ। यस चरणमा पछि उच्चारण हुने गरी जोडिएको तेर्सो रेखाको **र** निकै लामो बनेको पाइन्छ। **ह**को विकासमा यो चरण महत्त्वको देखिन्छ। पुरानो ढल्केको रेखाको ठाउँमा वैकल्पिक रूपमा ठाडो रेखामा अर्को एक विभाजन हुन गई अंकुश भागको देब्रेपट्टि अर्को ढल्केको रेखाको विकास भएको देखिन्छ। तर धेरैजसो ठाउँमा भने पुरानै **ह** कायम छ। राजा गणदेवका संवत् ४८२ (५६० ई.)का एकै बेहोराका थानकोट, बलम्बु, किसिपिडी र नजिकका ६ वटा अभिलेखहरूमा दुई किसिमको लेखोट पाइन्छ। बलम्बुको अभिलेख सावधानीसँग कुँदिएको छ र **ह** विशेष ढंगले लेखिएको छ जसबाट आगामी चरणमा कोणात्मक **ह**को विकास भएको हो। संयुक्ताक्षर **प्प**मा पछिल्लो प आकारमा ठुलो छ र तल बनाउने चलनको विपरीत दाहिनेतिर बनाइएको छ, जो अपवाद हो।

गोपालराजवंशावलीको अनुसार राजा भूमिगुप्तले "नेपालमा गोली नामक अक्षर प्रचलित गरे"।[२१] भूमिगुप्त शायद भौमगुप्त थिए, जसले ५५७ ई.देखि ५९०सम्म पर्याप्त राजनीतिक अधिकार कमाएको देखिन्छ, तर सामन्तको रूपमा अंशुवर्माको उपस्थितिपछि भौमगुप्त देखिनछोड्छन्। 'गोली' को अर्थ सम्भवत: गौडी (बंगाली) हो। माथिको विवरणबमोजिम यस चरणमा कतिपय अक्षर र मात्रामा परिवर्तन देखा परेतापनि तिनका मुख्य आधार प्रथम चरणकै अक्षर र

मात्राहरू देखिन्छन् । लेखनमा कुनै नौलो परिपाटीको प्रवेश भएको देखिँदैन र नयाँ 'लिपि' चलेको मान्ने कुनै आधार पाइँदैन । संयुक्त **ट्ट**मा तल्लो **ट**को मुख प्रायः तलतिर खुल्ने स्वरूपको तुलना अहमद हसन दानी बंगाली लेखनसँग गर्छन् ।[२२] तर यस्तो स्वरूप यहीं धस्काएर लेख्दा बनेको मान्नु तर्कसंगत देखिन्छ ।

**तेस्रो चरण** (६०५-६४२ ई.) :

यसमा राजा अंशुवर्मा, जिष्णुगुप्त र विष्णुगुप्तका २६ वटा शासकीय र केही व्यक्तिगत अभिलेखहरूलाई समावेश गरिएको छ ।[२३] (फलक १४-१६) । यस चरणमा सामान्यतया वर्णहरूको आन्तरिक बनावटमा खास फरक देखिँदैन । तथापि राजा अंशुवर्माका अभिलेखहरूमा लेखोट सफाई र सावधानीका साथ कुँदिएका कारण आकर्षक भएको छ । **अ** केही नौलो स्वरूपको छ । **ए**को माथिल्लो भाग चौडा भएको छ । ६१३ ई.मा पहिलोपल्ट स्वतन्त्र **ङ** पाइन्छ । जसको स्वरूप संयुक्ताक्षरमा उपयोग भएजस्तै देवनागरीको अङ्क ८ को समान छ ।[२४] **ट**को टिक बढी स्पष्ट भएको छ । दोस्रो चरणमा देब्रेतिरको गाँठो हटेको र तल्लो आधार रेखा ढल्केको **ण**ले काँचुली फेरेको छ । अब दायाँबायाँ दुवैतिर बाहिर फर्केका दुवै भुजाका टुप्पा निकै तलसम्म पुगेका छन् र दायाँतर्फको ऊर्ध्वरेखा सोझो भएको छ । **आ**कारको अङ्कुशे मात्राचिह्नको ठाउँमा दायाँतिरको ठाडो रेखाको तल्लो टुप्पोलाई मोडी माथिसम्म सोझो लग्ने अघिको चरणमा कतैकतै देखिने विशेषता सर्वत्र कायम भएको छ । **प म** बढी कोणात्मक भएका छन् । यस चरणको उत्तरार्धमा दुइधर्के **य**को स्वरूप वैकल्पिक रूपमा पहिलोपल्ट देखिन्छ ।[२५] तथापि अधिकांश लेखोटमा पुरानै स्वरूपको **य** कायम रहेको छ । **ल**को तल्लो भाग चौडा र कहिलेकाहीं कोणात्मक बनेको छ । **व** गोल र कोणात्मक दुवै पाइन्छन् । तल्लो भाग चौडा र देब्रे भाग कोणात्मक भएको **ह**को स्वरूप निर्धारित भएको छ ।

यस चरणको पूर्वार्धसम्म आकारको अङ्कुशे मात्राचिह्न खासगरी **ठ थ ध**मा कायम रहेको छ तर उत्तरार्धमा यिनबाट अङ्कुशचिह्न हटिसकेको छ र डीकोबाट दायाँतिर ढल्कँदै जाने तेर्सो रेखा कायम रहेको छ । **जा** र **टा**मा पुरानै पद्धतिको आकारको मात्रा कायम छ । व्यञ्जनको डीकोबाट देब्रेतिर झर्ने इकारको मात्राचिह्न विशेष गरी **ति नि भि**मा तलैसम्म झरेको छ; तर सबै व्यञ्जनमा यस्तो देखिँदैन । ६०० ई. तिरका केही उदाहरणहरूमा तलसम्म जाने इकार चिह्न वक्र नभई सोझो तानिएको देखिन्छ; तर अधिकांशमा यस्तो देखिँदैन । देब्रे अंगको न्यून कोणात्मकता र मोटो टाँकाको कारण र कलमलाई घुमाउँदा **द प म स** जस्ता केही व्यञ्जनहरूका दायाँ भुजाको तल्लो भागमा तीखो टुप्पो वा पुच्छर रहेको आभास पाइन्छ । **उ**कारको मात्राचिह्नमा खास फरक आएको छैन । **ऊ**को मात्रामा केही अन्तर आएको छ । व्यञ्जनहरूका दायाँ भागबाट तानिएको ऊर्ध्वरेखाबाट देब्रेतिर जाने **ऊ**मात्राको सोझो तेर्सो रेखाको ठाउँमा अब त्यसको टुप्पोलाई निकै तलसम्म मोडिएको हुन्छ । पछिल्लो व्यञ्जनको रूपमा जोडिने

रको (जस्तै **क्र प्र** आदि)स्वरूपमा पनि किञ्चित् फरक आएको छ। दायाँतिर जाने सोभ्रो तेर्सो रेखाको ठाउँमा अब केही माथितिर उठ्ने रेखाको चलन चलेको छ। यस स्वरूपको विकासको बीज दोस्रो चरणमै देखिन्छ। पछिल्लो व्यञ्जनको रूपमा जोडिने अङ्कुशे **य**को देब्रे अंग पहिलो चरणमा केही मात्र देब्रे फर्किएको हुन्थ्यो, दोस्रो चरणमा यो व्यञ्जनको आधारसम्म जान्थ्यो भने अब अब यो ठाडो रेखाको रूपमा डिकोको हाराहारीसम्म माथि पुगेको छ। यस स्थितिमा राजा हर्षवर्धनको लेखनको प्रभावको व्याख्या गर्ने आधार पाइँदैन।[२६]

## चौथो चरण (६४३-७३३ ई.) :

नरेन्द्रदेवको राज्यकालदेखि जयदेवको पालासम्मका अभिलेखहरूको लेखनमा अक्षरको बनोट र मात्राशैलीमा केही परिवर्तन देखिन्छ।[२७] (फलक १७-१९)। यस चरणमा दुइ किसिमका **अ** प्रचलित देखिन्छन्। **इ**को स्वरूपमा परिवर्तन आएको छ। ठाडो गरी बनाइएका दुई वृत्त र ऊर्ध्वरेखाको **इ**को ठाउँमा अब तेर्सो गरी बनाइएका दुई वृत्तहरूको तल देब्रेतिर जाने अंकुश भएको **इ**को स्वरूप निर्धारित भयो। यस चरणको आरंभमा पुरानै स्वरूपको **क** प्रचलित थियो। तर चाँडै नै दायाँतिर गाँठो भएको प्रकारको **क** विकसित भयो जो जोडको अक्षरमा बाहेक अन्तसम्म बनिरह्यो। चुच्चे **च**को स्वरूप देवनागरीको **च** झैं बनेको छ। यसको लम्बिएको ऊर्ध्वरेखा हेर्न लायक छ जसलाई पुच्छरको विकास भन्न सकिन्छ। **ज**को तल्लो भुजा दाहिनेतर्फ मुड्ने प्रवृत्ति मुखरित भएको छ। आरम्भमा पुरानै **न** पाइन्छ, तर चाँडैनै यसको साथसाथ दुई स्वरूप प्रचलनमा आए जसको तुलना देवनागरीको **व** र **न**सँग गर्न सकिन्छ। तेस्रो चरणको आखिरी चरणमा देखापर्ने दुइधर्के **य** यस चरणको आरम्भमा पुरानो तीनधर्के प्रकारको साथ साथ चलेको पाइन्छ। तर पछिपछि पुरानो स्वरूप लुप्त भयो र यही कायम रहयो। यस चरणमा गोल गाँठोको पारम्परिक **ष**को ठाउँ पेट चिरेको **ष**ले लियो। त्रिकोणात्मक **स**को ठाउँ अब मुख खुलेको **स**ले लियो। तेस्रो चरणमा वैकल्पिक रूपमा उपयोग हुन सुरू भएको **ह**ले पुरानो **ह**को ठाउँ लियो। तृतीयचरणको उत्तरार्धदेखि **च द प म य व स ष** जस्ता वर्णहरूको दायाँतिरको ऊर्ध्वरेखाको टुप्पामा देखा पर्ने पुच्छरको विकासेको प्रवृत्ति यस चरणमा बढी मुखरित भएको छ।

अङ्कुशे आकारको मात्रा अब पूरा लुप्त भइसकेको छ र डीको रेखाबाट दायाँ जाने तेर्सो रेखा र त्यसको टुप्पाबाट छोटो ऊर्ध्वरेखा तल झर्ने स्वरूपको आकारको मात्राचिह्न सबै व्यञ्जनमा पाइन्छ। इकारको मात्राचिह्न पुरानै कायम छ, यद्यपि केही ठाउँमा वक्ररेखा तलैसम्म आएको छ जो यस चरणको अन्तमा स्पष्ट देखिन्छ। ईकारको पुरानो मात्राचिह्न बढी पाइन्छ। तर यस कालमा अर्को देवनागरीको जस्तो चिह्न विकसित भएको छ, जो वैकल्पिक रूपमा देखिन्छ। ह्रस्व उमा (**कु रु**को समान) देब्रेतिर फर्कने अंकुश प्रायः सबै व्यञ्जनमा पाइनथाल्छ र यसरी उकारको मात्रामा एकरूपता कायम भएको छ। **ऊ, ए, ऐ, ओ,** र **औ** मात्राचिह्नहरूमा खास फरक आएको छैन। एकारको डीको माथिको

ढल्केको रेखा अब तरंगवत् बनेको छ (**पौ**)। यस कालका संयुक्ताक्षरमा पनि खास फरक पाइँदैन (**क्ष त्य न्द्र न्न स्तो स्य**)।

'कुटिलाक्षर' लिच्छविलिपिको सामान्य प्रवृत्ति नभएको कुरा माथि परेको छ। तर यसकालमा कुटिलाका केही उदाहरणहरू पाइन्छन्। **त** र **भ**को दाहिने भुजाको टुप्पो दायाँतिर तरंग झैं घुमेको, ह्रस्व इकारको मात्रा निकै वक्र हुनु जस्ता कतिपय मिल्दाजुल्दा लक्षण पाइने बलम्बुको अभिलेखमा[२८] पनि यस चरणका विशेषताहरू छन्। जस्तै यसमा त्रिकोणात्मक गाँठोको **क**, दुइ धर्के **य**, मुख खुलेको **स**को साथसाथ क्रमश: बढेको ऊर्ध्वरेखाको **आ**कारको मात्रा पाइन्छन्। यस कालका अधिकांश अभिलेखहरूमा कुटिलाक्षरका कथित लक्षण पाइँदैनन्। सातौं र आठौं शताब्दीहरूको लेखनमा पाइने वर्णहरूका स्वरूप र मात्राचिह्नहरूको मुख्य आधार आरंभिक चरणकै लेखन रहेको देखिन्छ।

## पाँचौं चरण/संक्रमणकाल (७३४ – १००० ई.) :

लिच्छविवंशको पतन भएपछिका सीमित संख्याका लघु अभिलेखहरू र ताडपत्रमा ग्रन्थका रूपमा लेखन कायमै रह्यो। तिथियुक्त अभिलेखहरूमा संवत् १७० (७४६ ई.को) मङ्गलबजार (पाटन) को धारालेख,[२९] सं. १८० (७५६ ई.) को यंगुबही (पाटन) को मूर्तिलेख,[३०] सं. २०७ (७८३ ई.) को हनुमानढोका धारालेख,[३१] (सं. २५० (८२६ ई.) को मोतीटार (पाटन) को धारालेख[३२] र सं. २७१ (८४७ ई.) को चाँगुनारायण अभिलेख प्रमुख छन्।[३३] यिनका लेखनमा साधारणतया पारम्परिक विशेषताहरूनै कायम छन्। पाण्डुलिपिको लेखनमा भने खासै आन्तरिक फरक नदेखिएता पनि माध्यम र उपकरणमा अन्तर आउनुको परिणामस्वरूप केहीनकेही बाह्य परिवर्तन देखिन्छ। यस चरणमा कतिपय वर्णहरू चौडा छन् र तिनमा पुच्छरको पूर्ण विकासले उल्लेखनीय परिवर्तन ल्याएको पाइन्छ। यो विशेषता खास गरी पाण्डुलिपिहरूका **क ख च थ द न प ब म य ल व श** र **स**मा स्पष्ट देख्नसकिन्छ। उत्तर भारतका लेखनमा यसै ताका भएको पुच्छरको विकासलाई नागरी वा प्राचीन देवनागरीको विशेषता मानिन्छ।[३४] (फलक २०)।

यस कालका पाण्डुलिपिहरूमा स्कन्दपुराण (राष्ट्रिय अभिलेखालय, काठमाडौं)[३५] परमेश्वरतन्त्र र बोधिसत्वभूमि (क्याम्ब्रिज वि.वि. संग्रहालय, बेलाइत),[३६] संवत् ३०१को सहोत्तरतन्त्र (केशर पुस्तकालय, काठमाडौं)[३७] नेपालसंवत् २८को लङ्कावतार (राष्ट्रियअभिलेखालय)[३८] (फलक २१) र नेपालसंवत् ८८को कारण्डव्यूह (राष्ट्रिय अभिलेखालय) (फलक २२) बढी चर्चित छन्। स्कन्दपुराण सं.२३४ (८१० ई.) मा लेखिएको हो। बोधिसत्वभूमिमा कुनै मिति छैन र यसमा दुइ किसिमको लेखाई पाइन्छ। आरम्भिक लेखाइमा पुरानोपन कायम छ। 'परमेश्वरतन्त्र' मा सं. २५२ (८२८ ई.) अंकित छ।[३९] बोधिसत्वभूमिको आरम्भिक भागको **ण** चतुर्थ चरणमा अन्यत्र दुर्लभ छ। यसमा आकारको मात्रामा पनि पुरानोपन देखिन्छ जो डिकोबाट दाहिनेतिर केही मात्र तल झरेको छ। यसरी हेर्दा बोधिसत्वभूमिको पहिलो लेखाई तृतीय चरणभन्दा धेरै

पछिको प्रतीत हुँदैन। यसमा र 'परमेश्वरतन्त्र' मा **न** दर्शनीय छ। **न**को दाहिनेतिरको गाँठो तेर्सो लंबवत् बनाइएको छ, बीचमा मसी भरिएको छ र दाहिनेतिरको भुजा सोभ्फो गरी तल फर्काइएको छ। परमेश्वरतन्त्र र स्कन्दपुराण दुवैमा सातौं शताब्दीको पूर्वार्द्धमा आरम्भ भएको **ण**को उपयोग गरिएको छ। स्कन्दपुराणको **न** र **स** प्राचीन स्वरूपका देखिन्छन्। तर उकारको मात्राचिह्न भने अक्षरको टुप्पोबाट देब्रेतिर अंकुशको रूपमा फर्काइएको छ। बोधिसत्वभूमिको पछिल्लो लेखन र स्कन्दपुराण दुवैमा आकारको मात्राचिह्नमा दाहिनेतिरको ठाडो रेखा तलसम्म भ्फारिएको छ। **ब**को बनावटमा अन्तर पाइन्छ। परमेश्वरतन्त्रमा देवनागरीको **य**को बीचमा तेर्सो रेखा खिंचेर **ब** बनाइएको प्रतीत हुन्छ। स्कन्दपुराणमा भने माथिल्लो दुवै भुजा जोडिएको देवनागरीको **प** जस्तो गरी **ब** लेखिएको छ।

यद्यपि लङ्कावतारलाई केही लेखकहरूले नेवारीलिपिको आरम्भिक उदाहरण मानेका छन्।[४०] लङ्कावतारमा अन्य वर्णहरूका साथसाथ **घ ण थ स** मा प्राचीन स्वरूपका साथसाथ नयाँ स्वरूप पनि देखिन्छ। **ञ** र **ड** मा नयाँपन उल्लेखनीय छ। समान्यतया शैली र लेखाइमा लङ्कावतारको स्कन्दपुराणसँग तुलना गर्न सकिन्छ। स्कन्दपुराणको लेखाइलाई चतुर्थ चरणबाट छुट्याउन गाह्रो छ। तर बोधिसत्वभूमि, लङ्कावतार र परमेश्वरतन्त्रको लेखनमा एउटा महत्त्वपूर्ण विशेषता देखिन्छ। त्यो विशेषता हो : अक्षरका दाहिने ऊर्ध्वरेखामा वक्रता देखिनु। कुटिलाक्षरबारे माथि विस्तृत चर्चा भएको छ। परमेश्वरतन्त्रको पछिल्लो लेखनमा यो विशेषता कम पाइन्छ। खास गरी पाण्डुलिपिको लेखनमा नवौंदेखि दशौं शताब्दीसम्म देखिने यो विशेषता शीघ्रताले धस्काएर लेख्दा अथवा लेखाइलाई सुन्दर रूप दिने प्रयासमा विकसित भएको हुनसक्छ।[४१] केही शताब्दीपछि देखिने विशेष गरी रञ्जनाका अक्षरहरूको दायाँ ऊर्ध्वरेखान्तबाट दाहिनेतिर ढल्केको पातलो रेखासँग यसको कुनै सम्बन्धबारे केही भन्न पनि गाह्रो छ। नेपालसवत् १०० (९८० ई.) को सुनधारा, पाटनको अभिलेखका अक्षर र लेखाइमा प्राचीनताको बढी आभास पाइन्छ। यसमा **ण म भ**, मुख खोलिएको **स**, डिकोबाट केही मात्र तल भ्फरेको आकारको मात्रा र **रि** मा तलसम्म नभ्फरेको मात्राले चतुर्थ चरणको संभ्फना गराउँछन्। यही विशेषता ने. सं. १०७ (९८७ ई.) को घायँबु कुम्भेश्वर, पाटनको शिलालेखमा पनि पाइन्छ।[४२] मोटो र एकनासको टाँका हुनु यसको अर्को विशेषता हो।

१००० ई.देखिको लेखनमा नौलोपन पाइनथाल्छ। यस चरणको लेखनका बाह्य स्वरूपमा दुई मुख्य प्रवृत्तिहरू देखिन्छन्।[४३] ती प्रवृत्तिहरूले यसपछि विकसित नेवारीलिपिका दुई मुख्य धाराको प्रतिनिधित्व गरेका छन् :

१. खास किसिमको कोणात्मक डीको भएका कारण ऊर्ध्वरेखाको माथिल्लो भाग बाँगो भ्फैं देखिन वर्णहरू, जसबाट कालान्तरमा विभिन्न किसिमका डीकोको नामले परिचित शैलीहरू विकसित भए, र
२. तेर्सो र मोटो डीकोमा लेखिएका मोटा र चौडा वर्णहरू, जसले अनेकौं शैलीहरूलाई प्रभावित गरे। नयाँ प्रवृत्तिहरूको प्रवेशका अनेक कारण

थिए। मुख्य कारण थियो लेखनमाध्यममा फरक आएकाले प्रविधिमा फरक आउनु। अब पाण्डुलिपि बढी लेखिए। घन र छेनुका ठाउँ अब मसी र कलमले लिए। यस नयाँ माध्यममा वर्णहरू लेख्दा तिनको स्वरूपमा बढी लचक हुनु स्वाभाविक थियो। नरम र लचकदार माध्यममा लेखनको प्रवाह बढ्नु र केही फरक देखापर्नु स्वाभाविक थियो। एघारौं शताब्दीमा नेपाली लेखनको इतिहासमा नौलो अध्याय सुरु हुन्छ।

## टिप्पणी

१. हेमराज शाक्य, **नेपाल लिपिप्रकाश** (काठमाडौं : नेपाल राजकीय प्रज्ञाप्रतिष्ठान, २०३०) पृष्ट ५। शाक्यले उत्तर लिच्छवी (कुटिल) लिपिका उदाहरणहरूमा वर्णहरूको दायाँ भागलाई कृत्रिम ढंगले तरंगवत् बनाइदिएका छन्। हेर्नुस् उही पृष्ठ १६-२१।

२. शङ्करमान राजवंशी, "नेपाली लिपिविकास" **कैलाश,** वर्ष २,अङ्क १-२, पृष्ठ ३८। राजवंशीले अंशुवर्माको संवत् २९को अभिलेखलाई दोस्रो कालको पहिलो नमुना मानेका छन्।

३. दशौं शताब्दीको (वि.सं.१०४९को) आरम्भिक नागरीमा लेखिएको उत्तर प्रदेशको देवलप्रशस्तिमा "कुटिलाक्षराणि" (अर्थात् टेढा अक्षरहरूको) उल्लेख पाइन्छ। यस शब्दलाई सर्वप्रथम जेम्स प्रिन्सेपले भारतीय पुरालेखनमा शामिल गरे। हालसम्म पनि मगधको सातौं शताब्दीको लेखोटको लागि यो शब्द प्रचलित छ।

४. John Faithful Fleet, ed. **Inscriptions of the Early Gupta Kings** in the **Corpus Inscriptionum Indicarum,** III. Pp.201-202.Plate XXVIII. अफसड लेखनमा उपर्युक्त लक्षणहरूको साथसाथ दीर्घ ईकारको मात्राचिह्न ह्रस्व मात्रा झैं पुरा अक्षरको दाहिने भागलाई छोप्ने गरी तलैसम्म तानिएको वक्ररेखा पाइन्छ। उनले त्यसलाई "सातौं शताब्दी ई.को मगधलेखनको कुटिलप्रकार" घोषित गरे।

५. गौरीशंकर हीराचन्द ओझा, **भारतीय प्राचीन लिपिमाला** (दिल्ली, १९५९) पृष्ठ ६२, त्यसको टिप्पणी २ र ३ र पृष्ठ ६३। कुटिलको चर्चा गर्दा फ्लीट र ओझा दुवै भिन्न अर्थ गरिरहेका देखापर्छन्।

६. Ahmad Hasan Dani, **Indian Palaeography** (Oxford: Clarendon Press, 1963). 115.

७. उही पृष्ठ १३०।

८. उही पृष्ठ १३९-४०।

९. उही पृष्ठ १४०।

१०. जर्ज बूलर, **भारतीय पुरालिपिशास्त्र** (हिन्दी अनुवाद) (मोतीलाल बनारसीदास, १९६६) पृष्ठ १०१ र अगाडि। उनले छैठौं शताब्दीदेखिनै त्यसको विकास भएको मानेका छन्। कोणयुक्त वर्ण र वर्णको ठाडोरेखाको अन्तिम भाग (रेखान्त) मोटो बनाउने चलन नेपालमा आरम्भदेखि नै पाइन्छ, तर अन्यत्र भनिए झैं हर्षका र आदित्यसेनका अभिलेखहरू र नेपालका अभिलेखहरूमा मौलिक अन्तरहरू छन्। वास्तवमा यो लक्षण बूलरले सम्पूर्ण उत्तर भारतको लेखनलाई ध्यानमा राखी बनाएका हुन्। स्वयं बूलरले अफसड अभिलेखलाई गुप्तलिपिको पश्चिमी प्रकार

र इलाहाबादप्रशस्तिसहित नेपालका अभिलेखहरूलाई (उत्तरी लिपिको) पूर्वी प्रकार मानेका छन्।

११. अंशुवर्माका अभिलेखहरूको भारतीय अभिलेखहरूसँग तुलना गर्दा स्पष्ट फरक देख्नसकिन्छ हेर्नुस् D.R. Regmi, **Inscriptions of Ancient Nepal.** (New Delhi: Abhinav Publications,1983). Plates LXVIII-LXXX, J.F.Fleet Plate XXVIII and A.H.Dani, **op.cit. note** 6, Plates Xa-b,6,7,8,10 and 11.

१२. ***op.cit.* note** 4. फ्लीटिले यस प्रसङ्गमा विभिन्न अभिलेखहरूमा प्रयोग भएका '**विकटाक्षर**'(अफसडअभिलेख), '**रुचिराक्षर**' (नागपुरअभिलेख), '**सद्वर्ण**' (राजा महीपालको सासबहु मन्दिरअभिलेख), आदिको उल्लेख गरेका छन्।

१३. अ.ह.दानी, **पूर्वोक्त** पृष्ठ १३९-४०।

१४. जगदीशचन्द्र रेग्मी, **प्राचीन नेपालको राजनीतिक इतिहास** (काठमाडौं : नेपाल राजकीय प्रज्ञाप्रतिष्ठान, २०३५), पृष्ठ १४४-४८।

१५. तुलना गर्नुस् डी.आर. रेग्मी, **पूर्वोक्त टिप्पणी** ११, प्लेट १२५ (बलम्बु अभिलेख) र जे.एफ.फ्लीट **पूर्वोक्त टिप्पणी** ४, प्लेट २८ (अफसडअभिलेख)।

१६. हेर्नुस् अध्याय १७। तुलनीय : शङ्करमान राजवंशी, **टिप्पणी** २, लिपिचित्र १६, १८।

१७. हेमराज शाक्य, **टिप्पणी** १, पृष्ठ ५। एघारौं शताब्दीमा अरब यात्री अल बेरूनीले त्यतिखेर कश्मीर र वाराणसीमा प्रचलित लेखनलाई 'सिद्धमातृका' भनेका थिए, (E.C. Sachau, trans. London,1910. I, P. 173). यस शब्दको सामान्य अर्थ मात्राहरू सिद्ध भएको लेखन भन्ने हुन्छ। भारतीय पुरालेखनमा यस शब्दको अर्थ खोज्ने प्रयास भएका छन्। बूलरको विचारमा (**टिप्पणी** १०, पृष्ठ १०२) अल बेरूनीको यससम्बन्धी कथन संक्षिप्त र अस्पष्ट छ।

१८. D.R. Regmi. ***op.cit.* note** 11, Plates I--XVIII.

१९. हेर्नुस् माथि अध्याय १३।

२०. D.R. Regmi, ***op.cit.*** Plates XIX—LXV. यस लेखकले पहिले सतही तौरमा यस चरणको अन्त ५८९ ई.मा हुने मानेको थियो। हेर्नुस् **पुरालेखन परिचय नेपाल** (काठमाडौं, २०४८) पृष्ठ ८० र अगाडि।

२१. Dhana Vajra Vajracharya and Kamal Prakash Malla, ed. **The Gopalarajavamsavali** (Kathmandu: Nepal Research cenre & National Archives, 1985) P 30. यहाँ भूमिगुप्तलाई शिवदेवभन्दा पहिले राज्य गर्ने तीन जना गोपालवंशी राजाहरूमध्ये अन्तिम राजाको रूपमा बयान गरिएको छ। भिन्न गोपालवंशको अस्तित्वको बारेमा इतिहासकारहरू सन्देह गर्छन्।

२२. अ.ह.दानी, **पूर्वोक्त** पृष्ठ १३९।

२३. D.R. Regmi, ***op.cit*.** Plates XLIX—CXV.

२४. राजा अंशुवर्माको संवत् ३७को (६१३ ई.को) तौखेल अभिलेखमा **तेस्तुं शुल्हमुड्ब्रह्मुडाङ्करणीय**..... हेर्नुस् **उही** Plate LXXVII.

२५. दुइधर्के **य** पहिलोपल्ट जिष्णुगुप्तको शासनकालको तिथि भाग नष्ट भएको छत्रचण्डेश्वरको अभिलेखमा र ६४१को सुनागुठी भृंगारेश्वर, ललितपुरको अभिलेखमा देखापर्छ। D.R. Regmi, *ibid.* Plates CIV, CIX.

२६. हेर्नुस् माथि यसै अध्यायमा कुटिलाबारे छलफलको प्रसङ्ग।

२७. D.R. Regmi, *op.cit.* Plates CXVI—CXLV.

२८. माथि (टिप्पणी १५मा) उल्लेख भएको ६६६ ई.को बलम्बु अभिलेखमा (डि.र.रेग्मी, प्लेट १२५) उपर्युक्त लक्षणहरूको साथसाथ **ह्रस्व** इकारको मात्रा निकै वक्र भएको छ र पातलिंदै गएको तल्लो टुप्पो वर्णको तल्लो भागसम्म पुगेको छ। यस लेखोटमा वर्णहरू निकै खुकुलो किसिमले कुँदिएका छन् अर्थात् अक्षरहरूका बीचमा निकै अन्तर राखिएको छ। यसलाई कुटिला मान्नुपर्छ।

२९. *ibid.* ***op.cit.*** Plate CXLVI.

३०. ***ibid.*** Plate CLVI.

३१. धनवज्र वज्राचार्य, **लिच्छविकालका अभिलेख** (काठमाडौं : त्रि.वि., २०३०), ५९४ जहाँ यसको देवनागरी लिप्यन्तर प्रकाशित छ।

३२. D.R. Regmi, ***op.cit.*** Plate CLVIII.

३३. D.R. Regmi, ***op.cit.*** Plate CLIX.

३४. हेर्नुस् तल अध्याय १६।

३५. यसका केही पंक्तिहरू शङ्करमान राजवंशीले (**टिप्पणी** २, लिपिचित्र १६ मा) दिएका छन्।

३६. Cecil Bendall, ed. **Catalogue of the Buddhist Sanskrit Manuscripts in the University Library, Cambridge** (Cambridge: University Press, 1883), pp.XXXIX-LI. नेपालमा लेखिएका परमेश्वरतन्त्र र बोधिसत्वभूमिका क्याम्ब्रिज वि.वि.मा दर्तासंख्या क्रमशः १०४९ र १७०२ छन्। बेण्डालले यिनका एक-एक पृष्ठका चित्र छपाएका छन्।

३७. सहोत्तरतन्त्रको अन्तिम पृष्ठको चित्र डि.र. रेग्मीले दिएका छन्। (**टिप्पणी** ११ प्लेट १६१)।

३८. यसका अन्तिम दुई पंक्तिहरू यहाँ फलक २१मा छन् र शङ्करमान राजवंशीले (**टिप्पणी** २, लिपिचित्र १८मा) हातले लेखेका केही पद्यहरू दिइएका छन्।

३९. सेसिल बेण्डालले (**टिप्पणी** ३५, पृष्ठ ४१-४२) यस संवत्को वर्ष २५२लाई हर्षसंवत् मानी यस पाण्डुलिपिलाई ८५७ ई.को मानेका छन्। ५७६ ई.मा उठेको संवत् मान्दा यो ८२८ ई. हुनआउँछ।

४०. शङ्करमान राजवंशी, **टिप्पणी** २, लिपिचित्र १८ र हेमराज शाक्य, **टिप्पणी** १, पृष्ठ ५, जहाँ यसलाई नेवारीलिपिको पहिलो उदाहरणको रूपमा प्रस्तुत गरिएको छ। लङ्कावतारलाई नेवारी लिपिको उदाहरण मान्न सकिँदैन। अध्याय १८ हेर्नुस्।

४१. बेण्डालले यिनलाई कुटिलअक्षर भनेका छन्। **टिप्पणी** ३५।

४२. शङ्करमान राजवंशीले यी दुवैका हातले लेखिएका लिपिचित्र प्रकाशित गरेका छन्। हेर्नुस् लिपिचित्र १९ र २०।

४३. अध्याय १८ हेर्नुस्।



# अध्याय पन्ध्र

# लिच्छविलिपिका विशेषताहरू

पाँचौ शताब्दीदेखि १००० ई.सम्मका अभिलेखहरू र पाण्डुलिपिहरूका लिच्छविलेखनका कतिपय विशेषताहरूबारे गत अध्यायहरूबाट थाहा भइसकेको हुनुपर्छ। लिच्छविलिपि ब्राह्मीबाट अनेकौं क्षेत्रमा विकसित लेखनशैलीहरूमध्ये कुनै एकको नजिक रहेर विकसित भएको लेखन हो। लिच्छविलिपिमा स्वयं ब्राह्मीका, कौशाम्बीशैलीका र नेपालमै लामो कालसम्म थप हुनपुगेका अनेकौं विशेषताहरू छन्। यसमा ब्राह्मीलेखनपद्धतिका ती सबै विशेषताहरू छन् जो ब्राह्मीमा पाइन्छन्। ती साझा विशेषता हुन्: पर्याप्त मात्रामा स्वतन्त्र स्वर र व्यञ्जनवर्णहरू, व्यञ्जनवर्णमा स्वर जनाउने मात्रापद्धति, संयुक्तव्यञ्जनपद्धति र संस्कृतव्याकरणका कतिपय नियमबमोजिम उच्चारण।[1] लिच्छविलिपिको व्युत्पत्ति र परिभाषाको प्रसङ्गमा कौशाम्बीशैलीको लेखनका विशेषताहरूको चर्चा माथि भइसकेको छ।[2] नेपालमा प्रवेश भइसकेपछि, लेखनमा थप भएका त्यस्ता विशेषताहरू जो अन्यत्र विरलै देखिन्छन् यहाँ लिच्छविलिपिका विशेषताअन्तर्गत विचार गरिएका छन्।[3] विभिन्न चरणहरूमा विकसित लिच्छविलिपिका मुख्य विशेषताहरूलाई यसरी रेखाङ्कित गर्न सकिन्छ :

## १. मोटो टाँकाको कलमको उपयोग

लिच्छविलिपिमा आरंभदेखिनै खास किसिमले मोटो टाँकाको कलमको उपयोग गरिएको पाइन्छ। यस्तो कलमको उपयोग अन्यत्र पनि कतैकतै केही समयसम्म पाइन्छ, तर लिच्छविलेखनमा यो विशेषता लामो समयसम्म रहेको छ र यस्तो कलमले लेख्ने पद्धति आफ्नै किसिमको छ। माथि मोटो र तल क्रमश: पातलो हुने गरी मोटो टाँकाले ऊर्ध्वरेखा तान्ने मथुराको शकक्षत्रपशैलीको लेखनको[4] विपरीत यहाँ ऊर्ध्वरेखा बराबर मोटाईको हुन्छ। यहाँ कलम घोप्टयाएर लेखिएको प्रतीत हुन्छ जसकारण मोडमा मोटाई बराबर हुँदैन। ऊर्ध्वरेखाको तल्लो भागमा यहाँ विशेष ध्यान दिइएको पाइन्छ, जो तीखो टुप्पोमा अन्त हुन्छ। यसरी अन्यत्र पनि पाइने मोटो कलमको उपयोग भएता पनि आफ्नो खास पद्धतिको साथसाथ लामो कालसम्म कायम रहेको कारण लिच्छविलिपिमा यो मूल विशेषता बनेको छ। यहाँ मोटो टाँकालाई घोप्ट्याएर र तेर्स्याएर मोटो र पातलो रेखा बनाई वर्णहरूका सबै अंगहरू समानुपातिक बनाइएका छन्। वर्णहरूका कोण, मोड र गोलाइमा यसको मनोहर प्रभाव देख्न सकिन्छ। यसरी मोटो टाँकाको कलमको खास किसिमको उपयोगले कालान्तरमा अन्यत्रको लेखनभन्दा लिच्छविलिपिलाई मौलिक र विशिष्ट बनाउन ठूलो सहयोग पुऱ्यायो।

## २. त्रिकोण डीको

शीर्षविन्दु ऊर्ध्वरेखामा मिल्ने गरी बनाइएको ठोस त्रिकोण आकारको डीको लिच्छविलिपिको अर्को विशेषता हो। त्रिकोण डीको सर्वप्रथम दोस्रो-तेस्रो

शताब्दीका मोहेनजोदाडो, शोरकोट र मझगावँ (मध्यप्रदेश)का केही लेखोटमा पाइन्छ।[५] तर तिनको डीको खोक्रो त्रिकोणस्वरूपको छ। चौथो शताब्दीको उत्तरार्धमा बंगालको एक लेखोटमा पहिलोपल्ट कतिपय वर्णहरूमा ठोस त्रिकोण डीको पाइन्छ।[६] पाँचौं शताब्दीका चन्द्रगुप्त द्वितीयको उदयगिरि गुफाअभिलेखमा पनि यस्तो डीको पाइन्छ।[७] तर ती दुवै ठाउँमा यो विशेषता केही वर्णहरूका शीर्षभागमा मात्र सीमित रहेको र त्यसको ठाउँ चाँडै नै अरू किसिमका डीकोले लिएको पाइन्छ। यो दीगो रहेर स्थानीय विशेषता बन्नसकेन। चन्द्रगुप्त द्वितीय र कुमारगुप्तका गढवाका केही अभिलेखहरूमा मोटो अर्धचन्द्राकार डीकोको प्रयोग भएको छ।[८] लिच्छविलिपिमा **ए ऐ ख ग ज ट ठ ण थ ध ब श** जस्ता खास प्रकृतिका वर्णहरूबाहेक शीर्षभागमा ऊर्ध्वरेखा हुने सबै वर्णहरूमा त्रिकोण डीको हुन्छ। दुइवटा रेखा हुने **अ प फ म ष स** जस्ता वर्णहरूमा देब्रेतिरको ऊर्ध्वरेखामा यस्तो डीको बनाइएको हुन्छ। त्रिकोण डीको लिच्छविलिपिमा मात्र सीमित रहेन बरू मध्यकालमा विकसित नेवारीलिपिको पनि विशेषता बन्यो। नेवारीलिपिका कतिपय शैलीहरूको उत्पत्तिको एक कारण त्रिकोण डीको रहेको देखिन्छ।[९]

## ३. रेखान्तको खास बनावट

लिच्छविलिपिका वर्णहरूका ऊर्ध्वरेखाको तल्लो टुप्पो वा रेखान्तको बनावट खास किसिमको छ। ऊर्ध्वरेखाको तल्लो भाग प्रायः दायाँतिर ढल्कने तीखो त्रिकोणमा चुच्चिँदै अन्त हुन्छ। यसको एउटा शीर्षविन्दु ऊर्ध्वरेखामा मिल्न गएको हुन्छ भने अर्को शीर्षविन्दु देब्रेतिर बढाइएको कोणको अन्तमा हुन्छ। तर कतैकतै रेखान्त मोटो बनाई शीर्षविन्दुलाई दायाँ वा बायाँ फर्काइएको देखिन्छ। दुवै अवस्थामा मोटा टाँकाको कलमलाई माथिबाट सुरु गर्दै बराबर मोटाइको रेखा बनाएर तल्लो टुप्पोमा देब्रेतिर फर्कने गरी जोर दिई उठाएको देखिन्छ। **इ क ड र**को साथसाथै दुइ भुजा हुने **अ ग त भ श**को दाहिनेतिरको भुजाको अन्तमा र **ख ज न प म य ल स ष ह** जस्ता वर्णहरूको उकारको मात्राचिह्नको ऊर्ध्वरेखाको अन्तमा यो विशेषता पाइन्छ। लिच्छविलिपिविकासको दोस्रो चरणका केही वर्णहरूमा देब्रे फर्काइएको कलमको प्रभाव झन् टड्कारो देखिन्छ।

## ४. कोण र गोलाइको विकास

ब्राह्मीको विकासका सुरुका चरणहरूमा केही क्षेत्रीय शैलीहरूमा वर्णहरूको बाह्य आकारप्रकारमा कोणात्मकता र गोलोपनको विकास भएको कुरा माथि गरिएको छ।[१०] ब्राह्मीको यो सहज प्रवृत्तिले लिच्छविलिपिमा जरो गाडेको छ। यस विशेषताले यहाँ झण्डै ५०० वर्षसम्म कतिपय वर्णहरूको स्वरूपलाई विशिष्ट बनाउन मद्दत गरेको छ। लिच्छविलिपिविकासको पहिलो चरणमै कोणात्मक **स** र गोल स्वरूपको **ष**को विकास गर्नुमा लिच्छविलेखकहरूमा यसबारे रहेको संवेदनशीलता बुझ्नसकिन्छ। लिच्छविलिपिका विकासका विभिन्न चरणमा **घ प य** मा कोणात्मकता र गोलोपन एकसाथ देखापर्छ। देब्रे भागमा गोलोपन र दायाँतिरको कोणात्मकताले गर्दा यी वर्णहरूको स्वरूप सन्तुलित छ र अन्यत्रको

भन्दा विशेष बन्न पुगेको छ। यसै गरी लिच्छविवर्णमालाका **ख**, **ङ**, **च**, **ड**, **द**, **भ**, **म**, **ल**, **ष** र **स**का कोण र त्रिकोण स्पष्ट बनेको छ। विकासका विभिन्न चरणहरूमा **ल ह**का अंकुश चौडा हुँदै कोणात्मकता बढ्दैगएको पाइन्छ।

## ५. शीघ्रलेखन र कर्सिभप्रवृत्ति

लिच्छविलिपिको मूल मानिएको कौशाम्बीशैलीको लेखनको मुख्य विशेषता शीघ्रताले धस्काएर लेख्ने कर्सिभप्रवृत्ति हो। यसै प्रवृत्तिबमोजिम कौशाम्बीमा विकसित **ण न म ल स ह** जस्ता व्यञ्जनहरूको साथसाथ स्वयं कर्सिभप्रवृत्ति लिच्छविलिपिमा कायम रहेको छ।[११] यस प्रवृत्तिको कारण लिच्छविलिपिमा कतिपय वर्णहरूका नयाँ स्वरूपको विकास भएको छ। आफ्नो विकासको पहिलो चरणमै लिच्छविवर्णमालामा गाँठो भएको र गाँठोरहित गरी दुई प्रकारको **ण** र सादा र पुच्छर भएको गरी दुइ प्रकारको **म** पाइन्छन्। यिनको विकास स्पष्टतः यसै प्रवृत्तिका कारण हुन्। परवर्ती चरणहरूमा **ब ज ण थ ध न ब य ल व स** र **ह** जस्ता कतिपय वर्णहरूका स्वरूपमा शीघ्रताले धस्काएर लेख्ने प्रवृत्तिको कारण परिवर्तन आउँदैगएको पाइन्छ। सुरूदेखि नै दुवैतिरका भुजा तल झुकेको **क**को देब्रे भुजा चौथो विकासचरणमा गाँठोको रूपमा विकसित भयो। यस प्रकारको **क** लेख्दा दुइपल्ट कलम उठाउनु पर्दैनथियो। यो विशेषता शीघ्रलेखनको प्रयासमा विकसित भएको हो। **ज**को ऊर्ध्वरेखा बीचमा दायाँतिर ढल्कने र देब्रेतिरका भुजाहरू तलतिर झुक्दै जाने प्रवृत्तिले अन्तिम चरणमा यसको स्वरूपमा ठूलो परिवर्तन आएको देखिन्छ। **ण**को गाँठो हराउनु, तल्लो तेर्सो रेखा ढल्कँदै जानु र दुवैतिरका भुजा झुक्दै अंकुशमा पविर्तन आइरहनुमा यही प्रवृत्ति रहेको पाइन्छ। यसै किसिमले वृत्तको दाहिने भाग भित्र पसेको **थ** र **ब**मा पनि परिवर्तन आइरहेको पाइन्छ। नको विकासमा पनि यही प्रवृत्ति देखिन्छ। लिच्छविलिपिविकासको चतुर्थ चरणमा वर्तमान देवनागरी जस्तो लाग्ने **न**को विकासको कारण पनि यही नै हो। शीघ्र लेख्ने प्रयासले पछिल्लो चरणमा तीन धर्के **य** दुइ धर्केको रूपमा देवनागरीको समान बन्नपुगेको छ। यसै प्रयासमा **ल**को अंकुश चौडा भएको, **ब**को ऊर्ध्वरेखा सोझो बनेको र देब्रेतिर त्रिकोणको ठाउँ गोलोपनले लिएको र त्रिकोण गाँठोको **स**को गाँठो माथिल्लो भागमा खुलेर मुख खुलेको रूपमा विकसित भएको हो। प्रायः प्रत्येक विकासचरणमा धस्काएर लेख्दा **ह**को स्वरूप भिन्नभिन्न भएको छ र तेस्रो चरणमा गोलोपन र कोणात्मकताको अचम्मको समन्वय देखाउँछ। संयुक्त व्यञ्जनमा सुरुदेखिनै खास गरी **ज ञ ट थ ध व** जस्ता वर्णहरू धस्काएर सरल तरीकाले लेखिएका छन्।

## ६. वर्णहरूका बाह्य स्वरूपमा विविधता

लिच्छविलिपिमा आरम्भदेखिनै कतिपय वर्णहरूमा विविधता पाइन्छ। देब्रेतिर गाँठो भएको र नभएको गरी दुई प्रकारको **ण**, पुच्छर भएको र नभएको गरी दुई प्रकारको **म** र बढी वा कम ढल्केको ऊर्ध्वरेखाको **ह** लिच्छविलिपिमा सुरुदेखिनै प्रचलित रहेका छन्। लिच्छविलिपिविकासको तेस्रो चरणमा दुइधर्के

यको र चौथो चरणमा निहुरीमुण्टे **न** र मुख खुलेको **स**को विकास भयो। निकैसम्म दुवै प्रकार साथसाथ चलेका पाइन्छन्। यस किसिमको विविधता पछि नेवारीलिपिको विकासको पूर्वाधार बन्न गएको देखिन्छ।[१२]

## ७. समानुपातिक वर्ण र पंक्तिबद्धता

अनुपात मिलेका वर्णहरू हुनु र लेखाईमा पंक्तिबद्धता लिच्छविलिपिको अर्को विशेषता हो। ब्राह्मीमूलको लेखनमा **ट ठ थ ब** जस्ता कतिपय वर्णहरूको बनोट अरू वर्णहरूको तुलनामा सानो हुन्छ। लिच्छविलिपिमा यस्ता वर्णहरू पनि समान आकारका बनाइएका छन्। तल र माथिका मात्राचिह्न र संयुक्तव्यञ्जनका कारणमात्र व्यञ्जनवर्णहरू आकारमा लामा देखिन्छन्। मोटो टाँकाको कलमको उपयोग, कोण र गोलोपनको मनोहर समन्वय, ठोस त्रिकोण डीको र खास किसिमको रेखान्तको कारण वर्णहरूको बनावटमा समान अनुपात कायम रहेको छ। यस्ता वर्णहरूलाई सोझो पंक्तिमा सजिलै लेख्न सकिन्छ।

## ८. अलंकरणको प्रवृत्ति

लिच्छविलिपिमा पूर्वी दक्कनमा झैं ऊर्ध्वरेखाको टुप्पोलाई मोड दिएर तथा मात्रारेखालाई अस्वाभाविक किसिमले लम्ब्याएर घुमुर्क्याएर लेखाइलाई खास स्वरूप दिने चलन चलेको पाइँदैन।[१३] तर लिच्छविकालीन लेखकहरूले अलङ्करणका अन्य उपायहरूको खोजी गरेका छन्। त्रिकोण डीको, खास किसिमको रेखान्त, कोणात्मकता र गोलोपनको समन्वयको साथसाथ मात्राचिह्नको वक्र, गोल र ढल्केका रेखाहरूको कारण लिच्छविलिपि स्वयं सुलेखनको नमूना प्रतीत हुन्छ। सुरुदेखिनै लिच्छविलिपिमा अनुस्वार, विसर्ग र स्वरवर्ण **इ** को विन्दुका ठाउँमा साना वृत्त बनेका छन्। मात्राचिह्नमा चाहिंदो वक्रता, मोड, गोलाई र लम्बाईको साथसाथ समानुपातिक वर्ण र लेखाईमा पंक्तिबद्धता र सफाईले अलङ्करणको प्रभाव पैदा गरेको छ।

## ९. अन्तिम चरणमा नयाँ प्रवृत्तिहरूको विकास

### (क) दुई लेखनप्रवृत्ति

लिच्छविलिपिविकासको अन्तिम चरणमा लेखनका बाह्य स्वरूपमा दुई मुख्य प्रवृत्तिहरू देखिन्छन्।[१४] ती प्रवृत्तिहरूले यसपछि विकसित नेवारीलिपिका दुई मुख्य धाराको प्रतिनिधित्व गरेका छन् :

१. खास किसिमको कोणात्मक डीको भएका कारण ऊर्ध्वरेखाको माथिल्लो भाग बाँगोझैं देखिने वर्णहरू, जसबाट कालान्तरमा विभिन्न किसिमका डीकोको नामले परिचित शैलीहरू विकसित भए, र

२. तेर्सो र मोटो डीकोमा लेखिएका मोटा र चौडा वर्णहरू, जसले नेवारीलिपिका अनेकौं शैलीहरूलाई प्रभावित गरे।

### (ख) नागरी लक्षणको विकास

१. यतिखेर भारतमा लामो तेर्सो रेखाको डीकोमा लम्बा र पुच्छरदार वर्णहरू लेख्ने चलन थियो जसलाई नागरी वा प्राचीन देवनागरी भनिन्छ। मात्राचिह्नमा एकरूपता र स्थायित्व तथा चौडा अक्षर नागरीका अन्य विशेषता हुन्। १००० ई.सम्म नेपालमा विकसित लेखनमा यी विशेषताहरू देखिन्छन्। यहाँ पनि पुच्छरदार र चौडा अक्षर पाइन्छन्।

२. अन्तिम चरणसम्म आइपुग्दा लिच्छविलिपिमा **क घ च छ थ प फ ब म व स र ष** जस्ता कतिपय वर्णहरूको तल्लो भागमा सानो पुच्छरको विकास भइसकेको थियो। यस कालको पाण्डुलिपिलेखनमा यो विशेषता चरम उत्कर्षमा पुग्यो। बेण्डालले क्याम्ब्रिज वि.वि.मा रहेको १००८ ई.को कुनै नेपाली ताडपत्र ग्रन्थको लेखनलाई नागरी भनेका छन्।[१५] जर्ज बूलरले भुजिँमोः र रञ्जना लगायत नेवारीका अनेक लेखनशैलीहरूको चर्चा नागरीको शीर्षक अन्तर्गत गरेका छन्।[१६] (तुलनीय फलक २१ र २२)। अन्यत्र झैं नेपालमा लेखनको विकास नागरीमा टुंगेन।

## १०. बाहिरी प्रभाव

पहिलेका लेखकहरूले उत्तर भारतमा वेलावेलामा विकसित लेखनशैलीहरूसँग तुलना गरी लिच्छविलिपिमा तिनको प्रभावको अनुमान गरे। एक त तिनीहरूसँग नेपालका स्रोतसामग्री कम थिए, अर्को पुरालेखनअध्ययनविधि पुरानो थियो। नेपालकै आरंभिक र पछिल्लाकालको लेखनको विकासको तुलना गर्नुभन्दा बढी तिनीहरूले आफैंले समसामयिक मानेका भारतका लेखनसँग लिच्छविलेखनको तुलना गर्नुलाई महत्त्व दिए। नेपालका अभिलेखहरूको कालक्रम निर्धारण गर्दा पनि तिनले पुरालेखनको आधारलाईभन्दा बढी राजनीतिक कारणलाई महत्त्व दिए। तिनका राजनीतिक प्रभावको व्याख्या समेत ठोस स्रोतमाथि आधारित थिएन। लिच्छविकालमा प्रचलित दोस्रो संवत्लाई हर्षसंवत् मानेर ती लेखकहरू हर्षको पालाको लेखनको प्रभाव अंशुवर्माको लेखनमा खोज्नपुगे। तिनले कुटिलाक्षरको मत अगि बढाए। आज पाइने सामग्रीहरूले अंशुवर्माको उत्कर्ष हर्षको राज्यारोहणभन्दा निकै पहिलेदेखि रहेको र हर्षको चरम उत्कर्षको समयमा अंशुवर्मालाई मरिसकेको देखाएका छन्।[१७] भारतसँग सांस्कृतिक संपर्कको ढोका बन्द थिएन। सांस्कृतिक सम्पर्क कायम थियो। कुटिलाक्षरको लक्षण नेपालमा सातौं शताब्दीको उत्तरार्धका केही लेखोटमा पाइन्छ। तर यसले लिच्छविलिपिको मूल प्रवाहलाई प्रभावित गरेको पाइँदैन।[१८] शीघ्रताले धस्काएर लेख्ने अभ्यासले कतिपय वर्णहरूमा आएको परिवर्तनलाई बाह्यप्रभाव मान्नु ठीक ठहर्दैन।

वास्तवमा एकपल्ट लेखनको प्रवेश भइसकेपछि दशौं शताब्दीसम्मको नेपालको लेखनमा बाहिरी प्रभावका लक्षण ज्यादै नै कम पाइन्छ। लिच्छविलिपिविकासका परवर्ती चरणमा अर्थात् नवौं शताब्दीपछिको लेखनमा भने बाह्यप्रभाव देखिन्छन्।[१९] १००० ई. ताका नेपालमा पाण्डुलिपिग्रन्थहरूको माग बढिरहेको र पूर्वी भारतमा सारिएका ग्रन्थहरूले नेपालमा प्रवेश पाएका

देखिन्छन । त्यसै वेलाका ग्रन्थहरूमा नागरीका लक्षणहरू स्पष्ट देखिनलाग्छन् । तथापि तिनमध्ये कतिपय परिवर्तनको बीज यहीं विकसित पूर्ववर्ती चरणको लेखनमा पाइन्छ । त्यसको साथै नागरी यहाँको लिपिविकासको अन्तिम चरण थिएन । नेवारीलिपिको विकासको साथसाथै नागरीलिपिका लक्षणहरूका ठाउँमा लेखनका अनेक नयाँ शैलीहरूको प्रवर्तन भयो ।

## ११. अन्य विशेषताहरू

(क) संख्यावाचक चिह्न वा अङ्कलेखनको निरन्तरता लिच्छविलेखनको अर्को विशेषता हो । श्लोकसंख्या, दिइएको वस्तु, रकम वा भूमिको परिमाण, संवत्, पृष्ठसंख्या, आदिको लागि यिनको उपयोग गरिएको हुन्छ । संवत्को निम्ति अङ्कचिह्नको उपयोग नेपालमा सबै कालका सबै माध्यममा भएको छ । लिच्छविकालीन अभिलेखमा शब्दहरूको माध्यमले अङ्क लेख्ने चलन चलेन ।[२०]

(ख) लिच्छविलिपिका अभिलेखहरूमा संक्षेपीकरणको विशेषता पाइन्छ । यिनमा अन्यत्र झैं संवत्लाई सं. मात्र लेख्ने चलन त पाईदैन, तर भूमि, पण, पुराण, मानिका जस्ता केही शब्दहरूको पहिलो अक्षर मात्र लेखी संक्षेपीकरण गरिएका उदाहरण पाइन्छन् ।[२१]

## टिप्पणी

१. ब्राह्मीलिपि र ब्राह्मीलेखनपद्धतिका विशेषताहरूबारे अध्याय ११मा विचार गरिएको छ ।
२. कौशाम्बीलिपिका विशेषताहरूको बारेमा अध्याय १२मा विस्तारसँग चर्चा भएको छ र यहाँ पनि प्रसङ्गवश आएका छन् ।
३. स्पष्ट पदच्छेद नगरिनु अर्थात् वर्णहरू शब्द-पद नमिलाई समान दूरीमा लेख्नु, समयको साथसाथ वर्णहरूको अकारप्रकारमा फरक आइरहनु जस्ता विशेषताहरू ब्राह्मीलिपिको विकासक्रममा सर्वत्र देखिने साझा विशेषता हुन् । यस्ता कुरा माथि यहाँ विचार गरिएको छैन ।
४. हेर्नुस् अध्याय १२ ।
५. Ahmad Hasan Dani, **Indian Palaeography** ( Oxford: The Clarendon Press, 1963) 80-81.
६. ibid. Plate XI.1 चौथो शताब्दीको उत्तरार्धको मानिएको चन्द्रवर्मन्को सुसुनिया चट्टान अभिलेख ।
७. J.F.Fleet, **Corpus Inscriptionum Indicarum,** Vol. III (reprint. Varanasi: Indological Book House, 1963) Plate iv A.
८. J.F.Fleet, *ibid.* Plate iv BCD.
९. प्रारम्भिक नेवारीलिपिको कोणात्मक डीको, भुजिँमोः र रञ्जनाको डीकोको उत्पत्ति लिच्छविलिपिको डीकोबाटै भएको देखिन्छ । हेर्नुस् अध्याय १८ ।
१०. माथि अध्याय १२ हेर्नुस् ।
११. विस्तारको लागि हेर्नुस् अध्याय १३ ।

१२. अध्याय १८ हेर्नुस् ।
१३. माथि अध्याय १२ हेर्नुस् ।
१४. माथि अध्याय १४ र तल अध्याय १८ हेर्नुस् ।
१५. Cecil Bendall, **Catalogue of the Buddhist Sanskrit Manuscripts in the University Library, Cambridge** (Cambridge: University Press, 1883) Add. 836, Plate 1.3.
१६. George Buhler, **Indian Palaeography** (reprint. Calcutta: 1962) 93-95.
१७. जगदीशचन्द्र रेग्मी, **प्राचीन नेपालको राजनीतिक इतिहास** (काठमाडौं :नेपाल राजकीय प्रज्ञाप्रतिष्ठान, २०३५), पृष्ठ १४४-४८ ।
१८. नरेन्द्रदेवको पालाको बलम्बूको सं.९० (ई. ६६६) को अभिलेख लगायत केही अभिलेखको लेखन भारतको अफसडअभिलेखको लेखनसँग तुलनीय छ। हेर्नुस् D.R. Regmi, **Inscriptions of Ancient Nepal** (New Delhi: Abhinav Publications,1983) Plate CXXV; J.F.Fleet, ed. **Corpus Inscriptionum Indicarum,** Vol.III, Plate xxviii. विस्तारको लागि हेर्नुस् माथि अध्याय १४ ।
१९. अध्याय १४ हेर्नुस् ।
२०. शब्दहरूको माध्यमले अङ्क लेख्ने चलन बाह्रौं शताब्दीदेखि यहाँ लोकप्रिय भयो । हेर्नुस् अध्याय २० ।
२१. लिच्छवि लेखोटमा मानिकालाई **मा**, पणलाई **प**, पुराणलाई **पु** मात्र लेखिएका उदाहरण पाइन्छन् । हेर्नुस् फलक १५ । नेवारी भाषाको मुख्य विशेषता रहिआएको संक्षेपीकरण कतै लिच्छविकालीन अभिलेखको प्रभाव त होइन ?



# अध्याय सोह्र

# मध्यकालीन लेखन

नवौं शताब्दी ई.को उत्तरार्धमा नेपालसंवत्को आरम्भ भएपछि अठारौं शताब्दीसम्मको काललाई नेपालको इतिहासमा मध्यकाल भन्ने चलन छ। मध्यकालको आरम्भमा राजनीतिक इतिहास धेरै जानिएको छैन तर नेपाली संस्कृतिको विकासको इतिहासमा यस कालको खास महत्त्व छ। दशौं शताब्दीताका पठनपाठन र लेखनमा धेरै प्रगति भएको देखिन्छ। भारतसँग खासगरी बंगालविहार र तिब्बतको साथ नेपालको धार्मिकसांस्कृतिक सम्बन्ध प्रगाढ रहेको पाइन्छ। नेपालमा भारतका प्रतिष्ठित विश्वविद्यालयहरूबाट स्नातक पण्डितहरू रहेका पाइन्छन्। भारतका पण्डितहरू वेलावेलामा यहाँ धार्मिक उपदेश र दार्शनिक प्रवचन दिन आएका सन्दर्भ पाइन्छन्। देशमा एकातिर बौद्धधर्मका महायान र तन्त्रप्रधान वज्रयानको प्रचार भइरहेको पाइन्छ भने अर्कोतिर शिवपशुपति र विष्णुलाई मान्ने हिन्दुहरू देखापर्छन्। यहाँ लेखनको मूल उद्देश्य सँधै धार्मिक रहँदैआएको छ। लेखन संस्कृतिको अङ्ग हो। एक अङ्गको प्रभाव अर्को अङ्गमा पर्नु स्वाभाविक हुन्छ। त्यस वेला नेपालमा लेखनको चलन धेरै बढेको र लेखनमा विभिन्न प्रयोग भएको पाइन्छ। पुरालेखनको दृष्टिले दशौं शताब्दी ई.सम्म ग्रन्थलेखनमा लिच्छविलिपिकै परम्पराको अनुसरण गरिएको कुराको चर्चा माथि गरिएको छ।[1] (फलक २०-२२)।

पुस्तकहरूको मांग बढेको वेलामा यहाँका पुस्तकहरूबाहेक अन्यत्र लेखिएका पुस्तक पढ्ने र लेख्नेहरूको हातमा पुग्नु अस्वभाविक थिएन। अनेक ग्रन्थ सारिए, सारिने ग्रन्थ जहाँ लेखिएका पनि हुनसक्थे। यी सबबाट लेखकहरूले प्रयोगका नयाँ अवसर पाए। परिणामस्वरूप एघारौं शताब्दीमा नवीन शैलीको लेखनको आरम्भ भएको देखापर्छ। त्यस लेखनको पारम्परिक नाम नेवा:आख: अर्थात् नेपाल अक्षर वा नेवारीलिपि हो। अबको लेखनमा लिच्छविलिपिका मात्राचिह्न, वर्णहरूको आकारप्रकारके साथसाथ तिनका शीर्षभागमा निकै परिवर्तन आएको छ। कालान्तरमा नेवारीलिपि विभिन्न शैलीहरूमा विकसित हुँदै गयो। यस लेखनको विकासको समयमा घरभित्र र छरछिमेकमा घटित त्यस्ता घटना र तथ्यहरूको चर्चा गर्नु यहाँ आवश्यक ठानिएको छ जसले नेपालको सांस्कृतिक गतिविधिमा नौलो स्फूर्ति दिएका थिए।

राजा जयदेव (७१३–७३३ ई.) पछिको कुनै पनि लिच्छवि राजाको अभिलेख पाइदैन। त्यसपछि केही स्थानीय राजाहरूले राज्य गरे। त्यसताका अभिलेखहरू पाइँदै नपाइने होइनन् तर ती संख्यामा कम र आकारमा साना छन्। ती मूर्ति, शिवलिङ्ग, ढुंगेधारा, चैत्यमा लेखिएका छन्। बाह्रौं शताब्दी ई. पछि शिलालेखहरूको साथसाथ ताम्रपत्रलेख पाइनथाल्छन्। राजकीय र व्यक्तिगत दानपत्रको साथसाथ ताम्रपत्रमा अनेक विषयका लेख रहेका छन्। सोह्रौं शताब्दीदेखि राजाहरूको बीचमा सम्झौता भएका लेखोट अर्थात् सन्धिपत्र पनि

ताम्रपत्रको विषय भएको छ। खासमा चौधौं शताब्दीदेखि पाण्डुलिपिग्रन्थको साथसाथ शिलालेख, स्तम्भलेख, मूर्तिलेख, ताम्रपत्र जस्ता प्राय: सबै माध्यममा लेखोटको विस्तार भएको पाइन्छ।

लिच्छविकालपछिको पुरालेखनअध्ययनको स्रोत अभिलेखहरू र ताम्रपत्रमा सीमित रहेन। वस्तुत: यो पाण्डुलिपि अर्थात् हस्तलिखितग्रन्थको काल हुनआएको छ। पन्ध्रौं शताब्दीसम्म ताडपत्रमा र त्यसपछिदेखि डेढ शताब्दीपहिले मुद्रित पुस्तकको चलन चल्नुअघिसम्म फुस्रोपहेंलो र नीलोकालो रंगको नेपाली पाको कागतका पानाहरूमा लेखिएका ग्रन्थहरू पर्याप्त मात्रामा पाइएकाछन्।[२] अधिकांश ग्रन्थहरू संस्कृत भाषाका छन्। ती ग्रन्थहरू हिन्दू र बौद्ध धर्मसम्बन्धी पूजाविधि, स्तोत्र र माहात्म्य, कथा र दर्शनको साथसाथ ज्योतिष, पुराण, धर्मशास्त्र, तन्त्रशास्त्र, देवदेवीको मूर्तिविज्ञान, शिल्पशास्त्र र वास्तुविज्ञान जस्ता भिन्नभिन्न विषयका छन्। अन्यत्र दुर्लभ रहेका कतिपय ग्रन्थहरू नेपालमा पाइएका छन्। ग्रन्थहरूको अन्तमा ग्रन्थ सार्ने लेखकको तर्फबाट लेखिएको मिति र टिप्पणीबाट इतिहास, र संस्कृतिका विभिन्न पक्षहरूबारे जानकारी पाइन्छ। मूल पाठ सिद्धिएको जनाउने फूलबुट्टा पछिको पुष्पिकावाक्यबाट शासकका नाम, तिथि, सामाजिक र सांस्कृतिक घटना र विशेषताको साथसाथै स्वयं पुरालेखनका विशेषताहरूबारे महत्त्वपूर्ण जानकारी पाइन्छ।[३] (फलक २१,२२ र २६)। मध्यकालमा काठमाडौं उपत्यकामा माथि बयान गरिएका विभिन्न किसिमका लेखोटका साथसाथै जग्गाका खरीदबिक्रीसम्बन्धी व्यावहारिक तमसुक पत्रहरू पाइन्छन्। यसबाट लौकिकजीवनमा समेत लेखनको अपरिहार्यताबारे बुझ्नसकिन्छ।

## राजनीतिक र सांस्कृतिक गतिविधि

अक्टुबर ८७९ ई.मा नेपालसंवत्को आरंभ र एघारौं शताब्दी ई.मा दक्षिण भारतका नान्यदेवद्वारा वर्तमान नेपालको सिमरौनगढमा राजधानी तुल्याई मिथिला राज्यको स्थापना मध्यकालको सुरुमा घटेका महत्त्वका घटना थिए। नेपालसंवत्को आरम्भ कुन उपलक्षमा कसले गऱ्यो भन्ने कुरा अझै राम्ररी जानिएको छैन।[४] तथापि नेपालसंवत्को सांस्कृतिक महत्त्वको बारेमा कसैको विरोध पाइँदैन। यसको थालनीले कालक्रमको समस्यालाई समाधान गर्न ठूलो सहयोग त गरेकै छ, त्यसको साथसाथ एक नयाँ युगको सूत्रपात गरेको छ।

मिथिलाका राजा हुनुअघि नान्यदेव दक्षिण भारतका चालुक्य वंशका कुनै राजाका सेनापति रहेका मानिन्छन्।[५] उनका वंशलाई कर्णाट र राज्यलाई तिरहुत, डोय वा मिथिला भनिन्छ। तिनको राजधानी नेपालको बारा जिल्लामा पर्ने सिमरौनगढमा थियो। नान्यदेवको राज्यमा विहार राज्यका मैथिली भाषा संस्कृति बहुल क्षेत्रको साथसाथै हाल नेपालका धनुषा, महोत्तरी र रौतहटका भूभाग सम्मिलित रहेको देखिन्छ। नान्यदेव र उनका वंशजहरूले ११९२ ई.मा र त्यसपछि धेरैपल्ट नेपालमाथि असफल आक्रमण गरेको कुरा थाहा भएको छ। केही वंशावलीहरूमा नान्यदेवले काठमाडौं उपत्यका विजय गरेको बयान पाइन्छ,

तर अन्य समसामयिक स्रोतहरूबाट यसको पुष्टि हुँदैन।[६] नान्यदेव र उनका वंशजहरूले नेपालमा राजनीतिक प्रभाव स्थापित गरेको देखिदैन। त्यतिखेर शिवदेव वा सिंहदेव (१०९९–११२६ ई.) नेपालका महत्त्वका शासक थिए। उपत्यका बाहिर मंग्वरविषय (शायद कास्कीमा कतै) शिवदेवको अधीनमा थियो जहाँ उनको ताम्रपत्र पाइएको छ।[७]

तेह्रौं शताब्दीको पूर्वार्धमा नान्यदेवको वंशका तिरहुते राजा रामसिंहले १२२४ ई. र १२४५ ई.मा काठमाडौं उपत्यकामा गरेको आक्रमणबाट वर्तमान नेपालको पूर्वीतराई क्षेत्रलाई आफ्नो अधीनमा पारे।[८] आफ्ना पुष्पिकावाक्यमा राजा रामसिंहको उल्लेख गर्ने कैयौं हस्तलिखित ग्रन्थहरू काठमाडौं उपत्यकामा पाइएका छन्।[९] तिरहुते राजा नेपालका केही भारदारहरूलाई आफूतिर मिलाउने प्रयास गर्नेगर्थे। ती अनेकौं गुटहरूमा विभाजित थिए र विरोधी गुटलाई पराजित गर्न तिरहुतेहरूलाई गुहार गर्नेगर्थे। कर्णाटवंशका अन्तिम राजा हरसिंह (हरिसिंह) देवले यसबाट फाइदा उठाई १३०९ ई.मा उपत्यकामा आक्रमण गर्न आफ्ना मन्त्री चन्द्रेश्वर ठक्कुरलाई पठाए। यस वेला यहाँका राजा अनन्तमल्ल (१२७४-१३०९ ई.) को मृत्यु भइसकेको थियो। चन्द्रेश्वर ठक्कुरको आक्रमणमा ललितपुर नगर ध्वस्त भयो र पशुपतिनाथको ढुकुटी लुटियो।[१०] त्यस घटनाको दश वर्षजतिपछि गयासुद्दिन तुगलकको आक्रमणमा पराजित भई हरसिंहदेव ज्यान बचाउन सिन्धुली आए, जहाँ उनको मृत्यु भयो।।[११] तिरहुतमा तुगलकको अधिकार भयो। हरसिंहदेवकी विधवा रानी देवलदेवीले भने नेपालदरबारमा सम्मानित स्थान मात्र पाइनन्, बरू लामो अवधिसम्म नेपाल राज्यको संचालन गर्ने समेत शक्ति आर्जन गरिन्।[१२]

मिथिला राज्यमा बंगाल र बिहारमा आठौं शताब्दीदेखि बाह्रौं शताब्दीसम्म विकसित संस्कृतिको ठुलो प्रभाव थियो। तेह्रौं शताब्दीमा मैथिलीलिपिको विकास हुनुअगि त्यहाँ नागरी वा आदिबाङ्ला जस्ता स्थानीय रूपमा विकसित पूर्वीलेखनप्रकार प्रचलित थियो। त्यहाँ र बंगाल बिहारमा लेखिएका अनेकौं ग्रन्थ नेपालमा पाइएका छन्। सिमरौनगढका कतिपय सांस्कृतिक विशेषताहरू काठमाडौं उपत्यकाको तत्कालीन नेपालीसमाजमा परेको अनुभव गरिएको छ।[१३]

सुदूर पश्चिमको कर्णाली प्रदेशमा बाह्रौं शताब्दी ई.मा खशमल्लवंशका राजाहरूको बलियो राज्यस्थापना भएपछि त्यो क्रमशः शक्तिशाली हुँदैगयो।[१४] यस राज्यमा पश्चिमी तिब्बतको ङरीप्रदेशदेखि हाल नेपालको प्रायः सबै सुदूरपश्चिमाञ्चल विकासक्षेत्र र भारतको नवनिर्मित उत्तरांचल प्रदेशका कुमाऊं र गढवाल सम्मिलित थिए। यस वंशका राजा जितारिमल्लले १२८८ ई.मा तीन वर्षसम्म काठमाडौं उपत्यकामाथि धेरैपटक आक्रमण गरे र ठूलो धनराशि लुटेर लगे। जितारिमल्लका उत्तराधिकारी छोरा आदित्यमल्ल र भतिजा पुण्यमल्लले पनि उपत्यकामा आक्रमण गरी लुट्ने क्रम जारी राखे।[१५] तर तिनीहरूले यहाँ आफ्नो राजनीतिक प्रभाव भने स्थायी रूपमा स्थापित गर्नसकेनन्। चौधौं शताब्दीदेखि खसराज्य अनेकौं ससाना टाकुरे राज्यहरूमा विभाजित हुनपुग्यो।

खशमल्लहरू बौद्ध धर्मप्रति आस्था राख्थे। तिनको तिब्बत र भारतसँग पनि सांस्कृतिक संबन्ध कायम थियो। बृहत्तर नेपालमा खसकुरा अर्थात् नेपाली भाषा र खससंस्कृतिले ठुलो भूमिका खेलेको छ। नेपाली भाषा खससमाजको देन थियो। खस राज्यको पतन भएपछि त्यहाँका नेपाली बोल्नेहरू बिस्तारैबिस्तारै वर्तमान नेपालका प्रायः सबै पहाडी जिल्लाहरूमा पुगे। फलस्वरूप त्यहाँ नेपाली भाषा र खससंस्कृतिको प्रसार सम्भव भयो। खसमल्ल शासकहरूका ढुंगा, स्तम्भ, ताम्रपत्र र कनकपत्र अभिलेखहरू पाइएका छन्।[१६] यिनमा नागरी वा पुरानो देवनागरी लिपिको उपयोग भएको छ। यहाँको पुरालेखनको विषयमा कुनै अध्ययन भएको छैन। तथापि त्यस लेखनमा काठमाडौं उपत्यकामा विकसित लेखनपरम्पराको प्रभाव देखिँदैन।

बाह्रौं शताब्दी ई.ताका बौद्ध धर्म र कलाका क्षेत्रमा तिब्बतसँग पनि नेपालको गहीरो संबन्ध रहेको देखिन्छ। चीनियाँ स्रोतबाट जानिएबमोजिम चीनियाँ (मंगोलियाई) सम्राट् कुबलई खानले आफ्ना धर्मगुरूको आग्रह बमोजिम तिब्बतमा कुनै स्तूपको निर्माण गर्न नेपालबाट कलाकारहरू बोलाए। त्यस टोलीको नाइके अ-नि-को (अरनिको) भनिएको छ। नेपाली कलाकारको कामबाट प्रभावित भएर चीनियाँ सम्राट्ले अ-नि-कोलाई आफ्नो दरबारमा उच्च पद दिई राखे। नेपालका यस कलाकारको बारेमा धेरै कुरा जानिएको छ।[१७] तत्कालीन चीनका केही स्तूप र मूर्तिहरूमा नेपाली कलाका लक्षण पाइन्छन्। चीनमा पछिसम्म पनि महायान शाखाका अनेकौं देवदेवीहरूका मूर्ति ढालिए जो नेपालमा लेखिएका प्रतिमाविज्ञानका आधारमा बनाइएका छन्। यस ताका तिब्बतका विद्वान्हरू नेपाल आउनेजाने गर्थे। तेह्रौं शताब्दी ई.मा तिब्बती विद्वान् च्याग् लोचवा चो जे पाल (संस्कृत नाम धर्मस्वामी) भारतका बौद्धतीर्थ जानुअघि नेपाल आई आठ वर्ष बसे।[१८]

बंगाल र विहार राज्यमा आठौं शताब्दीमा गोपाल नामक राजाले स्थापना गरेको पालवंशको अन्त सेनवंशका शासकहरूबाट बाह्रौं शताब्दीमा भयो। पालवंशका शासकहरू बौद्धधर्मका पक्षपाती थिए भने सेनहरू हिन्दुधर्मका पक्षपाती थिए। ती दुवैका शासनकालमा कला, धर्म, र संस्कृतिको अभूतपूर्व प्रगति भएको थियो।[१९] बिहार राज्यका नालन्दाको विहार र भागलपुरनजिक विक्रमशिलाविहार शिक्षा, धर्म, कला र संस्कृतिका ठुला केन्द्र थिए। भगवान् बुद्धका गतिविधिको केन्द्र भएको कारण बौद्ध तीर्थस्थल बनेको नालन्दामा ई. पू. तेस्रो शताब्दीमा अशोकले विहार बनाएका थिए। पछि गुप्तसम्राट्हरूले चौथो शताब्दीताका शिक्षा र कलाको केन्द्रका रूपमा नालन्दाको विकास गरे। सातौं शताब्दीका युवान च्वांगको समयमा नालन्दामा विभिन्न विषय पढ्ने विद्यार्थीहरूको संख्या दश हजार थियो। पछि यो महायान बौद्धदर्शनको मुख्य केन्द्र बन्यो। नागार्जुन, वसुबन्धु, असङ्ग, धर्मकीर्ति जस्ता विद्वान् दार्शनिक नालन्दाका स्नातक थिए।[२०]

भागलपुरबाट ४० किलोमींटर टाढा पालवंशी राजा धर्मपालले ८०० ई. ताका विक्रमशिलाविहारको निर्माण गरी विद्यालयको रूपमा विकसित गरे।[२१] यहाँ

बौद्ध धर्म र दर्शनको साथसाथ न्यायशास्त्र र व्याकरण विषय पनि पढाइन्थे। दशौं शत्ताब्दीमा यहाँको विद्यार्थीसंख्या नालन्दाकोभन्दा कम थिएन। विदेशी विद्यार्थीहरूमा धेरैजसो तिब्बतका हुन्थे। विक्रमशिला विश्वविद्यालयमा छ संकाय थिए जसका प्रमुख द्वारपण्डित भनिन्थे। छजना द्वारपण्डितहरूको समितिद्वारा विश्वविद्यालयको संचालन हुन्थ्यो। कुलपति महास्थविर भनिन्थ्यो। यी दुवै विद्यालयहरू आफ्ना विशाल पुस्तकालय र महान् बौद्ध विद्वान्हरूको कारण प्रसिद्ध भए। यी वज्रयान र तन्त्रशास्त्रका ठूला केन्द्र थिए, जहाँ टाढाटाढाका शिष्यहरू पढ्न आउने गर्थे।

वज्रयान योगाचार दर्शनको विकास हो, जसको निर्वाणको अवधारणामा शून्य र विज्ञानको साथसाथ महासुख तत्त्वको सिद्धान्तको थप भएको छ। वज्रयानमा थुप्रै नवीन विचार थपिएका छन्। पाँच स्कन्ध जस्तो बौद्ध दर्शनका मौलिक र विश्वव्यापी तत्त्वहरूलाई पाँच ध्यानीबुद्धका रूपमा मानवीय स्वरूप दिइएको छ। यताबाट पाँच ध्यानीबुद्धका कुलको सिद्धान्तको विकास हुन्छ र ती कुलहरूबाट आवश्यकताबमोजिम अनेकौं देवदेवीको उत्पत्ति हुन्छ। बौद्धदर्शनमा पहिलोपल्ट शक्तिको पूजा वज्रयानले सुरु गरेको पाइन्छ। यहाँ शक्ति प्रज्ञा भनिन्छ। यस दर्शनले थुप्रै देवदेवीहरूका पूजा, साक्षात्कार गर्ने साधना, मन्त्र, तन्त्र, यन्त्र, मुद्रा, मण्डलका रहस्यमय अनुभव र मनोगत अभ्यासका बारेमा धेरै ध्यान दिएको छ। माध्यमिक दर्शनको शून्यवादबाट प्रभावित भई योगाचारले विकसित गरेको तन्त्रलाई वज्रयानले बढी गति दिएको छ। माध्यमिक दर्शन अनुसार अन्तर्जगत् र बाह्यजगत्मा शून्यको कुनै अस्तित्व छैन। वज्रयानमा शून्यको सकारात्मक पक्षलाई आवश्यक ठानी महत्त्व दिइएको छ। यसमा वज्रलाई खास अर्थमा शून्यको प्रतीक मानिन्छ। यसअनुसार वज्र दृढ, ठोस, पूर्ण, अपरिवर्तनीय, अभेद्य, अछेद्य, अलङ्घ्य, बाल्ननसकिने र अनाशवान् छ।[२२]

नेपालको शैक्षिक इतिहासको बारेमा धेरै जानिएको छैन। तथापि नवौंदशौं शताब्दीताका थुप्रै माध्यममा पाइएका लेखनका नमुनाहरूबाट लेख्नेपढ्ने र ग्रन्थ लेख्ने काममा तीव्रता आएको सहजै अनुमान गर्न सकिन्छ। तिब्बतको पारम्परिक इतिहासबाट मध्यकालीन नेपालका पण्डितहरू र तिनको शिष्यपरम्परा, विक्रमशिलाविश्वविद्यालयसँग तिनको सम्बन्ध, भारतीय र तिब्बती विद्वान्हरूसँग तिनका साहचर्य तथा वज्रयान र तन्त्रयानको प्रचारमा तिनको योगदानका बारेमा महत्त्वपूर्ण सूचना पाइन्छ। यस अनुसार विक्रमशिला र नालन्दामा नेपाली विद्यार्थी र शिक्षकहरूको निकै पहिलेदेखिनै आवागमनको क्रम जारी थियो, त्यहाँ पढ्ने स्नातकहरूको नेपालमा ठुलो इज्जत थियो।[२३] तिब्बत जानुअघि र स्वदेश फर्कनुअघि भारतीय विद्वान्हरू केही दिन नेपालमा बस्न रुचाउंथे। शान्तरक्षित र पद्मसंभव लगायत अनेकौं आचार्यहरूले यसै गरे।[२४] शान्तरक्षितले पद्मसंभवलाई काठमाडौंबाटै तिब्बत लगेका थिए। भारतीय पण्डितहरूको नेपाल आउने परम्परा निकैसम्म चलेको हुनुपर्छ। नेपाल र तिब्बतको बीचमा पनि विद्वान्हरूको आवागमन निकैसम्म जारी रह्यो।

यस कालमा विकसित बौद्धधर्म र दर्शनको प्रचारकार्यमा भारतको बिहारबंगाल र तिब्बतपछि नेपालको पनि भूमिका महत्त्वको देखिन्छ। यिनको प्रचारकार्यमा मिशनरी उत्साह र त्याग रहेको देखिन्छ। आठौं शताब्दीका शान्तरक्षित नामका बौद्धविद्वान् त्यसकालका शायद पहिलो भारतीय पण्डित थिए जसले नेपालमा यो काम सुरु गरे। तिनले तिब्बतबाट नेपाल आई वज्रयान दर्शनका तान्त्रिक विद्वान् पद्मसंभवसँग भेटेर तिब्बतलाई आफ्नु कार्यक्षेत्र बनाउन राजी गराए। तिब्बतमा पद्मसंभवले निकै प्रतिष्ठा पाए।[२५] गुरु रिम्पोछेको नाउँमा पद्मसंभवको पूजा तिब्बत र उत्तरी नेपालमा आज पनि गरिन्छ। १०१३ मा राजा महीपालले विक्रमशिलाका बौद्ध विद्वान्हरूको शिष्टमण्डल तिब्बत पठाएका थिए।[२६] त्यसको पच्चीस वर्षपछि अर्का राजा नयपालले दोस्रो शिष्टमण्डल तिब्बत पठाए जसका नेता प्रसिद्ध बौद्ध विद्वान् अतिशा दीपङ्कर थिए।[२७] अतिशा दीपङ्कर बुद्धगया हुँदै १०४१ मा काठमाडौं आए। काठमाडौंको ठमेलमा एक वर्ष बसेर उनले थमबहीमा धर्मधातु विहार बनाए, अनेकौं शिष्य तयार गरे र चर्या गीतहरूको संग्रह गरेपछिमात्र उनी तिब्बत पुगेका थिए।[२८] शायद यसैताका वज्रयानी तान्त्रिक विद्वान् नारोपा नेपालमा प्रचारकार्य गर्दैथिए।[२९] तन्त्रमा सिद्धि पाएका नारोपा एक ताका विक्रमशिलाका द्वारपण्डित पनि थिए। यी विक्रमशिलाका अर्का द्वारपण्डित वागीश्वरकीर्तिका गुरु थिए। वागीश्वरकीर्ति फर्पिङका नेपाली पण्डित थिए। यिनका शिष्यपरम्पराबारे पनि जानकारी भएको छ।

तिब्बतमा बसी यश कमाएका नेपाली पण्डितहरूको र काठमाडौं उपत्यकामा बसेर तिब्बती छात्रहरूलाई पढाउने गुरुहरूको बारेमा तिब्बतीपरम्परामा निकै बयान पाइन्छन्। दशौं शताब्दीका नेपाली पण्डितहरूमा रत्नकीर्ति, वैरोचन र कनकश्रीका नाम निकै पाइन्छन् जो विक्रमशिलामा पढेपछि त्यहीं शिक्षक भएका थिए। कनकश्री एकपल्ट त्यहाँका द्वारपण्डित पनि भएका थिए। यी तीनै जना तिब्बतमा पनि पुगेका थिए, जहाँ ती असल गुरुका रूपमा प्रसिद्ध थिए। नेपालका अनेक विहारहरूमा असल गुरुका खोजीमा तिब्बती विद्यार्थीहरू आइरहन्थे भन्ने कुरा तिब्बती वंशावलीहरूबाट थाहा हुन्छ।[३०]

बाह्रौं शताब्दीसम्मको बंगाल, विहार र आसामको इतिहास महत्त्वको थियो। विक्रमशिला, नालन्दा, उदन्तपुरी (पटना नजिकै) र बंगलादेशको ढाकाको विक्रमपुर जस्ता शिक्षा र संस्कृतिका केन्द्रमा अन्य कुराको साथसाथ बौद्ध दर्शनको बारेमा चर्चापरिचर्चा हुन्थे र ग्रन्थ लेखिन्थे भने वज्रयोगिनी (आसाम), विक्रमपुर जस्ता ठाउँमा दर्शनले तोकेका कर्मकाण्डको अभ्यास हुन्थ्यो। त्यसैगरी शिक्षाकेन्दहरूमा नयाँ देवदेवीका स्वरूप निर्धारित हुन्थे र त्यस आधारमा नालन्दा र अन्य स्थानमा मूर्तिहरू बनाइन्थे। त्यतिखेरको विकासशील दर्शन तन्त्रप्रधान वज्रयान थियो।[३१] बंगाल र विहारका तीर्थस्थानको साथसाथ बौद्ध शिक्षाकेन्द्रमा जानुआउनु गर्ने नेपाली बौद्धहरू मूकदर्शक रहेनन्होला। पण्डितहरू नेपाल र तिब्बतमा आउनेजाने गरिरहन्थे, यहाँ वज्रयानको प्रचार थियो।

तेह्रौं शताब्दीमा बख्तियार खिलजीबाट भारतका ती केन्द्रहरूको पतन भएपछि त्यहाँ विकसित संस्कृतिका अनेकौं पक्ष भारतबाट सधैंको लागि अन्त भयो, तर कतिपय धार्मिक र सांस्कृतिक विशेषताहरू काठमाडौं उपत्यकाका स्थापित हुनपुगे।[३२] नेपालको वज्रयान र तान्त्रिकमतमा बंगाल, आसाम र विहारमा विकसित मतहरूको बलियो प्रभाव रहेको अनुभव गरिएको छ। वज्रयानको अभ्यास हुने थोरै ठाउँहरूमध्ये आज नेपाल एउटा हुन आएको छ।

मध्यकालमा काठमाडौं उपत्यकामा ग्रन्थलेखनको प्रचलन थियो नै, बाहिर शायद गण्डकी क्षेत्र (गण्डीगुल्म?), र पोखरामा (धवलस्रोतपुर वा मग्वर विषयमा) समेत उपत्यकामा विकसित लिपिमा ग्रन्थहरू लेख्ने चलन चल्यो। संवत् २०४ (१०८४ ई.) मा त्यहाँ सारिएको संस्कृतभाषाको आयुर्वेदग्रन्थ **चरकसंहिता**का लेखक रत्नपालश्रीवास्तव भनिएका छन्।[३३] श्रीवास्तव कायस्थ जातिको थर हो, जो लेखनदारीको काम गर्थे। यस कालमा लेखिएका अनेकौं ग्रन्थहरूका लेखक कायस्थ भनिएका छन्।[३४] कतिपय नेपाली ग्रन्थहरूका लेखक भारतीय देखिन्छन्। संवत् ३०३ (११८३ ई.को) एक ग्रन्थका लेखक जेजाभुक्ति वा बुन्देलखण्डका निवासी कायस्थपण्डित श्रीरत्नपाल थिए।[३५] संवत् ३३६ (१२१६ ई.को) एउटा ग्रन्थका लेखक गुजरातको चमत्कारपुरका ब्राह्मण थिए जसको नाउँ पण्डिताचार्य थियो।[३६] संवत् २६४मा (११४४ ई.मा) सारिएको एक ग्रन्थका लेखक कश्मीरबाट आएका थिए।[३७]

१२०३ ई.मा बख्तियार खिलजीद्वारा विहार र बंगालमा गरिएको आक्रमणमा प्रायः सबै बौद्ध विहारहरू नष्ट भए, अध्यापक र छात्रहरू मारिए। बच्न सकेकाहरूमध्ये केही सुरक्षाको खोजीमा नेपाल पसे भन्ने मानिन्छ।[३८] तिनका साथमा आफ्ना भिःटीमा पुस्तकहरू रहेहोलान्। त्यहाँ लेखिएका केही ग्रन्थहरू यहाँ पाइएका छन्। त्यस्ता केही पाण्डुलिपिग्रन्थहरूले नेपालको राजनीतिक इतिहासमा विवादको सिर्जना समेत गरेका छन्। कुब्जिकामत शीर्षकको तन्त्रशास्त्रको पुष्पिकावाक्यमा 'राजा रामपालको विजयराज्यमा लेखिएको' भनिएको छ।[३९] यसका आधारमा आरंभका केही इतिहासकारले नेपाल रामपालको अधीनमा रहेको भन्ने मानेका थिए। यस्ता अनेकौं पाण्डुलिपि ग्रन्थहरू पाइएका छन् जो लेखनशैलीका आधारमा नेपालमा लेखिएका देखिंदैनन्।[४०] ती ग्रन्थहरू शरणार्थी, तीर्थयात्री, विद्यार्थी वा गुरू कसैले ल्याएका हुनसक्थे।

बौद्धधर्मका साथसाथ यस कालमा नेपालको हिन्दु धर्ममा पनि नयाँ चिन्तन आयो। शिवपशुपति र विष्णुलाई मान्ने कतिपय सम्प्रदायहरू गतिशील थिए। नाथसम्प्रदायका योगी र हिन्दु तान्त्रिकहरू समाजलाई प्रभावित गर्दै थिए।[४१] वेलावेलामा धार्मिक सन्त, योगी र हिन्दु विद्वान् नेपाल आइरहन्थे। वंशावलीहरूमा बाह्रौं शताब्दीताका शङ्कराचार्यको आगमन र तिनको बौद्धहरूका बीच हिंसापूर्ण कलहको बयान गरिएको छ। तत्कालीन राजकुमारहरूले त्यस्ता कतिपय शङ्कराचार्यहरूबाट शिक्षा पाएको बयान पनि पाइन्छ।[४२] इतिहासकारहरूले अतिशा दीपङ्करको समान त्यस वेला कुनै शङ्कराचार्यले नेपालमा आई हिन्दुधर्मको सुधार र प्रचार गरेको अनुमान गरेका छन्।[४३]

चौधौं शताब्दीमा बंगाल र विहारमा अधिकार स्थापित गरेपछि शमसुद्दीन इलियासले १३४९ ई.मा सिन्धुलीको बाटोबाट काठमाडौं उपत्यकामाथि भारी आक्रमणगरे।[४४] त्यसमा पशुपतिको ढुकुटीका साथसाथ भारीसम्पति लुटिएको र सात दिनसम्म मन्दिर र मूर्तिहरू भत्काइएको र फोरिएको बयान समसामयिक वंशावली र अभिलेखहरूमा पाइन्छ।[४५] यस आक्रमणले काठमाडौं उपत्यकामा दीर्घकालीन राजनीतिक प्रभाव नपारेता पनि आर्थिक र सांस्कृतिक क्षेत्रमा भने निकै गहीरो नकारात्मक प्रभाव पार्‍यो। यो घटना बौद्धहरूका लागि पनि दुःखदायी थियो।

शमशुद्दीन इलियासको अक्मणमा फुटेको पशुपतिको शिवलिङ्गको ठाउंमा १३६१ ई.मा अर्को शिवलिङ्गको प्राणप्रतिष्ठा हुँदा पनि भारतका केही हिन्दु शैवनेता, सन्त र विद्वान् नेपाल आएकैहोलान्। यसको प्रभाव नेपालको प्रचलित धर्मचिन्तनमा पर्नु स्वाभाविक हो। त्यस्तो अवस्थामा भारतमा विकसित नवीन चिन्तन र तद्विषयक ग्रन्थ यहाँ आए जो कालान्तरमा यहीं सारिए होलान् भन्ने जस्ता तर्कनाहरू सहजै उठ्छन्।

चौधौं शताब्दीको उत्तरार्धमा पुरानो राजवंशकी उत्तराधिकारिणी नायकदेवीकी छोरी राजल्लदेवीका पतिका हैसियतमा स्थितिमल्ल शक्तिमा आए। उनी शायद तिरहुततिरका क्षत्रिय थिए। धेरैसम्म प्रशासनको उच्च ओहदामा बसेर स्थितिमल्ल अन्तमा सार्वभौम राजा बने। उनले स्थापना गरेको मल्लवंश चार सय वर्षसम्म चल्यो। राज्यमा अमनचैन र सुरक्षा, सामाजिक र आर्थिक क्षेत्रमा सुधार, कला, वास्तुकला र लेखनको विकासको लागि मल्लकाल नेपालको इतिहासमा निकै प्रसिद्ध रहेको छ। नेपालको मध्यकालीन संस्कृतिको निर्माणमा मल्लकालको ठुलो देन रहेको छ। आरंभिक मल्लकालमा तिरहुतका केही सांस्कृतिक परंपराको प्रवेश भयो। पछिल्लो कालमा राज्य विभाजन, आपसी बेमेल, आन्तरिक कलह र शत्रुहरूको गतिविर्धिप्रतिको लापरवाहीको साथसाथ, छिमेकमा भइरहेको राजनीतिक परिवर्तनको कारण मल्लवंश कमजोर भयो। पशिचमको पहाडी राज्य गोर्खाका राजा पृथ्वीनारायण शाहले नजिकैका ससाना राज्यहरू जित्दै गई मल्ल राज्यहरूबाट प्रभावित क्षेत्रहरूमाथि अधिकार स्थापित गरेर १७६८ मा काठमाडौं उपत्यका जिते। पृथ्वीनारायण शाहका उत्तराधिकारीहरूले एक शताब्दीभित्र एकीकरणअभियान पूरा गरी वर्तमान नेपालको निर्माण गरे। कालान्तरमा नेपाली भाषाको विस्तारको साथसाथ देवनागरी लोकप्रिय हुँदैगयो र नेवारीलिपि काठमाडौं उपत्यकामा सीमित हुँदैगयो।

## समकालीन भारतीय लेखन

यो समय भारतमा लेखनको विकासको लागि महत्त्वको थियो। दशौं शताब्दीसम्ममा भारतको ठुलो क्षेत्रमा नागरी अर्थात् प्राचीन देवनागरी विकसित भइसकेको थियो।[४६] सामान्यतया कुटिलालिपिबाट नागरीको विकास भएको मानिन्छ। कुटिलालाई न्यूनकोणीय वा सिद्धमात्रिका भन्ने नाम दिने जर्ज बूलर पनि त्यसैबाट नागरीको विकास भएको मान्छन्। उनी नागरीलाई परिभाषित गर्ने

एकमात्र पुराना पुरालेखनविद् हुन् । जर्ज बूलरको विचारमा नागरीका वर्ण लामा र पुच्छर भएका हुन्छन् तथा शिरोभागमा लामो रेखा (डीको) बनेको हुन्छ । उनको अनुसार नागरीका नमुना सातौं शताब्दीदेखि पाइनथाल्छन् ।[४७] तथापि सबै क्षेत्रमा कुटिला वा न्यूनकोणीय लेखनका लक्षण पाइँदैनन् र विभिन्न ठाउंमा विकसित नागरीमा वर्तमान देवनागरीमा झैं एकरूपता पाइँदैन । वर्तमान देवनागरीको एकरूपतामा उण्डाइसौं शताब्दीदेखि प्रचलित छापाखानाको भूमिका सबैलाई थाहा छ । वास्तवमा दशौं शताब्दीसम्म सुदूर दक्षिणबाहेक भारतमा प्रायः सर्वत्र वर्णहरूको तल्लो भागमा सानो सोझो फुर्को वा पुच्छर र मात्राहरूको निर्धारित चिह्नहरूको विकास भने भइसकेको थियो । संभवतः यही कुरालाई लक्ष्य गरेर एघारौं शताब्दीमा भारतभ्रमण गरी यहाँको संस्कृति, कला र दर्शनको अध्ययन गर्ने अरब लेखक अल बेरूनीले त्यतिखेर खासगरी काशी र कश्मीरमा प्रचलित लेखनलाई सिद्धमात्रिका भनेका छन् ।[४८] सिद्धमात्रिकाको अर्थ स्पष्ट रूपमा विकसित मात्राचिह्न भएको लेखन भन्ने हुन्छ ।

त्यतिखेर स्थानीय रूपमा विकसित नागरीमा आआफ्ना क्षेत्रीयलेखनका विशेषताहरू उपस्थित थिए । कतै भने स्थानीयलेखनमा बाह्यप्रभाव अत्यधिक देखिन्छ र त्यस्ता लेखनमा स्थानीय विशेषता कमै देखिन्छन् । कतिपय प्रान्तमा क्षेत्रीयलेखनका विशेषताहरू यति मात्रामा प्रबल थिए कि तिनले प्रान्तीय लिपिको विकासमा ठुलो भूमिका खेले । पंजाब र काश्मीरमा नवौं शताब्दीसम्म पारम्परिक मथुराशैलीको लेखनबाट शारदालिपि विकसित भइसकेको थियो ।[४९] बंगालमा एघारौं शताब्दीमा आदिबाङ्ला र तेह्रौं शताब्दीमा बाङ्लालिपि, गुजरातमा गुजराती लिपिको विकास आआफ्ना क्षेत्रीय लेखनका मूल आधारमा भएको थियो ।

लेखनको परंपरा समृद्ध रहेका केही प्रान्तहरूमा त्यसै ताका आफ्ना क्षेत्रीय लेखनका विशेषताहरूले सम्पन्न प्रान्तीय लेखनको विकास भयो । दक्षिण भारतमा भने यस्तो प्रान्तीय लेखनको विकासको इतिहास भिन्नै प्रकारको थियो । तमिडहरूले आफ्नु भाषामा आवश्यक पर्ने मात्र ब्राह्मीका वर्णहरूको वर्णमाला सातौं शताब्दीमै तयार गरिसकेका थिए । यसमा संस्कृत लेख्न नसकिने भएकोले संस्कृतभाषालेखनको लागि अर्को लेखनको विकास भयो जो ग्रन्थलिपि थियो । यसै उद्देश्यले दक्षिण भारतको विजयानगरम् राज्यमा नन्दीनागरीको विकास भयो ।[५०]

नेपालको भौगोलिक र सांस्कृतिक रूपमा घनिष्ट संबन्ध रहेको बिहार-बंगालमा गुप्तकालीन लेखनबाट विकसित लेखनलाई पूर्वी लेखनप्रकार भनिन्छ । आठौं शताब्दीमा पाल वंशका राजाहरूको शासनकालमा यहाँको लेखनमा मध्यगंगाक्षेत्रका क्षेत्रीय शैलीहरूको प्रभाव परेको कारण नवौं शताब्दीमा नागरीको समान लेखन विकसित भयो । एघारौं शताब्दीदेखिको लेखनलाई अधिकांश लेखकहरूले प्रोटो-बेंगाली (आदिबाङ्ला) भनेका छन् ।[५१] आधुनिक बाङ्लालिपिको विकास यसैबाट भएको मानिन्छ भन्ने कुरा माथि परेको छ । पाल र सेन राजवंशको अधीनमा भारतको ठूलो क्षेत्र सम्मिलित थियो । संपूर्ण बंगाल र विहारको साथसाथ आसाम र उडीसाको ठूलो भूभागमा तिनका अभिलेख

पाइएका छन्। यी प्रान्तहरूमा बंगालको राजनीतिक मात्र होइन सांस्कृतिक प्रभाव पनि परेको पाइन्छ। उपर्युक्त अभिलेखहरूका केही वर्ण, मात्राचिह्न र संयुक्तव्यञ्जनपद्धति वर्तमान बाङ्लासँग मिल्दाजुल्दा छन्। यस कारण प्रोटो-बेंगालीको प्रत्यक्ष प्रभाव आसामी, उडिया (उडीसाको लेखन) र मैथिलीको निर्माणमा परेको अनुभव गरिएको छ। केही लेखकले मध्यकालीन नेपालको लेखनमा पनि आदिबाङ्लाको प्रभावको चर्चा गरेका छन्, जसको उल्लेख गर्ने प्रसङ्ग आउने छन्। तेरहौं शताब्दीसम्म बाङ्लालिपिमा खास गरी **अ इ ई ऋ ए ऐ ख घ झ ञ ट थ प फ श ष** को स्वरूपमा निकै अन्तर आइसकेको पाइन्छ।[५२] नागरीको समान बाङ्ला पूर्ण वर्णमाला हो र यस लिपिमा विशाल वाङ्मय लिपिबद्ध भएका छन्। बाह्रौं शताब्दीको उत्तरार्धमा मिथिलाका ब्राह्मणहरूले मैथिलीलिपिको विकास गरेको मानिन्छ। मैथिलीलिपिमा बाङ्गलालिपिको प्रभाव प्रत्यक्ष देख्नसकिन्छ।

यसरी इतिहासले काठमाडौं उपत्यकाको पूर्वमध्यकालीन राज्यलाई विभिन्न किसिमका संस्कृतिको संगमस्थलको रूपमा चित्रित गरेको छ। यहाँ कर्णालीप्रदेश, मिथिला तथा भारतका विहार र बंगाल राज्यमा विकसित भिन्नभिन्न संस्कृतिका विशेषताहरू देखापर्नुमा कुनै आश्चर्य छैन। काठमाडौं उपत्यकाबाट प्रभावित क्षेत्रहरूमा यहींको पारम्परिक लेखनको अभ्यास जारी रहनु स्वाभाविक देखिन्छ। पुरालेखनको दृष्टिले यहाँको मिथिलाराज्यसँगको सम्बन्ध बढी महत्त्वको हुनुपर्छ, जहाँ पूर्वी भारतीय लेखनप्रकार वा प्रोटोबेंगाली लेखनपद्धति विकसित रहेको बुझिन्छ। मिथिला क्षेत्र र नेपालको बीचमा लिखित ग्रन्थहरूको आउनेजाने क्रम चलिरहेको जानिएको छ। कर्णाली (खस)प्रदेशमा भूमिदानसम्बन्धी अनेकौं ताम्रपत्र पाइएका छन् जसबाट तेह्रौंचौधौं शताब्दीको खसराज्यमा उत्तर भारतमा अन्यत्र झैं नागरीको चलन रहेको देखिन्छ। त्यस लेखनको उद्भवको स्रोत काठमाडौं उपत्यका नभएको देखिन्छ।

लिच्छविकालपछि पाण्डुलिपिग्रन्थमा जारी रहेको लेखनमा निकै मात्रामा नौलोपन आएको छ। दशौं शताब्दीसम्म नेपालको लेखनमा नयाँ विशेषताहरू निकै देखिन्छन्। यसका अनेक कारण रहेहोलान्। पहिलो कारण लेखनमाध्यममा आएको परिवर्तनको साथ लेखन उपकरणमा आएको फरक हुनसक्छ। अन्य कारणहरूमा बढ्दैगएको ग्रन्थलेखनको लोकप्रियता र लेखकहरूमा आपसी प्रतिस्पर्धिता रहेहोलान्। यस कालमा लेखनका आयामहरू बढ्दैगए। मध्यकालसम्म विभिन्न किसिमका अभिलेखहरूका साथसाथै पाठ्यपुस्तकदेखि लिएर विभिन्न विषयका गम्भीर ग्रन्थहरू र व्यक्तिगत टिपोटलगायत व्यावहारिक लेनदेन र सुक्रीबिक्रीसम्बन्धी दस्तावेजहरू लेखिए। यस कालको लेखनमा देखिने नौला विशेषताहरू स्थानीय विकासकै परिणाम लाग्छन्। वर्णहरूको तल्लो भागमा पुच्छरको विकास र मात्राहरूमा एकरूपता ब्राह्मीको विकासमा सर्वत्र देखिने विशेषता हुन्। गहिरिएर हेरेमा यस कालको नेपाली लेखनमा लिच्छविलिपिकै परम्पराको अनुसरण गरिएको देखिन्छ। एघारौं शताब्दीको नयाँ नामको लेखनमा निकै मात्रामा पारम्परिक विशेषताहरू पाइन्छन्।[५३]

वि.सं.२०४८सम्म नेवारीलिपि परिभाषित भएको थिएन र यस लेखनको आरंभ र व्युत्पत्तिका संबन्धमा अन्योल कायम थियो।[५४] नेवारीलिपिको नामकरणको प्रश्नमा झैं नेवारी लिपिको आरंभकाल र व्युत्पत्तिलाई संकेत गर्ने हचुवा विचार प्रकाशित भएका थिए। एकातिर दशौं शताब्दी ई.को संस्कृत ग्रन्थलाई नेवारीलिपिको पहिलो नमूना मानिएको थियो भने अर्कोतिर नेवारीलिपिको तुलना बाह्रौं शताब्दीमा भारतमा विकसित प्रादेशिक लिपि मैथिलीसँग गरिन्थ्यो र यसको विकासमा पारंपरिक लिच्छविलिपिको भूमिकाको उपेक्षा गरिएको थियो। यी कुराहरू नमिल्दा हुन् भन्ने बारेमा आगामी अध्यायहरूमा चर्चा हुने छ।

## टिप्पणी

१. हेर्नुस् माथि अध्याय १४।

२. हेर्नुस् अध्याय ३ र २२।

३. मूल ग्रन्थ सिद्धिए पछिको पुष्पिकावाक्यबाट शासकका नाम, तिथि, सामाजिक र सांस्कृतिक घटना र तथ्यबारे महत्त्वपूर्ण सूचना पाइन्छ। पूर्वमध्यकालीन इतिहासको निर्माणमा एल. पेतेकले पुष्पिकावाक्यको भरपुर उपयोग गरेका छन्। हेर्नुस् : L.Petech, **Medieval History of Nepal** (Rome 1958).

४. नेपालसंवत्लाई नेवारसंवत् पनि भनिन्छ। यसको आरम्भ अक्टुबर २० ८७९ ई.मा अर्थात् वि.सं.९३६ कार्तिकशुक्ल प्रतिपदामा भएको देखिनआएको छ। नेपालसंवत् कसले र कुन अवसरमा चलायो भन्नेबारेमा अनेक मत चलेका छन्। हेर्नुस् माथि अध्याय ६। यससम्बन्धी विवादका लागि हेर्नुस्: ज्ञानमणि नेपाल, **नेपालको पूर्वमध्यकालको इतिहास** (काठमाडौं: नेपाल र एशियाली अनुसन्धान केन्द्र, त्रि.वि., २०५४) पृष्ठ १० र अगाडि।

५. नान्यदेव दक्षिण भारतको हाल कर्णाटकको प्राचीन कर्णाटराज्यका चालुक्यवंशका विजेता राजा विक्रमाङ्कका सेनापति मानिएका छन्। नान्यदेवलाई महासामन्ताधिपति पनि भनिएको छ। उनी उत्तरभारतमा विजयअभियानमा आएका थिए। हेर्नुस् **उही**, पृष्ठ ७१।

६. देवीप्रसाद लंसाल, सम्पादित **भाषा वंशावली द्वितीय भाग** (काठमाडौं : पुरातत्त्वविभाग,२०२३) २६। यसमा नान्यदेवले नेपाल जितेको भनिएको वर्ष शकसंवत् ८११ (८८९ ई.) अमिल्दो देखिन्छ। नान्यदेवको ११११ ई.को र रामसिंहको १२७४ ई.को आक्रमणलाई नेपालले विफल पारिदिएको थियो। ज्ञानमणि नेपाल, **उही**,पृष्ठ ७४।

७. **उही** पृष्ठ ६४, ६६। मग्वरविषय, धवलस्रोतपुर र पन्नगविषय एकै जिल्लाका नाम प्रतीत हुन्छन्। केही पाण्डुलिपिग्रन्थहरूबाट यहाँका स्थानीय शासकहरूका नाम जानिएका छन् जो महासामन्त भनिएका छन्।

८. **उही** पृष्ठ ११८।

९. **उही**, पृष्ठ ११८-१९। ग्रन्थहरूको विवरणको लागि हेर्नुस् **उही**, पृष्ठ १२५ (टिप्पणी)।

१०. **उही**, पृष्ठ १५३-५७।

११. **उही**, पृष्ठ १६३-६४ ।
१२. **उही**, पृष्ठ १७३-७५ । हरहिंहदेवकी विधवा देवलदेवी राजदरबारमा बस्थिन् र राजा रुद्रमल्लकी उत्तराधिकारी छोरी नायकदेवीकी संरक्षिका थिइन् ।
१३. सूर्यविक्रम ज्ञवाली, **नेपाल उपत्यकाको मध्यकालीन इतिहास** (**८७९ ई देखि १७६८ ई.सम्म**, (काठमाडौं, २०१९) पृष्ठ ५९ र अगाडि ।
१४. D.R. Regmi, **Medieval Nepal, Part 1** (Calcutta: Firma K.L. Mukhopadhyay,1961) pp.710 ff.
१५. ज्ञानमणि नेपाल, **पूर्वोक्त** पृष्ठ १४३-४४ ।
१६. D.R. Regmi, *op.cit.* pp.712-13, 716.
१७. *ibid.* pp.235-37, 632-33. ज्ञानमणि नेपाल, पूर्वोक्त पृष्ठ १३९-४० ।
१८. D.R. Regmi *ibid.* pp. 559-61; ज्ञानमणि नेपाल, पृष्ठ १२२ ।
१९. विन्ध्येश्वरी प्रसाद सिंह, **भारतीय कला को बिहार की देन** (पटना : बिहार राष्ट्रभाषा परिषद्, १९५८) पृष्ठ १२४, १४९
२०. जयशंकर मिश्र, **प्राचीन भारतका सामाजिक इतिहास** (पटना : बिहार हिंदी ग्रन्थ अकादमी, १९८३) पृष्ठ ५५५-५७ ।
२१. उही पृष्ठ ५५७-५९ ।
२२. Benoytosh Bhattacharyya, **The Indian Buddhist Iconography Mainly Based on the Sadhanamala and Cognate Tanrtrik texts of Rituals** (Calcutta: Firma K.L. Mukhopadhyay, 1968) 10-12.
२३. D.R. Regmi *op.cit.* 628-29.
२४. *ibid.* 629.
२५. सूर्यविक्रम ज्ञवाली, **पूर्वोक्त टिप्पणी** १३ पृष्ठ २५० र अगाडि ।
२६. K.A. Nilakanta Sastri, G. Srinivasachari, **Advanced History of India** (Allied Publishers, 1982) 251.
२७. *ibid.* ९८० ई.मा बंगालमा जन्मेका अतिशालाई २०० जति पुस्तकहरूका लेखक मानिन्छ ।
२८. नेपालमा अतिशाको गतिविधिको लागि हेर्नुस् : सूर्यविक्रम ज्ञवाली **पूर्वोक्त** (टिप्पणी १३) पृष्ठ २६८ । D.R. Regmi *op. cit.* pp. 128-29, 560-61.
२९. सूर्यविक्रम ज्ञवाली उही पृष्ठ २५७, २७० र अगाडि ।
३०. D.R. Regmi, 629-31
३१. B.Bhattacharyya, *op.cit.* note 22,16-17.
३२. *ibid.* 39-41.
३३. ने.सं.२०४ का **त्रियाकालगुणोत्तर** र **चरकसंहिता** तथा ने.सं. २२१ (११०१ ई.) को **आर्योष्णीषविजयनामधारिणी** धवलस्रोतपुरमा लेखिएका थिए, (ज्ञानमणि नेपाल, **पूर्वोक्त टिप्पणी** ९ पृष्ठ ६६)। ज्ञानमणि नेपालले धवलस्रोतपुर मंग्वरविषय अन्तर्गत रहेको मानेका छन् । मंग्वरको सम्बन्ध मगरसँग रहेको र मगरको सम्बन्ध नाग वा पन्नगसँग रहेको जिकिर गर्दै उनले मंग्वरविषय र पन्नगविषय एउटै थियो भन्ने अनुमान गरेका छन् । ने.सं. २१३ (१०९३ ई.) को **अष्टसाहस्रिकप्रज्ञा पारमिता** र केही पहिलेको अन्य एक ग्रन्थमा गण्डीगुल्मविषयको उल्लेख छ । **उही**, पृष्ठ ३० । यो शायद गुल्मी थियो । उपत्यकाका राजाका अधीनमा रहेका सामन्तशासित यी क्षेत्रहरू विषय (जिल्ला) भनिएका छन् ।

३४. काठमाडौं उपत्यकामा खास गरी भक्तपुरमा बसोबास गर्ने एक समुदाय थरको रूपमा कायष्ठ (कायस्थ) लेख्ने गर्छन् ।
३५. D.R. Regmi, op.cit. note 14, 640.
३६. *ibid.*
३७. *ibid.*
३८. B.Bhattacharyya, *op.cit.* note 22. 39.
३९. D.R. Regmi. 144 ff; ज्ञानमणि नेपाल, पृष्ठ ७५-७६ । तान्त्रिक महायानको **कुब्जिकामतम्** नामक यस ग्रन्थको पुष्पिकावाक्यमा तिथि छैन ।
४०. डी.आर.रेग्मीले (उही पृष्ठ १४८मा) छवटा ग्रन्थका पुष्पिकावाक्यको विवरण दिएका छन् जुनमध्ये दुइवटा रामपालको राज्यकालमा एकएकवटा गोविन्दपाल र मदनपालका राज्यकालमा, एकवटा वाराणसीका गोविन्दचन्द्रको राज्यकालमा र एउटा राजा गोविन्दचन्द्र नामक अर्के राजाको राज्यकालमा नेपालभन्दा बाहिर कतै लेखिएका थिए ।
४१. सूर्यविक्रम ज्ञवाली पृष्ठ २५९-६० ।
४२. ज्ञानमणि नेपाल, पृष्ठ ८३-८६ ।
४३. उही पृष्ठ ८५ ।
४४. D.R. Regmi. 312 ff; ज्ञानमणि नेपाल, पृष्ठ १७७ र अगाडि ।
४५ D.R. Regmi. 314.
४६. गौरीशंकर हीराचन्द ओझा, **भारतीय प्राचीन लिपिमाला** (दिल्ली : मुन्शीराम मनोहरलाल, १९५९) पृष्ठ ६८-७०, Ahmad Hasan Dani, **Indian Palaeography** (Oxford: The Clarendon Press, 1963) 110. जर्ज बूलरले गुप्तलिपिबाट विकसित उत्तरी लिपिहरूको सूचीमा न्यूनकोणीय वा सिद्धमात्रिका, नागरी, शारदा, पूर्वी-आदिबाङ्ला र अङ्कुशे नेपालीलिपिको गणना गरेका छन् । उनको विचारमा सिद्धमात्रिका छैठौं शताब्दीमा, शारदालिपि आठौं शताब्दीमा, आदिबाङ्ला एघारौं शताब्दीमा र अङ्कुशे नेपाली लिपि एघारौं शताब्दीमा विकसित भएका थिए । हेर्नुस् जर्ज बूलर, **भारतीय पुरालिपिशास्त्र** (हिन्दीमा अनुदित) (मोतीलाल बनारसीदास, १९६६) पृष्ठ ९४ ।
४७. जर्ज बूलर **उही** ।
४८. E.C. Sachau, trns. **Alberuni's India** Vol 1 (London, 1910) 173.
४९. A.H.Dani, pp.110-11. जर्ज बूलर **पूर्वोक्त टिप्पणी** ४० पृष्ठ ९४ ।
५०. गौ.ही.ओझा पृष्ठ ६८ (नन्दिनागरी), ८९-९० (ग्रन्थलिपि) र ए.एच.दानी **उही** पृष्ठ ११२ ।
५१. जर्ज बूलर पृष्ठ ९४ । A.H.Dani. 110.
५२. गौ.ही.ओझाले पृष्ठ ७७ मा देखाएअनुसार ।
५३. हेर्नुस् तल अध्याय सत्र र अठाह्र ।
५४. दिनेशचन्द्र रेग्मी, **पुरालेखनपरिचय नेपाल** (काठमाडौं : श्रीमतीसुशीला रेग्मी, २०४८) पृष्ठ ९२ र अगाडि ।



## अध्याय सत्र

# नेवारीलिपिको परिचय

नेवारी लिपि वा नेपालाक्षरको नामकरण, परिभाषा, र लेखनपद्धतिको सम्बन्धमा यहाँ विचार गरिदै छ। सर्वप्रथम नेवारीलिपि भन्ने पारंपरिक नामको बारेमा प्रचलित केही धारणाको परीक्षण गर्नु आवश्यक छ।

नेवारीलिपिको अर्थ नेवार जाति वा समुदायको लिपि अथवा नेवारीभाषाको लिपि भन्ने हुनसक्छ। केही लेखकहरूले नेवारीलिपिलाई "नेवार जातिको भाषाको लिपि" भनेका छन्।[१] यस भनाइबाट दुइवटा आशय झल्कन्छन् : एक, नेवार कुनै जातको नाम हो, र अर्को, नेवारीलिपि नेवारीभाषा लेख्न विकसित गरिएको हो। १७६८ ई.मा बृहत्तर नेपालको निर्माण भएपछि नेवारको गणना जातविशेषका रूपमा गर्न थालिएको कुरा साँचो हो। मुलुकी ऐनमा 'नेवार जात'को ऐनको व्यवस्था गरिएको छ।[२] तर ऐतिहासिक वास्तविकता भने त्यस्तो देखिँदैन।

नेवार वा नेवाः शब्दको उत्पत्तिको बारेमा नानाथरिका मत प्रचलित भएता पनि देशवाचक शब्द नेपालसँग यसको संबन्ध रहेको कुरामा कुनै सन्देह छैन। **नेपाल** संस्कृत बोल्नेहरूले राखेको नाम हो। यसको पहिलो प्रयोग कौटल्यको अर्थशास्त्रमा पाइन्छ।[३] हाल पाइने अर्थशास्त्रको संस्करण कहिले सम्पन्न भयो सो मतभेदको विषय हुनसक्छ, तर यसको मूल रचयिता ऐतिहासिक व्यक्ति देखिन्छन्। कौटल्य सम्राट् अशोकका बाजे चन्द्रगुप्त मौर्यका मन्त्री मानिन्छन्, जो ईसापूर्व चौथो शताब्दीका थिए। इलाहाबादको समुद्रगुप्तको स्तंभलेख पहिलो अभिलेख हो जसमा गुप्तसाम्राज्यका सीमावर्ती राज्यहरूमध्ये नेपालको उल्लेख गरिएको छ।[४] यस स्तम्भलेखमा संवत् लेखिएको छैन। तथापि यसका कर्त्ता समुद्रगुप्तको मृत्यु ३७५ ई.मा भएको मानिन्छ।[५]

टिस्टुङ्ग भेगमा पाइएका ५१२ ई. र ६०७ ई.का तीनवटा अभिलेखहरूमा नेपालका निवासीहरूका अर्थमा **नैपाल** शब्दको उल्लेख गर्दै तिनको कल्याणकामना गरिएको छ।[६] आठौं शताब्दीका उपत्यका भित्रका दुइवटा अभिलेखहरूमा 'नेपालभुक्ति' र 'नेपालमण्डल' शब्दहरूको उल्लेख भएको छ।[७] मल्ल राजाहरू स्वयंलाई नेपालेश्वर भन्ने गर्थे।[८] ती सबै उपत्यका र नजिकैका क्षेत्रका राजा थिए। संस्कृत भाषा बोल्नेहरूले पनि नेपालको सम्बन्ध काठमाडौं उपत्यकासँग जोडेका छन्, चाहे ती अठारौं शताब्दीताकाका वंशावलीका लेखक हुन् चाहे हालैका लेखक। नेपालको उत्पत्ति ने मुनिबाट भएको भन्ने वंशावलीको कथा र नीपबाट भएको भन्ने अनुमानमा तात्विक फरक छैन।[९] शब्दहरू सुन्दा उस्तैउस्तै लाग्नु बाहेक यस्ता अनुमानको समर्थनमा कुनै ठोस प्रमाण पाइँदैन। **ने**मुनि र

**नीप** दुवैको ऐतिहासिकता जानिएको छैन । अत: नेपाल शब्दको व्युत्पत्ति स्थानीय भाषामा खोज्नुपर्छ र  स्थानीय भाषाको शब्दको संस्कृत रूपान्तरण 'नेपाल' रहेको हुनुपर्छ ।

प्राचीन कालमा पनि नेपालको आजकै जस्तो भौगोलिक सीमा रहेको देखाउने अनेकौं विफल प्रयास भएका छन् ।[१०] तथ्य त यत्ति हो कि प्राचीन र मध्यकालीन स्रोतसामग्रीमा **नेपाल**को उल्लेख **नेपालमण्डल** वा **नेपालभुक्ति** भनी गरिएको छ जो काठमाडौं उपत्यका थियो । यद्यपि बीचबीचमा उपत्यका बाहिरका केही क्षेत्रहरूमा विजय हासिल गरी केही राजाहरूले तिनमाथि अधिकार स्थापित गरेका थिए जहाँ ती स्थानीय सामन्तहरूको माध्यमले शासन सञ्चालन गर्थे । मेचीदेखि महाकाली र हिमालयदेखि तराईसम्मको विस्तृत भूभागको नाम नेपाल कायम रहेको झण्डै तीन सय वर्ष बितिसक्दा पनि आज नेपालको सीमित अर्थ काठमाडौं उपत्यकाको लागि गर्ने चलन जीवित छ । यस अर्थमा नेपालका रैथाने निवासीहरू र तिनको संस्कृतिलाई नेपाल, नेपाली वा नेवा: भन्ने चलन चलेको देखिन्छ । उपत्यकामा नवौं शताब्दी ई.मा चलेको संवत्‌लाई संस्कृतमा नेपालसंवत् भनिन्छ भने लौकिक भाषामा नेवारसंवत् । चौधौं शताब्दी ई.देखि राज्य गर्ने मल्ल राजाहरू जो आफूलाई कर्णाटका रघुवंशी अर्थात् सूर्यवंशी क्षत्रिय मान्थे,[११] नेपालका नेवार राजा भनिन्छन् । यसैगरी नेवारीलिपि संस्कृतमा नेपालाक्षर अर्थात् नेपालका अक्षर (वर्णमाला) भनिन्छ ।

नेवार कुनै एक जात होइन, बरु यो शब्द शताब्दियौं पहिलेदेखि राष्ट्रियतावाचक शब्दका रूपमा उपयोग हुँदै आएको छ । नेवा: नेपालको (काठमाडौं उपत्यकाको) बृहत्तर जनसमुदाय हो ।[१२] यसभित्र हिन्दु र बौद्ध धर्मको साथसाथ पारंपरिक मातृ-देवी वा अजिमा मान्नेहरूका अनेकौं जात र थरसमूहहरू पाइन्छन् । यस समुदायभित्र उपाध्याय (देवोपाध्याय, राजोपाध्याय), आचार्य (आचाजु, कर्माचार्य, बौद्धाचार्य, वज्राचार्य) र झा जस्ता ब्राह्मण र समकक्ष जातलगायत मल्ल, श्रेष्ठ (श्रेष्ठि), शाक्य, कायस्थ र रजक (धोबी) जस्ता अनेकौं जातिसमूहहरूको उपस्थिति पाइन्छ । यीमध्ये केही सुदूर दक्षिणपूर्वको मैथिल संस्कृतिसँग नजिक छन् । नेवा: समुदायका कतिपय समूहमा मिथिलामा विकसित संस्कृतिका विशेषता पाइन्छन् । यस प्रकार खास जात वा वर्गमा सीमित नभएर नेवा: वा नेवार राष्ट्रियताको नाम हो । नेवारीलिपि नेपालको राष्ट्रिय लेखन हो, नेपाली लिपि हो ।

चीनीतिब्बतीबर्मेली भाषापरिवारको नेवारीभाषा नेपालमा संस्कृतपछिको पहिलो लिखित भाषा हो । यसको इतिहास नेपाली भाषाभन्दा निकै पुरानो छ । नेवारी भाषाको पहिलो दस्तावेज ललितपुरको उकुबहाको रुद्रवर्ण महाविहारको संवत् २३५ (११३५ ई.) को लेखोट हो ।[१३] चौधौं शताब्दी ई.देखिका लेखोटमा नेवारी भाषाका स्वतन्त्र अभिव्यक्ति पाइनथाल्छन् । गोपालवंशावलीको अधिकांश भाग नेवारी भाषामा छ ।[१४] त्यस पछिका अभिलेखहरूमा त नेवारी भाषा संस्कृतका साथसाथ लेखिने चलन चल्यो । पन्धौं शताब्दीदेखि संस्कृतग्रन्थको नेवारीमा टीकाटिप्पणी र अनुवादको साथसाथ स्वतन्त्र ग्रन्थहरू समेत

पाइनथाल्छन् ।[१५] यसै वेलाका यक्षमल्लका केही अभिलेख र फुटकर लेखोटहरूमा प्रवाहमय र प्राञ्जल भाषाका नमुना छन् । स्पष्ट छ यिनमा संस्कृतको प्रभाव कम छ ।[१६] विभिन्न कारणले बीचमा केही उदासीनता देखिएता पनि हाल आएर नेवारी साहित्यको निकै विकास भइरहेको छ । नेवारी भाषाले नेपाली भाषालाई समृद्ध तुल्याउन त्यसैगरी योगदान दिएको छ जसरी कि नेवारीभाषाभाषीले नेपाली साहित्यको विकासमा योगदान दिँदै आएका छन् ।

निस्सन्देह डेढ सय वर्ष अघि देवनागरीको प्रेसको व्यापक चलन चल्नुअघिसम्म नेवारी भाषाको लिपि नेवारी थियो, नेवारी भाषा नेवारीलिपिमा लेखिन्थ्यो । माथिको ऐतिहासिक तथ्यको आधारमा विचार गर्दा नेवारीलेखनको विकास नेवारी भाषा लेख्न भनी गरेको भन्ने कुरा चाहीं सत्य देखिंदैन । नेवारी भाषालेखनमा व्यापकता आएको समयभन्दा निकै पहिले नेवारीलिपिको विकास भइसकेको थियो भन्ने कुरा तल विचार गरिने छ । नेवारीलिपिलाई 'नेवार जातिको भाषाको लिपि' भन्ने लेखकहरू समेतले संस्कृतमा लेखिएको लङ्कावतार ग्रन्थलाई नेवारीको पहिलो उदाहरणको रूपमा पेश गरेर प्रकारान्तरमा यस तथ्यको पुष्टि गरेका छन् ।[१७] यस प्रकार नेवार कुनै जाति नभएझैं नेवारीलिपि नेवारी भाषा लेख्न भनी सिर्जना गरिएको लेखन होइन भन्ने स्पष्ट छ । 'नेवारीलिपि'को अर्थ नेपालको लेखन हो । यस नाममा विशिष्ट सांस्कृतिक छाप छ, आफ्नै परंपरा र इतिहास छ । यहाँ निम्नलिखित कुराहरू संझनुपर्ने हुन्छ :

- नेवारीलिपिको उपयोग नेवारी भाषाभन्दा बढी संस्कृतभाषा लेख्न भएको पाइन्छ ।
- देशभाषा, भाषा र नेपालभाषा जस्ता शब्द पन्ध्रौं शताब्दी ई.देखि प्रचलनमा आएको पाइन्छ, जब कि यस लिपिका केही खास लक्षणहरू कम्तीमा त्यसको चारसय वर्ष पहिले देखिको लेखनमा पाइन्छन् ।
- लिपिको संबन्ध सँधै भाषाविशेषसँग मात्र जोड्न मिल्दैन । उदाहरणार्थ पाली प्राकृत लेख्न ब्राह्मी लेखनको जति उपयोग भएको छ, त्योभन्दा बढी संस्कृतभाषा लेख्न भएको छ । अंग्रेजी भाषा लेख्न रोमन लेखनको उपयोग गरिन्छ र वर्तमान नेवारीभाषा लेख्न देवनागरीको उपयोग गरिन्छ ।
- नेवारीलिपि एकै शैलीको लेखन होइन । यस अन्तर्गत समयसमयमा आएका परिवर्तनहरूको साथसाथ परम्पराप्रतिको मोह, डीकोमा भिन्नभिन्न प्रयोग, शीघ्रताले लेख्ने (कर्सिभ) प्रवृत्ति र लेखकहरूका व्यक्तिगत लेखाइका कारण विकसित भएका अनेकौं शैलीहरू पर्दछन् ।

## नेवारी र मैथिली

नेपालमा आदिबाङ्ला, बाङ्ला र मैथिलीमा लेखिएका पाण्डुलिपि ग्रन्थहरू पाइएका छन् । यी प्रादेशिक लेखनहरूमध्ये नेवारीलिपिमा आदिबाङ्लाको केही प्रभाव पाइन्छ भन्ने कुराको चर्चा यथास्थान हुने छ । नेपालमा सोह्रौं शताब्दी

ई.देखि राजपरिवारका सदस्यहरू संस्कृतका साथसाथै भारतीय प्रादेशिक भाषाहरूका कविता र नाटकहरूमा रुचि लिन्थे। यिनीहरू मैथिली भाषाको साथसाथ भोजपुरी, अवधी र बाङ्लामा कविता रच्नु गौरवको विषय मान्दथे र दरबारमा मैथिली नाटक र नाच मंचन गर्थे। मल्ल राजाहरू खास गरी पाटनका राजा सिद्धिनरसिंहमल्ल (१६१८–१६६० ई.), भक्तपुरका राजा जितामित्रमल्ल (१६७२–१६९६ ई.) र भूपतीन्द्रमल्ल (१६९६–१७२२ ई.), मैथिलीमा कविता रच्न मनपराउँथे।[१८] मैथिली भाषासँग मध्यकालीन नेपालको यति घनिष्ट संबन्ध भएको कारण यहाँ मैथिलीलिपि पनि वर्गविशेषमा अवश्य प्रचलित रह्यो। तर यसबाट मैथिलीलिपि नै नेवारीको उत्पत्तिको कारण थियो भन्न मिल्दैन।[१९] पहिलो कुरा त ऐतिहासिक दृष्टिले मैथिलीको विकास हुनुअगावै नेवारीको विकास भइसकेको देखिन्छ। दोस्रो, मैथिली वर्गविशेषमा (ब्राह्मणवर्गमा) प्रचलित लिपि थियो भने नेवारी यहाँको राष्ट्रिय लिपि हो। ज्ञातव्य छ, हालसम्म पनि मिथिलाको विस्तृत भूभागमा कैथीलिपि वा देवनागरीलिपिको प्रचलन हुन्छ। तेस्रो कुरा, नेवारी लेखनमा थुप्रै विविधता पाइन्छ। विविधता विकासको प्रमुख पूर्वाधार हुन्छ। नेवारीलिपिलाई परिभाषित गर्दै त्यसको आरंभकाल निर्धारित गर्नुअघि यहाँ नेवारीलेखनको वर्ण-परिचयतिर लागिँदै छ। (फलक २३)।

## नेवारी वर्णमाला

संस्कृत लेख्न आवश्यक पर्ने सबै वर्णहरू नेवारीवर्णमालामा पाइन्छन्। सौभाग्यवश केही ग्रन्थहरूको आरंभमा पूरा वर्णमाला लेखिएको पाइन्छ। कतिपय वर्णहरूको बयान गर्दा यहाँ देवनागरी, लिच्छवि (पारम्परिक), र आदिबाङ्लाको आकारप्रकारसँग तुलना गरिएको छ। कतिपय वर्णहरूलाई 'प्रचलित परंपरामा विकसित' भन्ने अर्थमा पारंपरिक भनिएको छ। वर्णहरूका आन्तरिक बनावट सबै शैलीहरूमा समान भएको कारण शैलीपिच्छे वर्णहरूको वर्णन गरिएको छैन। केही अन्तर भएमा सो दर्साउने प्रयास गरिएको छ।

## स्वरवर्ण

**अ आ** मूल रूपमा दुई मुख्य प्रकारको **अ** पाइन्छ : पारंपरिक र नौलो स्वरूपका। देवनागरीको **प**को देब्रेतिर **ञ**को अग्रभाग जोडिएको **झैं अ** पारंपरिक हो। केहीमा अग्रभागमा बढी मोड पाइन्छ। अर्को प्रकार देवनागरीको **ञ**को समान छ। यस्तो **अ** बंगालका दशौं शताब्दीका राजा नारायणपालको बादल स्तंभलेखमा पाइन्छ।[२०] तर नेपालको उदाहरण आधुनिक बाङ्लाको **अ**को नजिक छ।[२१] **ञको देब्रेतिरको माथिल्लो भुजाको टुप्पोलाई ठोस विन्दु बनाइएको र त्यसलाई सानो ठाडो रेखाले डीकोमा जोडिएको हुन्छ। यस्तो ठाडो रेखा भने बाङ्लामा पाइँदैन। दुवै प्रकारको अको तल्लो रेखान्तमा तल फर्कने टिक लगाइएको पनि पाइन्छ। व्यञ्जनमा जोडिने ठाडो रेखाको आकारको मात्रा जोडेर आ बनाइएको हुन्छ।**

**इ ई** परवर्ती लिच्छविकालमै विकसित तेर्सोगरी बनाइएका दुइवटा वृत्तहरूको **इ** नेवारीलेखनमा पनि कायम रह्यो। डीको भागमा बीचमा झुकेको आँखि भौं जस्तो धर्सा थपिएको हुन्छ र कहींकहीं तल्लो भागमा बीचमा तल फर्केको टिक पनि जोडिएको हुन्छ। रञ्जनामा यसको डीको भाग विशेष कलात्मक पाराले बनाइएको हुन्छ।

**उ ऊ** देवनागरीको **उ** वा **ड**को स्वरूपको नेवारी **उ** पारंपरिक किसिमको छ। दीर्घ **ऊ** बनाउँदा देवनागरीमा झैं **उ**को दाहिने तिरको मोडमा तल फर्केको अंकुशको ठाउँमा नेवारीमा **उ**मा तल्लो भागमा देब्रे फर्कने गरी अंकुश जोडिएको हुन्छ। रञ्जनामा यस्तो अंकुश कहीं लामो र कहीं छोटो बनाइएको हुन्छ।

**ऋ ॠ** निकै कम उपयोगमा आउने ऋ ॠ पारंपरिक किसिमका छन्। झण्डै देवनागरीको **द**सँग मिल्दोजुल्दो प्रकारको र देवनागरीको **ग**को बीच भागमा बाहिरसम्म आउने गरी तेर्सो रेखाले काटेको स्वरूपको गरी **ऋ**को दुई प्रकार प्रचलित भए। दोस्रो प्रकारको **ऋ**को ठाडो रेखाको तल्लो टुप्पामा व्यञ्जनमा लाग्ने **ऋ**को मात्राचिह्न जोडेर दीर्घ **ॠ** बनाइएको पाइन्छ।

**ऌ ॡ** अंग्रेजीमा संख्या ६ को निम्ति उपयोग हुने अरेबिक अंक चिह्न **6** अथवा सानो **e** को जस्तो वा कानको आकारको **ऌ** र त्यसको तल्लो भागमा तल झर्ने फुर्को जोडेर दीर्घ **ॡ** बनाइएको हुन्छ। यो पारंपरिक हो र लिच्छविकालदेखि नै ५० को संख्या जनाउने चिह्नको रूपमा पनि उपयोगमा आएको छ।

**ए ऐ** पारंपरिक त्रिकोण स्वरूपको **ए**को साथसाथ देब्रेतिर मुख खुलेको र देवनागरीको डीको नभएको **नु** वा **त्र** जस्तो आकारको गरी दुई प्रकारको **ए**को चलन चल्यो। दोस्रो प्रकारको **ए** बाह्रौं शताब्दीदखि बढी चल्यो जसको विकास पनि त्रिकोण **ए**बाटै भएको देखिन्छ। यस प्रकारको **ए**को तुलना एघारौं शताब्दीका बंगालविहारका राजा विजयसेनको देवपाडाअभिलेखको **ए**सँग गर्नसकिन्छ।[२२] त्यहाँ त्रिकोणको देब्रेतिरको मुख खुलेको छ र माथिल्लो तेर्सो रेखाको टुप्पो देवनागरीको **न**को जस्तो गरी तलतिर निहुरिएको छ। नेवारीको दुवै प्रकारको **ऐ**मा **ए**कारको डीकोमाथि ढल्केको ठाडो रेखाको मात्राचिह्न जोडिएको छ।

**ओ औ** देवनागरीको **ड** जस्तो लाग्ने वर्णमा **ओ**कारको मात्रा जोडिएको स्वरूपको **ओ** र त्यसमा पुनः अर्को **ए**कारको मात्रा थपेर **औ** बनाइएको हुन्छ।

## व्यञ्जन वर्ण

**क** गोल वा कोण स्वरूपको गाँठोको **क**मा कुनै परिवर्तन देखिंदैन।

**ख** अधिकांश लेखनमा पारंपरिक **ख** प्रचलित छ। एघारौं शताब्दीदेखि अर्को नयाँ प्रकारको मुख खुलेको **ख**को प्रचलन भयो जो बाह्रौं शताब्दीसम्म निकै चल्यो। यसमा दायाँतिरको देवनागरीको **व** जस्तो चिह्नको ठाउँमा डीकोरहित **प** बनाइएको छ, देब्रेतिर माथिल्लो भागबाट तेर्सो रेखा तानिएको छ र त्यसको तल्लो भागमा धस्काएर **र** जस्तो चिह्न बनाइएको छ। डीको नभएको **र प**

मिलाएर लेखिएको स्वरूपको **ख** बंगालका आठौं शताब्दीदेखि[२३] बाह्रौं शताब्दीसम्मका[२४] अभिलेखहरूमा पनि पाइन्छ। यसै स्वरूपबाट आधुनिक बाङलाको **ख** बनेको देखिन्छ। रञ्जनामा भने सर्वत्र पारंपरिक **ख** पाइन्छ।

**ग** पारंपरिक प्रकारको दुइ धर्के गाइगोडे **ग** बढी लोकप्रिय रहेको छ। तथापि तेह्रौं शताब्दी ई.का केही लेखमा (खासगरी भुजिंमो:मा) एक धर्के **ग** पाइन्छ। यसमा दाहिनेतिरको ठाडो रेखाको डीको भागभन्दा केही तलबाट देब्रेतिर सानो सीधा धर्सो र त्यसको टुप्पोलाई तल लगेर बाहिरपट्टि मोडिएको हुन्छ। यस प्रकारको **ग**मा डीको हुँदैन। बंगालको बाह्रौं शताब्दीको दानपत्रमा र आधुनिक बाङलालिपिमा समेत **ग**को यही स्वरूप पाइन्छ।[२५]

**घ** बाह्रौं शताब्दी ई.सम्म **घ** देवनागरीको दुइवटा **प**को संयुक्तव्यञ्जन जस्तो पारंपरिक किसिमको छ। त्यसपछि देवनागरीको **घ**को स्वरूप विकसित भइसकेको पाइन्छ।

**ङ** संस्कृतमा जोडको व्यञ्जनमा उपयोग हुने र नेवारीमा स्वतन्त्र उपयोगमा आउने **ङ** देवनागरीको ८ अंकचिह्नको स्वरूपबाट विकसित भएको हो। आरंभिक नेवारीमा प्रायः जोडमा प्रयोग भएको **ङ** पारम्परिक किसिमको छ। **ङ**को यस प्रकारमा दाहिने भागमा मोड आएको र तल्लो टुप्पोलाई देब्रेतिर फर्काइएको हुन्छ।[२६] (फलक २८) यही टुप्पोले कालान्तरमा विन्दुकोरूप लियो। यस्तो विकास बाह्रौं शताब्दी ई.मा बंगालमा स्पष्ट देखिन्छ।[२७] नेपालमा पारंपरिक रूपमा विकसित **ङ**मा तल्लो टुप्पोलाई विन्दुको रूपमा देब्रेतिर फर्काइएको पाइन्छ, डीकोमाथि वा दायाँतिर टिक वा विन्दु हुँदैन। रञ्जनामा भने डीकोको दायाँ भागमा तल झरेको टिक लोकप्रिय रह्यो। बाङ्ला र मैथिलीमा ङ को स्वरूप केही बेग्लै छ र विन्दु ठिक माथि बनाइन्छ।[२८]

**च** चरि चुच्चे **च** को पारंपरिक स्वरूप नेवारीका सबै शैलीहरूमा प्रचलित रह्यो। त्रिकोणको स्वरूपमा केही सामान्य फरक पाइन्छ र कतै देब्रेतिर बढी चोसो निस्केको पाइन्छ।

**छ** ठाडो रेखाको तल्लो भागमा दुइतिर वृत्त जोडिएको पारंपरिक **छ** लामो कालसम्म प्रचलित रह्यो। सोह्रौं शताब्दी ई.देखि भने **च** जोडिएको **छ** स्वतन्त्र **छ** वर्णको रूपमा प्रचलनमा आयो।

**ज** तीन भुजाको रोमन ई **E** जस्तो तर बाँगिएको ऊर्ध्वरेखा र तल झुक्दै गएको तेर्सा भुजाहरूको लिच्छवि **ज**बाट नेवारी **ज**को विकास भएको हो। नेवारी **ज**को स्वरूप देवनागरीको **ड**को दाहिनेतिर मोडबाट बांगिदै तल जाने रेखा थपिएको झैं बन्न पुगेको छ। लिच्छवि **ज**को माथिल्लो भुजा डीकोमा मिल्नगएको, बीचको भुजा बाँगो रेखामा परिणत भएको र तल्लो भुजा देब्रेतिर मोडिन गएको कारण नेवारी **ज**को विकास भयो। आठौं शताब्दीताकाको स्कन्दपुराणको साथसाथ[२९] भारतमा अन्यत्र पनि यस प्रकारको **ज** विकसित भएको

पाइन्छ।[३०] कतै दशौं शताब्दी ई. मै देवनागरीको समान **ञ** पनि देखिन्छ।[३१] (फलक २१)। तर यो स्वरूप नेवारीमा लोकप्रिय रहेन।

**झ** लिच्छविकालमा निकै कम उपयोगमा आउने **झ** नेवारीमा पारंपरिक किसिमकै पाइन्छ। देवनागरीको डीको नभएको उल्टो स्वरूपको **प** जस्तो **झ** आरंभमा पुरानोभन्दा भिन्न स्वरूपको छैन। तेह्रौं शताब्दी ई.ताका यसको स्वरूप देवनागरीको **ग**को बीचमा दाहिनेतिर ढल्कँदै गएको तेर्सो रेखाले जोडेको स्वरूपमा कायम रह्यो।

**ञ** लिच्छविलिपिमा अधिकतर **च छ** र **ज**मा जोडिएको रूपमा देखापर्ने **ञ**को स्वरूप नेवारीमा अलि बेग्लै जस्तो लाग्छ। लिच्छविलेखनमा स्वतन्त्र **ञ** विरलै पाइन्छ। तथापि यस वर्णसँग अङ्कचिह्न ७ को स्वरूप मिल्ने भएकोले त्यसबाट **ञ**को स्वरूप थाहापाइन्छ। मानदेवको चांगुनारायणअभिलेखमा यसको स्वरूप झण्डै रोमन बी जस्तो छ तर केही पछि देब्रे डीको भागमा देब्रेतिर जाने अङ्कुशको विकास भयो र अझ पछि तल्लो टुप्पो पनि देब्रेतर्फ माथिल्लो भागमा मोडियो। जोडको व्यञ्जनमा देवनागरीको उल्टो वा सुल्टो **उ** जस्तो स्वरूपको **ञ** आरंभिक नेवारीमा पनि प्रचलित रह्यो। कतैकतै पहिलो उच्चारण हुने **ञ** वक्ररेखा स्वरूपको पाइन्छ।[३२] **ञ** पन्ध्रौं शताब्दीताका देवनागरीको अंक चिह्न ७३ को स्वरूपमा परिणत भयो। केहीमा पहिलो ७ जस्तो चिह्न गोल बनेको हुन्छ भने कतै कोणात्मक बनेको छ।

**ट** लिच्छविकालको टिकयुक्त **ट** दशौं शताब्दीसम्म यथावत् चलेको पाइन्छ। त्यसपछि टिक हरायो र नेवारीका सम्पूर्ण शैलीहरूमा **ट**को स्वरूपमा खास परिवर्तन आएन। रञ्जनामा भने दाहिने डीको भागमा भिन्नभिन्न किसिमको टिक पछिसम्म पनि रहिरहेको पाइन्छ।

**ठ** वर्तुल आकारको **ठ**मा लिच्छविकालदेखि तेह्रौं शताब्दी ई.सम्म खास परिवर्तन पाईदैन। त्यसपछि माथिल्लो भागमा सानो ठाडो रेखा र भुजिंमोः र रञ्जनामा डीको लगाइएको पाइन्छ। प्रचलित नेवारीमा **ठ**मा डीको लाग्दैन।

**ड** लिच्छविकालमा देवनागरीको **र** जस्तो आकारको **ड**मा नेवारीलिपिमा निकै परिवर्तन आएको पाइन्छ। परवर्ती लिच्छविकालमा **ड**को तल्लो टुप्पो देब्रेतिर मुड्ने र बीचको मोडको विन्दुमा जोड दिने प्रवृत्ति पाइन्छ। दशौं शताब्दीमा सानो ठाडो रेखापछि ठोस विन्दु र त्यसको तलबाट केही दायाँतिरबाट बायाँतिर जाने वक्ररेखा विकसित भयो, जो देवनागरीको ७ को अंक चिह्न झैं प्रतीत हुन्छ। बाह्रौं शताब्दीका केही उदाहरणहरूमा रञ्जनामा पनि यो प्रकार पाइन्छ। पछिका रञ्जनाका अधिकांश उदाहरणहरूमा देवनागरीको समान **ड** पाइन्छ।

**ढ ढ**को आकारप्रकार आश्चर्यजनक रूपले प्रायः सबै लिपिमा समान रहेको छ। परवर्ती कालमा रञ्जनामा दाहिनेतिर डीको भागमा त्रिकोणात्मक टिक थपिएको पाइन्छ।

**ण** लिच्छवि **ण**बाट डीकोरहित देवनागरीको **ल** जस्तो स्वरूपमा दशौं शताब्दीमै विकास भएको देखिन्छ। देवनागरीको **ल** ठाडो रेखाको बीचबाट देब्रेतिर बनाइन्छ भने **ण** माथिबाटै दोहोरो अंङ्कुश बनाइन्छ, टुप्पोलाई भित्रपट्टि मोडिन्छ र डीको बनाइँदैन। रञ्जनामा भने आरंभदेखिनै तीन धर्के **ण**लाई कलात्मक रूपमा बनाइएको हुन्छ।

**त** पारंपरिक किसिमको **त**को दाहिने भाग सोझो लेखिने प्रवृत्तिले नेवारी र देवनागरीको **त**को विकास भएको हो। नेवारीमा यही त कायम रह्यो र पछि सम्म खास गरी जोडको **त**मा पनि पुरानो स्वरूप देखापर्छ। अन्यथा सोह्रौं शताब्दीपछि देवनागरीको स्वरूप लोकप्रिय हुँदै गयो। पछिल्लो व्यञ्जनको रूपमा जोडिने **त** अक्सर दाहिनेतिर बनाइएको हुन्छ।

**थ** परवर्ती लिच्छविको बीचमा चिरिएको **थ**बाट दशौं शताब्दीमा ठाडो ढल्केको रेखाले चिरिएको र डीको नलाग्ने **थ**को विकास भयो।[33] बाह्रौं शताब्दी ताका दुइवटा **व** जोडिएको स्वरूपको ठाउँमा माथिल्लो भागमा सानो गाँठोको विकास भयो। तेह्रौं शताब्दीसम्म दुवै स्वरूप प्रचलित रह्यो; पछि पुरानो हराउँदै गयो।

**द** सातौं शताब्दी ई.देखि **द**को टुप्पामा बढी जोर दिने प्रवृत्तिको विकासले क्रमशः पुच्छरको विकास हुँदै आएको **द** नेवारीलिपिमा देवनागरीको समान स्वरूप पाइन्छ। यसको पिठयूँ भने कतै गोल र कतै कोणात्मक बनको छ। रञ्जनामा पिठयूँलाई मोटो बनाएर कोणमा जोर दिइएको पाइन्छ।

**ध** यसको स्वरूप देब्रेतिरको पिठयूँको बीच भाग केही भित्र पसेको डीको नभएका देवनागरीको प जस्तो छ।[34] यसको माथिल्लो देब्रे टुप्पो भित्रतिर मोडिएको छ। यो स्वरूप दशौं शताब्दीसम्म कायम रह्यो। एघारौं शताब्दीताका देवनागरीको डीको नभएको **प**को तल्लो भागमा **व** जोडिएको स्वरूपको विकास भयो, जो रञ्जनासहित अन्य शैलीहरूमा लोकप्रिय रह्यो। यदाकदा पुरानो स्वरूप पनि प्रचलित नै रह्यो।

**न** देवनागरीको निहुरीमुण्टे **न**को स्वरूप सुरूदेखिनै नेवारीमा प्रचलित रह्यो।

**प** नेवारी **प** लिच्छवि **प**को विकसित रूप हो। यसको देब्रे भाग केही भित्र पसेको कारण देवनागरीको **य** जस्तो देखिन्छ। **य** भने बढी कोणात्मक बनाइएको हुन्छ। रञ्जनामा मोटो रेखाले खास किसिमले कलात्मक पाराले **प** लेखिन्छ।

**फ** लिच्छवि लेखनमा थोरै मात्रामा देखिने **प**बाट विकसित पारंपरिक **फ** नेवारीमा कोणात्मक हुँदै जाँदा भिन्न स्वरूपको देखापर्छ। परिणामस्वरूप यसको स्वरूप देवनागरीको **रू** वा हसँग मिल्दोजुल्दो हुन गयो। रञ्जनामा **प** लेखेर त्यसको दायाँतिर तल र माथि जाने दोहोरो अंकुश जोडेर **फ** बनाइएको पाइन्छ। तथापि देवनागरीको **ह** जस्तो स्वरूपको नेवारीको **फ** पनि प्रचलित रह्यो।

**ब** लिच्छविको चारकुने बाकस झैं ब मा नबौं शताब्दी सम्म खास फरक आएन। कतै डीको रहेको **प**को समान **ब** लेखिएको छ।[३५] लङ्कावतारमा **व**को स्वरूपको **ब** रहेको छ।[३६] बंगालमा छैठौं शताब्दीदेखि नै **व** र **ब**मा भेद गरिएको छैन।[३७] नेवारीमा सोह्रौं शताब्दीका केही लेखनमा **ब** र **व**मा भेद गर्न **व**को गोलाईको तल्लो भागलाई खुँडे बनाउने चलन चल्यो। अन्यथा नेवारीमा पनि साधारणतया **ब** र **व**मा भेद गरिएको पाइँदैन।

**भ** दुई भुजाको पारंपरिक लिच्छवि **भ**बाट नेवारीलिपिको **भ**को विकास भयो। देब्रेतिरको मोटो भुजा त्रिकोणात्मक रूपमा र दाहिने भागमा सीधा ठाडो रेखाको विकास हुँदा **भ**को एक प्रकार झण्डै देवनागरीको **न** जस्तो बन्न पुगेको छ। खासगरी रञ्जनामा यो स्वरूप धेरै लोकप्रिय रह्यो। बाह्रौं शताब्दीताका केही पाण्डुलिपि र अभिलेखहरूमा देब्रे भुजाको त्रिकोणको मुख खुलेर दुवैतिर फाट्यो र देब्रेतिर कोणात्मकस्वरूपको देवनागरीको **ह**को झैं आकारमा विकसित भयो। तथापि पुरानो त्रिकोणात्मक भुजाको **भ** चलिनै रह्यो। तेह्रौं शताब्दीताका त्रिकोण देब्रे भुजाबाट ढल्केको रूपमा तल जाने पातलो रेखा थपियो। यसो हुँदा **भ**को स्वरूप झण्डै देवनागरीको **रु** वा **ए** जस्तो हुनपुग्यो। चौधौं शताब्दीताका त्रिकोण भुजाबाट तल जाने रेखाको ठाउँमा ढल्केर माथि जाने रेखा जोडियो। यी दुवै स्वरूप खास गरी भुजिंमोःमा लोकप्रिय रह्यो। पछिल्लो **भ** झण्डै देवनागरीको **भ**सँग मिल्नआउँछ। यी सबै स्वरूप वैकल्पिक रूपमा साथसाथ चले। प्रचलित नेवारीमा सोह्रौं शताब्दी ई.देखि देवनागरीको **रु** वा **ए**सँग मिल्दोजुल्दो स्वरूप स्थिर रह्यो।

**म** नेवारी **म** पारंपरिक हो। एघारौं शताब्दी ई.सम्म पारम्परिक **म**को देब्रेतिर ठोस वा खोक्रो विन्दु वा त्रिकोणको र दाहिने तल्लो भागमा पुच्छरको विकास भइसकेको थियो। अधिकांश लेखोटमा **म**को देब्रेतिरको गाँठो ठोस वृत्तात्मक पाइन्छ।

**य** सातौं शताब्दी ई.मा स्थिर भएको **य**बाटै नेवारी **य**को विकास भएको स्पष्ट छ। कहींकहीं देब्रे भागको कोणात्मकता दोहोरो पाइन्छ। **य**को यस कोणले नै **प**भन्दा भिन्न स्वरूप बनाउँछ।

**र** आफ्नो देब्रेतिर फर्कने रेखान्तका कारण लिच्छवि **र**बाट नेवारी **र**को विकास भएको हो। मसी भरिएको वा खोक्रो त्रिकोणात्मक **र** निकै पछिसम्म कायम रह्यो। दशौं शताब्दीका लेखमा देवनागरीको समान **र** पनि पाइन्छ, जो पछि रञ्जनामा लोकप्रिय भयो। मसी नभरिएको कारण त्यसै वेलाको अभिलेखमा **च** जस्तो गरी **र** बनाइएको पाइन्छ। एघारौं शताब्दीदेखि ठाडो रेखाको देब्रे भागमा मसीनो सानो तेर्सो रेखा जोडिएको स्वरूपको **र** प्रचलित नेवारीमा बढी चल्यो। (फलक २८)।

**ल** देवनागरीको समान **ल**को विकास आठौं शताब्दीमै भइसकेको थियो। **ण** र **श**भन्दा **ल** भिन्न छ। **ल** सधैं ठाडो रेखाको बीचबाट देब्रेतिर दुई अंकुशको रूपमा मोडिएको हुन्छ र सधैं डीको रहन्छ।

**व** पारंपरिक **व**को विकास पनि पुच्छरको विकासको साथ आठौं शताब्दीमै अस्तित्त्वमा आयो । नेवारीमा **ब** र **व**मा भिन्नता देखाउन सोह्रौं शताब्दीदेखि **व**को तल्लो वर्तुल भागलाई खुँडे बनाउने चलन चल्यो ।

**श** उत्तरवर्ती लिच्छविलेखनमा पारंपरिक **श**कै उपयोग भएको पाइन्छ । यसको देब्रे भाग त्रिकोण बन्दै गएको र केही उदाहरणमा पुच्छरको समेत विकास भएको पाइन्छ । नेवारीकै **ण**को समान तर देब्रे टुप्पो बाहिरतिर मोडिएको **श** आरंभमा दशौं शताब्दीदेखि बाह्रौं शताब्दीसम्म पारंपरिक प्रकारको साथसाथ पाइन्छ । त्यसपछि पुरानो प्रकार देखिन छोड्छ । रञ्जनामा भने पुरानै **श** लोकप्रिय रह्यो । नयाँ प्रकारको **श** पारंपरिक प्रकारबाटै विकसित भएको हुनसक्छ । तर त्यसको बीचको अवस्था कस्तो थियो नेवारी लेखनबाट जान्न सकिंदैन । यसको आरंभिक स्वरूप सातौं शताब्दीको बंगालको एक अभिलेखमा पाइन्छ ।[३८] त्यस पछि एघारौं र बाह्रौं शताब्दीका बंगालका अभिलेखहरूमा त्यसै प्रकारको **श**को विकास पाइन्छ । सत्रौं शताब्दीमा कहिलेकाहीं देखिने शको अर्को प्रकारमा ठाडो रेखाको देब्रतिर माथि जाने रेखा र त्यसको टुप्पोलाई तल लगी गाँठो बनाउँदै देब्रे फर्काइएको हुन्छ । यसको स्वरूप परवर्ती बाङ्लाको शसँग मिल्दोजुल्दो छ ।[३९]

**ष** पारंपरिक गोलो गाँठो भएको **ष**को ठाउँमा आठौं शताब्दीमै देवनागरीको पेट चिरेको स्वरूपको ष प्रचलित रह्यो । नेवारीमा सर्वत्र यसै प्रकारको **ष** प्रचलित भयो ।

**स** आठौं शताब्दीदेखि विकसित भएको मुख खुलेको पातलो **स**बाट तल्लो भागमा पुच्छरको विकास भई नेवारी **स** कायम भयो । यो देवनागरीको **स**भन्दा भिन्न छैन ।

**ह** पारंपरिक **ह**बाट नेवारी र देवनागरी **ह**को विकास भएको हो ।

## संयुक्ताक्षर

वर्तमान देवनागरीकै संयुक्ताक्षरको सिद्धान्त नेवारीमा पनि पाइन्छ । तथापि पुरानो नेवारीमा संयुक्त व्यञ्जनको पद्धति केही जटिल जस्तो लाग्नसक्छ । यसमा एकातिर धस्काएर लेखिएका स्वरूप पाइन्छन् भने अर्कोतिर सकेसम्म सबै व्यञ्जनका स्वरूप उतार्ने प्रयास गरिएको हुन्छ । उदाहरणार्थ **क्** र **ष्**को संयुक्त रूप **क्ष**मा **क**को देब्रेतिरको गाँठो बनाइएको पाइँदैन र **ष** पनि पूरा लेखिंदैन । **क**को दाहिनेतिरको तल झर्ने अंकुश सामान्यभन्दा लामो हुनसक्छ । **त**मा **र** जोडिएको **त्र**को स्वरूप भने बढी स्पष्ट हुन्छ । **ज** र **ञ** जोडिएको **ज्ञ** प्रायः पुरानै किसिमले लेखिएको हुन्छ । **क्ष त्र ज्ञ** जस्तै **श्री** पनि नेपाली देवनागरीमा स्वतन्त्र वर्णका रूपमा विकसित झैं देखापर्छन् । तर नेवारीमा **श्री** **श**मा **र** जोडेर दीर्घ ईकारको मात्राचिह्न थपिएको स्वरूपको हुन्छ । त्यसैगरी ॐका लागि लिच्छविकालदेखिनै खास चिह्नको विकास भएको पाइन्छ । जोडमा पहिले उच्चारण हुने **र** अथवा रेफ व्यञ्जनको माथिल्लो भागमा डीकोमाथि दाहिनेतिर

फर्केको रेफको चिह्न नेवारीमा पनि पाइन्छ। यसको साथसाथ पछि उच्चारण हुने व्यञ्जनको बीचमा देब्रेतिर सानो तेर्सो रेखा जोड्ने चलन पनि नेवारीमा विकसित भएको पाइन्छ। व्यञ्जन जोड्दा कुनै ठूलो र कुनै सानो बनाउने चलन नेवारीका सबै शैलीमा पाइन्छन्, तर यो विशेषता रञ्जनामा टड्कारै देखिन्छ।

## मात्राचिह्न

नेवारीका आ ा, इ ि, ई ी, उ ु, ऊ ू, ऋ ृ का मात्राचिह्नहरू देवनागरीका पाठकका लागि प्रायः नौला छैनन्। तथापि तिनका केही खास विशेषताहरूबारे बुझ्नु आवश्यक हुन्छ :

**आ ा** सामान्यतया व्यञ्जनको दाहिनेभागमा जोडिएको ठाडो रेखा आकारको मात्राचिह्न हो। डीको नभएका व्यञ्जनहरूमा यस्तो मात्रा लगाउँदा माथिल्लो भागमा वा बीचमा ढल्केको तेर्सो रेखा जोड्ने चलन विकसित भयो।

**इ ि** आरंभिक नेवारीमा देब्रेतिरको ठाडो रेखा लिच्छविको समान वक्र हुन्छ जो पछि सीधा हुँदै गएको पाइन्छ।

**ई ी** दीर्घ ईको मात्रा देवनागरीकै समान हुन्छ।

**उ ु** उकारको मात्रा चिह्नका दुई मुख्य प्रकार पाइन्छन्। व्यञ्जनहरूका ऊर्ध्वरेखाको तल्लो टुप्पोको देब्रेतिर केही मोटो बनाइने पुरानो पद्धतिले आरंभिक नेवारीमा त्रिकोणात्मक स्वरूप लिएको पाइन्छ।[४०] केहीमा यस्तो त्रिकोण ठोस छ भने केहीमा खोक्रो। यसको साथसाथ धेरैजसो व्यञ्जनहरूमा देवनागरीमा प्रचलित तर्कुल्ले वा देब्रेतिर घुमुर्किएको चिह्न पाइन्छ। यी दुवै साथसाथ पाइन्छन्। एघारौं शताब्दीको उत्तरार्धमा पहिलो प्रकारको मात्राचिह्न बनाएपछि रेखान्तलाई दाहिने तल झारेको पाइन्छ, जसले गर्दा देवनागरीको दीर्घ उकारको मात्रा झैं बन्न पुगेको छ। रञ्जनामा भने प्रायः तर्कुल्लेकै चलन चल्यो।

**ऊ ू** पन्ध्रौं शताब्दीदेखिका लेखोटमा देवनागरीकै समान ऊकारको मात्रा चिह्न चल्यो। त्यसभन्दा पूर्व यो चिह्न केही देब्रेतिर फर्केको हुन्थ्यो। यस चिह्नको विकास लिच्छविकै मात्राचिह्नबाट भएको देखिन्छ।

**ऋ ृ** व्यञ्जनको तल्लो टुप्पो दाहिनेतिर फर्काएर ऋ जोड्ने नियम पारंपरिक हो र देवनागरीसँग मिल्दोजुल्दो छ।

**ए े ऐ ै ओ ो औ ौ** डीको भागको देब्रेतिर जाने सानो रेखा र डीकोमाथिको ढल्केको रेखा गरी दुवै प्रकारका एकारको पारंपरिक मात्राचिह्न नेवारीमा पनि प्रचलित रह्यो। पद्धतिबमोजिम **ऐ**मा दुइवटा एकारको मात्रा चिह्नहरू यसै अनुरूप बनाइएका पाइन्छन्। यसैगरी **ओ**मा एकारको मात्राको साथसाथ आकारको मात्रा चिह्न र **औ**मा दुईवटा एकारका मात्राचिह्नको साथसाथ आकारको मात्राचिह्न बनाइएको हुन्छ। देवनागरीका पाठकहरू यस नियमसँग परिचित छन्। एघारौं शताब्दीमा नेवारीको विकाससँगसँगै एकारको नौलो मात्राचिह्न देखापर्‍यो। कोष्ठको पहिलो चिह्न झैं वक्ररेखा भएको यो

चिह्न व्यञ्जनको देब्रेतिर पूरा व्यञ्जनलाई ढाक्नेगरी बनाइएको हुन्छ। यसको विकास पनि पारंपरिक तेर्सो एकारको चिह्नबाटै भएको हो। तर यसको विकासक्रम नेपालमा देखिंदैन। दशौं शताब्दीमा यस प्रकारको मात्राचिह्न बंगाल-विहारमा विकसित देखिन्छ।[४१] एघारौं शताब्दीमा अन्यत्रको नागरीमा भने सोझो ऊर्ध्वरेखाको एकारको मात्रा पाइन्छ।[४२] नेपालमा एकारको यो वक्ररेखाको चिह्न **ए ऐ ओ** र **औ** सबैमा पाइन्छन्। तर पारंपरिक एकारको मात्राचिह्न पनि साथसाथ उपयोगमा आउँथे। सुरूमा यो चिह्न **ग ठ ण थ श**मा सीमित रहेको पाइन्छ। पन्धौं शताब्दीको पूर्वार्धको एक अभिलेखमा **क ग ज्य त (त्र) थ द य र**मा समेत यस्तो एकारको मात्राचिह्न लगाइएको पाइन्छ। तर सोह्रौं शताब्दीको उत्तरार्धदेखिका लेखोटमा यस्तो चिह्न **ग ञ ठ ण थ ध** तथा **श** जस्ता प्रायः डीको नभएका व्यञ्जन हरूमा सीमित रह्यो। यो मात्राचिह्न रञ्जना बाहेक प्रायः सबै शैलीहरूमा कायम रहे। रञ्जनामा भने पारंपरिक एकारका चिह्नहरू मात्र पाइन्छन्।

## अन्य संकेतचिह्न

सामान्यतया व्यञ्जनमाथि विन्दु लागेको पारम्परिक अनुस्वार नेवारीमा पनि कायम छ। वाक्यको अन्तमा यस्तो अनुस्वारको साटो खुट्टा काटेको **म्** दिनु पर्दछ भन्ने संस्कृत व्याकरणको नियमको पालन नेवारीको लेखोटमा पनि गरिएको छ। हलन्त **म्** लाई सानो स्वरूपको बनाउने लिच्छविलेखनको परम्परा नेवारीलिपिले पनि अनुसरण गरेको छ। एघारौं शताब्दीसम्म विन्दुको ठाउँमा **म**को सानो पूरा स्वरूप र त्यसको तल ढल्केको रेखाको चलन चलेको पाइन्छ। (फलक १६, १८, १९, २१, २३ र २६) यो विशेषता पारम्परिक हो। सातौं शताब्दीमै धस्काएर लेखिएको म्को स्वरूप माथि फर्केको अर्धचन्द्र र तल ढल्केको तेर्सो रेखा भएको पाइन्छ।[४३] (फलक १८) एघारौं शताब्दीमा माथि मुख खुल्ने (तल फर्केको) कोणको तल खुट्टा काटेको जनाउने दायाँ ढल्केको रेखाले हलन्त **म्** जनाइएको छ।[४४] डीकोरेखा नजिकै वृत्त र त्यसको तलतिर दायाँ ढल्केको रेखाले ० हलन्त **म्** जनाउने चलन बाह्रौं शताब्दीमा देखिन्छ र तेह्रौं शताब्दीसम्म स्थिर भइसकेको पाइनथाल्छ।[४५] यो चिह्नको चलन बंगाल-विहारमा बाह्रौं शताब्दीमा लोकप्रिय रहेको पाइन्छ, जो संयोग मात्र पनि हुनसक्छ।[४६]

ठाडो गरी बनाइएका दुई वृत्त वा विन्दुको पारम्परिक विसर्गचिह्न नेवारीलेखनका सबै शैलीहरूमा प्रचलित छ। तथापि रञ्जना र भुजिंमोःका कलात्मक लेखोटमा विसर्गको चिह्न अरबिक अङ्कचिह्न **8** जस्तो गरी वृत्तहरूमा फुर्को लगाइएको हुन्छ। दोहोरो ठाडा रेखाको विरामचिह्न सातौं शताब्दीदेखि नै अभिलेखमा देखिन्छ र त्यसपछिका ग्रन्थलेखनमा लोकप्रिय रहँदैआएको छ।[४७] (फलक १८) दशौं शताब्दीदेखि दोहोरो ठाडा रेखामध्ये पहिलो ऊर्ध्वरेखाको देब्रेतिर बीचमा छोटो तेर्सो रेखा जोडिएको विरामचिह्न लोकप्रिय रहयो। अर्धविरामको चिह्न दुर्लभ छ, तर कहींकहीं यसको लागि विन्दु पाइन्छ र ठाउँ खालि राख्ने चलन दुर्लभ छ।

## टिप्पणी

१. हेमराज शाक्य, **नेपाल लिपिप्रकाश** (काठमाडौं : ने.रा.प्रज्ञाप्रतिष्ठान, २०३०) पृष्ठ ७ (प्राक्कथन), शङ्करमान राजवंशी, "नेपाली लिपिविकास" **कैलाश** वर्ष २, अङ्क १-२ (काठमाडौं १९७४) पृष्ठ २६ ।

२. नेपाल सरकार, "नेवार जातको ऐन" **मुलुकी ऐन** (काठमाडौं : गोरखापत्र प्रेस, २०१२), भाग ५, पृष्ठ. ७५-८२ ।

३. बाबुराम आचार्य, "नेपाल, नेवार र नेवारी भाषा " **नवकुञ्ज** (नेपाली मासिक) वर्ष ५, अङ्क १ (ज्येष्ठ २०२६) पृष्ठ ३, ५-६ ।

४. John Faithful Fleet, **Corpus Inscriptionum Indicarum** Vol. III (reprint.Varanasi: Indological Book House, 1963) 6-10.

५. K.A.Nilakanta Sastri, G.Srinivasachari, **Advanced History of India** (Allied Publishers, 1982) 188.

६. धनवज्र वज्राचार्य, **लिच्छविकालका अभिलेख** (काठमाडौं : त्रि.वि., २०३०) पृष्ठ ११०, ३०९ र ३११ । पहिलो अभिलेख राजा वसन्तदेवको हो, जसमा संवत् ४३४ (तदनुसार ५१२ ई.) छ । बाँकि दुइवटा अभिलेख राजा अंशुवर्माका हुन् । एउटामा संवत् मेटिएको छ र अर्कोमा संवत् ३१ (६०७ ई.) कुँदिएको छ ।

७. **उही** पृष्ठ ५३० र ५७३ । राजा शिवदेव द्वितीयको संवत् १२९ (७०५ ई.) को बलम्बूको अभिलेखमा देशको अर्थमा **नेपालभुक्ति** शब्दको उपयोग गरिएको छ । शिवदेवका उत्तराधिकारी राजा जयदेवको तिथि पढ्नन‌सकिने भग्नअभिलेख **नेपालमण्डल**भित्रका अड्डाअदालतका अधिकृतहरूलाई सम्बोधन गरिएको छ ।

८. **सोह्रौं** शताब्दीपछिका राजाहरूमा **नेपालेश्वर** भन्ने चलन बढी पाइन्छ । नेपालसंवत् ५९९ (१४७९ ई.) को एक ग्रन्थको पुष्पिकावाक्यमा यक्षमल्ल नेपालमण्डलेश्वर भनिएका छन् । हेर्नुस्: D.R. Regmi, **Medieval Nepal, Part I** ( Calcutta: Firma K.L.Mukhopadhyay,1961) P.431. एउटा ताम्रपत्रमा राजा रत्नमल्ल अर्को एक ग्रन्थको पुष्पिकावाक्यमा राजा रायमल्ललाई **नेपालचूडामणि** भनिएको छ । **उही** पृष्ठ ४५५, ४५७ । पन्ध्रौं शताब्दीको उत्तरार्धदेखि दानपत्रको सङ्कल्पवाक्यमा "भरतखण्डमा हिमालयको पाउमा रहेको पशुपतिनजिकैको वासुकिक्षेत्र" भनेर नेपालको र वाग्मती र विष्णुमती नदीहरूबाट काठमाडौं उपत्यकाको भौगोलिक अवस्थिति बताइएको छ । **उही** पृष्ठ ४५४।

९. ने मुनिको बारेमा हेर्नुस् : नयनाथ पौडेल, सम्पादित **भाषा वंशावली** (भाग १) (श्री ५ को सरकार पुरातत्त्व विभाग, २०२०) पृष्ठ २९-३१, ४१-४२ । ज्ञानमणि नेपालको (**नेपालनिरुक्त**, काठमाडौं : ने.रा.प्रज्ञाप्रतिष्ठान, २०४०) अनुमान अनुसार भारतबाट आएका कुनै नीप नामक जातिको नामबाट नेपाल भन्ने नाम रहन गएको हो ।

१०. धनवज्र वज्राचार्य, **पूर्वोक्त टिप्पणी** ६, पृष्ठ २७-२८ । ज्ञानमणि नेपाल, (**उही** पृष्ठ ३-४) । जगदीशचन्द्र रेग्मी, **लिच्छवि-इतिहास** (काठमाडौं : त्रि.वि. नेपाल र एशियाली अनुसन्धान केन्द्र,२०५३), पृष्ठ २१० ।

११. D.R. Regmi, *op.cit.*note 8. 489.

१२. दिनेशचन्द्र रेग्मी, "छु नेवाः जातया नां खःला?" **इनाप** असोज २३, २०४२ ।

१३. यस ताडपत्रको लेखनलाई कमलप्रकाश मल्लले नेपालभाषाको पहिलो तिथियुक्त दस्तावेज मानेका छन् । हेर्नुस् **कैलाश** १६ (१-२) : १५-२६: साहित्यको

विकासको बारेमा हेर्नुस्। Kamal P.Malla, **Classical Newari Literature; A Sketch** ( Kathmandu: Educational Enterprise, 1982 ),: 7 . कमल प्रकाश मल्लबाट अन्यत्र प्राप्त जानकारीअनुसार ५०० जति चीनीतिब्बतीबर्मेली भाषाहरूमध्ये चारवटा भाषा मात्र लिपिबद्ध छन्। तीमध्ये एक हुने गौरव नेपालको नेवारीले पाएको छ। भिन्न मूलको भएता पनि यस भाषामा संस्कृतको धेरै प्रभाव परेको छ। कतिपय लेखोटको सङ्ग्रहका लागि हेर्नुस् : चित्तधर 'हृदय', **नेपाल भाषा साहित्यया जातः** (कान्तिपुर : नेपाल भाषा परिषद्, ने.सं. १०९१) पृष्ठ ४।

१४. **गोपालवंशावली**को पूर्वार्ध (पत्र १७ एदेखि ३० बीसम्म) ज्यादै अशुद्ध संस्कृतमा लेखिएको छ र उत्तरार्ध (पत्र ३१एदेखि ६३ बी र अतिरिक्त पत्र) नेवारीमा छ। यसको भाषामा संस्कृतशब्दहरूको धेरै उपयोग भएको कारण प्रवाह कम छ। हेर्नुस् : Dhanavajra Vajracharya, Kamal P.Malla, ed. **The Gopalarajavamsavali** (Kathmandu:Nepal Research Centre,1985) 39-72.

१५. चित्तधर 'हृदय' **पूर्वोक्त** टिप्पणी १३ पृष्ठ ९-१५। अधिक संस्कृत शब्दहरूको उपयोगको कारण भाषा अझै बोझिल छ। यसै ताकाका केही अभिलेख र ताडपत्रको भाषामा भने निकै प्रवाह पाइन्छ। हेर्नुस् **उही** पृष्ठ १५-१६: मल्ल, **टिप्पणी** १३।

१६. उदाहरणको लागि हेर्नुहोस् संवत् ५७३को राजा यक्षमल्लको भक्तपुरको अभिलेख (उही पृष्ठ १७-१८)।

१७. हेमराज शाक्य, **पूर्वोक्त टिप्पणी** १, पृष्ठ ७, शङ्करमान राजवंशी, **पूर्वोक्त टिप्पणी** १, लिपिचित्र १८।

१८. सूर्यविक्रम ज्ञवाली, **नेपाल उपत्यकाको मध्यकालीन इतिहास** (काठमाडौं : रायल नेपाल एकेडेमी, २०१९), पृष्ठ २२० र अगाडि।

१९. शङ्करमान राजवंशीले (**पूर्वोक्त टिप्पणी** १, पृष्ठ २६मा) लेखेका छन् : "नेपालमा मिथिलाको लिपिसँग मिल्दोजुल्दो किसिमको लिपि चलेको थियो, जुन लिपिलाई प्राचीन नेवारीलिपि भन्ने चलन छ।"

२०. गौरीशंकर हीराचन्द ओझा, **भारतीय प्राचीन लिपिमाला** (दिल्ली : मुन्शीराम मनोहरलाल, १९५९) लिपिपत्र ३२।

२१. **उही** लिपिपत्र ७८।

२२. **उही** लिपिपत्र ३२।

२३. Ahmad Hasan Dani, **Indian Palaeography** (Oxford: The Clarendon Press, 1963) Plate XI 6 a.6.

२४. ओझा, लिपिपत्र ३२-३४।

२५. **उही** लिपिपत्र ३३-३४, ७८।

२६. शङ्करमान राजवंशी **पूर्वोक्त** टिप्पणी १, लिपिचित्र १८।

२७. ओझा, लिपिपत्र ३३।

२८. ओझा, लिपिपत्र ७८।

२९. शङ्करमान राजवंशी, लिपिचित्र १६।

३०. Ahmad Hasan Dani, *op.cit.* note 23, Plate XI a.6.

३१. शङ्करमान राजवंशी, लिपिचित्र १८।

३२. **उही** लिपिचित्र २४।

३३. **उही** लिपिचित्र १८ ।
३४. **उही** लिपिचित्र १८ ।
३५. **उही** लिपिचित्र १६ ।
३६. **उही** लिपिचित्र १८ ।
३७. Ahmad Hasan Dani, note 23, P. 130.
३८. *ibid.* Plate Xl b.5.
३९. नेपाल लिपि गुथि, **प्रचलित नेपाल लिपिया वर्णमाला** (काठमाडौं, ने.सं. १११२) मा यस प्रकारको शको परिचय दिइएको छ ।
४०. फलक २३ खमा **कुमुद** लेख्ता **क**मा तर्कुल्ले लगाएको छ भने **म**मा ठोस त्रिकोण बनाइएको छ ।
४१. बंगाल र आसाममा दशौं-एघारौं शताब्दीका लेखहरूमा यो कोष्ठकको पहिलो चिह्न झैं वक्र हुन्छ र कालान्तरमा यसको रेखान्तमा गाँठो बनाइएको हुन्छ । (हेर्नुस् गौ.ही. ओझा, लिपिपत्र ३२, ३३ र ३४) । यो चिह्न पारम्परिक एकारको चिह्नबाटै विकसित भएको हो । गौ.ही. ओझा (पृष्ठ ७४,पादटिप्पणी ३) लेख्छन् : "यही ऊर्ध्वरेखा नागरीमा पडीमात्रा (पृष्ठमात्रा) भएर ए ऐ ओ औका मात्रा भएका व्यञ्जनको अगाडि लाग्नलाग्यो र बंगला, मैथिली र उडिया लिपिहरूमा दाहिनेतिर (अर्थात् हाम्रो देब्रेतिर) तल गाँठो भएको वक्ररेखाको रूपमा यसको अहिले सम्म प्रयोग हुन्छ (हेर्नुस् लिपिपत्र ७८ र ७९) ।" यसरी नेपालमा बंगालमा प्रचलित वक्ररेखाको चलन चलेको छ। तुलना गर्नुस् ओझाका उपर्युक्त फलकहरू र शङ्करमान राजवंशी, लिपिचित्र २२, २३ मा **गे थै थौ** र **ठे** ।
४२. कन्नौज र पश्चिमी भारतमा एघारौं-बाह्रौं शताब्दीका लेखोटहरूमा र तेह्रौं शताब्दीका आबू, जालौर र मेवाडका लेखोटहरूमा व्यञजनको अगाडि ठाडो रेखाको रूपमा एकारको मात्राचिह्नको साथसाथ डीकोबाट माथि जाने तरङ्गयुक्त रेखाको पुरानो चिह्न पनि बनाउने चलन पाइन्छ। हेर्नुस् ओझा लिपिपत्र २६, २७। हेर्नृस् शङ्करमान राजवंशी, लिपिचित्र ४९, ५०, ५१। तर जुम्लाका लेखोटमा यस किसिमको एकारको मात्रा पाइँदैन। उही लिपिचित्र ५२।
४३. हेर्नुस् राजा नरेन्द्रदेवको पाटन दरबारको भन्सारचोक लुँझ्याको संवत् ६७को (६४३ ई.को) अन्तमा अनुस्वार । D.R. Regmi, **Inscriptions of Ancient Nepal** (New Delhi: Abhinav Publications, 1983) Plate CXVI.
४४. शङ्करमान राजवंशी, लिपिचित्र २३ ।
४५. **उही** लिपिचित्र २६ ।
४६. गौ.ही. ओझा, लिपिपत्र ३३ ।
४७. D.R. Regmi, *op.cit.* note 43, Plate CXVI. यसमा अन्तमा दोहोरो ठाडो रेखाको विरामचिह्न फुलबुट्टा, पुनः दोहोरो ठाडो रेखाको विरामचिह्न र तेर्सो नागबेली रेखा बनाएर खालि ठाउँ भरिएको छ ।



# अध्याय अठार

# नेवारीलिपिको उत्पत्ति र विकास

नेवारी लिपिको उत्पत्तिमाथि विचार गर्दा पाँचौं शताब्दी ई.देखि निरन्तर रूपमा जारी रहेको लेखनको प्रकृति र प्रवृत्तिमाथि ध्यान दिनुपर्ने हुन्छ। वर्णमालाको चिनारी भएपछि नेपाली लेखनमा पहिलेको तुलनामा आएको परिवर्तनबारे बुझ्न सकिन्छ। अब वर्णहरूको तल्लो भागमा मसिनो फुर्को वा पुच्छरको विकास भइसकेको छ र मात्राचिह्नहरू निर्धारित भइसकेका छन्। यी विशेषताहरू अकस्मात् देखापरेका होइनन् भन्ने कुरा लिच्छविलिपिविकासको अन्तिमचरणको लेखावट हेर्दा हामीलाई थाहा भइसकेको छ। यी विशेषताहरूको विकासको प्रवृत्ति आठौं शताब्दीको लेखनमै अनुभव गर्नसकिन्छ। केही पछि ताडपत्रमा लेख्ने चलन बढेपछि लेखनमा प्रवाह बढ्नजाँदा यो प्रवृत्ति बढी मुखरित हुन्छ। यी विशेषताहरू १००० ई.सम्म स्पष्ट रूपमा देख्नसकिने भइसकेका छन्। वास्तवमा यी विशेषताहरू पछिल्लो लिच्छविलिपि लगायत नेवारीलिपि र प्राचीन देवनागरीका साझा विशेषता हुन्, यिनले नेवारीलिपिको उत्पत्तिमा ठूलो भूमिका खेलेका छन्।

## नेवारी र नागरी

यतिखेर भारतका कतिपय ठाउँहरूमा नागरी वा प्राचीन देवनागरीको विकास भइरहेको कुरा माथि परेको छ। नागरीमा वर्णहरू लम्बा र पुच्छरदार हुन्छन् र यिनका शिरोभागमा लामो तेर्सो रेखाको डीको हुन्छ।[१] नागरीको यस परिभाषामाथि विचार गरेर हेर्दा १००० ई.सम्म नेपालमा विकसित लेखनमा यी विशेषताहरू देखिन्छन्। नेपाल र भारतमा एउटै भाषा अर्थात् संस्कृत लेख्न ब्राह्मीमूलको लेखन प्रचलित छ। नेपाल भौगोलिक र सांस्कृतिक रूपले भारतको समीप रहेको छ। यिनका बीच सांस्कृतिक सम्बन्धको लामो इतिहास छ। दुवै देशका बीचमा हस्तलिखित ग्रन्थहरूको आदानप्रदानको संभावना रहेको छ। अतएव दुवै देशमा लेखनविकासको सामान्य प्रवृत्ति समान किसिमको रहेको भएमा आश्चर्य मान्नु हुँदैन। भारतका विभिन्न क्षेत्रहरूमा खास चरणमा नागरीको विकास देख्दा यो ब्राहमीको विकासको सामान्य प्रवृत्ति जस्तो लाग्छ। नेपालमा पनि त्यस्तै हुनु वा त्यसको प्रभाव पर्नजानु असंभव हुँदैन। वास्तवमा यसताका नेपालमा पनि प्राचीन देवनागरीका लक्षण भएको लेखन विकसित भएको पाइन्छ।

लिच्छविलिपिविकासको अन्तिम चरणमा कतिपय वर्णहरूमा पुच्छरको विकास भइसकेको थियो र मात्राचिह्नमा प्रायः एकरूपता र स्थायित्व आइसकेको थियो। यी विशेषताहरू नागरी वा प्राचीन देवनागरीका पनि हुन्। यसै कुरालाई ध्यानमा राखेर बेण्डालले क्याम्ब्रिज वि.वि.मा रहेको १००८ ई.को कुनै नेपाली ताडपत्रग्रन्थको लेखनलाई नागरी भनेका छन्।[२] जर्ज बूलरले भुजिँमोः र

रञ्जनालगायत नेवारीका अनेक लेखनशैलीहरूको चर्चा नागरी पछि गरेका छन्।[३] ती दुवै लेखकहरू **नेवारी लाञ्जा** वा **रञ्जना** र **भुजिंमो**: जस्ता लेखनशैलीका पारम्परिक नामको बारेमा अनभिज्ञ देखिन्छन्। तिनले त्यस्ता शब्दहरूको उल्लेखसम्म गरेका छैनन्। उनका दृष्टिमा तेह्रौं शताब्दीताकाको नेपाली लेखन पूर्वी प्रकारको नागरीको विस्तार थियो। उनीहरूले भारतीय पुरालेखनको विकासक्रमलाई ध्यानमा राखेर नेपालबाहिर पुगेका सीमित सामग्रीहरूको आधारमा नेपाली पुरालेखनको अध्ययन गर्नखोजे। तथापि नेपाली लेखनपरम्पराको अन्तरङ्ग अध्ययनबाट कैयौं यस्ता पारम्परिक विशेषताहरू देखिएका छन् जो अन्यत्र अज्ञात छन्। नेवारी भनिने नेपालको पारम्परिक लेखन अनेक अर्थमा अन्यत्र विकसित नागरीभन्दा भिन्न छ। सेसिल बेण्डालका उदाहरणहरूमध्ये एउटामा मोटो र सीधा डीकोमा लेखिएका मोटा र चौडा वर्ण छन् र अर्कोमा वर्णहरूको बनावट त समान छ तर डीको भने खास किसिमको त्रिकोणात्मक छ। पहिलो प्रकारको लेखनलाई नेपालको परम्परामा प्रचलित नेवारी र अर्कोलाई रञ्जना भनिन्छ। विशिष्ट बनावटको डीको र समृद्ध अलङ्करणको कारण दोस्रो किसिमको लेखनले भिन्न पारम्परिक नाम पाएको हो।

नेपाली पुरालेखनको विकासक्रम अन्यत्रको भन्दा भिन्न देखिन्छ। भारतमा दशौं शताब्दीमा लेखनपरम्परा समृद्ध भएका ठाउँमा विकसित नागरीमा पारम्परिक लेखनका विशेषताहरूको बोलबाला रहेको पाइन्छ। पारम्परिक विशेषताहरू हबी रहेकै कारण भारतका बंगाल र गुजरात जस्ता कतिपय राज्यहरूमा स्थानीय स्वरूपका नागरीबाट बाह्रौं-तेह्रौं शताब्दीताका वर्तमान प्रादेशिक लिपिहरू विकसित भएका हुन्। तर नेपालमा नेवारी त्यसको एक शताब्दी पहिले एघारौं शताब्दीमै विकसित भएको थियो।

प्राचीन नेपाली समाजले एकपल्ट सांस्कृतिक विशेषताहरूलाई अपनाएपछि सधैं तिनलाई दीगो बनाउने प्रयास गरेको छ। नवौं शताब्दीसम्म नेपाली संस्कृतिको प्रकृति एक किसिमले अन्तर्मुखी रहेको देखिन्छ। नेपालमा लामो परम्परा रहेको लेखनको इतिहास यस कुराको अपवाद छैन। यसमा बाहिरबाट कसैको प्रभावशाली हस्तक्षेप भएको देखिँदैन। यतिखेर बाहिरबाट आएका पाण्डुलिपि ग्रन्थहरूको बारेमा जानिएको छैन। यति बेला दुवै देशका विद्यार्थी, शिक्षक, भिक्षु र धर्मप्रचारकहरूका गतिविधिको सम्बन्धमा पनि धेरै जानिएको छैन। यहाँको सबै लेखोट एउटै भाषा (संस्कृत) मा छ र तिनका लेखकहरूको भाषा, संस्कृति र जातीय विशेषता पनि समान रहेको हुनुपर्छ।

दशौं शताब्दीपछि नेपाली संस्कृतिमा ठुलो परिवर्तन आयो। नेपालीहरूको शिक्षाप्रतिको आकर्षण बढ्दैगयो र भारतका शिक्षाकेन्द्रहरूसँग सम्बन्ध बढ्दैगयो। पूर्वी भारतमा विकसित तन्त्रशास्त्र र वज्रयान र तद्विषयक ग्रन्थको नेपालमा प्रचारप्रसार बढ्यो। शिक्षार्थी, शिक्षक र भिक्षुहरूको आवागमन र शरणार्थीहरूको आगमनले दुई देशहरूका बीच सांस्कृतिक सम्बन्ध घनिष्ठ हुँदैगयो र अर्कोको सांस्कृतिक विशेषतालाई उदारताका साथ अपनाउने प्रवृत्तिको विकास भयो। यसले अन्य सांस्कृतिक पक्षमा झैं लेखनको विकासमा पनि प्रभाव पारेको

देखिन्छ। नेपालीहरू पारम्परिक संस्कृतिका विशेषताहरूलाई चटक्कै छोड्नपनि चाहँदैनथे र नयाँ विचारप्रति उदासीन रहन पनि सक्दैनथे। यस कुराको प्रतिबिम्ब नेवारीलिपिको विकासमा देख्नसकिन्छ। नेपालको परम्परामा भिन्नभिन्न समयमा विकसित लेखनशैलीहरूका पारम्परिक नाम छन्। लिच्छविकालपछिको लेखनको पारम्परिक नाम नेवारीलिपि हो। देवनागरीको प्रचलनको वास्तविक इतिहास कर्णाली अञ्चलमा चौधौं शताब्दीको पूर्वार्धमा[४] र काठमाण्डौं उपत्यकामा सत्रौं शताब्दीमा[५] सुरु हुन्छ। नेपालभरी देवनागरीको चलन अठारौं शताब्दीमा चलेको पाइन्छ।

नेपालमा यस चरणमा विकसित लेखनलाई अन्यत्रको समान प्राचीन देवनागरी भनिँदैन। यसका विभिन्न कारण छन्: एक, यहाँको परम्परामा त्यतिखेरको लेखनको भिन्नै नाम छ, दुई, अनेकौं पारम्परिक विशेषताहरूको कारण यहाँको लेखन अन्यत्र विकसित नागरी भन्दा नौला लाग्छन्। तीन, यहाँ यसै स्थितिमा लेखनको विकास टुंगिएको छैन। चार, यो पनि प्रयोगकै चरण देखिन्छ। यहाँ लेखनमा अनेकौं प्रयोग भएका छन्। एक शताब्दी पनि बित्दानबित्दै नेपालमा प्रयोग भइरहेका अनेक प्रकारका लेखनहरूमध्ये केही भिन्नै नाउँले लोकप्रियता पाउन सफल भएका छन्। पाँच, नेपालमा देवनागरीको प्रचलनको इतिहास भिन्न रहेको छ। नेपालको एघारौं शताब्दीसम्मको लेखनमा नागरीका कतिपय लक्षणहरू स्थानीय रूपमा विकसित विशेषताहरूको अगाडि चाँडैनै तिरोहित भएका देखिन्छन्। तथापि नेवारीलिपिको विकासमा नागरीको योगदान महत्त्वको रहेको छ। यस नयाँ लेखनमा पारम्परिक विशेषताहरूको अभाव छैन। तथापि त्यसमा कतिपय नौला विशेषताहरू थपिएका छन् जो लेखनको एक नयाँ नामको लागि पर्याप्त छन्।

नेवारीलिपिका खास लक्षणहरूको पहिचान नभएको कारण यसको नामकरण, परिभाषा, विशेषताहरूको साथसाथै यसको आरंभकालबारेको अनुमान पनि अस्पष्ट हुन गएको हो। सर्वप्रथम कुनै पनि लेखनको नामकरणका स्पष्ट आधार र खास लक्षणहरू खोजिनुपर्छ। भविष्यमा विकसित हुने कुनै भाषाको लागि कुनै लेखनको पहिले नै रचना गरियो भन्न सकिंदैन।[६] यस लिपिलाई अन्य कुनै लिपिसँग मिल्दोजुल्दो भनिदिनु[७] र कुनै लेखोटलाई विना कुनै आधार त्यसको पहिलो उदाहरण भनिदिनु तर्कसंगत हुँदैन।[८]

लिच्छविलिपिविकासको अन्तिम चरणमा चर्चिएका काठमाडौं उपत्यकाको लेखनमा देखिने दुई मुख्य प्रवृत्तिहरूको यहाँ संझना गर्नुपर्छ। ती प्रवृत्तिहरूले दुई मुख्य धाराको प्रतिनिधित्व गर्दछन्, जसले नेवारीलिपिका विभिन्न शैलीहरूको विकासलाई संभव बनाए। ती हुन् :

१. खास किसिमको कोणात्मक डीको भएका कारण ऊर्ध्वरेखाको माथिल्लो भाग बाँगो झैं देखिन वर्णहरू, जसबाट कालान्तरमा विभिन्न किसिमका डीकोको नामले परिचित शैलीहरू विकसित भए, र •

२.  सीधा तेर्सो र मोटो डीकोमा लेखिएका मोटा र चौडा वर्णहरू, जसले अनेकौं शैलीहरूलाई प्रभावित गरे ।

पारंपरिक नेपाली लेखनमा देखिने यी नयाँ प्रवृत्तिहरू अकस्मात् देखा परेका थिएनन्, बरु ती पारम्परिक लेखनलाई बढी गतिशील बनाउने लेखकहरूको लामो प्रयासका परिणाम थिए । यी नयाँ प्रवृत्तिहरूको प्रवेशको एक मुख्य कारण लेखनमाध्यममा फरक आएकाले प्रविधिमा फरक आउनु थियो । १००० ई.ताका इतिहासमा पहिलोपल्ट ठूलो मात्रामा ताडपत्रका पाण्डुलिपि ग्रन्थहरूको साथसाथ डायरी र तमसुक लेखिनथाले । घन र छेनुका ठाउँ अब मसी र कलमले लिए । यस नयाँ माध्यममा वर्णहरू लेख्दा तिनको स्वरूपमा बढी लचक हुनु स्वाभाविक थियो । लेखनका माध्यम, उपकरण र प्रविधिमा आएको अन्तरले लेखनमा लेखन्दासको व्यक्तिगत छाप पर्ने संभावना बढ्दैगयो । नरम र लचकदार माध्यममा लेखनको प्रवाह बढ्नु स्वाभाविक थियो । यसको साथसाथ परंपराप्रेमी नेपालीहरूले लेखनका कतिपय पारम्परिक विशेषताहरू त्याग्न संकोच गरे । प्रविधिमा फरक आउँदा पनि परंपराप्रतिको लेखकहरूको मोहले गर्दा काठमाडौं उपत्यकामा एघारौं शताब्दीमा यस्तो लेखनको विकास भयो जो नौलो र खास किसिमको थियो । यही लेखन प्रारम्भिक नेवारी थियो ।

**पहिलो प्रवृत्तिमा** वर्णहरूको माथिल्लो भाग ढल्काएर लेखिएका झैं प्रतीत हुन्छ । एउटै ऊर्ध्वरेखाबाट सुरू हुने **क च छ त द न ह** जस्ता वर्णहरूको ऊर्ध्वरेखाको माथिल्लो भाग बाँगिदै देब्रेतिर डीको भागमा पुग्छ र त्यहीं कोण बनाउँदै माथिबाट दायाँतिर सोझो तेर्सो रेखा तानिएको हुन्छ । डीको भागको यो कोण देब्रेतिर चुच्चिन्छ र यसको मुख दाहिनेतिर खुल्छ । यस प्रकारको कोणयुक्त डीको आरंभिक नेवारीको मुख्य लक्षण हो । यो वर्णको स्वरूपमा आएको परिवर्तन होइन : यसभन्दा तल बनाइएका वर्णहरूको स्वरूपमा फरक आएको देखिंदैन । यो ऊर्ध्वरेखाको बांगो जस्तो लाग्ने भाग डीकोसँग संबन्धित छ । यो भाग र यसमा जोडिएको तेर्सो रेखाले बनाएको पूरा कोण डीको प्रतीत हुन्छ । बेण्डाल र बूलरले नेपाली लेखनमा देखिने यस विशेषतालाई अन्यत्रको लेखनको प्रभाव मानेका छन् ।[१] वास्तवमा नेपालमा लामो कालदेखि चलेको त्रिकोण डीको नै यस किसिमको डीकोको विकासको कारण देखिन्छ । यस प्रसङ्गमा त्रिकोण डीको लामो समयसम्म नेपालमा लोकप्रिय रहेको तथ्यलाई बिर्सनुहुँदैन ।

यस प्रकारको कोणात्मक डीकोमा दाहिनेतिरको माथिल्लो टुप्पोबाट ऊर्ध्वरेखाको ढल्केको विन्दुमा मिल्ने गरी रेखा तानेमा शीर्षविन्दु तल पर्ने त्रिकोण बन्नपुग्छ । लेखनकार्य बढेपछि शीघ्र लेखिसक्नु पर्ने बाध्यताका कारण यस्तो रेखा तानेर त्रिकोण बनाउनु र त्यसभित्र मसी भरी ठोस त्रिकोण बनाउनु आवश्यक नमानिएको हुनसक्छ । यस कालमा लेखनको विस्तार भएको छ । त्यसका अनेक उद्देश्य र आयामहरू थपिएका छन् । पाण्डुलिपिग्रन्थको मांग बढेको छ र लेखनले पेशाको रूप लिएको छ । लेखन्दासको व्यावसायिक वर्गको विकास भएको र लेखनमा तीव्रता आउनुको साथसाथ स्वाभाविक रूपमा शीघ्रलेखनकार्यमा प्रतिस्पर्धिता बढेको देखिएको छ । तथापि लेखनलाई ब्रह्माको सृष्टि मानेर पवित्र

धर्मको अङ्ग ठान्ने नेपालीहरूमा कतिपय परम्परा त्याग्न संकोच स्वाभाविक हुन्छ। नेपालको लेखनमा त्रिकोण डीको निकै पुरानो परम्परा हो र यसलाई यथाशक्य बचाउँदै लेख्ने कोशिशमा त्रिकोणात्मक डीको यस रूपमा परिवर्तित भएको हुनुपर्छ। त्रिकोण डीकोकों परम्परा त्यागिएन। ठोस त्रिकोण डीकोको ठाउँमा एकै झट्कामा दाहिनेतिरबाट देब्रेतिर तेर्सो रेखा खिंची त्यसको टुप्पाबाट तल ढल्केको रेखा तानेर दाहिनेतिर मुख खुल्ने कोण बनाई त्यसैको तल्लो टुप्पाबाट वर्ण लेख्ने अभ्यास प्रचलित भयो। कोणको दाहिने माथिल्लो भुजाबाट ढल्केको रेखाको विन्दुमा मिलाउने गरी रेखा तानी त्यसलाई त्रिकोण रूप दिनु आवश्यक ठानिएन। यस किसिमको लेखन स्वाभाविक र बढी व्यावहारिक ठहरियो।

सुरुका उदाहरणहरूमा डीकोको कोणको माथिल्लो रेखा सीधा तेर्सो छ। तर पछि यसमा परिवर्तन आउँदैगयो र शीघ्रताले लेख्दा तीखो कोणले गोल वा अर्धवृत्त रूप लिंदैगयो। फलस्वरूप यसको बनावट माथि उठी दाहिने जाने अंकुश झैं बन्न गयो। धेरैसम्म प्रचलित यस्तो डीकोको लेखनले **भुजिंमो**ः भन्ने नाम पायो, जसको अर्थ झिंगाको (टाउको) जस्तो डीको भन्ने हुन्छ। सेसिल बेण्डाल र जर्ज बूलरले यस किसिमको लेखनलाई **नेपालको अङ्कुशे अक्षर** भनेका छन्।[१०] कोण मन पराउने लेखकले यसलाई तीखो कोणको रूप दिएर **कुँमो**ः अर्थात् कोणयुक्त डीकोको शैलीको विकास गरे। धस्काएर लेख्दा बन्नगएको अंकुशे डीकोको माथिल्लो रेखालाई बढी मोडेर अर्धवृत्त रूप दिने प्रवृत्तिले बढी गोल डीकोको **गोलमो**ः विकसित हुनगयो। यसप्रकार विकसित अनेक डीकोशैलीहरूका नाम नेवारी भाषामा प्रचलित छन्; जस्तैः **लितुमो**ः अर्थात् बढी वक्र रूपमा झुकेको डीको; **क्वेंमो**ः अर्थात् घुमाउरो गरी फर्काइएको डीको; **हींमो**ः अर्थात् बेरिएको डीको र **पाँचुमो**ः अर्थात् तेर्सो (सम्म) रेखाको डीको। हेमराज शाक्यले भजिँमोःलाई मक्षिमुण्ड कुँमोःलाई **कोणमुण्ड**, लितुमोःलाई **नतमुण्ड,** क्वेंमोःलाई परामुण्ड, हींमोःलाई **वेष्टितमुण्ड** र पाचुमोःलाई **सममुण्ड** भन्ने संस्कृत नाम दिएका छन्।[११]

शैलीका रूपमा धेरै प्रचलित डीकोशैली भुजिंमोः हो। भुजिंमोःका केही उदाहरणहरूमा समेत डीकोको अंकुश गोलो हुनगएको पाइन्छ, त्यस्तोलाई गोलमोः र सादा तेर्सो रेखाको डीकोको लेखनलाई पाचुमोः भन्नसकिन्छ। अन्य अधिकतर नाम डीकोका विशेषण मात्र लाग्दछन्। कोणात्मक डीकोमा टेढो ऊर्ध्वरेखा भएका झैं लाग्ने वर्णहरू लामो कालसम्म नेवारीलिपिका मुख्य विशेषता बनिरहे। विकासमा अरू कारणहरू पनि थिए, जसको चर्चा यथास्थान गरिने छ।

लेखनको **दोस्रो प्रवृत्तिमा** सीधा र मोटो डीकोमा मोटा र चोडा वर्णहरूको लेखन पर्दछ, जो आफ्नो आन्तरिक बनावटमा पहिलाभन्दा भिन्न छैनन्। तथापि यसमा नागरीको समान पुच्छरको विकास भएको छ र डीको सादा छ। यस प्रकारको लेखनको एउटा आरंभिक उदाहरण हाल बेलाइतको क्याम्ब्रिज विश्वविद्यालयको संग्रहमा रहेको ने.सं.१२८ (१००८ ई.) को बौद्धग्रन्थ

अष्टसाहस्रिकप्रज्ञापारमिताको पाण्डुलिपि हो।[१२] डीको र वर्णहरूको बनावटमा ध्यान दिंदा यो देवनागरीभन्दा धेरै फरक लाग्दैन। यो सम्मडीकोको पाचुमो: पनि भन्न सुहाउँछ। एघारौं शताब्दीका राजा भोजदेव र राजा रुद्रदेवको पालाको गचाननी पाटनको अभिलेख र बाह्रौं शताब्दीको देउपाटनको गौरीमूर्तिको पादपीठ अभिलेखका वर्णहरू यस्तै देखिन्छन्। क्याम्ब्रिज वि.वि.को उपर्युक्त पाण्डुलिपिको लेखनलाई सेसिल बेण्डालले प्राचीन देवनागरी भनेका छन्।[१३] डीकोको खास बनावट र कलात्मक लेखाईलाई छोडेर वर्णहरूको बनावटमा ध्यान दिने हो भने रञ्जनाको विकासमा समेत यसको संबन्ध देखिन्छ। त्रिकोण डीकोबाट विकसित मोटो कलात्मक डीकोमा खास पद्धतिमा लेखिएका मोटा र चौडा वर्णहरूलाई रञ्जना भनिन्छ। रञ्जनामा यसरी दुवै धाराका लक्षणहरू पाइन्छन्। रञ्जना र पहिलो धारामा विकसित भुजिमो: नेवारीलिपि अन्तर्गत सुलेखनका राम्रा उदाहरण मानिन्छन्। यी दुवै लेखनशैलीहरू बाह्रौं शताब्दीदेखि बढी लोकप्रिय रहे। बढी व्यवहार गरिने शीघ्रताले लेख्नपढ्न सकिने खालको प्रचलित नेवारी पुरानो देवनागरी वा नागरीभन्दा धेरै फरक छैन। त्यसै गरी सीधा डीकोको कारण पाचुँमो: (सममुण्ड) नाम रहेका शैली प्रचलित नेवारीभन्दा धेरै फरक छैन। **प्रचलितनेवारी** भन्ने नाम काल्पनिक हो पारम्परिक होइन। यसलाई सर्वसाधारणको लिपि वा जनलेखन भन्न सकिन्छ।

यसरी झण्डै एक शय वर्षसम्म नेपालको लेखनमा जारी रहेका उपर्युक्त नयाँ प्रवृत्तिहरूमा विविधता थियो। फलस्वरूप नेवारीलेखनको प्रवाह एउटै धारामा सीमित रहेन, कालान्तरमा विभिन्नता आउँदैगयो, अनेक शैलीहरू अस्तित्त्वमा आए। तीमध्ये केही लेखनशैली सरल किसिमका थिए, जो सामान्य व्यवहारमा लोकप्रिय भए। केही भने नेपालीहरूको कलात्मक रुचिअनुरूप विकसित गरिए। नेवारीलिपिका अनेक शैलीहरूमा कलात्मक डीकोको भूमिका महत्त्वको छ। यहाँका कतिपय लेखनशैलीको नामकरण डीकोको बनावटको आधारमा गरिएको छ। अपेक्षाकृत सानो क्षेत्रमा विकसित नेवारी लेखनमा जति डीकोका प्रयोग भए त्यस्तो अन्यत्र विरलै पाइन्छ। माथि बयान गरिएका आरंभिक नेवारीका लक्षणहरूबाट नेवारी लेखनको आरंभ एघारौं शताब्दीमा भएको भन्ने कुरा स्पष्ट भएको छ। नेपालको लेखनको लामो परंपरामा विकसित आरंभिक नेवारीका लक्षणहरूलाई मनमा राखेर मात्र यसमा वेलावेलामा आएको बाह्य प्रभावको प्रकृति र मात्रा बुझ्न सकिन्छ।

नेवारीलिपिको विकासमा पूर्वी भारत अर्थात् बंगाल र विहारमा विकसित लेखनको प्रभाव उल्लेखनीय छ। भारतका यी राज्यहरूसँग नेपालको सांस्कृतिक सम्पर्कको चर्चा माथि परेको छ।[१४] नेपालमा बौद्धधर्मको रहस्यमय तन्त्रप्रधान वज्रयानको र भक्तिप्रधान हिन्दुधर्मको विकासमा पनि बंगालको ठूलो भूमिका रहेको कुरा माथि परेको छ। बिहार र बंगालका धार्मिक र शैक्षिक केन्द्रहरूमा भएको आक्रमणको विनाशलीलाबाट बचेका केही बौद्धहरूको आगमनले यस कार्यमा योगदान दिएको विश्वास गरिन्छ।[१५] धर्म र विभिन्न शास्त्रसंबन्धी कैयौं दुर्लभ ग्रन्थहरू काठमाडौं उपत्यकामा भित्र्याइए, पुराना विहारहरू **संस्कार** गरिए

र नयाँ बनाइए,[१६] तिनमा पठनपाठन, प्रवचन र सर्वोपरि लेखनको परिपाटी दरो हुनगयो ।[१७] धर्मको नयाँ स्वरूपले मांग गरे बमोजिम कैयौं देवमूर्तिहरू बनाइए, जसमध्ये अनेक आज अन्यत्र दुर्लभ भइसकेका छन् ।[१८] कलासमीक्षकहरूले तत्कालीन नेपाली कलामा बंगालका पालवंशी राजाहरूको संरक्षणमा विकसित कलाशैलीको प्रभावको चर्चा गरेका छन् ।[१९] यस प्रकारको सांस्कृतिक संपर्कको पृष्ठभूमिमा मध्यकालीन नेपालको पारंपरिक लेखनमा पूर्वी भारतमा तत्कालीन लिपिको प्रभाव पर्नुमा आश्चर्य मान्नु हुँदैन । वर्णको आकारप्रकार र मात्राचिह्नमा परेको केही प्रभावको चर्चा माथि वर्णपरिचयको प्रसङ्गमा भएको छ ।

प्राचीन नागरी र आरंभिक नेवारी दुवैका विशेषता सम्पन्न मोटो कोणात्मक डीको भएको रञ्जनाको पूर्ण विकास बाह्रौं शताब्दीमा भयो । रञ्जनाको चलन सत्रौं शताब्दीसम्म कायम रह्यो । (फलक ३२) । बाह्रौं शताब्दीदेखि पन्ध्रौं शताब्दीसम्म अंकुशे डीकोको भुजिमो: अधिक प्रचलनमा रहेको देखिन्छ । (फलक २५) । सुरुमा नागरीसँग मिल्दोजुल्दो रहेको र चाँडैनै स्थानीय पारम्परिक विशेषताहरूको कारण भिन्न रूपमा विकसित भएको प्रचलित नेवारी वा पाचुँमो: साथसाथ प्रचलित रह्यो । (फलक २८) । केही लेखकहरूले यदाकदा अन्य डीकोका शैलीहरू अपनाएता पनि ती धेरै प्रचलित रहेनन् । तेह्रौं शताब्दी ई.मा उपर्युक्त शैलीहरूका साथसाथ भुजिमो: बढी प्रचलित रह्यो । यिनमा देवनागरीको **प** जस्तो देखिने पुरानै स्वरूपको **ध** पाइन्छ तर **भ** नयाँ र पुरानो दुवै पाइन्छन् । **इ ष य** र **ए**कारको मात्राचिह्नमा बाङ्गालापन स्पष्ट देखिन्छ । संख्यावाचक चिह्नहरूमा भने एकरूपता पाइँदैन । बाहिरबाट हेर्दा बेग्लाबेग्लै प्रतीत हुने नेवारीका सबै किसिमका शैलीहरूमा वर्णहरूको आन्तरिक बनावट, मात्राचिह्न र संयुक्ताक्षरमा खास अन्तर पाइँदैन । यी सबै देवनागरीभन्दा चाहीं पृथक् लाग्दछन् ।

चौधौं र पन्ध्रौं शताब्दी ई.मा पनि ताडपत्र पाण्डुलिपिहरूमा भुजिँमो:कै प्रधानता देखिन्छ । केही उदाहरणमा डीकोको बनावट भुजिमो:को समान पनि छैन र सबै वर्णहरूमा सोझो डीको पनि छैन; बराबर मिलेको (पंक्तिबद्धता) देखिँदैन । यसलाई प्रचलित नेवारी नै भन्नु पर्छ । डीकोको आधारमा रहेका यिनका पारंपरिक नाम जेजतिसुकै भएतापनि यिनको निरन्तरता र सार्वभौमिकता भने कहिल्यै देखिँदैन । चौधौं र पन्ध्रौं शताब्दीको कालमा पुरानो, नयाँ प्रकारका **भ** र कहिलेकाहीं पुरानो बनावटको **ध** पनि देखापर्छन् । यस कालका अधिकांश ताडपत्रपाण्डुलिपिहरू ज्यादै सफा र साना आकारका भुजिमो: वर्णको लेखनका कारण निकै आकर्षक देखिन्छन् । (फलक २६,२७) । चौधौं शताब्दीका भुजिमो:लेखनका कतिपय उदाहरणहरूमा **भ स ह र** जस्ता वर्णका ऊर्ध्वरेखाका पुछारमा दाहिनेतिर ढल्काएर मातलो रेखा खिंचिएको छ । यो विशेषता अझ पछिका लेखनमा बढी स्पष्ट देखिन्छ । यस कालका लिखित ग्रन्थ, ताडपत्रमा फुटकर टिपोट र डायरी शिलालेख र ताम्रपत्र संख्यामा धेरै छन् ।

सोह्रौं शताब्दीमा पाचुमो: (देवनागरी) जस्तो लेखन र रञ्जना निकै प्रचलित देखिन्छन् । केही वर्णहरूमा पुरानोपन कायम रहेको पाइन्छ । यस

शताब्दीदेखि ताडपत्रको साथसाथ निकै ठूलो संख्यामा पाको कागतमा पाण्डुलिपि पाइनथाल्छन् । यस बेलादेखि नीलपत्र भनिने नीलोकालो कागतमा सुन र चाँदीको मसीले लेख्ने चलन लोकप्रिय रहेको पाइन्छ । नीलपत्रमा रञ्जनाको लेखोट ज्यादै आकर्षक र मनोहर देखिन्छ ।

सत्रौं शताब्दीमा प्रतापमल्ल जस्ता राजाहरूको प्रोत्साहनले निकै पाण्डुलिपिहरू र अभिलेख लेखिए । यस कालमा पनि अलङ्कृत रञ्जनासहित पाचुमोः, प्रचलितनेवारी र भुजिंमोः जस्ता पारंपरिक शैली निकै प्रचलित रहे । अब ताडपत्रको स्थान पुरा रूपमा कागतले लियो ।

अठारौं शताब्दीको पूर्वार्धसम्म नेवारीलिपिको गरिमा कायम रहेको देखिन्छ । तर त्यसै शताब्दीको उत्तरार्धमा यसको व्यवहार पतनोन्मुख हुँदै गयो । यद्यपि एकीकरणपछि केही समयसम्म सीमित मात्रामा विशेषतः बौद्ध ग्रन्थहरू नेवारीमा लेखिए । कालो कागतका पाण्डुलिपिमा अलङ्कृत लेखनशैलीका तथा पहेंलो पाको कागतमा अन्य पारंपरिक लेखनशैलीहरूका केही उदाहरणहरू पाइन्छन् । वक्र र तरङ्गयुक्त रेखाको एकारको मात्राचिह्न नेवारीशैलीको विशिष्ट लक्षण हो । केही वर्णहरूको देब्रेतिर वक्ररेखाको एकारको चलन स्थिर भएको पाइन्छ । **ए ञ ण श**का स्वरूपमा बाङ्लापन र **इ ए ङ झ फ** मा नेपालीपन द्रष्टव्य छ ।

## टिप्पणी

१. जर्ज बूलर, **भारतीय पुरालिपिशास्त्र** (मंगलनाथ सिंह द्वारा हिन्दी अनुवाद) (मोतीलाल बनारसीदास, १९६६), पृष्ठ ९४ ।

२. Cecil Bendall, **Catalogue of the Buddhist Sanskrit Manuscripts in the University Library, Cambridge** (Cambridge: University Press, 1883) Add.836, Plate 1.3.

३. जर्ज बूलर, टिप्पणी १, पृष्ठ ९४ ।

४. Giuseppe Tucci, **Preliminary Report on Two Scientific Expeditions in Nepal** ( Roma: ISMEO, 1956). 46-50, योगी नरहरिनाथ, सम्पादित, **इतिहासप्रकाश**, भाग २.१ पृष्ठ ५८-५९ .यहाँको सबभन्दा पुरानो अभिलेख शकसंवत् १२६० को छ जो १३३८ ई. हुनआउँछ । यी अभिलेखहरूको उठानमा भने रञ्जना जस्तो लेखनमा **ॐ मणिपद्मे हुम्** लेखिएको छ । डी.आर.रेग्मीले सबै लेखनलाई रञ्जना भनिदिएका छन् । हेर्नुस् D.R. Regmi, **Medieval Nepal** Part I (Calcutta,1961). 721.

५. शङ्करमान राजवंशी, सम्पादित, **कान्तिपुर शिलालेखसूची** (काठमाडौं:राष्ट्रीय अभिलेखालय, २०२७) पृष्ठ ६४, ७७, ७८, ८०, ८५, १२२, जसमध्ये पहिलो अभिलेख संवत् ७५३ (१६३३ ई.) को छ । राजवंशीले संवत् ८३३ (१७१२ ई.) को देवनागरीमा नेपालीभाषा लेखिएको एक अभिलेखको विवरण दिएका छन्, हेर्नुस् शङ्करमान राजवंशी, सम्पादित, **भक्तपुर शिलालेखसूची** (काठमाडौं :राष्ट्रीय अभिलेखालय, २०२०) पृष्ठ ७३ ।

६. हेमराज शाक्य, **उही**, पृष्ठ ७, शङ्करमान राजवंशी, "नेपाली लिपिविकास" **कैलाश**, (वर्ष २, अङ्क १-२, १९७४) पृष्ठ २६ ।

७. शङ्करमान राजवंशी **उही** पृष्ठ २६ ।

८. हेमराज शाक्य, उही पृष्ठ ७, शङ्करमान राजवंशी उही पृष्ठ ४६, ७६ । दुवैको संस्कृतमा लेखिएको ९०८ ई.को **लङ्कावतार**को ग्रन्थलाई नेवारीको पहिलो उदाहरण मानेका छन् ।

९. Cecil Bendall, **Catalogue of the Buddhist Sanskrit Manuscripts in the University Library, Cambridge** (Cambridge: University Press, 1883); P. XXVI (Introduction); जर्ज बूलर **भारतीय पुरालिपिशास्त्र** (हिन्दीमा अनुदित) मोतीलाल बनारसीदास, १९६६) पृष्ठ १२०, १२२ ।

१०. Cecil Bendall, *ibid.* जर्ज बूलर, उही ।

११. हेमराज शाक्य, **नेपाल लिपिप्रकाश** (नेपाल राजकीय प्रज्ञाप्रतिष्ठान, २०३०) पृष्ठ ८ ।

१२. Cecil Bendall, *op.cit.* Add.866, Pl. 1.3, P.XXVI.

१३. Cecil Bendall. *ibid.*

१४. हेर्नुस् माथि अध्याय १६ ।

१५. B. Bhattacharyya, **The Indian Buddhist Iconography** (Calcutta: Firma K.L. Mukhopadhyay, 1968) 31-41.

१६. मध्यकालका अनेकौ विहारहरू निर्मित नभनी संस्कारित भनिएका छन् जसको अर्थ नयाँ आवश्यकतालाई पुरा गर्ने किसिमले परिवर्तन गरी जीर्णोद्धार गरिएको भन्ने हुनुपर्छ । बी.भट्टाचार्यको (उही पृष्ठ ४१) विचारमा काठमाडौं उपत्यकाका अधिकांश विहारहरू तेह्रौं शताब्दीका छन् जो पूर्वी भारतमा मुसलमानहरूको विजयको लगत्तै त्यहाँबाट आएका शरणार्थीहरूले बनाएका हुनसक्छन् ।

१७. अधिकांश पाण्डुलिपिग्रन्थहरूका पुष्पिकावाक्यबाट ती विहारमा लेखिन्थे भन्ने तथ्य थाहा हुन्छ । बौद्ध पण्डितहरूको आवागमन पठनपाठन, शास्त्रचर्चा, जस्ता गतिविधि विहारमै सम्पन्न हुन्थे भन्ने देखिन्छ ।

१८. B. Bhattacharyya, *op.cit.* 6. 384-85.

१९. D.R. Regmi, *op.cit.* note 24.616, 620.



# अध्याय उण्डाइस
# नेवारीका प्रमुख शैलीहरू

माथि भनिएझैं नेवारीको उत्पत्तिकालमा वर्णहरूमा पुच्छरको विकास, चौडाइको अनुपातमा बराबर गरिएको लम्बाइका वर्णहरू, माथिल्लो भागमा दुई भुजा हुने वर्णका दुवै भुजाहरूलाई मिलाउने गरी तानिएको पातलो तेर्सो डीको, र विकसित मात्रापद्धति जस्ता नागरीका विशेषताहरूको साथ पांरपारिक विशेषताहरूको कारण नेवारीलिपिको निकास भयो। यहाँको लेखनमा यहींको परम्पराको छाप स्पष्ट देखिन्छ। १००० ई.ताका विकसित लेखनका कोणात्मक डीको र मोटा र चौडा वर्णहरूका दुई प्रवृत्तिहरूबाट कसरी विभिन्न शैलीहरू विकसित भए भन्ने कुरा माथि परेको छ। ती दुई प्रवृत्तिहरूमध्ये कोणात्मक डीकोबाट अङ्कुशे डीकोको विकास भयो, जसलाई भुजिँमो: भनिन्छ। मोटा र चौडा वर्णको रञ्जना र सादा डीकोको प्रचलित नेवारी अर्को प्रवृत्तिको विकासको परिणाम थियो।

## १. **भुजिँमो :**

**भुजिँमो**: अङ्कुशे डीको भएको लेखनशैलीको नेवारी नाम हो, जसको अर्थ झिँगाको टाउको भन्ने हुन्छ। हेमराज शाक्यको अनुसार भुजिँमो: दुई नेवारी शब्द **भुजिं** वा **भोजिनी** (झिंगा) र **मो**: (शिर) मिलेर बनेको हो। उनले भुजिँमो:को लागि **मक्षिमुण्ड** अर्थात् झिंगाको टाउको भन्ने संस्कृतनामको सुझाव दिएका छन्।[1] (फलक २५)। यसबाट यो पारम्परिक नाम डीकोको बनावटको आधारमा रहनगएको भन्ने कुरा स्पष्ट हुन्छ। भुजिँमो:लाई सेसिल बेण्डाल र बूलरले 'नेपालको अङ्कुशे अक्षर' भन्ने सार्थक नाम दिएका छन्।[2] देब्रेतिर कोण बनाउँदै दायाँतिर सीधा जाने डीकोरेखा, जो पहिलो लेखनप्रवृत्तिअनुसार विकसित भयो, शीघ्रलेखनको अभ्यासको कारण कसरी गोल घुम्दै घोप्टे अङ्कुशको स्वरूपको बन्नपुग्यो, हामीलाई थाहा भइसकेको छ।

एउटै ऊर्ध्वरेखाको आधारमा बनेका **क च छ ज ट ठ ड ढ त द न फ ब भ र ल ह** जस्ता वर्णहरूको डीकोको बनावटबाटै भुजिँमो:ले आफ्नु नाम पाएको हुनुपर्छ। प्रारम्भिक नेवारीका उपर्युक्त वर्णहरूमा लाग्ने दाहिनेतिर मुख खुल्ने कोणात्मक डीको नै भुजिँमो:मा अङ्कुशे स्वरूपमा रूपान्तरित भएको हो। भुजिँमो:मा पनि ऊर्ध्वरेखाको माथिल्लो भागमै डीकोरेखा सुरु हुन्छ जो माथि उठ्दै देब्रेतिर जान्छ र मोड लिँदै माथिल्लो भागमा चुलिँदै दाहिनेतिर तल निराधार झुक्छ। मूलमा दुई भुजा हुने **अ ऋ ख ग घ झ प म य ष स** जस्ता वर्णहरूमा भने बेग्लै किसिमले डीको लाग्छ। यिनको देब्रे भुजाबाट केही माथि उठेको रेखा दाहिने भुजामा मिल्छ, जहाँ सानो चोसो माथि उठेको हुन्छ। नेवारीका अन्य शैलीहरूमा झैं भुजिँमो:मा पनि **ङ ञ ण थ ध श** जस्ता कतिपय

वर्णहरूमा डीको लाग्दैन। प्रायः **गमा** पनि डीको पाइँदैन। यसरी भुजिँमोको डीकोको बनावट वर्णहरूको स्वरूपमा निर्भर गर्छ।

माथिका केही कुरा संझदै यस्तो डीकोको उत्पत्तिको बारेमा प्रचलित धारणाबारे विचार गर्नु यहाँ जरूरी छ। सेसिल बेण्डालले 'बाह्रौं शताब्दीदेखिको नेपालको विशिष्ट अङ्कुशे अक्षर'को लेखाईमा बंगाली प्रभाव देखे।[३] जर्ज बूलरले भुजिँमोःको डीकोको तुलना ११२२ ई.को बंगाली अभिलेखको लेखोटसँग गरे।[४] उनको विचारमा बंगालमा प्रचलित त्रिकोण डीकोनै धस्काएर लेख्दा भुजिँमोःको डीको बनेको हो। उक्त बंगाली अभिलेखमा धेरैजसो खोक्रो त्रिकोण डीको छ र कहीं प्रारम्भिक नेवारीको समान कोणात्मक अङ्कुश पनि बनेको छ। जहाँसम्म त्रिकोण डीकोनै भुजिँमोःको उत्पत्तिको कारण हो भन्ने कुराको अनुमान छ, त्यो चित्तबुझ्दो देखिन्छ। तर जस्तो कि माथि लेखिएको छ, त्यसको पृष्ठभूमि खुद नेपालमा उपस्थित थियो।

लामो कालसम्म लिच्छविलिपिको विशेषता रहेको ठोस त्रिकोण डीको चाँडै लेख्ने प्रयासमा देब्रेतिर चोसो परेको कोणात्मक रूपमा परिवर्त्तित हुने प्रवृत्तिको सुरुवात लिच्छविलिपिविकासको अन्तिम चरणमा भएको हुनुपर्छ। यस किसिमको लेखनले एघारौं शताब्दी ई.को सुरुको दशकमै आफ्नु ठाउँ बनाइसकेको देखिन्छ। तौमढी टोल, भक्तपुरको निर्भयदेवको संवत् १२५ (१००५) को अभिलेखमा यस प्रवृत्तिको विकास देख्नसकिन्छ।[५] यसमा **क च ज त द न भ र ल व** जस्ता वर्णहरूको शीर्षभाग द्रष्टव्य छ। **ख**को स्वरूप नौलो छ। यस पछिका लेखनमा त यो प्रवृत्ति आम देखिन्छ। कोणात्मक डीको र टेढो ऊर्ध्वरेखाका वर्णहरूका केही सुन्दर उदाहरण ऐश्वर्यधर शर्माको संग्रहमा रहेका ताम्रपत्रहरूले प्रस्तुत गरेका छन्, जसलाई उनले र महेशराज पन्तले प्राचीनतम ताम्रपत्र मानेका छन्।[६] यिनमा क्रमशः संवत् २२१ (११०१ ई.) र संवत् २८२ (११६२ ई.) कुँदिएका छन्। हामीले यस प्रकारको लेखनलाई प्रारम्भिक नेवारी भनेका छौं र नेपालको लेखनलाई नयाँ गति दिने प्रारम्भिक नेवारीको यस प्रकारको धाराबाट भुजिँमोःको विकास भएको कुरा देखाएका छौं। यस अवस्थामा नेपालमा भुजिँमोःले आफ्नो विकासको निम्ति ११२२ को बंगाली लेखोटलाई पर्खनुपरेको देखिँदैन। अर्को कुरा, नेपालमा भुजिँमोःको चलन जुन मात्रामा र जुन क्रममा चलेको पाइन्छ त्यस्तो बंगालमा पाइदैन। नेपालमा भुजिँमोःको पाँचसय वर्षको इतिहास छ। जसआधारमा यसका अनेकौं पक्षहरूको अध्ययन गर्नसकिन्छ। मिल्दोजुल्दो बंगालीलेखनलाई के भनिन्थ्यो कसैलाई थाहा छैन।

संवत् १३२ को (१०१२ ई.को) १७२ (१०५२ ई.) मा सारिएको **ब्रह्मयामलतन्त्र** आरम्भिक भुजिँमोःको राम्रो नमुना हो।[७] (फलक ३२)। भुजिँमोः बाह्रौं शताब्दी ई.सम्म निश्चित स्वरूपमा विकसित भइसकेको थियो। संवत् ३०५ (११८५ ई.) को **बृहज्जातकटीका**को लेखोटबाट यस कुराको पुष्टि हुन्छ।[८] संवत् ३६७ (१२४७ ई.) को **पञ्चरक्षा**,[९] संवत् ३७ (१३१७ ई.) को टुटेधारा देउपाटनको अभिलेख,[१०] चौधौं शताब्दीको उत्तरार्धको **गोपालवंशावली**[११] (फलक २७) र संवत् ५२४ (१४०४ ई.) को सुनधारा पाटनको धर्ममल्लको पालाको

 ने१२८

अभिलेख[१२] भुजिँमोःका राम्रा उदाहरण हुन्। सोह्रौं शताब्दीसम्मका भुजिँमोःका ग्रन्थहरू पाइन्छन्।

सेसिल बेण्डाल र जर्ज बूलरले बाह्रौं शताब्दीभन्दा पहिलेका र पन्ध्रौं शताब्दीभन्दा पछिका भुजिँमोःका उदाहरण पाएका थिएनन्।[१३] सेसिल बेण्डालले पन्ध्रौं शताब्दीको अन्तमा भुजिँमोःको चलन बन्द भएको ठाने। बेण्डालको अनुसार वर्णहरूको बनावटमा मौलिक विकास आइसकेको नदेखिएकोले यस लेखनमा नेपालको विशेषता छैन। स्वयंले हेर्न पाएका लेखोटका आधारमा तिनले भुजिँमोःलाई 'निरन्तर सार्वभौम किसिमले प्रचलनमा नआएको' भन्ठाने।[१४] एघारौं शताब्दी र सोह्रौं शताब्दीका बीचमा लेखिएका भुजिँमोःका सयौं ग्रन्थहरूले तिनको अनुमानलाई खण्डित गरिदिएका छन्। यस अवधिमा भुजिँमोःको साथसाथ अरू शैलीहरू पनि प्रचलित थिए भन्ने कुरा बेग्लै हो। उनले कुन खास उदाहरणलाई ध्यानमा राखेर यसो भनेका हुन् उनै जानुन्। यदि उनको आशय वर्णहरूको बनावटमा बंगाली प्रभावसँग सम्बन्धित छ भने भिन्न कुरा हुन्छ। नेवारीलिपिका सबै शैलीहरूमा आदिबाङ्लाको केहीनकेही प्रभाव पाइनु तथ्य हो। तथापि कुनै पनि लेखनमा बाह्यप्रभावले भन्दा बढी भूमिका स्थानीय परम्पराले खेलेको हुन्छ। यहीनै नयाँ वा पुरानो लेखनशैलीको मूल स्रोत हुन्छ। नेपाली लेखनको मूल प्रवाहको चर्चा नत सेसिल बेण्डालले गरेका छन् न जर्ज बूलरले। उनीहरूले दिएका प्रायः उदाहरणहरू भारतकै छन्। तिनमा नेपालको पारम्परिक लेखनको कुनै उल्लेख पाइँदैन। फलस्वरूप नेपाली पुरालेखनको बारेमा तिनीहरूको टिप्पणी सतही हुनगएको छ। वास्तवमा नेवारीलिपिमा पारम्परिक छाप प्रबल छ र कुनै पनि शैलीमा कहिल्यै बाह्यप्रभाव हबी रहेको पाइँदैन।

नेवारीलिपिका अन्य शैलीहरूबाट फरक देखाउने भुजिँमोःको मूल लक्षण नै खास किसिमको डीको हो यसकारण यसमा वर्णहरूको बनावट, मात्रापद्धति र संयुक्ताक्षरको नियम नेवारीलिपिका अन्य शैलीहरूका समान छन्। भुजिँमोःका अधिकांश वर्णहरू पारम्परिक छन् र कतिपयमा अझै प्राचीनता स्पष्ट देखिन्छ। केही परिवर्तित स्वरूपका र केही आदिबाङ्ला स्वरूपका वर्णहरू निकै समयसम्म साथसाथ चलेका देखिन्छन्। **ए ओ ञ ड फ भ** तथा **श**का नयाँ स्वरूप पारम्परिकभन्दा भिन्न लाग्छन्। खास गरी पारम्परिक **ए ऐ ख** तथा **भ**ले आश्चर्यजनक रूपमा आदिबाङ्लाका समान वर्णहरूको साथ सहअस्तित्त्व कायम राखेका छन्। **ध** पुरानै कायम छ र कहींकहीं यसको स्वरूप देवनागरीको **प** झैं र **प** देवनागरीको **ध** झैं लेखिएको पाइन्छ। जर्ज बूलरले क्याम्ब्रिज वि.वि. र ब्रिटीश म्युजियममा रहेका कतिपय नेपाली ग्रन्थमा लेखिएबमोजिम **इ ई ए ऐ ण ध** र **श**मा आदिबाङ्ला विशेषता देखाएका छन्। उनले कहींकहीं पुरानो **इ**को चलन रहेको पनि देखाएका छन्।[१५] एको पारम्परिक मात्राचिह्नको साथसाथ व्यञ्जनको देब्रेतिर बनाइने कोष्ठकको पहिलो चिह्नको स्वरूपको बाङ्ला एकारको मात्राचिह्न पाइन्छ। कतिपय वर्णहरूमा लिच्छविलिपिविकासको चतुर्थ चरणको समान कोणात्मकता कायम रहेको देखिन्छ।

एघारौं शताब्दीमा अस्तित्त्वमा आएको भुजिँमो: बाह्रौं शताब्दीमा निकै प्रौढ भएको देखिन्छ। तेह्रौं र चौधौं शताब्दीमा खासगरी ग्रन्थलेखनमा यसको भूमिका अग्रणी रहेको छ। यो भुजिँमो:को चरम उत्कर्षकाल थियो। साना समानुपातिक वर्ण, सफा र छरितो लेखाईको साथसाथ अलङ्करणको प्रयोग यस कालको भुजिँमो:का विशेषता देखिन्छन्। तेह्रौं शताब्दीको लेखनमा कतिपय वर्णहरूमा मोटो र पातलो टाँकाको मनोरम सन्तुलन देखिन्छ। यति वेला भुजिँमो: व्यवहारोपयोगी हुनुको साथसाथ सुलेखनको समेत राम्रो नमुना भएको देखिन्छ। **भ स ह** जस्ता कतिपय वर्णहरूको तल्लो भागमा दायाँतिर ढल्केको पातलो अलङ्करणरेखा चौधौं शताब्दीसम्म कायम रहेको पाइन्छ। पध्रौं शताब्दीको भुजिँमो:को लेखनमा कुनै नौलोपन देखिँदैन। ग्रन्थलेखनमा यस लिपिको उपयोग सोह्रौं शताब्दीसम्म हुँदैथियो। यस कालको लेखनमा कुनै उल्लेखनीय विशेषता पाइँदैन, बस यन्त्रवत् नक्कल भइरहेको देखिन्छ। वास्तवमा अब भुजिँमो:ले क्रमश: लोकप्रिय भइरहेको व्यावहारिक लेखनको प्रचलित नेवारीसँग प्रतिस्पर्धा गर्नसकेन। यसको साथसाथै कलाप्रेमी पाठकहरूको मांग पुरा गर्ने अलङ्करणप्रधान रञ्जना प्रचलित थियो नै।

## २. रञ्जना

'रञ्जना' शब्द रंगनु वा आनन्द दिनु भन्ने अर्थमा प्रयोग हुने संस्कृतको 'रञ्ज' धातुबाट बनेको हो। ठोस, गोल त्रिकोणात्मक मोटो डीकोमा मोटा चौडा अक्षर र पातलो रेखाका संयुक्ताक्षर तथा मात्राचिह्नको लेखनशैलीलाई रञ्जना भनिएको हो। रञ्जनामा सेतो, पहेँलो, रातो र कालो जस्ता विभिन्न रंग (मसी) ले लेखिएको पाइन्छ र यसको मनोहर बनावटले प्रसन्नता दिन्छ। जनभाषामा 'रञ्ज' 'राञ्जा' वा 'लाञ्जा' भनिने यो लेखन बाह्रौं शताब्दीदेखि सत्रौं शताब्दीसम्म बढी प्रचलित देखिन्छ।[१६] (फलक ३२)

कोणात्मक मोटो डिको, चौडा अक्षर, मोटो टाँकाको लेखाइ, दाहिनेतिर ढल्केको पातलो रेखाले बनेका मात्राचिह्न हुनु रञ्जनाका मुख्य विशेषता हुन्। यस्ता मोटा र पातला रेखाहरूको संयोजन निकै आकर्षक हुन्छन्। रञ्जनाको डीको त्रिकोणात्मक नै हुन्छ तर यसको निर्माणमा खास पद्धति पाइन्छ। लिच्छविलेखनमा त्रिकोणको शीर्षविन्दु अक्षरको मूल रेखामा मिल्थ्यो, तर रञ्जनामा यस्तो त्रिकोण अक्षरको देब्रेतिरको अंगमै टुङ्गिन्छ र त्रिकोण डीकोको तल्लो भागमा किञ्चित् गोलोपन हुन्छ। चौडा र मोटो अक्षर लेख्ने चलन एक्कासी देखिएको विशेषता होइन। १०००तिर यहाँ लेखिएका प्राय: सोझो डीकोका मोटा अक्षरहरूका केही उदाहरणहरू पाइएका छन्। क्याम्ब्रिजविश्वविद्यालयको संग्रहमा रहेको अष्टसाहस्रिकाप्रज्ञापारमिता ग्रन्थमा **क द न म ब ह** जस्ता केही चौडा अक्षरहरूको डीकोमा त्रिकोणात्मक स्वरूप देख्न सकिन्छ।[१७]

रञ्जनाको नामकरणको अर्को कुनै कारण ज्ञात छैन। स्वयं रञ्जना भन्ने नाम धेरै पुरानो देखिँदैन। एक सय पचास वर्ष पहिलेका सेसिल बेण्डाल र जर्ज बूलरले यस नामको उपयोग गरेका छैनन्। यसको आरम्भ कसरी भयो वा

यसको उत्पत्तिको कारण के थियो यस बारेमा विशेषज्ञहरू मौन छन्। रञ्जनाका चौडा अक्षर, डिकोको विशिष्ट बनावट, पातलो रेखान्त र कतिपय नौला अक्षरहरूको आधारमा उपर्युक्त प्रश्नहरूको उत्तर खोज्ने प्रयत्न गर्नु उपयुक्त हुन्छ। रञ्जनाको लेखावटमा चौडा र मोटा अक्षरहरूको कारण एकातिर देवनागरीको आभास पाइन्छ भने अर्कोतिर तिनको लेखाईको खास पद्धति, कतिपय पारम्परिक वर्णहरूको उपस्थिति र डिकोको विशेष बनावटमा नेवारी लेखनको झझल्को पाइन्छ। आरम्भिक नेवारी (मुजिमो:) को शीर्षभाग सोझो भएको कोणात्मक डिकोमा मसी भरेमा रञ्जनाभन्दा धेरै भिन्न लाग्दैन। आफ्नो लामो विकासकालमा रञ्जनाले नेवारीलिपिका कतिपय विशेषताहरूलाई आत्मसात् गरेको छ। दसौं शताब्दीपछिदेखि नेपालमा कसरी बंगालविहारमा लेखिएका पाण्डुलिपिहरू पाइनथाल्छन् र यहाँको लेखनमा गतिशीलता पाइन्छ भन्ने कुराको चर्चा माथि भएको छ। नेपालमा रञ्जनाको नामले चिनिने लेखनको पूर्वरूप बंगालविहारमा एघारौं शताब्दीको पूर्वार्धसम्म प्रचलित रहेको पाइन्छ। नेपालमा लेख्ने अभ्यासको १०० वर्ष बित्दानबित्तै यस लेखनमा नेवारीलिपिका कतिपय विशेषताहरूको साथसाथै मोटोपातलो रेखाहरूमा अद्‌भुत समन्वय गर्ने पद्धति विकसित भयो। यसकारण आरम्भिक उदाहरणहरूमा विकसित रञ्जनामा सबै लक्षण पाइँदैनन्। बंगालमा त्यो नागरीको प्रकार थियो, त्यहाँ यसको खास नामबारे थाहा छैन। रञ्जना भन्ने नाम नेपालकै प्रतीत हुन्छ, जो यहाँको विशेष पद्धतिमा लेखिएको लेखोटलाई भनिएको हो।

सेसिल बेण्डालको साथसाथ हेमराज शाक्यले पनि बंगालमा लिखित पाण्डुलिपिलाई आरम्भिक रञ्जनाका उदाहरणका रूपमा प्रस्तुत गरेका छन्। बेण्डालले काठमाडौंबाट लगिएको क्याम्ब्रिज विश्वविद्यालयको अष्टसाहस्रिकाप्रज्ञापारमिता शीर्षकको ताडपत्रग्रन्थको एक पन्ना प्रकाशित गरेका छन्।[१८] त्यो बंगालमा राजा महीपालदेवको शासनकालमा १०२० ई. तिर लेखिएको थियो। हेमराज शाक्यले उल्लेख गरेका कारण्डव्यूह त्यसभन्दा पछिका राजा 'रामपालदेवको राज्यकालमा लेखिएको' भनिएको छ।[१९] यी दुवैमा रञ्जनाका आरम्भिक लक्षण पाइन्छन्। सेसिल बेण्डालले एक अर्को पाण्डुलिपिको पन्नाको फोटो छपाएका छन्। यो संवत् २८५ (११६५ ई.) मा राजा आनन्ददेवको राज्यकालमा धर्मचक्रमहाविहारमा बस्ने लेखकले लेखेका थिए।[२०] सेसिल बेण्डालले यसलाई 'रूपान्तरित कुटिला वा देवनागरी' भनेका छन्। लेख्ने पद्धति र डीकोको बनावटमा भने कलात्मकता र मौलिकता पाइन्छ। यसको र १०२० ई.को बंगालमा लिखित पाण्डुलिपिको लेखनलाई आपसमा तुलना गर्दा केही कुरामा समानता देखिन्छ।

स्वयं बंगालविहारमा सुरु भएतापनि त्यहाँ यस लेखनको विकास ज्ञात छैन। रञ्जना नेपालमै हुर्केको, बढेको र लामो कालसम्म प्रचलित रहेको देखिन्छ। यहाँ यो बाह्रौं शताब्दीदेखि सोह्रौं शताब्दीसम्म निकै प्रचलित रह्यो र यहींबाट यसले अन्य एशियाली देशहरूको यात्रा गर्‍यो। यस लेखनलाई विकसित गरी जारी राख्ने श्रेय महायानी बौद्धहरूलाई जान्छ। खास गरी प्रज्ञापारमिताका आरम्भिक प्रतिहरूका साथसाथ अन्य महायान बौद्ध ग्रन्थहरूको ठूलो संख्या यसै

शैलीमा लेखिएका पाइन्छन्। हालसम्म पनि काठमाडौं उपत्यकामा सुलेखनको प्रसंगमा यस लिपिको उपयोग गरिन्छ।

रञ्जनाको लेखावटमा चौडा र मोटा अक्षरहरूको कारण एकातिर नागरीको आभास हुन्छ भने अर्कोतिर डिकोको विशेष बनावटमा नेवारी लेखनको झझल्को पाइन्छ। डिकोमा ध्यान नदिने हो भने सेसिल बेण्डालले झैं जसले पनि यसलाई देवनागरी भन्ने छ। आरम्भिक नेवारी (भुजिंमो:) को शीर्षभाग सोझो भएको कोणात्मक डिकोमा मसी भरेमा रञ्जनाभन्दा धेरै भिन्न लाग्दैन। आरम्भका केही उदाहरणहरूमा वर्णहरूको तल्लो भागमा पातलो रेखा तानिएको पाइँदैन। उष्णीषविजयधारिणी (१११६ ई.), प्रज्ञापारमिता (११५२ ई.) र विजयकामदेवको इचङ्गुनारायण अभिलेख (१२०० ई.) आरम्भिक रञ्जनाका नमुना हुन्।[२१] यी सबै नेपालमै लेखिएका हुन्। यिनमा पनि कतिपय वर्णहरूमा नौलोपन पाइन्छ। उष्णीषविजयधारिणीमा **ओ औ ञ ड ध प फ ब**मा नौलोपन देखिन्छ। **ओ** देवनागरीको **डो** जस्तो छ, **ञ** देवनागरीको ७ अङ्कमा ३ जोडेको जस्तो छ, **ड त** जस्तो छ, **फ ह** जस्तो छ र **ब व** जस्तो छ। प्रज्ञापारमितामा **फ**मा पुरानोपन देखिन्छ र इचंगुअभिलेखमा **ण** र **ध** भिन्न किसिमका छन्।

रञ्जनामा अक्षरहरूका गोल र कोणात्मक रेखाहरूलाई स्पष्टता दिइएको छ। **ङ य र** जस्ता वर्णहरूको देब्रे भाग आरम्भदेखि नै बढी कोणात्मक पाइन्छ। **क छ ठ त प र व**मा गोलोपन पाइन्छ। मात्राचिह्नहरू प्राय: पातलो रेखाले बनाइएका छन्। नेवारीलिपिका अन्य शैलीहरूमा झैं दुई किसिमले रेफ बनाइएको छ, जस्तै : देवनागरीमा बनाइने रेफसँग मिल्दोजुल्दो चिह्न र व्यञ्जनको आरम्भमा तेर्सो रेखाको (च्यालको र् जस्तो) चिह्न। रञ्जनामा विसर्ग र स्वरवर्ण इका विन्दुहरूबाट तरङ्गयुक्त (पुच्छर झैं) पातलो रेखा तल दाहिनेतिर जाने गरी झारिएको हुन्छ। सुरुका उदाहरणहरूमा हलन्त (खुट्टो काटिएको) **म्** पाइन्छ, पछि विन्दु र त्यसको तल तर्कुल्लेको चिह्न ० प्रचलित भएको छ। जोडको व्यञ्जनलाई पातलो रूप दिनु र संयुक्ताक्षरलाई जटिल बनाउनु रञ्जनाको अर्को विशेषता हो। कतै पहिले उच्चारण हुने व्यञ्जनलाई बढी महत्त्व दिई ठुलो बनाइएको छ भने कतै निकै सानो बनाइएको छ। **त्व**मा **त** स्वाभाविक आकारको छ तर **व** भने ज्यादै सानो आकारमा लेखिएको छ। पहिले वा पछि उच्चारण हुने **र** भने सबै अवस्थामा साना आकारमा लेखिएको हुन्छ।

पछिल्लो कालको रञ्जनाका वर्णहरूमा मोटोपातलो रेखाहरूको संयोजन, विशेष कोणात्मकता र गोलोपनको विकास भएको पाइन्छ। यी विशेषताहरूको साथसाथ यसको खास मात्रापद्धतिका कारण रञ्जना नेवारीका अन्य शैलीहरूभन्दा भिन्न देखिन्छ। यसमा देवनागरीको **ड**को स्वरूपसँग मिल्दोजुल्दो **उ** तथा **डु** जस्तो **ऊ** पाइन्छन् र **ए** र **ऐ** का आकारप्रकार देवनागरीकै समान छन्। **आ** लेखेपछि डीकोको देब्रे भागबाट तल झर्ने छोटो कोणात्मक रेखा थपेर **ओ** बनाइएको हुन्छ। **क**को दाहिनेतिरको अङ्ग तथा **छ झ ञ ट ठ ढ ण थ फ भ श**का विशेष स्वरूप उल्लेखनीय छन्। **ङ**को दाहिने थोप्लाको ठाउँमा माथि ठाडो मोटो रेखा र दायाँतिर ढल्केको पातलो रेखा वा टिक बनाइएको छ। **का जा ठा** बनाउन दायाँतिर डीकोबाट केही तल मात्र ठाडो रेखा बनाइएको हुन्छ। **की जी ठी** पनि त्यसै गरी बनाइएको छ। ध व्यञ्जनमा डीको बनाइएको हुँदैन। **आ**कारको मात्राको ऊर्ध्वरेखा सामान्यतया डीकोमा जोडिएको हुन्छ। तर **ठा णा**

**था धा शा** बनाउँदा आकारको ठाडो रेखा डीकोमा जोडिएको हुँदैन बरु बीचको तेर्सो रेखाले जोडिएको हुन्छ। नेवारीका अन्य शैलीमा झैं कतिपय व्यञ्जहरूको (**ग ञ ठ ण थ ध श**को) देब्रेतिर कोष्ठकचिह्न जस्तो वक्ररेखाको एकारको मात्रा रञ्जनामा पाइन्छ, र डीकोको देब्रे भागबाट थोरै मात्रामा तल झर्ने पातलो वक्ररेखाको साथसाथ डीकोमाथि बनाइने तरङ्गयुक्त ठाडो रेखाको मात्राकोसमेत उपयोग गरिएको हुन्छ।[२२]

रञ्जना नेपाली सुलेखनको सुन्दरतम उदाहरण हो। खास गरी सुन र चाँदी जस्तो मूल्यवान् धातुका मसीले लेखिएको यस लिपिका नीलपत्र ग्रन्थ विश्वभरि प्रशंसाका विषय बनेका छन्। किताब तयार गर्न महँगो उपकरणको साथसाथ बढी समय दिनुपर्ने र बढी मिहेनत गर्नुपर्ने कारणले रञ्जना सर्वसाधारणको दैनिक व्यवहारमा लोकप्रिय हुनसकेन। रञ्जनाको प्रचारप्रसार र संरक्षण धनी वर्गका बौद्धहरूबाट भयो। यद्यपि यस लिपिमा कतिपय हिन्दु ग्रन्थहरू पनि लेखिएका छन्।[२३] (फलक ३३)। रञ्जनाका बौद्ध ग्रन्थहरू धेरैजसो विहारहरूमा दान दिइन्थे, जो दैनिक रूपमा पाठ गर्ने काममा विरलै आउँथे। विशेष पर्व वा अवसरमा मात्र यिनको सार्वजनिक प्रदर्शन हुन्थ्यो। यस लिपिको चलन यहाँ झण्डै छ सय वर्षसम्म चल्यो। यति हुँदाहुँदैपनि खासगरी तेह्रौं शताब्दीदेखि यता यस लिपिमा कुनै नौलो विशेषता थप भएको देखिँदैन। चार सय वर्षसम्म रञ्जना एकै किसिमले लेखियो। अर्को शब्दमा भन्ने हो भने रञ्जनामा यान्त्रिकता बढी पाइन्छ। काठमाडौं उपत्यका, हिमालयक्षेत्र र तिब्बतमा वज्रयानका मन्त्र झैं रञ्जनाको लेखोट पवित्र मानियो। लामावादी बौद्धहरूको प्रार्थनाचक्रमा र जुनसुकै लिपिको लेखोटको आरम्भमा लेखिने **ॐ मणिपद्मे हुम्** भन्ने मन्त्रमा रञ्जनाको प्रयोग गर्ने चलन लोकप्रिय भयो। नेपालको यस सुन्दर लिपिको प्रचार र संरक्षणको काममा कतिपय व्यक्ति र नेपाल लिपि गुथि जस्ता संस्था सक्रिय छन्। संयुक्त राष्ट्र संघमा नेपालको पुरानो लिपिको रूपमा रञ्जनाको परिचय गराइएको छ। कम्प्युटरको टाइप (फण्ट) मा रञ्जनाको प्रवेश गरिएको छ।

## ३. प्रचलित नेवारी

सादा डीकोमा पारम्परिक किसिमले लेखिएका विकसित वर्ण र मात्राचिह्नको सरल र व्यावहारिक लेखन प्रचलित नेवारी हो, जसमा नेवारीलिपिका प्रायःसबै विशेषताहरू हुन्छन्। लेखोटमा झल्कने स्थानीय विशेषताले गर्दा प्रचलित नेवारी भारतका कतिपय ठाउँमा विकसित नागरीभन्दा भिन्न स्वरूपको भएको छ। सेसिल बेण्डाल र जर्ज बूलरले कतिपय नेपाली ताडपत्रग्रन्थहरूको लेखनलाई नागरी भनेको कुरा माथिपरेको छ।[२४] सेसिल बेण्डालका उदाहरणहरूमध्ये केहीमा मोटो र सीधा डीकोमा मोटा र चौडा वर्ण लेखिएका छन् र केहीमा वर्णहरूको बनावट त समान छ तर डीको भने खास किसिमको त्रिकोणात्मक छ। पहिलो प्रकारको लेखनको विकासलाई नेपालको परम्परामा प्रचलित नेवारी र अर्कोलाई रञ्जना भनिन्छ। विशिष्ट बनावटको डीको र समृद्ध अलङ्करणको कारण दोस्रो किसिमको लेखनले भिन्न पारम्परिक नाम पाएको हो।

सम्म परेको वा सोझो डीकोको लेखनको लागि नेवारी भाषामा पाचुँमो: शब्दको व्यवहार हुन्छ। हेमराज शाक्यले पाचुँमो:लाई सममुण्ड भन्ने संस्कृत नाम दिँदै "यसको शीर्षभाग सोझो र लिपिको आकारप्रकार पनि सकभर सोझै गरी लेखिएको हुन्छ" भनेका छन्। उनले यसको छुट्टै वर्णमाला दिएका छन् जसमा भने वर्णको बनावट र डीको दुवै कोणात्मक बनाइएका छन्।[२५] तथापि उनले पाचुँमो:लाई भिन्न शैली मान्ने कुनै आधार र आफूले दिएको वर्णमालाको स्रोत देखाएका छैनन्। पाचुँमो: सम्मडीकोको लेखनशैलीको विशेषण प्रतीत हुन्छ। यदि यस्तो हो भने पाचुँमो: प्रचलित नेवारीभन्दा धेरै भिन्न हुनुहुँदैन।

सामान्य व्यवहारमा आउने अर्थमा यसलाई प्रचलित भनिएको हो। यो पारंपरिक नाम होइन। शीघ्रताले सादा डीकोमा प्रायः एकै झट्कामा वर्ण र अक्षर लेख्नसकिने गुणको कारण प्रचलित नेवारी सुरुदेखिनै लोकप्रिय रह्यो। नेवारीलिपिको उत्पत्तिको प्रसङ्गमा माथि चर्चा गरिएका दुई आधारभूत प्रवृत्तिहरूमध्ये एउटाको प्रत्यक्ष सम्बन्ध प्रचलित नेवारीसँग देखिन्छ। माथि उल्लेख गरिएको बेण्डालले देखाएको पहिलो किसिमको लेखन यस कुराको आधार बनेको छ। डीकोको बनावट र मसिना वर्णहरूमा ध्यान नदिने हो भने प्रचलित नेवारीको सम्बन्ध अर्को प्रवृत्तिसँग पनि रहेको देखिन्छ। किनभने नेवारीलिपिका सबै शैलीहरूमा वर्णहरूको बनावटमा समानता छ।

डीकोमा ध्यान नदिई सरल ढंगले लेख्ने सहज प्रवृत्तिका उदाहरण लिच्छविलिपिविकासको अन्तिम चरणदेखिनै पाइनथाल्छन्। ग्रन्थलेखनमा यसको राम्रो उदाहरण ९०८ ई.को लङ्कावतार हो। (फलक २१)। दशौं शताब्दीका केही अभिलेखहरूमा पनि चौडा वर्णहरूको लेखाई पाइन्छ। कतैकतै चौडा वर्णहरूमा कोणात्मक र कहीं त्रिकोणात्मक डीको लागेको देखिन्छ। यस्तो लेखोटका नमुनामा संवत् ९८७ को धायँबु कुम्भेश्वरको अभिलेख र १००५ को तौमढीटोलको अभिलेखलाई लिनसकिन्छ।[२६] पहिलो उदाहरणमा **न ल त व भ** जस्ता व्यञ्जनहरूमा लिच्छविको त्रिकोण डीको छ भने अर्कोमा **क ज त द न ल** जस्ता वर्णहरूमा कोणात्मक डीको छ जसलाई हामीले प्रारम्भिक नेवारीको अन्यतम लक्षण मानेका छौं। यी दुवै नमुनामा वर्णहरू चौडा छन्।

चौडा वर्ण र सोझो तेर्सो रेखाको डीकोको लेखोटको राम्रो उदाहरण संवत् १३२ (१०१२ ई.) को त्यागल गचाननी पाटनको अभिलेखमा पाइन्छ।[२७] (फलक २३ ख)। यसका केही विशेषताहरू टिप्नलायक छन्। यसमा एकातिर उकारको मात्राचिह्न पारम्परिक किसिमको छ भने **ग थ न श**मा एकारको वक्राकार मात्राचिह्न बनेको छ। यहाँ **कुमुद** लेख्दा लिच्छविलिपिको समान **क**मा तर्कुल्ले लगाइएको छ र **म**को तल्लो टुप्पोमा देब्रेतिर फर्केको ठोस त्रिकोण बनाइएको छ। त्यसै गरी **ख**को स्वरूप थैनाटोलको तलको लेखोटको जस्तो छ। १०६५ को थैनाटोल पाटनको अभिलेख र १०८३ को सुनधारा पाटनको अभिलेखमा एकातिर चौडा वर्णहरू छन् भने अर्कोतिर कोणात्मक डीको छ।[२८] पहिलोमा **क ज त द** जस्ता वर्णहरूको डीकोमा कोणात्मकता बढी स्पष्ट छ र **ख** नौलो छ जो देवनागरीको सँगैलेखिएको डीकोरहित **रव**स्वरूपको छ। अन्तिम उदाहरणमा डीकोमा कोणात्मकता ज्यादै न्यून छ। यस प्रकारको मिश्रित विशेषता नेवारीलिपिको आरम्भिक कालमा केही समयसम्म कायम रहेको देखिन्छ। तथापि यस किसिमको लेखाईले एघारौं शताब्दीको उत्तरार्धसम्म पृथक्

शैलीको नामले चिन्नसकिने गरी आफ्नो विकास गऱ्यो। कुनै लेखकले प्रचलित नेवारीलिपिलाई प्राचीन, मध्यकालीन र परवर्ती गरी तीन भागमा विभाजित गरेका छन्। विकास चरण बारेको यो विचार धेरै राम्रो हो। तर तिनले विभाजनको आधार स्पष्ट गरेका छैनन्।[२९]

बाह्रौं शताब्दीका उदाहरणहरूमा ११३३ ई.को ताडपत्रको पञ्चरक्षा ग्रन्थ, वलटोल पाटनको ११७२ ई.को अभिलेख र चांगुनारायणको अमृतदेवको पालाको ११७६ को अभिलेख महत्त्वका छन्।[३०] (फलक २४)। बाह्रौं शताब्दीदेखि पन्ध्रौं शताब्दीसम्म खास गरी ग्रन्थलेखनमा प्रचलित नेवारीको ठाउँ भुजिँमो:ले लिएपनि व्यवहारमा यो जारीनै रह्यो। इटुम्बहाल काठमाडौं, को संवत् ५०२ को (१३८२ को) जयसिंहरामवर्द्धनको शिलालेख लेखनको प्रवाहको हिसाबले प्रचलित नेवारीको राम्रो उदाहरण हो।[३१] वर्णहरू ठुला छन् र केही भद्दा देखिन्छन्। खासीटोल फर्पिङको संवत् ५२७को (१४०७ ई.को) अभिलेखको लेखन पन्ध्रौं शताब्दीको राम्रो उदाहरण हो।[३२] यसमा नयाँ किसिमका **ए ख ग र** एकारको मात्राको उपयोगमा कृत्रिमता देखिँदैन र लेखनमा प्रवाह छ। राजा यक्षमल्लको यसै शताब्दीको उत्तरार्धको पशुपति अभिलेखको लेखाईमा सफाईको साथसाथै प्रवाह पनि छ।[३३] सत्रौं शताब्दीको पूर्वार्धको नागरसर्वस्व नामक ताडपत्रग्रन्थको लेखन महत्त्वको छ।[३४] मोटो टाँका, चौडा वर्ण, रञ्जनाका झैं देखिने मोटो डीको र सफा लेखाई यसका विशेषता हुन्। तथापि यसको डीकोलाई मिहेनतपूर्वक मोटा बनाइएको कारण नागरसर्वस्वको लेखनमा प्रवाह पाइँदैन। संवत् ७७४ को (१६५४ ई.को) हनुमान्ढोका काठमाडौंको राजा प्रतापमल्लको धाराको अभिलेख[३५], संवत् ७८८ को बाहीगाउँ कीर्तिपुरको अभिलेख (फलक ३१), संवत् ८७० को (१७५० ई.को) कमलाछी काठमाडौंको राजा ज्योतिप्रकाशको अभिलेख[३६] र भक्तपुरदरबाट सुन ढोकाको दायाँ बायाँ तिरको रणजित्मल्लको जोडा अभिलेख (फलक २९,३०) छरितो र प्रवाहमय लेखाई प्रस्तुत गर्छन्। सोह्रौं शताब्दीदेखि अठाह्रौं शताब्दीको काल लोकप्रियताको दृष्टिले प्रचलित नेवारीकै थियो। यस कालमा यस शैलीको उपयोग अभिलेखहरूका साथसाथ पाको कागतको ग्रन्थलेखनमा पनि पर्याप्त भयो। अब रञ्जनाको चलन धेरै रहेन।

सादा डीकोबाहेक प्रचलित नेवारीका प्राय: सबै विशेषताहरू नेवारीका अन्य शैलीहरूका समान छन्। तीमध्ये केही यस प्रकार छन् :

क. **इ उ ऋ लृ ए ङ छ ञ ठ ण ध फ र श** का नयाँ स्वरूप पाइन्छन्। लामो कालसम्म नेवारीमा **ब** र **व**का निम्ति एउटै वर्णको उपयोग भयो। पछि वृत्तको तल्लो भागलाई खुँडे बनाएर **व** पढ्नथालियो। स्वतन्त्र **छ**को ठाउँमा **च** जोडिएको **छ**को उपयोग भयो।

ख. **इ लृ ए ऐ ञ ठ ण थ ध श** जस्ता कतिपय वर्णहरूमा र कहिलेकाहीं **ग**मा डीको पाइँदैन।

ग. प्राय: पारम्परिक पद्धतिको अनुसरण गरिएको भएता पनि केही लेखोटमा संयुक्ताक्षर निकै जटिल छन्। कतै व्यञ्जनहरू परस्पर खप्टिएका कारणले कूटाक्षर वा मोनोग्रामको शैली अपनाइएको देखिन्छ। पहिले बोलिने **क**को प्राय: वृत्त वा गाँठो हुँदैन। पछि उच्चारण हुने **त** पुरानै प्रकारको हुन्छ र दाहिनेतिर जोडिएको हुन्छ।

घ. (१) प्राय: डीको नलाग्ने व्यञ्जनमा आकारको ठाडो रेखा ढल्केको तेर्सो रेखा वा हाइफेनले जोडिएको हुन्छ। (२) डीको नहुने व्यञ्जनको दाहिनेतिर स्वतन्त्र बक्ररेखाको एकारको मात्राचिह्नको उपयोग हुन्छ। डीको भएको वा नभएको गमा पनि यही चिह्न पाइन्छ। **ऐ ओ** र **औमा** यसको साथसाथ पारम्परिक ठाडो तरङ्गयुक्त रेखाको एकारको मात्राचिह्न समेतको व्यवहार हुन्छ। (३) अन्य व्यञ्जनहरूमा आवश्यकता अनुसार ठाडो तरङ्गयुक्त रेखा र डीकोरेखाबाट दुवैतिर उठ्ने रेखाका पारम्परिक एकारका मात्राचिह्न बनाइन्छन्।

## टिप्पणी

१. हेमराज शाक्य, **नेपाल लिपिप्रकाश** (काठमाडौं : ने.रा.प्रज्ञा प्रतिष्ठान, २०३०) ७।

२. Cecil Bendall, **Catalogue of the Buddhist Sanskrit Manuscripts in the University Library, Cambridge** (Cambridge: University Press, 1883 ) XXVI (Introdution); George Buhler, **Indian Palaeeography** ( reprint. Calcutta, 1962. 93.

३. Cecil Bendall, *ibid.*and P.XXII. बेण्डालले भने झैं यसको तुलना बंगाली लेखनसँग गर्न सकिन्छ। वास्तवमा नेपाली र बंगाली दुवै लेखनको मूल स्वरूप एउटै हो। तर नेपाली नागरीको कुरा गर्दा सेसिल बेण्डाल "दोहोरो स्थानीय उत्पत्तिको" कुरा गर्छन्।

४. George Buhler, *ibid.* 93-95.

५. यस अभिलेखका केही पंक्तिहरू शङ्करमान राजवंशीले सावधानीका साथ हातले सारेका छन्। हेर्नुस् : "नेपाली लिपिविकास" **कैलाश** २.१-२ (१९७४) लिपिचित्र २१।

६. Mahesh Raj Pant, Aishwaryadhar Sharma, "The Two Earliest Copper plate Inscriptions from Nepal", **Nepal Research Centre, Miscellaneous Paper**, No. 12 (July 1977), pp. 7 and 28 (texts), 6 and 26 (plates).

७. शङ्करमान राजवंशी **उही** लिपिचित्र २३। यसमा प्रारम्भिक नेवारीको कोणात्मक डीकोको ठाउँ अङ्कुशले लिइसकेको छ। यसको १३ वर्षपछिको प्रद्युम्नकामदेवको पालाको थैनाटोल पाटनको अभिलेखका **क त द न र व** जस्ता वर्णहरूमा कोणात्मक डीको लागेको छ। (हेर्नुस् उही लिपिचित्र २४)। अभिलेखमा निकै पछिसम्म कोणात्मक डीको पाइन्छ। (हेर्नुस् उही लिपिचित्र) यस कारण यस तथ्यको प्रबल कारण लेखनका माध्यम, उपकरण र प्रविधिमा अन्तर आउनुनै देखापर्छ। ताडपत्र जस्तो लचकदार माध्यममा नयाँ प्रयोग जति संभव छ त्यति अभिलेखमा हुँदैन।

८. **उही** लिपिचित्र २८।

९. **उही** लिपिचित्र ३०।

१०. **उही** लिपिचित्र ३१।

११. Dhanavajra Vajracharya, Kamal P.Malla, ed. **The Gopalarajavamsavali** (Kathmandu: Nepal Research Centre Publication No 9) Facsimile Plates 1-24.

१२. शङ्करमान राजवंशी **उही** लिपिचित्र ३२ ।
१३. Cecil Bendall, *op.cit*. XXII; George Buhler, *op.cit*.
१४. *ibid*. XXXVI.
१५ George Buhler *op. cit.* note 2, 95.
१६. हेमराज शाक्य (टिप्पणी १ पृष्ठ ५) लेख्छन् : रञ्जना 'चीन, जापान र तिब्बत आदि महायान बौद्ध देशपर्यन्त पनि प्रचलित र प्रसिद्ध भएको सुन्दर लिपि हो ।'
१७. Cecil Bendall, note 2, Plate I.3. Add. 866. यस अनुसार यो ग्रन्थ निर्भयदेव र रुद्रदेवको पालामा ने.संवत् १२८ (१००८ ई.) मा लेखिएको थियो ।
१८. *ibid.* Plate II.1, Add. 1464, P. XXV.
१९. हेमराज शाक्य, **पूर्वोक्त** पृष्ठ ६ ।
२०. Bendall, *op.cit.* Plate II. 2. pp. XXII ff. XXXVI.
२१. शङ्करमान राजवंशी **पूर्वोक्त** टिप्पणी ५, लिपिचित्र ४१,४२, र ४३ ।
२२. शङ्करमान राजवंशी, **प्राचीनलिपि वर्णमाला** (काठमाडौं : श्री ५ को सरकार, पुरातत्त्व र संस्कृतिविभाग,२०१७) पृष्ठ ८-१४ (वर्णमाला र बारखरी) ।
२३. राष्ट्रीय अभिलेखालयमा श्रीमद्भागवत, शिवधर्मसङ्ग्रह, विष्णुधर्म, विष्णुधर्मोत्तर र मार्कण्डेय पुराणको दुर्गासप्तशती जस्ता हिन्दु ग्रन्थहरू रञ्जनाका सुवर्णअक्षरमा लेखिएका छन् । हेर्नुस् श्री ५ को सरकार, **बृहत्सूचीपत्रम्,** भाग ८ (काठमाडौं : राष्ट्रीय अभिलेखालय, २०२५) ।
२४. हेर्नुस् माथि **टिप्पणी** २० ।
२५. हेर्नुस् माथि **टिप्पणी** १ पृष्ठ ८, ५२ ।
२६. शङ्करमान राजवंशी, पूर्वोक्त टिप्पणी ५ ।
२७. उही लिपिचित्र २२ ।
२८. उही लिपिचित्र २४ ।
२९. उही विभिन्न लिपिचित्रहरूका (१८ देखि ३९) शीर्षकमा उनले ९०८ ई.देखि १३१७ ई.सम्मका लेखोटलाई प्राचीननेवारी, १४०४ ई.देखिका लेखोटलाई मध्यकालीन नेवारी र १६३० ई.देखिका लेखोटलाई नेवारीलिपि भनेका छन् ।
३०. **उही,** लिपिचित्र २५, २६, २७ । अन्तिम अभिलेखको नक्कल गर्दा **भ्ग्रमृत**को ठाउँमा **श्रीमृत** हुन गएको छ ।
३१. शङ्करमान राजवंश सम्पादित, **कान्तिपुरशिलालेखसूची** (काठमाडौं : राष्ट्रिय अभिलेखालय,२०२७) पृष्ठ ३८ र ३९ को बीचको फलक ।
३२. शङ्करमान राजवंशी **पूर्वोक्त** टिप्पणी ५, लिपिचित्र ३३ ।
३३. शङ्करमान राजवंश **पूर्वोक्त** टिप्पणी ३१, पृष्ठ ४६ र ४७ को बीचको फलक ।
३४. शङ्करमान राजवंशी **पूर्वोक्त** टिप्पणी ५, लिपिचित्र ३५ ।
३५. **उही,** लिपिचित्र ३७ ।
३६. **उही,** लिपिचित्र ३८ ।



# अध्याय बीस

# नेवारीलिपिका विशेषताहरू

एघारौं शताब्दीदेखि अठारौं शताब्दी ई.सम्म अनेकौं शैलीमा विकसित नेवारीलिपिका कतिपय विशेषताहरूबारे हामीलाई जानकारी भइसकेको छ। नेपालको लेखनका पारम्परिक विशेषताहरूको साथ नागरीका कतिपय लक्षणहरूलाई आत्मसात् गर्दै हुर्केको नेवारीलिपिमा स्वभावतः ब्राह्मीलेखनपद्धतिका प्रायः सबै विशेषताहरू मौजूद छन्। विशाल संस्कृतवाङ्मयको साथसाथ नेपालको प्राचीनतम भाषा नेवारीको साहित्य लेखिएको यस लिपिमा ब्राह्मीपद्धतिका स्वर, व्यञ्जन, मात्रा र संयुक्ताक्षरपद्धतिसहित संस्कृत व्याकरणले निर्देशन गरेका सबै व्यवस्था उपस्थित छन्। संस्कृत र अपभ्रंश भाषाका साथसाथ चीनी-तिब्बती-बर्मेली परिवारसहित नेपालका सबै भाषा लेख्न आवश्यक प्रायः सबै चिह्न नेवारीलिपिमा पाइन्छन्।[१] वर्णहरूका अकारप्रकार, डीको र मात्राको बनावट र लेख्ने पद्धतिमा विविधता पाइएता पनि सबै शैलीका वर्णहरूको आन्तरिक बनावटमा अन्तर नहुनु नेवारीलिपिको मुख्य विशेषता रहेको छ।[२] नेवारीलिपिका आरम्भिक विशेषताहरूको छानबिन यहींको पारम्परिक लेखन अर्थात् परवर्ती लिच्छविलेखनको पृष्ठभूमिमा गर्नुपर्छ। त्यसैगरी छिमेकी मुलुकमा विकसित लेखनका प्रवृत्तिहरूतिर पनि आँखा दौडाउनु आवश्यक हुन्छ।[३] यहाँ नेवारीलिपिका ती विशेषताहरूलाई रेखाङ्कित गर्ने प्रयास गरिएको छ जो अन्यत्र विरलै देखिन्छन्। डीकोका विभिन्न किसिम र मोटा वर्णहरूको लेखावट गरी दुई मुख्य लक्षणहरूको साथसाथ नेवारीलिपिका अनेकौं विशेषताहरू छन् जसमध्ये केहीलाई यसरी रेखाङ्कित गर्नसकिन्छ :

## १. वर्णहरूका स्वरूपमा विविधता

लिच्छविलिपिविकासको आखिरी चरणमा अर्थात् नेवारीलिपिको आरम्भकालमै वर्णहरूमा पुच्छरको विकास भइसकेको थियो र मात्राचिह्नमा प्रायः एकरूपता आइसकेको थियो। अन्य शब्दमा भन्ने हो भने तत्कालीन लेखनमा नागरीका अनेक लक्षण विकसित भइसकेका थिए। तिनको आकारप्रकारमा पारम्परिक लिच्छविलिपिबाट अन्तर आइरहेको थियो।[४] एघारौं शताब्दीसम्म लेखनको अभ्यासको क्रममा नेवारीलिपिको आफ्नु छुट्टै पहिचान बनिसकेको थियो। यस वर्णमालामा **अ उ ए ओ औ ख ग घ ङ ज ञ ड ण थ ध न फ ब भ र ल श ह** खास किसिमका बनेका छन् र तीमध्ये कतिपय वर्णहरूका अनेक प्रकार विकसित भएका छन्। तीमध्ये केही प्रकार पूर्वी भारतमा पनि देखापर्छन्। नेवारीलिपिले कतिपय वर्णको बनोटमा बंगालविहारमा विकसित विशेषतालाई

उदारताको साथ स्वीकारेको छ भन्ने कुरा माथि गरिएको छ।[५] पारम्परिक वर्णहरू र नौला स्वरूपका वर्णहरू वैकल्पिक रूपमा एकसाथ प्रचलित हुनुमा नेवारीलिपिको विशेषता रहेको छ। **अ ए ख ग ज र श** जस्ता वर्णहरूमा यो विशेषता स्पष्ट छ। धेरैजसो अवस्थामा वर्णहरूको आकारप्रकार शैलीपिच्छे फरक हुँदैन। तथापि यस्ता केही अपवाद पाइन्छन्। रञ्जनाका **ए ख ग ण श** जस्ता वर्णहरू प्रायः पारम्परिक छन्। नेवारी वर्णमालाका कतिपय वर्णहरूमा नौलो प्रयोग पनि भएको छ। स्वतन्त्र व्यञ्जन **छ**को लागि **च** जोडिएको **छ**को उपयोग हुनु र पहिले **ब र व** एकै किसिमले लेखिनु र पछि तिनको फरक बुझाउन एउटालाई खुँडे बनाउनु यस कुराका उदाहरण हुन्।[६]

## २. मात्राचिह्नमा विविधता

व्यञ्जनमा स्वर लगाउने ब्राह्मीलिपिको मात्रापद्धतिको अनुसरण गर्दै नेवारीलिपिले कालान्तरमा लिच्छविलिपिमा विकसित विभिन्न किसिमका धर्सा वा अङ्कुश जस्ता थप चिह्नहरूलाई समेत अपनाएर आफ्नुलागि विशिष्ट मात्राचिह्नहरूको विकास गरेको छ। व्यञ्जनको दायाँ लाग्ने ऊर्ध्वरेखाको आकारको मात्रा, व्यञ्जनको क्रमशः बायाँ र दायाँ ऊर्ध्वरेखा र डीकोरेखाबाट क्रमशः दायाँ र बायाँ जाने अङ्कुशका इकार र ईकारको मात्रा, डीकोरेखाको देब्रे भागमा तल झर्ने छोटो तेर्सो रेखा र माथि ढल्केको रेखाका एकारका मात्रा गरी सबै पारम्परिक मात्राहरूको उपयोग नेवारीमा भएको छ। आरम्भमा उकारको मात्राचिह्नमा पारम्परिक विविधता पाइन्छ। बाह्रौं शताब्दीदेखि दुई किसिमका उकारका चिह्नहरू स्थिर भए : अधिकांश व्यञ्जनको टुप्पोबाट दायाँतिर तल फर्कने टिक र कतिपय व्यञ्जनहरूमा देवनागरीको जस्तो उकारको चिह्न। यसको साथै नेवारीलिपिका कतिपय मात्राचिह्न पूर्वी भारतमा विकसित आदिबाङ्लाको मात्राचिह्नसँग दाँज्न सकिन्छ। रञ्जनामा बाहेक अन्य नेवारीलिपिमा एकारको कोष्ठकचिह्नको नयाँ मात्राचिह्न पनि प्रयोग गरिएको छ। यसबाट स्वभाविक रूपमा **ऐ ओ औ**का मात्राहरू प्रभावित भएका छन्। यो चिह्न पहिलोपल्ट आदिबाङ्ला लेखनमा पाइन्छ। सुरुमा यो चिह्न सबै किसिमका नेवारी व्यञ्जनमा लागेतापनि पछि डीको नभएका **ग ञ ठ ण थ ध श** जस्ता कतिपय वर्णहरूमा मात्र सीमित रहनगयो। अन्य व्यञ्जनहरूमा भने पारम्परिक एकारका मात्राचिह्न कायमै रह्यो। डीको नभएका व्यञ्जनमा आकारको मात्राको ऊर्ध्वरेखा भने छोटो हाइफेनले जोडिएको हुन्छ।[७]

## ३. डीकोमा अनेक प्रयोग

प्रारम्भिक नेवारीलिपिको कोणात्मक डीकोबाट कसरी भुजिँमोः, गोलमोः, लितुमोः कुँमोः जस्ता अनेकौं डीकोका प्रयोगहरू भए भन्ने कुरा माथि गरिसकिएको छ।[८] यी सबै प्रकारका डीकाहरूको मुख्य आधार वर्णहरूको माथिल्लो भागलाई कलात्मक तरिकाले बांगो गरी बनाइएको कोणात्मक डीको थियो जो पारम्परिक त्रिकोण डीकोबाट अनुप्राणित थियो। यिनै डीकाहरूका

कारण विभिन्न लेखाईका पारम्परिक नाम रहनगए। यद्यपि ती सबै डीकोशैलीहरू चलेनन्। यिनीहरूमध्ये प्रारम्भिक कोणात्मक डीको र भुजिँमोः मात्र बढी मात्रामा प्रचलित भए। डीकोमा अर्को उल्लेखनीय प्रयोग रञ्जनामा भएको छ। रञ्जनाको डीको मोटो र ठोस छ। यो कोणात्मक पनि छैन, पूर्ण त्रिकोण पनि छैन। यसमा आरम्भिक लिच्छविको समान त्रिकोणको शीर्षविन्दुबाट वर्णहरूको लेखन सुरु हुने प्रश्नै भएन। रञ्जनाको डीकोको त्रिकोण वर्णको ठाडो रेखासम्म जान्छ र देब्रेतिरको तल्लोभाग गोल बनेको हुन्छ। नेवारीका सबै शैलीहरूमा **ऋ ए ऐ ओ औ ख ग घ झ प फ म य स ष** जस्ता दुई भुजा हुने वर्णहरूका दुवै भुजा डीकोले जोडिएको हुन्छ। पातलो लामो तेर्सो डीकोको प्रचलित नेवारीमा यो विशेषता स्पष्ट छ। भुजिँमोःको अङ्कुशे डीको पहिलो भुजाबाट माथि उठ्दै तल झुकेर दोस्रो भुजामा मिल्छ। यसो हुँदा दोस्रो भुजाको माथिल्लो दाहिने भागमा चोसो निस्केको हुन्छ। देब्रेतिरको भुजासम्म मोटो हुनु र त्यसपछि पातलो रेखाले दोस्रो भुजा जोडिनु रञ्जनाको डीकोको मुख्य विशेषता हो। डीकोले दुवै भुजा जोडिनु नागरीको पनि लक्षण हो भन्ने कुरा माथि गरिएको छ। नेवारीका सबै शैलीहरूमा यो विशेषता पाइन्छ।[१]

## ४. विशिष्ट संयुक्ताक्षर

संयुक्ताक्षरपद्धति ब्राह्मीबाट विकसित सबै लेखनको विशेषता हो। तथापि अगाडि र पछाडिका व्यञ्जनमध्ये कुनचाहिँलाई पूर्ण स्वरूपमा र कुनलाई अर्धस्वरूपमा देखाउने भन्ने बारेमा सबै लेखनमा प्रायः भिन्नता पाइन्छ। यस कुरामा ब्राह्मीबाट विकसित सबै लेखनमा संस्कृतव्याकरणको अनुसरण गरिएको पाइँदैन, जसअनुसार पछिल्लो स्वरसहित उच्चारण गरिने वर्ण पुरा स्वरूपको बनाइनुपर्ने हो। नेवारीलिपि यस कुराको अपवाद छैन। जोडको पहिलो अक्षरलाई सकेसम्म पुरा देखाउन खोज्ने र धस्काएर लेख्ने चलनको विकासले गर्दा नेवारीलिपिका कतिपय जोडका व्यञ्जनहरू जटिल लाग्छन्। जोडका **ञ ट त थ ध र य व** प्रायः लिच्छविलिपिकै समान धस्काएर लेखिएका छन्। कहिलेकाहीं खासगरी अन्तिम व्यञ्जनको रूपमा जोडिएको **त** र उकारको मात्रामा भ्रम हुनसक्छ। अन्तमा उच्चारण हुने यको लागि निकै सानो जोडको अङ्कुशे **य**को साथसाथ पूर्ण स्वरूपको **य** पनि सँगसँगै चलेको पाइन्छ। पहिले उच्चारण हुने **र** अर्थात् रेफको स्वरूप आरम्भदेखि नै देवनागरीको समान छ। बाह्रौं शताब्दीदेखि व्यञ्जनको देब्रेतिर तेर्सो रेखाको **र** जोड्ने चलन सबै शैलीमा प्रचलित रह्यो। नेवारीमा आरम्भदेखिनै **क** र **ष**को संयुक्ताक्षर **क्ष** तथा **ज** र **ञ**को संयुक्ताक्षर **ज्ञ** पारम्परिक स्वरूपका छन्। पछि **त्र**को साथ **क्ष** र **ज्ञ** अन्यत्र झैं स्वतन्त्र व्यञ्जन मानिए। पहिले उच्चारण हुने गरी लेखिने **क** र पछि उच्चारण हुने गरी लेखिने **त**को स्वरूप अक्सर पुरानै हुन्छ अर्थात् जोडको **क**को गाँठो हुँदैन र पछि जोडिने पारम्परिक दुइभुजे **त** दाहिने फर्केको हुन्छ। **प**मा **त** जोड्दा देवनागरीको **फ** जस्तो हुनजान्छ। पहिलो व्यञ्जनका रूपमा जोडिएको **क** र **ज**को दाहिने भुजा पछिल्लो व्यञ्जनको मध्य भागलाई छिचल्दै दायाँतिर तल झारिएको हुन्छ।

नेवारीलिपिमा संस्कृत लेख्दा उपयोगमा आउने **च** र **छ**को संयुक्त व्यञ्जन पछि स्वतन्त्र व्यञ्जन **छ**को रूपमा प्रचलित भयो।[१०]

यस अतिरिक्त तेह्रौं शताब्दीदेखि रञ्जनाका विभिन्न व्यञ्जनहरूलाई संयोजन गरी वज्रयानको बीजाक्षर मन्त्र लेख्ने चलन चल्यो। अंग्रेजीको मोनोग्राम जस्तो गरी लेखिएको यस्तो लेखनलाई कूटाक्षर भनिन्छ। साधकहरूले मात्र बुझ्नसक्ने अर्थ भएका कूटाक्षर अनेक थरिका हुनसक्छन्। **ह क्ष म ल व र यं** व्यञ्जनहरूको संयोजन भएको कूटाक्षर, जो सप्ताक्षरी भनिन्छ, बढी प्रचलित छ। यो कूटाक्षर स्तूप र विहार जस्ता पवित्र स्थान र अभिलेखको शिरानीमा लेखिएको पाइन्छ।[११] यसमा व्यञ्जनहरू ठाडो गरी लेखिएका हुन्छन् र तिनका दाहिनेतिरका भुजा ऊर्ध्वरेखाको रूपमा सीधा तल झारिएको हुन्छ। यसका व्यञ्जनहरूलाई छुट्ट्याएर पढ्न अभ्यासको खाँचो हुन्छ। यी सब कारणले गर्दा देवनागरीका पाठकहरूलाई नेवारीलिपि पढ्न हम्मे हुन्छ।

## ५. अलङ्करण र सुलेखन

वर्णहरूका आकारप्रकारमा कुनै प्रभाव नपर्ने गरी लेखनलाई सिँगार्न सकिने गुण नेवारीलिपिमा पाइन्छ। सोझो पंक्तिमा अनुपात मिलेका वर्णहरूको सफा र छरितो लेखाइ सुन्दर लेखनको पहिलो आवश्यकता हो। नेवारीलिपिका अधिकांश लेखोटहरूमा यो विशेषता देखिन्छ। लेखाइमा अलङ्करण अन्य धेरै कुरामा निर्भर गर्छ। अलङ्करणका मुख्य माध्यम मात्राचिह्न र डीको हुन्। आफ्ना खास प्रकारका डीका र मात्राचिह्नका कारण रञ्जना र भुजिँमोः अलङ्कृत लेखनका राम्रा नमुना हुन्। यी दुवै शैलीहरूमा सुलेखनका विशेषता पाइन्छन्। खास किसिमको मोटो डीकोमा मोटो र पातलो रेखाको संयोजन र चौडा वर्णहरूको ऊर्ध्वरेखाको तल्लो टुप्पोलाई पातलो ढल्केको रेखामा अन्त गरी लेखिएको रञ्जनाको लेखाईमा सफाई पनि छ, मात्रापनि अलङ्कृत छ।[१२] यथार्थमा आफ्नो समृद्ध अलङ्करणको कारण रञ्जनालिपि रहस्यप्रधान वज्रयानका लेखोटको लागि उपयुक्त ठहरियो, यसै माध्यमले तिब्बत र चीन पुग्यो, जहाँ यसको पहिचान वज्रयानको मन्त्रको लेखनको रूपमा हुनगयो। उत्तरी नेपाल र तिब्बतमा ॐमणिपद्मे हुम् र सप्ताक्षरी कूटाक्षर मन्त्रको लागि रञ्जनालाईनै चुनियो। देशभित्र भने रञ्जना मात्र एउटा सुलेखनको शैली थियो, जसमा बौद्ध ग्रन्थहरूको साथसाथ हिन्दु ग्रन्थहरू समेत लेख्न सकिन्थे।[१३] अङ्कुशे डीकोको भुजिंमोःमा पनि सुलेखनका कतिपय गुण पाइन्छन्। छरितो किसिमले सफासँग लेखिएका बुट्टेदार डीकोका भुजिँमोःका मसीना वर्णहरू निकै आकर्षक हुन्छन्। प्रचलित नेवारीलिपिमा अलङ्करणका यस्ता गुण त हुँदैनन् तर सोझो पंक्तिमा अनुपात मिलेका वर्णहरू भने पाइन्छन्। व्यावहारिक लेखनमा अलङ्करणको प्रभाव पैदा गर्ने अन्य उपाय खोज्नसकिँदैन। शीघ्रताले धस्काएर लेखिएका हुँदा प्रचलित नेवारीका कतिपय उदाहरणहरू भद्दा देखिन्छन्। प्रचलित नेवारीका मुख्य गुणनै शीघ्र लेख्न र पढ्न सकिनु हो।

## ६. विविधतामा एकता

नेवारीलिपिका अनेकौं शैलीहरू साथसाथ प्रचलित रहे। तथापि तिनका वर्णहरूका आन्तरिक स्वरूपमा मौलिक भिन्नता पाइदैन।[१४] यद्यपि डीकोको स्वरूपलाई ध्यानमा राखी हेर्दा वर्णहरूको बनोट लामो, थ्याप्चो वा मोटो बनाइएको जस्तो लाग्छ तर वास्तविकता त्यो होइन। कतिपय नौला वर्णहरू र मात्राचिह्नको प्रवेश भइसकेपछि पनि निकैसम्म तिनका साथसाथ पुराना पारम्परिक वर्णहरू र मात्राचिह्नको उपयोग भइरहेको देखिन्छ। यसमा कुनै किसिमको अस्वाभाविकता देखिँदैन। यो विशेषता सबै शैलीहरूमा भेटिन्छ। यस्तो हुनुको एउटा कारण नेवारीलिपिको खास किसिमको लेखनपद्धति हुनु संभव छ।

एकातिर सरल र व्यावहारिक प्रचलित नेवारी वा मिल्दोजुल्दो पाचुँमोः प्रचलित रह्यो भने अर्कोतिर बढी समय र परिश्रम लाग्ने रञ्जना र भुजिँमोः जस्ता सुलेखनका अलङ्कृत शैली चले। सामान्य लेखपढको व्यवहार गर्न शीघ्रताले धस्काएर लेख्न सकिने व्यावहारिक लेखन समाजमा अनिवार्य थियो। यो प्रचलित नेवारी थियो जसलाई नेपालको जनलेखन भन्नसकिन्छ। डीको र अलङ्करणको जटिलता नभएको कारण प्रचलित नेवारी सिक्न, पढ्न र लेख्न सजिलो थियो। मिहेनतका साथ लेखिने रञ्जना र भुजिँमोः सम्पन्न वर्गको संरक्षणमा जारी रह्यो। खास गरी नीलपत्र कागतमा ग्रन्थ लेख्ने चलन लोकप्रिय भएपछि कालो मसीको ठाउँ हलुका रंगका मसीले लिए। पुगिसरी आउनेहरूले सुन चाँदी जस्ता महँगा धातुको मसीको उपयोग गरेर आफ्नुलागि सुलेखनमा ग्रन्थ लेखाए। नेपालमा सुन र चाँदीका मसीको उपयोग ताडपत्र र कागत दुवैमा भएको छ। ताडपत्रको चिल्लो सतहमा सुनको उपयोग गर्नु धैर्यको काम हो। नेपालमा १०५७ ई.मा लेखिएको पञ्चरक्षा शीर्षकको ग्रन्थ हालसम्म जानिएका मध्ये पहिलो ताडपत्र ग्रन्थ हो जसमा सुनको मसीको उपयोग भएको छ। नीलपत्र ग्रन्थको नीलोकालो पृष्ठभूमिमा सुनौलो आभा धेरै आकर्षण पैदा गर्छ। खास गरी रञ्जनालिपिमा सुन र चाँदीको मसीले लेखिएका नीलपत्र ग्रन्थ आफ्नो नीलोकालो पृष्ठभूमिमा सुनौलो र रूपौलो रंगका कारण हेर्नेहरूको मनमा अमिट प्रभाव छोड्छन्।[१५] यसरी नेवारीलिपिमा अनेक शैलीहरूको उपस्थिति छ तर ती सबैमा प्रचलित वर्णहरूको आन्तरिक बनोटमा फरक देखिँदैन, पारम्परिक र नौला वर्णहरू एकसाथ देखिन्छन्। अत एव नेवारीलिपिमा विविधतामा एकता रहेको छ।

## टिप्पणी

१. नेवारी भाषा चीनीतिब्बतीबर्मेलीभाषापरिवारका थोरै लिखित भाषाहरूमध्ये एक हो। यस परिवारको एक प्रतिशत भाषा मात्र लिपिबद्ध छ जसमध्ये एक हुने गौरव नेपालको नेवारीले पाएको छ। भिन्न मूलको भएता पनि यस भाषामा संस्कृतको धेरै प्रभाव परेको छ। भारतीययूरोपेली भाषापरिवारको नेपाली भाषा अपभ्रंशसँग सम्बन्धित छ। बाह्रौं शताब्दीमा

सुरु भएको नेवारीभाषालेखनको इतिहास नेपाली भाषा भन्दा पुरानो छ। हेर्नुस् अध्याय १७, टिप्पणी १३।

२. हेर्नुस् अध्याय १७ र १८।

३. हेर्नुस् अध्याय १६। नेपाल बाहिर त्यहाँ लेखिएका अनेकौं ग्रन्थ यहाँ पाइने तथ्यलाई बिर्सनु हुँदैन।

४. हेर्नुस् अध्याय १८।

५. हेर्नुस् अध्याय १७।

६. **उही**।

७. **उही** पृष्ठ २१६।

८. हेर्नुस् अध्याय १८।

९. हेर्नुस् अध्याय १८ र १९।

१०. हेर्नुस् अध्याय १७ र १८।

११. हेमराज शाक्य, **नेपाल लिपिप्रकाश** (काठमाडौं : नेपाल राजकीय प्रज्ञाप्रतिष्ठान,२०३०) पृष्ठ ६। लेखकको अनुसार कूटाक्षरलाई तन्त्रयान र वज्रयानमा कालचक्र र 'योगाम्बर' को आत्मास्वरूप मानिएको छ र यसको प्रचार चीनमा समेत भएको छ।

१२. हेर्नुस् अध्याय १९।

१३. हेर्नुस् उही।

१४. हेर्नुस् अध्याय १७ र १८।

१५. हेर्नुस् तल अध्याय १८ र २२।



## अध्याय एक्काईस

# अङ्कलेखन

लेखनको अध्ययनमा अङ्कलेखनको ठुलो महत्त्व छ। सिन्धुसभ्यताको लेखनमा अङ्कको ज्ञान भएको हुनुपर्छ। वैदिक साहित्यमा निकै ठूला संख्याहरूको उल्लेख पाइन्छ, तर लिखित अङ्कहरूको स्वरूप अज्ञात छ।[१] यस भेगमा अक्षरलेखन झैं अङ्कचिह्नहरूको प्रथम लिखित स्वरूप तृतीय शताब्दी ईसापूर्वका अशोकका अभिलेखमा पाइनथाल्छ। ब्राह्मी र खरोष्ठीलिपिहरूमा भिन्नाभिन्नै किसिमका संख्यालेखनका पद्धतिहरू छन्। यहाँ ब्राह्मीमा प्रचलित अङ्कलेखनको चर्चा गरिँदै छ। अङ्कलेखनको उत्पत्तिको सम्बन्धमा विद्वान्हरूमा एकमत छैन। ए.सी. बर्नेल[२] र जर्ज बूलरको[३] अनुसार ब्राह्मीका अङ्कचिह्नहरू मिश्रका डेमोटिक वा हियरेटिक लेखनबाट रूपान्तरित भएका हुन्। अरू विद्वान्हरू यस मतलाई नमानी भारतमै अङ्कलेखनको उत्पत्ति भएको मान्दछन्।[४] यद्यपि ब्राह्मीअङ्कचिह्न कुन मूल आधारमा बने त्यसको चित्तबुझ्दो समाधान प्रस्तुत गर्न सकिएको छैन। यथार्थमा ब्राह्मी लेखनको झैं अङ्कलेखनको उत्पत्तिको समस्याको अझै समाधान भइसकेको छैन। ब्राह्मीका विभिन्न अङ्कपद्धतिहरूमध्ये विशेष चिह्नद्वारा व्यक्त गर्ने प्राचीनतम पद्धतिलाई यहाँ प्राचीन अङ्कपद्धति र शब्द र अक्षरका माध्यमले प्रकट गर्ने पद्धतिहरूलाई क्रमतः शब्दाङ्कपद्धति र अक्षरात्मकपद्धति भनिएको छ।

### १. प्राचीन अङ्कपद्धति

अशोकका ब्राह्मीलिपिका अभिलेखहरूमा ४, ६, ५० र २०० का अङ्कचिह्नहरू पाइन्छन्। अन्दाजि एक सय वर्षपछिका शातवाहन राजाद्वारा यज्ञका अवसरहरूमा दिइएको दानको विवरणको प्रसंगमा महाराष्ट्र प्रदेशको पुणें जिल्लाको नानाघाटको गुफाअभिलेखमा १९ अङ्कचिह्नहरू अङ्कित गरिएका छन्। ती हुन् : १, २, ४, ६, ७, ९, १०, २०, ८०, १००, २००, ३००, ४००, ७००, १,०००, ४,०००, ६,०००, १०,०००, र २०,०००। यिनलाई १८७६ मा भगवान्लाल इन्द्रजीले पढेका थिए।[५] प्रथम र द्वितीय शताब्दी ई.तिरका आन्ध्रवंशी राजाहरू र पश्चिमी शकक्षत्रपहरूका महाराष्ट्रस्थित नासिक र कार्लेका गुफा अभिलेखहरूमा अन्य दशवटा थप अङ्कचिह्नहरू पाइन्छन्।[६] ती हुन् ३, ५, ८, ४०, ७०, ५००, २,००० ३,०००, ८००० र ७०,०००। यी अङ्कचिह्नहरूको पद्धति दशमलवभन्दा भिन्न थियो। यसमा एकदेखि नौसम्मका र दशदेखि एक सयसम्मका दशमान र शतमानको साथै सहस्रमानका स्वतन्त्र चिह्नहरू छन्। यस पद्धतिमा अङ्कचिह्न यस प्रकार लेखिएका छन्[७] (फलक ३५)

१, २, ३ : एक मात्र तेर्सो रेखाले एक, त्यसमुनि तानिएको समेत गरी दुई रेखाले दुई र त्यसै गरी निर्मित तीन रेखाहरूले तीन अङ्क बुझाउँछन्: – = ≡. कुनै वर्णसँग यिनको समानता पाइँदैन। कालान्तरमा शीघ्रताले धस्काएर

लेख्ता दाहिनेतिरको रेखान्त तलतिर झुक्दैगयो । लिच्छविकालका अभिलेखहरूमा आरंभदेखि नै यस्तै अङ्कचिह्नहरू पाइन्छन् । यिनबाट वर्तमान देवनागरीका १ २ ३ अङ्कस्वरूप बने ।

४ : अशोकका अभिलेखमा ४ अङ्कचिह्न तेस्रो वा अर्द्धचन्द्राकार डीको भएको तत्कालीन **क** व्यञ्जनको समान छ । नानाघाट र नासिकका गुफा लेखहरूमा यो ब्राह्मीको संयुक्ताक्षर **प्क** जस्तो छ । अझपछि यो **न्प ल्क ट्क** वा **प्कृ** अक्षरहरू जस्तो गरी लेखिएको पाइन्छ । आरंभदेखिनै नेपालमा यो अङ्क लिच्छविको **प्क** जस्तै छ । पछिका नेपाली लेखोटमा **ञ्क** जस्तो गरी लेखिएको ४ अङ्कका उदाहरण पाइन्छन् ।

५ : भारतका अधिकांश आरंभिक अभिलेखहरूमा अङ्क ५ तृ अक्षर जस्तो देखिन्छ । तर पछि यसको स्वरूप **त ता पु हू रू तृ ना न ह्र हृ** वा **ह्र**को समान बनेको छ । नेपालमा यो अङ्क **ह हु ह्य ह्व तृ** वा **ज** जस्तो गरी विभिन्न ढंगले लेखिएको पाइन्छ ।

६ : धेरै ठाउँमा ६ अङ्क तत्कालीन **फ्र** जस्तो गरी लेखिएको पाइन्छ । तर कतैकतै यो **फ्रा फ फा ज ह्रा** जस्तो पनि देखिन्छ । लिच्छविलिपिमा ६ अङ्कको स्वरूप **ट** वा **टा** र पछि **ह्र भ्र भु ड हु** र कुनै अक्षरसँग नमिल्ने किसिमको पनि देखिन्छ ।

७ : धेरैजसो लेखोटमा यो अङ्क तत्कालीन **ग्र** वा **गु** अक्षर जस्तो गरी लेखिएको छ । केहीमा **ग** जस्तो पनि पाइन्छ । आरंभिक लिच्छविअभिलेखहरूमा ७ अङ्क झण्डै रोमन **B** जस्तो छ तर तल्लो वृत्त जोडिएको हुँदैन र तत्कालीन **ञ** व्यञ्जनसँग मिल्दोजुल्दो छ । पछि यो **गु भु ग्गु ग्र श्रा ण पु ञ्तु त्तु** जस्तो र कतै कुनै अक्षरसँग नमिल्ने गरी लेखिएको पाइन्छ । कुनैमा एमा वा देवनागरीको ७ मा ३ जोडेको वा नेवारीको **ञ**को स्वरूपको ७ पाइन्छ ।

८ : अधिकांश अभिलेखहरूमा ८ अङ्क **ह्** वा **ह्रा** जस्तो गरी लेखिएको पाइन्छ । नेपालका आरंभिक अभिलेखहरूमा यसको स्वरूप तत्कालीन **ड**सँग र पछि देवनागरीको **ड**सँग मिल्दोजुल्दो छ । यो अङ्क कहींकहीं **ग्रा**सँग मिल्ने र कहीं कुनै पनि अक्षरको स्वरूपसँग नमिल्ने पनि पाइन्छ ।

९ : कुषाण अभिलेखहरूमा पाइने ९ को अङ्कचिह्न कुनै अक्षरसँग सादृश्य राख्तैन । परवर्ती लेखोटहरूमा यसको स्वरूप उ वा ॐ अक्षरसँग मिल्दोजुल्दो छ । लिच्छवि अभिलेखहरूमा यसको आकारप्रकार आजभोलि प्रचलित विन्दुरहित प्रश्नचिह्नको समान छ । पछि यसको स्वरूप **लु ड तो त्रा डा डो** जस्तो पनि पाइन्छ ।

१०: दशअङ्कचिह्नको पुरानो आकारप्रकार कुनै पनि अक्षरसँग मेलखाँदैन । पछिका लेखहरूमा यो अङ्कचिह्न झण्डै **न्य ह हृ ख ठु** र **ठ** अक्षरसँग सादृश्य राख्छ । नेपालका आरंभिक अभिलेखहरूमा यो अङ्कचिह्न

तत्कालीन **ण्ट**, णु, णृ वा **णू**को समान छ। पछि **लु तो ण्डा डो**को साथसाथ **लृ** जस्तो चिह्न पनि कायम रहेको पाइन्छ।

२० : यो अङ्कचिह्न आरंभदेखि नै **थ** अक्षरको स्वरूपसँग मिल्दोजुल्दो छ। नेपालमा पनि अधिकांश लेखमा २० को अंङ्कचिह्न **थ**को समान पाइन्छ।

३० : आरंभिक अभिलेखहरूमा ३० को चिह्न **ल** वा **ला** अक्षरको समान देखिन्छ। नेपालमा पनि ३० को निम्ति **ल** अक्षरको उपयोग गरिएको पाइन्छ।

४० : यो अङ्कचिह्न **प्त** वा **स** अक्षरको समान छ। नेपालमा आरंभदेखि नै ४०को चिह्न झण्डै **प्त** अक्षरको समान पाइन्छ।

५० : यो कुनै अक्षरको स्वरूपसँग मेल खाँदैन। यसको स्वरूप दुवै भुजा भित्र मोडिएको रोमन **सी** C जस्तो छ। नेपालमा पनि यस्तै स्वरूप पाइन्छ। केहीमा यो चिह्न उल्टो फर्किएको छ र केही रोमन सानो **ई** जस्तो वा कानको आकारको पनि पाइन्छ।

६० : यस अङ्कचिह्नको स्वरूप **पु प** र **प्र** अक्षरसँग मिल्दछ। नेपालमा आरंभदेखि नै ६० को निम्ति **चु** अक्षरको उपयोग भएको छ।

७० : भारतीय अभिलेखहरूमा यस अङ्कचिह्नको स्वरूप **पु प्त प्रा ह्** जस्ता अक्षरहरूसँग मिल्दोजुल्दो हुन्छ। नेपालमा अधिकतर लेखमा यो दीर्घ **चू** अक्षरसँग सादृश्य राख्तछ।

८० : आरंभिक लेखनमा यो अङ्कचिह्न कुनै अक्षरसँग मेल खाँदैन। केही भारतीय पुरालिपिविद्हरूले यस अङ्कको चिह्नलाई उपध्यमानीय (प को अगाडिको विसर्ग) चिह्न मानेका छन्। यो पूर्णवृत्ताकार चिह्नको बीचमा ऊर्ध्व रेखाले चिरिएको हुन्छ। कहिलेकाहीं भित्रतिर पसेर खण्डित स्वरूपको वृत्त बनेको हुन्छ। नेपालमा प्रचलित स्वरूप पूर्णवृत्त वा स्याउको समान गोल रेखाभित्र ठाडो रेखा हो।

९० : यस अङ्कको चिह्न पनि अक्षरको समता राख्तैन। यसलाई पनि उपध्मानीय चिह्न मानिएको छ। नेपालमा आरंभदेखिनै पूर्णवृत्तभित्र धनचिह्न बनाई ९० जनाइएको पाइन्छ।

१०० : भारतका आरंभिक अभिलेखहरूमा **सु लु अ** जस्तो देखिने १०० को अङ्कचिह्न नेपालमा आरंभदेखिनै **अ** जस्तोगरी लेखिन्छ। यसको आकारप्रकार देवनागरीको **स** जस्तो हुन्छ। परवर्ती लिच्छवि र नेवारीमा विकसित **अ** ले यो संख्या जनाइएको छ। समयसमयमा **अ**को स्वरूपमा आउने परिवर्तनका साथ यसको लेखाइमा अन्तर आएको छ।

२०० : आरंभमा यो अङ्कचिह्न **सु सू र्स आ लू र्घू** अक्षरको समान छ। लिच्छवि अभिलेखमा यो **आ**को समान छ, जो निकै पछिसम्म कायम रह्यो। अक्सर गरी **अ**को तल्लो भागमा उकारको मात्राझैं देब्रेतिर फर्केको अंकुश जोडिएको वा डिकोको दाहिने भागमा आकारको मात्राचिह्न लगाइएको स्वरूपको हुन्छ।

३०० : यो संख्या बनाउन **अ**मा डिकोनजिकै एउटा र मध्य भागबाट दायाँतिर जाने अर्को गरी दुइवटा तेर्सो रेखा वा **अ**मा आकारको मात्रा र उकारको मात्रा चिह्न झैं रेखा लगाउने चलन आरंभदेखि नै नेपालमा चल्यो ।

४००-९०० : एक सयको चिह्न लेखेर त्यस नजिकै ४ वा उँभोका अङ्कचिह्न लेखेर ४०० र माथिका अङ्कचिह्न लेखिन्छ । यसो गर्दा सय र अन्य चिह्नको बीचमा आइफेन लगाउने चलन पनि पाइन्छ । लिच्छविकालीन नेपाली अभिलेखमा संवत्को संख्या जनाउने ५०० भन्दा बढी शतमान चिह्न दुर्लभ छ ।

१००० : नानाघाटमा यो **रो** जस्तो छ, नासिकका अभिलेखहरूमा **धु** वा **चु** जस्तो र अन्यत्र **बु** को समान लेखिएको पाइन्छ । नेपालमा यो दुर्लभ छ ।

यसरी संख्या लेख्ता पहिले ठुलो संख्या जनाउने चिह्न, त्यसपछि १०, २०, ३०, आदिमध्ये आवश्यक दशमानका चिह्न र अन्तमा १ २ ३ जस्ता एकाईको चिह्न लेखिन्थे । उदाहरणार्थ ३८६ लेख्ता पहिले ३००को चिह्न त्यसपछि क्रमशः ८० र ६का चिह्न लेखिएका छन् । नेपालका अभिलेख र पाण्डुलिपिग्रन्थका अङ्क लेखनको केही उदाहरण यस प्रकारका छन् :

| | |
|---|---|
| **थ ड** २० ८ = २८, | **ल प्क** ३० ४ = ३४, |
| **प्त प्क** ४० ४ = ४४ | **चु प्क** ६० ४ = ६४, |
| **अ थ हृ** १०० २० ५ = १२५, | **अ प्त प्क** १०० ४० ४=१४४ |
| **अ चू** २ १०० ७० २ = १७२, | **आ ल प्क** २०० ३० ४ = २३४ |

पाण्डुलिपिको पृष्ठसंख्या लेख्ता माथितल गरी अङ्कचिह्न लेख्ने चलन भारतका राजस्थान र गुजरातका समान नेपालमा पनि धेरै पछिसम्म चलेको पाइन्छ । यस अनुसार १२१ लेख्नुपरेमा माथि **अ** (१००), त्यसमुनि **थ** (२०) र त्यसमुनि १ लेखिएको पाइन्छ ।[८] दशमानमै टुंगिने अङ्कचिह्नपछि तल एउटा शून्य बनाउने चलन पनि देखिन्छ । उदाहरणार्थः १२० लेख्नु पर्दा **अ** त्यसमुनि **थ** र त्यसमुनि शून्य लेखिएको छ । यसमा शून्यको कुनै अर्थ छैन । शून्ययुक्त दशमलवपद्धतिको ज्ञान भएपछि पनि पुरानो पद्धति कायम राख्ने आग्रह बाहेक यसको अर्को अर्थ हुन सक्दैन ।[९] अङ्कलेखनको यो प्राचीन पद्धति भारतमा दशौं शताब्दीपछि देखिँदैन । तर नेपालमा १२ औं शताब्दीभन्दा पहिले नै दशमलवपद्धतिको ज्ञान भइसकेको भएतापनि अङ्कलेखनको प्राचीन पद्धति अठारौं शताब्दीसम्मका पाण्डुलिपिहरूमा बीचबीचमा अन्य पद्धतिको साथसाथ प्रचलित रहेको छ । यसबाट दशमलवपद्धतिलाई लोकप्रिय हुन भारतमा झैं नेपालमा पनि धेरै समय लागेको स्पष्ट हुन्छ । शून्य र स्थानमान सिद्धान्तको आविष्कार भएपछि पनि शून्यका साथ एकदेखि नौ सम्मका यिनै पारम्परिक चिह्नहरूको उपयोग हुँदैरह्यो ।

यसरी कतिपय ब्राह्मीअङ्कचिह्नहरू वर्णहरूको आकारप्रकारसँग मिल्दाजुल्दा छन् । तर तिनको पद्धति खास किसिमको छ । केही आरंभिक लेखकहरूले ब्राह्मी अङ्कचिह्नको सम्बन्ध अक्षरहरूसँग गाँसेका छन् । भगवान् लाल इन्द्रजीले अङ्कचिह्नको उत्पत्ति अक्षरबाट भएको मानेका छन् ।[१०] जेम्स प्रिन्सेपले संख्यावाचक शब्दको प्रथम अक्षरबाट अङ्कचिह्न बनेको अनुमान गरेका

छन् ।[११] बूलरले पनि यस विषयको चर्चा 'प्राचीन अक्षरसंख्यांक' शीर्षक अन्तर्गत गरेका छन् ।[१२] सोह्रौं शताब्दीका पाण्डुलिपि ग्रन्थहरूमा १ देखि ३ अङ्कहरूको सट्टा विभिन्न माङ्गलिक अक्षरचिह्नको उपयोग नेपालका पाण्डुलिपिहरूमा पनि भएको छ । जस्तै : स्वस्ति श्री, ॐ न मः ए द्वि त्रि आदिमध्ये क्रमशः एकको लागि ॐ **ए स्व**, दुईको लागि **स्ति न द्वि** र तीनको लागि **श्रीः मः .त्रि** लेखिएको पाइन्छ ।[१३] यसरी केही अङ्क चिह्नहरूको तुलना कतिपय वर्ण वा संयुक्ताक्षरहरूसँग गर्न सकिएकाले अङ्कचिह्नहरूलाई अक्षरकै आधारमा बनेको मानेर यस पद्धतिलाई **अक्षरात्मकपद्धति** मान्नु ठिकै देखिन्छ । यहाँ यस विवादमा नपरी यस पद्धतिलाई प्राचीन अङ्कपद्धति मात्र भनिएको छ । यहाँ अर्को पद्धतिलाई अक्षरात्मकपद्धति वा अक्षरपल्ली भनिएको छ जसबारेमा शब्दाङ्कपद्धतिपछि चर्चा गरिने छ ।

## २. शब्दाङ्कपद्धति

शब्दहरूको माध्यमले संख्या बताउने प्राचीन पद्धतिलाई यो नाम दिइएको हो ।[१४] यसमा यस्ता शब्दहरूको उपयोग गरिएको छ जो लौकिक वा साहित्यिक जगत्मा निश्चित संख्या भएका पदार्थ, वस्तु वा देवता हुन्थे । उदाहरणार्थ, चन्द्रमा, पृथ्वी, ब्रह्मा एउटै हुन्छन्, यसकारण १ संख्या बताउन यिनको उपयोग भएको छ । त्यस्तै दुई संख्या बताउन आँखा, हात, अश्विन् (अश्विनीकुमार जो दुई दाजुभाई थिए); तीन बताउन अग्नि (तीन किसिमको अग्नि प्रसिद्ध छ), गुण (सत्व, रज र तम-त्रिगुण), राम (दशरथका छोरा, बलराम र परशुराम समेत तीन जना राम) जस्ता शब्दहरूको उपयोग भएको छ ।

यो पद्धति विशेष गरी लामो अङ्क लेख्नु पर्ने गणित, ज्योतिष जस्ता विषयका ग्रन्थको निम्ति बढी उपयुक्त थियो । ज्ञातब्य छ, मुखस्थ विद्याको महिमा यहाँ धेरै थियो, कण्ठ गर्न गद्यभन्दा पद्य सजिलो हुन्थ्यो र ठूलठूला अङ्कहरू पद्यपद्ध गर्न सकिँदैनथ्यो । यस पद्धतिमा दशमलवको स्थानमानको विशेषता छ यो पद्धति भारतमा निकै पहिलेदेखि प्रचलित रहेको मानिन्छ ।[१५] पुरालेखनमा यसको उपयोग सर्वप्रथम प्राचीन भारतीय संस्कृतिको प्रभाव रहेको कम्बोडियामा ६०४ ई.को अभिलेखमा भएको पाइन्छ । स्वयं भारतमा यसको प्रयोग सर्वप्रथम नवौं शताब्दीको पहिलो चरणको अभिलेखमा गरिएको पाइन्छ ।[१६] नेपालमा यो पद्धति एघारौं शताब्दीदेखि लोकप्रिय हुँदै आयो । यस पद्धतिमा दशमलव पद्धतिको "अङ्कानां वामतो गतिः" अर्थात् अङ्कहरूको बायाँबाट गति हुन्छ भन्ने सिद्धान्तअनुसार पछिल्लो संख्यावाचक शब्द सबभन्दा पहिले लेखिन्थ्यो । उदाहरणार्थः १९९३ लेख्नु पर्दा यसरी लेख्न सकिन्छ : अग्नि-ग्रह-निधि-पृथ्वी वा गुण-निधि-दुर्गा-पितामह आदि । अङ्क बताउन उपयोगमा ल्याइएका यस्ता केही प्रचलित शब्दहरू यसप्रकार छन् :[१७]

**शून्य** आकाश, ख, व्योम, शून्य आदि आकाशका पर्यायवाची शब्दहरू, पूर्ण, रन्ध्र, अनन्त आदि ।

**एक** इन्दु, शशि, हिमांशु जस्ता चन्द्रमाका पर्यायवाची शब्दहरू, पृथ्वी र धरा, धरणी जस्ता समान अर्थ लाग्ने शब्दहरू, पितामह, ब्रह्मा, नायक आदि ।

**दुई** जोडा बनाउने शब्दहरू जस्तै हस्त, कर, नयन, अक्षि, नेत्र, कर्ण (कान), कुच, ओष्ठ, द्वन्द्व, अश्विन् आदि र यिनका पर्यायवाची शब्दहरू ।

**तीन** गुण (सत्व, रज र तम गरी तीन गुण), राम (दशरथका छोरा, परशुराम र बलराम),भुवन, लोक, दहन, वह्नि, र अग्निका अन्य पर्यायवाची शब्दहरू, रत्न (बुद्ध, धर्म र संघ गरी त्रिरत्न) आदि ।

**चार** श्रुति र वेदका पर्यावाची शब्दहरू, समुद्र, अब्धि (र पर्यायवाची शब्दहरू), केन्द्र, वर्ण, आश्रम, युग, संवत्सर, तुर्य, गति, आदि ।

**पाँच** बाण, शर, पाण्डव, महाभूत, तत्त्व, भाव, इन्द्रिय, रत्न, तत्त्व आदि ।

**छ** रस, ऋतु, राग, दर्शन, षण्मुख, शास्त्र, कारक, तर्क आदि ।

**सात** पर्वत, शैल र समानार्थी शब्दहरू, ऋषि, वार, स्वर, धातु, अश्व, तुरग र पर्यायवाची शब्दहरू, द्वीप, मातृका (सप्तमातृका) आदि ।

**आठ** वसु, अहि, नाग, गज, दिग्गज, द्वीप, सर्प, मङ्गल, दिक् वा दिशा आदि ।

**नौ** अङ्क, ग्रह, निधि, दुर्गा, पदार्थ आदि ।

**दश** दिशा, दिक्, आशा, अङ्गुली, पंक्ति, रावणशिर, अवतार आदि ।

**एघार** रुद्र, ईश्वर, हर, महादेव, अक्षौहिणी आदि ।

**बाह्र** रवि, सूर्य, अङ्क आदित्य, मास, राशि आदि ।

**तेह्र** विश्वेदेवा, काम, विश्व, अतिजगति आदि ।

**चौध** मनु, विद्या, इन्दु र पर्यायवाची शब्दहरू आदि ।

**पन्ध्र** तिथि, दिन र पर्यायवाची शब्दहरू, पक्ष आदि ।

नेपालमा यस पद्धतिमा संवत्का केही वर्षहरू यसरी लेखिएका पाइन्छन् :

क. **संवत्सरवेदाब्धिचन्द्रे** अर्थात् संवत्सर ४, अब्धि वा समुद्र ४, चन्द्र १ गरी ४४१ हुन्छ र अङ्कहरूको बायाँ गति हुने सिद्धान्तबमोजिम १४४ हुनजान्छ ।

ख. **आकाशनयनदहन** : आकाश ०, नयन वा आँखा २ र दहन वा अग्नि ३ गरी क्रमतः ०२३ हुन्छ र यी संख्याहरूलाई बायाँतिर पढ्दा ३२० हुनजान्छ ।

ग. **भुजग्रहाक्षिगुणिते** : भुजा २, ग्रह ९, अक्षि वा आँखा २ जसलाई बायाँ पढ्दापनि २९२ नै हुनजान्छ ।

घ. **ऋतुग्रहसमायुक्ते संवत्सरशतद्वये** : ऋतु ६, ग्रह ९ र २००, बायाँबाट पढ्दा २९६ हुन्छ ।

ङ. **संवत्सरयुगे जाते चन्द्रवह्निसमन्विते** : युग ४, चन्द्र १, वह्नि ३, बायाँ पढ्दा ३१४ हुन्छ ।

च. **रसपंक्त्यग्निसंख्याते** : रस ६, पंक्ति १०, अग्नि ३, बायाँतिर पढ्दा ३, १० र ६ गरी ३१६ हुन्छ ।

छ. **गुणषड्बह्नि** : गुण ३, षड् ६, वह्नि ३, बायाँतिर पढ्दा पनि ३६३ हुन्छ ।

ज. **खस्वरखरै** : ख (आकाश) ०, स्वर ७, खर ७ जसलाई बायाँतिर पढ्दा ७७० हुन्छ ।

## ३. दशमलवपद्धति

दशमलव पद्धतिमा जम्मा १० चिह्न हुन्छन् : एकदेखि नौ र शून्य। स्थानमान सिद्धान्तको अनुसरण गरेर १ देखि ९ सम्मका अङ्कहरू र शून्यको सहायताले जति पनि अङ्क लेख्न सकिने यस सार्वभौम पद्धतिको बारेमा विशेष भन्नु आवश्यक छैन। दशमलव पद्धतिको आविष्कार निकै पहिले भारतमै भएको मानिन्छ।[१८] तथापि यस पद्धतिमा लेखिएका अङ्क पहिलोपल्ट ५९४ ई.को गुर्जरवंशी राजाको ताम्रपत्रमा पाइन्छन्।[१९] सुदूरपूर्व एशियामा इण्डोनेशिया, मलेशिया र कम्बोडियामा यस पद्धतिमा लेखिएका सातौं शताब्दीका अभिलेखहरू पाइएका छन्।[२०] प्रचलित मान्यता अनुसार भारतबाट दशमलवपद्धति ७७३ ई.मा ईराक पुग्यो र नवौं शताब्दीतिर अरबमा यसको लोकप्रियता बढ्यो। बाह्रौं शताब्दीतिर यो यूरोप पुग्यो तर त्यसलाई यहाँ लोकप्रियता हासिल गर्न लामो समय लाग्यो।[२१] भारतका आरंभिक लेखहरूमा यस पद्धतिमा अङ्क लेख्ता केही गल्ती भएका पनि पाइन्छन्। तर यसले भारतमा अपेक्षाकृत चाँडैनै लोकप्रियता हासिल गऱ्यो। दक्षिण भारत र नेपालमा भने निकै लामो अवधिसम्म अङ्क लेख्ने पुरानै परिपाटी कायम रह्यो। नेपालमा ११ औं शताब्दीपछि दशमलवपद्धतिको प्रवेश भएको देखिन्छ। तर धेरैसम्म पुरानो पद्धति प्रचलनमा थियो। शब्दाङ्क पद्धतिमा समेत दशमलव सिद्धान्तको अनुसरण गरिएको छ।

दशमलवको विकास भइसकेपछि पनि थप शून्यको साथ १ देखि ९ सम्मका पुरानै अङ्क प्रचलित रहेको देखापर्नु महत्त्वको विषय हो। प्राचीन पद्धतिमा पनि ठुला अङ्क साना अङ्कको देब्रेतिरै लेखिन्थ्यो। यसले भारतमा गणितको क्रमबद्ध विकासचरणको एक सुन्दर उदाहरण प्रस्तुत गरेको छ।[२२] नेपालमा दशमलवमा प्रयोग भएका अङ्कचिह्नहरू मध्यकालीन अक्षरलेखनको समान विविध पनि छन् र एकै किसिमको लेखनमा पनि अङ्कस्वरूपमा एकरूपता पनि पाइँदैन। यसकारण कहिलेकाहीं भ्रमको सिर्जना हुनेगर्छ। (फलक ३५)

## ४. अक्षराङ्कपद्धति

अक्षरबाट संख्या जनाउने पद्धतिलाई यसो भनिएको हो। केही विद्वान्हरूले अभिलेख र पाण्डुलिपिहरूको पृष्ठसंख्यामा प्रयोग भएको उपर्युक्त प्राचीन

पद्धतिलाई पनि अक्षराङ्क मानेका छन् भन्ने कुरा माथि परेको छ। यिनमा एकदेखि तीनसम्मका अङ्कहरूका निम्ति अक्षरका स्पष्ट प्रयोग भएको छ। बाँकि अक्षरहरूसँग मेल खाने कतिपय अङ्कहरू नभएका होइनन्। तिनलाई पनि अक्षराङ्क मानेका ती नेपालमा यस प्रकारका पाइन्छन् :

| | | |
|---|---|---|
| १. ए, स्व, ॐ र एउटा तेर्सो रेखा | ९. ढे, डो, तो,? | ८०. थ (?) |
| २. द्वि, स्ति, न र दुई तेर्सो रेखा | १०. ण्ट ण्ड | ९०. कुनै वर्णसँग मिल्दैन। |
| ३. त्रि, श्री, मः र तीन तेर्सो रेखा | २०. थ | १००. अ |
| ४. प्क, ञ्क | ३०. ल | |
| ५. हु, हृ | ४०. प | २००. आ |
| | | ३००.आु |
| ६. ट, टा, भ्र, भू | ५०. लृ ? | ४००. अ प्क |
| ७. गु, पु, त्रु, | ६०. चु | ५०० अ हु/हृ |
| ८. ड, टु | ७०. चू | |

## ५. अक्षरपल्ली

दशमलव पद्धतिका आधारमा अङ्कका ठाउँमा अक्षरहरूको प्रयोग गरेर संख्या बताउने अक्षराङ्कको अर्को एक पद्धति वा अक्षरपल्लीका अनेक प्रकार प्रचलित छन्। त्यसको एक प्रकारको पद्धतिको आरम्भ आर्यभट प्रथमले ५०० ई. तिर गरेको मानिन्छ।[२३] यस प्रकारमा **क** देखि **म**सम्मका हलन्तअक्षरहरूले क्रमशः १ देखि २५ सम्मका अङ्क व्यक्त गर्दछन् ; जस्तै **क्**=१, **ख्**=२, **ग्**=३ आदि। यसबमोजिम **क्**देखि **म्**सम्मका स्वररहित व्यञ्जन वा हलन्तलाई **वर्गाक्षर** भनिन्छ। **य**देखि **ह**सम्मका व्यञ्जनहरू **अवर्गाक्षर** भनिन्छन् जो क्रमशः ३० देखि १०० सम्म दशस्थानीय अङ्क जनाउँदछन्। स्वरहरू शून्य व्यक्त गर्दछन्। तर स्वरसहित व्यञ्जनको अर्थ शून्ययुक्त अङ्क भन्ने हुन्छ। यसरी **ह**को १०, **इ**को १००, **उ**को १०००, र **ऋ**को १०,०००० हुन्छ। यसै गरी **लृ ए ऐ ओ औ**ले १०,०००० भन्दा अगाडिको दशले गुणित हुँदै क्रमशः बढ्दै जाने संख्या बताउंछन्। उदाहरणार्थ, हलन्त **ग्**ले **३** भन्ने जनाउंछ भने **अ**स्वरसहितको **ग**ले **३०** र **गि**ले **३००** भन्ने अर्थ गर्छन्। यसैगरी **य (य्+अ)=३००; य्**मा **अ**को ठाउँमा **इ** स्वर भएमा **यि**को एक अर्को शून्य भएको अङ्क अर्थात् **३०००** भन्ने अर्थ हुन्छ।[२४] यस पद्धतिको उपयोग गणित र ज्यौतिषका केही ग्रन्थहरूमा भएको पाइन्छ। तर यो नेपालमा कहिल्यै सर्वसाधारण उपयोगमा आएको र अभिलेख वा पाण्डुलिपिमा प्रयोग भएको देखिंदैन।

अक्षराङ्कको अर्को पद्धति **'कटपयादि'** भनिन्छ।[२५] १ देखि ९ अङ्क र शून्यका निम्ति वर्णहरूको प्रयोग गरिने यो पद्धति पहिलोभन्दा अधिक छिटो छरितो हुन्छ। **क्ट्प्य्**को अङ्कात्मक मूल्य १ भएकोले र यसबाट यस पद्धतिको आरंभ हुने भएकोले यस पद्धतिको नाम **कटपयादि** परेको हो। केही कवि शब्दको सामान्य अर्थको साथसाथ संख्यावाचक अर्थ निकाली चमत्कार देखाउन समर्थ भएका

छन् । यस अनुसार वर्णहरूको अङ्कमान यस प्रकार हुन्छ : **क् ट् प् य्=१, ख् ठ् फ् र्=२, ग् ड् ब् ल्=३, घ् ढ् भ् व्=४, ङ् ण् म् श्=५, च् त् ष=६, छ् थ् स्=७, ज् द् ह्=८, झ् ध्=९, ञ् न्** र **स्वरवर्ण**=१ हुन्छ । यो पद्धति भारतका केही अभिलेख, दानपत्र र पाण्डुलिपिहरूमा प्रयोग भएको छ । यस पद्धतिमा संयुक्त व्यञ्जनमा अन्तिम व्यञ्जनको मात्र संख्यामान भएको मानिन्छ। यसको क्रम पनि शब्दाङ्कपद्धति जस्तै हुन्छ, अर्थात् पहिले इकाईपछि क्रमशः दशमान र शतमान इत्यादि हुन्छ। उदाहरणार्थः **भ व ति** = ६४४ अर्थात् ४४६ । **रा घ वा य** = १४४२ अर्थात् २४४१ ।

यिनको अतिरिक्त केही अन्य प्रकार पनि प्रचलित छन् । तर तिनको उपयोग नेपाली लेखोटमा भएको पाइँदैन ।

## टिप्पणी

१. वैदिक साहित्यमा १० खरबसम्मको संख्याको उल्लेख भएको कुरा माथि अध्याय ८ मा परेको छ ।
२. A. C. Burnell, **Elements of South Indian Paleography** (London, 1878). 60–65, जहाँ उनले लेखेका छन्, "अशोकका अङ्कचिह्नका क्रमको उत्पत्ति उही, (डेमोटिक) क्रमबाट भएको हो, तर यसको विकास भारतमा भयो ।"
३. जर्ज बूलर, **भारतीय पुरालिपिशास्त्र** (मंगल नाथ सिंहद्वारा हिन्दीमा अनुदित)(मोतीलाल बनारसी दास, १९६६), पृष्ठ १६९ । उनी लेख्छन्: "ब्राह्मीका अङ्कचिह्न मिश्रको गूढआकृतिहरूबाट (हियरेटिकबाट) व्युत्पन्न भएका हुन् र हिन्दुहरूले तिनलाई अक्षरहरूमा रूपान्तरित गरे किनभने ती शब्दहरूको माध्यमले संख्या व्यक्त गर्न अभ्यस्त थिए ।" गौरीशङ्कर हीराचन्द ओझा, **भारतीय प्राचीन लिपिमाला**, दिल्ली, १९५९, पृ.११४ । विभूति भूषण दत्त र अवधेश नारायण सिंह, **हिन्दु गणित शास्त्र का इतिहास, भाग १ अङ्क संकेत और अङ्क गणित** (लखनऊः हिन्दी समिति, १९४७) पृष्ठ २० र अगाडि ।
४. ओझा, **उही** पृष्ठ ११४ । उनले लेखेका छन् "प्राचीन शैलीका भारतीय अङ्क भारतीय आर्यहरूद्वारा आविष्कार गरिएका हुन् ।" विभूति भूषण दत्त र अवधेश नारायण सिंह, **ऐजन**, पृष्ठ ३१ ।
५. Bhagawan Lal Indraji, "On Ancient Nagari Numeration From An Inscription At Nanaghat" **Journal Of the Bombay Branch of the Royal Asiatic Society,** vol XII (1876), P. 404, दत्त र सिंह, टिप्पणी ३, पृष्ठ २१ मा उद्धृत ।
६. दत्त र सिंह, **उही**, पृष्ठ २१ ।
७. ओझा, **टिप्पणी** ३, पृष्ठ १०४-१०५; बूलर, **टिप्पणी** २, पृष्ठ १६०-१६७, दत्त र सिंह, **उही**, पृष्ठ २८ ।
८. ओझा, **ऐजन**, पृष्ठ १०८; शङ्करमान राजवंशी, " नेपाली लिपि विकास" **कैलाश**, वर्ष २, अङ्क १-२, १९७२, लिपिचित्र (अङ्क) ७, ८, ११, १२ ।
९. ओझा, **ऐजन**, पृष्ठ १०९ ।
१० **टिप्पणी** ५ र दत्त र सिंह, पृष्ठ २९,३०-३१ मा उद्धृत ।

११. James Princep in the **Journal of Asiatic Society of Bengal**, 1838, दत्त र सिंह पूर्वोक्त, **टिप्पणी** ३, पृष्ठ २१ मा उद्धृत ।

१२. बूलर, **टिप्पणी** ३, पृष्ठ ११८ ।

१३. ओभ्रा, **टिप्पणी** ३, पृष्ठ १०७-१०८, राजवंशी, २००. **टिप्पणी** ८, लिपिचित्र (अङ्क), ९, १०, १२ ।

१४. ओभ्राले (**पूर्ववत्**, पृष्ठ ११९) यस पद्धतिलाई "शब्दहरूबाट अङ्क बताउने भारतीय शैली", बूलरले (**पूर्ववत्**, पृष्ठ १७२) "शब्द संख्यांक", शङ्करमान राजवंशीले (**पूर्वोक्त** टिप्पणी ८, पृष्ठ ५८) "संख्यालाई कहने अङ्क निघण्टु" र अवधेश नारायण सिंह र विभूति नारायण दत्तले (**पूर्वोक्त** टिप्पणी ३, पृष्ठ ४३) "शब्दांकपद्धति" भनेका छन् ।

१५. अवधेश नारायण सिंह र विभूति नारायण दत्तको विचारमा चौथो शताब्दीका पुलिशसिद्धान्त र सूर्य सिद्धान्तमा यस पद्धतिको प्रयोग देखिएको हुनाले कम्तीमा त्यसको दुई शताब्दी पहिलेनै यसको विकास भइसकेको हुनुपर्छ । **उही**, पृष्ठ ५१ ।

१६. अवधेश नारायण सिंह र विभूति नारायण दत्त **ऐजन**, पृष्ठ ४९ ।

१७. **ऐजन**, पृष्ठ ४४-४६: ओभ्रा, **पूर्ववत्**, पृष्ठ १२०-१२१; बूलर, **पूर्ववत्**, पृष्ठ १७२-१७५, राजवंशी, पृष्ठ ५८-५९ ।

१८. दत्त र सिंह, **पूर्वोक्त** टिप्पणी ३, पृष्ठ ३१, ३९ । **ऐजन**, पृष्ठ ४२, दत्त र सिंहको विचारमा (**ऐजन**, पृष्ठ ४२) भारतमा दशमलवको आविष्कारलाई प्रथम शताब्दी ईसापूर्वमा राख्न सकिन्छ ।

१९. **ऐजन**, पृष्ठ ३२ ।

२०. **ऐजन**, पृष्ठ ३५ ।

२१. ओभ्रा, **पूर्ववत्**, पृष्ठ ११७-११८ । उनले यस सन्दर्भमा **एन्साइक्लोपीडिया ब्रिटानिकालाई** उद्धृत गरेकाछन् । अरबको माध्यमले युरोपमा पुगेको कारण यस पद्धतिको अङ्कलाई त्यहाँ 'अरेबिक' भनिएको हो ।

२२. दत्त र सिंह, **पूर्ववत्**, पृष्ठ २२, ३९-४० ।

२३. **उही** पृष्ठ ५३; ओभ्रा, पृष्ठ १२१-१२२ ।

२४. **उही** पृष्ठ ५६-५७ ।

२५. **उही** पृष्ठ ५८-५९, ओभ्रा, **उही**, १२३ ।



# अध्याय बाईस

# ग्रन्थलेखनकला

मसीमा कलम वा बुरूस चोपेर नरम खालको लेखनसामग्रीमाथि लेखिएको लामो रचनाको लेखोट अर्थात् पाण्डुलिपिलाई ग्रन्थ वा किताब भनिन्छ। संसारका विभिन्न ठाउँहरूमा पेपिरस, रेशम, कपडा, छाला, ताडपत्र वा भोजपत्रका धेरैथोर पानाहरूमा उनिएका वा तह वा मुठा पारिएका ग्रन्थ पाइन्छन्। दक्षिण एशियामा ग्रन्थलेखनमा अधिकतर ताडपत्र, भोजपत्र र कागतको उपयोग भएको छ। नेपालमा पनि पहिले ताडपत्रका र पछि कागतका ग्रन्थहरू पाइन्छन्।[१]

समान आकारमा काटिएका पानाहरूलाई सिलसिलेवार ढंगले राखी उनेर वा सिएर तयार गरिने भएकोले ग्रन्थ भनिएको हो। ग्रन्थ साना पनि छन्, ठुला पनि। ताडपत्रग्रन्थ कागतका ग्रन्थभन्दा कम उँचाईका र धेरै लम्बाईका हुन्छन्। ग्रन्थको लम्बाईबमोजिम पानाहरूमा धागो उन्न बीचमा एकदेखि दुइवटासम्म प्वाल पारिएको हुन्छ। पानाका दुवै पृष्ठमा लेखिएका हुन्छन् र प्रत्येक पृष्ठमा पृष्ठसंख्या हुन्छ। कतिपय ग्रन्थहरूका पानाका बीचमा ससाना चित्र लेखिएका हुन्छन्। ग्रन्थको निर्माण गर्दा धेरै कुरामा विचार पुऱ्याउनुपर्ने हुन्छ। समान आकारको टुक्रा वा पानाको तयारी गर्ने, प्रत्येक पानामा सोझो हुने गरी लेखिने पंक्तिको निर्धारण गर्ने, लेखोटलाई छलेर धागो उन्न कहाँकहाँ र कतिवटा प्वाल पार्ने र कहाँकहाँ र कतिवटा चित्र लेख्ने भन्ने कुराको योजना बनाएर मात्र लेखकले काम सुरु गर्थ्योहोला। स्पष्ट बुझिने गरी समान दुरीमा लेख्ने काम सकिएपछि किनारामा पृष्ठसंख्या लेखिएका पानाहरूलाई क्रमले मिलाएर तल र माथि काठका हलुका गाता राखी बीचमा आवश्यक संख्यामा प्वाल पारिन्थ्यो र सुती धागो उनिन्थ्योहोला। लेखनसामग्री तयार गर्नु लगायत हातैले गरिने समग्र क्रियाकलाप ग्रन्थलेखनका विषय हुन्। यसरी निर्मित ग्रन्थमा आकर्षक सीप र मनोहर रुचि देख्न सकिन्छ। त्यसैले ग्रन्थलेखन स्वयं एक सीप हो, कला हो।[२]

## कला

ग्रन्थलाई आकर्षक र कलात्मक बनाउन अपनाइएका उपाय ग्रन्थ-निर्माणको सीपमा पाइने विशेषता हुन् : सफा र सुडोल अक्षरको लेखाई वा सुलेखनको उपयोग, अनेक थरिका मसी र रंगहरूको प्रयोग गरी पानाका बीचमा र ग्रन्थको हिफाजतको लागि बनाइएको काठका गातामा भित्रबाहिर गरी दुवैतिर लहरै बनाइएका चित्र। धागो उन्न छेडिएका प्वाल बचाएर लेख्नुपर्ने हुँदा प्रत्येक पानामा प्वालको संख्याअनुसार कलम वा स्तम्भ बनाई लेखिएको हुन्छ। कतिपय ग्रन्थमा त्यस्ता कलमहरूका बीचमा लघुचित्र बनाइएका हुन्छन्। केही ग्रन्थमा

किनारा र खालि ठाउँमा पनि चित्र वा डिजाइन बनाइएका हुन्छन्। यद्यपि सबै ग्रन्थमा चित्र हुँदैनन्।

## माध्यम

ग्रन्थलेखनको इतिहास लेखनको इतिहास जत्तिकै पुरानो हुनसक्छ। तर ग्रन्थका माध्यम धेरैसम्म नरहने कारणले ढुंगा र धातुका लेखोटभन्दा पुरानो ग्रन्थ पाइएको छैन।[३] संसारका विभिन्न ठाउँमा ग्रन्थलेखनमा विभिन्न वस्तुको उपयोग भएको छ। प्राचीन मेसोपोटामियामा मुछेको माटाको झिंगटी जस्तो पाटी बनाई तीखो कलमले अक्षर कोरेर घाममा सुकाई आगोमा पोलिन्थ्यो र यस्ता अनेकौं पाटीहरू मिलाएर एउटा पुस्तक तयार गरिन्थ्यो। प्राचीन मिश्र र यूरोपमा नरकट जस्तो वनस्पतिको डाँठबाट बनाइएको पेपिरसमा ग्रन्थ लेख्ने चलन थियो। पेपिरसका प्राचीन मिश्री ग्रन्थ र टिपोट पिरामिडमा पाइन्छन्। यस वनस्पतिको खेतीमा मिश्रका राजा (फाराहो) को एकाधिकार मानिन्थ्यो। कालान्तरमा ग्रीस र रोम हुँदै पेपिरसको चलन सारा यूरोपमा फैल्यो। पेपिरसका पुस्तक प्रायः एउटै बनाइएको टुक्रामा लेखेर मोडेर मुठा बनाइएको हुन्थ्यो। तेह्रौं शताब्दीमा यूरोपमा अरबबाट चीनियाँ कागतको चलन चल्नुअगिसम्म पेपिरसमै पुस्तक लेखिन्थे। भूमध्यसागर क्षेत्रको प्राचीन पुस्तकालयमा पेपिरसको साथसाथ बाच्छो वा भेडाको कमलो छालामा (पार्चमेण्टमा) लेखिएका अनेकौं पुस्तकहरू पाइएका छन्। हिमालय क्षेत्रका गुम्बाहरूमा काठका पाटीमा लेखिएका केही पुस्तकहरू पाइन्छन्। सुन र चाँदीका मोलम्मा लगाइएको काठको पाटीमा ग्रन्थ लेख्ने चलन बर्मामा चलेको पाइन्छ, जसका केही नमूना बृटीश संग्रहालयमा छन्। तर यो माध्यम धेरै लोकप्रिय रहेन।

प्राचीन संस्कृत साहित्यमा छालामा लेख्ने चलनको उल्लेख पाइन्छ। तर भारत र नेपालमा छालामा लेखिएको पुरानो पाण्डुलिपि पाइँदैन।[४] त्यहाँ ताडपत्रकै चलन बढी चल्यो। यद्यपि कतिपय प्राचीन ग्रन्थहरूमा भूर्जपत्र वा भोजपत्रमा लेखिएका ग्रन्थहरूको उल्लेख पाइनुको साथै भारतमा भोजपत्रग्रन्थका केही प्राचीन उदाहरणहरू पाइन्छन्।[५] हिमालय क्षेत्रमा हुने त्यस माध्यमको उपयोग नेपालमा लोकप्रिय भएन। बरु यहाँ सुदूर दक्षिणमा हुने ताडपत्रको लोकप्रियता हुनु आश्चर्यको विषय भएको छ।[६] सोह्रौं शताब्दीदेखिका नेपालमा लेखिएका धेरैजसो ग्रन्थहरू पहेँलो वा नीलाकालो पाको कागत वा नीलपत्रका छन्।

## ताडपत्र

नेपालका सुरुका ग्रन्थ पामीराको पातभन्दा चौडा र उत्तम खालको तालीपात वा ताडीपटका छन्। पछिका ग्रन्थहरू भने साधारण पामीरा जातको ताडपत्रका छन्। ताडपत्र ग्रन्थको उँचाई प्रायः ७ सेण्टिमीटर हुन्छ र लम्बाई भने २०देखि ५० सेण्टिमीटरसम्म हुन्छ। यिनमा आवश्यकता अनुसार काटिएका टुकडा वा पानाको सतहमा कालो मसी र कलमले लेखिएको हुन्छ। तीखो कलम

वा स्टाइलसले अक्षर कुँदेर मसी भर्ने दक्षिण भारतको चलन नेपालमा अज्ञात थिएन तर लोकप्रिय कहिल्यै भएन।[७] ताडपत्रग्रन्थको पुरानो नमूना ईसवीको दोस्रो शताब्दीसम्मको पाइएको छ।[८] मध्य एशियाको काशगर र जापानको होर्युजी विहारका ताडपत्र पाण्डुलिपि क्रमशः चौथो र छैठौं शताब्दीका मानिन्छन्।[९]

राष्ट्रिय अभिलेखालयमा रहेको स्कन्दपुराण ग्रन्थलाई हरप्रसाद शास्त्रीले सबभन्दा पुरानो ठानी सातौं शताब्दीका मानेका छन्।[१०] बेलाइतको क्याम्ब्रिज विश्वविद्यालय पुस्तकालयमा राखिएको 'परमेश्वरतन्त्र' शीर्षकको ग्रन्थमा संवत् २५२ लेखिएको छ जसलाई अंशुवर्माको पालामा चलेको संवत् मान्दा ८२८ ई. हुनआउँछ।[११] काठमाडौंको केसर पुस्तकालयमा राखिएको 'सह्योत्तरतन्त्र'मा सं. ३०१ (८७७ ई.) अङ्कित छ।[१२] नेपालसंवत् २८को (९०८ ई.को) लङ्कावतार अर्को पुरानो ताडपत्रग्रन्थ हो।[१३] (फलक २१)। नेपालमा कागतको प्रवेशको निकै पछिसम्म अर्थात् सोह्रौं शताब्दी ई.सम्म पनि ग्रन्थलेखनमा ताडपत्रको उपयोग लोकप्रिय रहेको पाइन्छ। तर यहाँ अठारौं शताब्दी ई.सम्म पनि सानातिना तमसुक र टिपोट जस्ता फुटकर र व्यावहारिक लेखनमा ताडपत्रको उपयोग भइरहेको पाइन्छ।

## कागत

मध्य एशियामा पाइएको कागतका ग्रन्थका केही पृष्ठहरूमा पाँचौं शताब्दीताका उत्तर भारतमा चलेको लिपि पाइन्छ[१४], तर सो कागत कहाँ बनाइएको थियो थाहा छैन। पश्चिम भारतमा कागतका ग्रन्थ तेह्रौं-चोधौं शताब्दीका पाइएका छन्।[१५] नेपालमा कागत बनाउने चलन निकै पुरानो हुनुपर्छ। लोक्तानिर्मित पातलो कागतका अनेक ताउलाई गुँदले टाँसेर मोटो र दह्रो बनाएपछि हरिताल वा नीलो तुथो दलेर पहेँलो र नीलोकालो गरी दुई रंगको हुन्छ। नीलो कागतमा हमेशा सेतो र पहेंलो अर्थात् चाँदी र सुन जस्ता हलुका रङ्गको मसीको उपयोग भएको छ र पहेंलो कागतमा प्रायः कालो मसीको। कागतका आरम्भिक ग्रन्थका पाना ताडपत्र झैं साधुँरा छन्। तर पछि ऊँचाई बढ्दै गयो र सिउने चलन हरायो। कतिपय कागतका ग्रन्थमा पनि ग्रन्थचित्र पाइन्छन्। यसमा पनि तल र माथि गाता राखी बस्ता (कपडा) ले लपेट्ने चलन पाइन्छ। पहिलो ज्ञात कागतको ग्रन्थ ११०५ ई.मा पहेंलो कागतमा लेखिएको छ। नीलपत्र कागतमा ११८५ ई.मा लेखिएको ग्रन्थको बारेमा थाहा भएको छ।[१६] सत्रौं शताब्दी ई.देखि काठमाडौं उपत्यकामा कागतका टुक्राहरू जोडी बराबर पानाको आकारमा उल्टोसुल्टो पट्याएर ग्रन्थ तयार गर्ने चलन लोकप्रिय भयो। यसलाई नेपालभाषामा ठ्यासफू अर्थात् पट्याइएको किताब भनिन्छ। चित्रात्मक ठ्यासफूलाई केही लेखकले कलापुस्तक भनेका छन्।

## लेखन र उपकरण

आरम्भिक नेपाली ग्रन्थमा परवर्ती चरणको लिच्छविलिपिको उपयोग भएको छ, जसलाई कतिपय लेखकहरूले कुटिला, नागरी वा सिद्धमात्रिका भनेका

छन् । बाह्रौं शताब्दीदेखिका ग्रन्थहरू रञ्जना र भुजिँमोः तथा पछिपछिका प्रचलित नेवारीका पाइन्छन् । रञ्जनाका पुच्छरदार चौडा वर्ण र भुजिँमोःको अङ्कुशे शिरोरेखा भएका सफा, छरिता र साना वर्ण स्वयंमा सुलेखनका नमुना हुन् । सुनको मसीको उपयोग ताडपत्र र कागत दुवैमा भएको छ । ताडपत्रमा सुनको उपयोग गर्नु धैर्यको काम हो । नीलपत्र ग्रन्थको नीलोकालो पृष्ठभूमिमा सुनौलो आभा धेरै आकर्षण पैदा गर्छ ।

प्राचीन साहित्यमा लेखनी अर्थात् कलम, मसी, मसीपात्र, कूर्चिका अर्थात् बुरुस, सोझो लाइन तान्न उपयोग गरिने शलाका (रुलर) वा तन्काउने सूत्र वा धागोको तान (कापाः) र चक्कू जस्ता उपकरणहरूको उल्लेख पाइन्छ । नेपालमा निगालोको कलम उपयोग गरिन्थ्यो । आँख्लाहरूको बीचमा काटिएको निगालोको एक टुप्पोलाई तेर्सो गरी नीबको आकारमा काटेर कलम तयार गरिन्थो । खयर वा कत्थाका पात, लाहा, स्वाग वा सुहागा र ध्वाँसो वा गाजल पकाएर कालो मसी बनाइन्थ्यो । विभिन्न खनिज पदार्थमा लाहा र गुँद मिलाएर अनेक रंगका मसी बनाइन्थ्यो । हिंगुल अर्थात् सिन्दुरबाट रातो र हरितालबाट पहेँलो रंग बनाइन्थ्यो । नीलपत्रमा अक्षर लेख्न र सबै माध्यमका पुस्तकमा चित्र लेख्न प्रयोग हुने सुन र चाँदीका मसी बनाउन निकै मिहेनत गर्नुपर्थ्यो । ससाना पातालाई पिटीपिटी बनाइएका बरक वा तपकलाई गुँदमा घोटेर मसी तयार गरिन्थो । स्थानीय पदार्थको बुरुस बनाइन्थ्यो । चाँदी, पीतल, ढलोट वा पक्की माटोको मसीपात्र बनाइन्थे । तन्काइएका धागाहरूको तानबाट पाना वा पत्रमा सोझो रेखा बनाइन्थ्यो । त्यस्तो तानलाई नेपालभाषमा कापाः भनिन्छ । त्यसरी बनेको धागोको डोबले सोझो लाइनमा लेख्न मदत गर्थ्यो । यसो गर्न बेलनआकारको (डोलो) शलाकाको उपयोग गरिन्थ्यो जो नेवारीमा दासी भनिन्छ ।[१७] लेखनसामग्रीलाई सही आकारमा काट्न, कलम बनाउन र अशुद्ध लेखिएमा त्यसलाई खुर्केर मेट्न चक्कूको उपयोग हुन्थ्यो ।

## ग्रन्थचित्र

कतिपय ग्रन्थका पानाको बीचमा ससाना कलापूर्ण चित्रको साथसाथ ग्रन्थको जतनका लागि तल र माथि राखिने काठको च्याप्टो फलेक वा गाताका बाहिरी र भित्री भागमा समेत चित्र बनाइएका पाइन्छन् । यिनमा सुनचाँदीसहित अनेकौं रंगहरूको उपयोग भएको छ । पानाका चित्रहरू आफ्ना उँचाई अनुरूप ५ से.मि.वर्गका हुन्छन् र लघुचित्र (miniature painting) भनिन्छन् । उँचाई कम भएता पनि लम्बाई प्रशस्त हुने पानाको आकारको काठका गातामा भने लहरै बनेका कोठामा समान आकारका अनेकौं चित्र लेखिएका हुन्छन् । प्रत्येक पानामा सिउने प्वाल छलेर बनाइने चित्रको संख्या पनि ग्रन्थको लम्बाई हेरी एकदेखि तीनवटासम्म हुन्छन् । करीब ४४ से.मी. लम्बा ताडपत्र ग्रन्थको पृष्ठमा प्रायः दुईवटा चित्र पाइन्छन् । ३३ से.मी. लामो ग्रन्थको प्रत्येक पानाको बीचमा एउटै चित्र बनेको पनि पाइन्छ ।[१८] ग्रन्थचित्रमा वोधिसत्व, तारा, प्रज्ञापारमिता, वसुधारा, शिव, विष्णु वा देवी जस्ता देवीदेवताका आकृति बनाइएका हुन्छन् ।

ग्रन्थचित्रको विचार बौद्धहरूको मानिएतापनि कतिपय नेपाली ग्रन्थहरूमा हिन्दु देवदेवीका पनि चित्र बनाइएका छन् । बौद्धग्रन्थमा प्रायः ६वटाको समूहमा १८ चित्रहरूको आकलन गरिएको छ । अष्टसाहस्रिकप्रज्ञापारमिता वा प्रज्ञापारमिता नामक ग्रन्थ चित्रकालागि प्रसिद्ध छ । प्रज्ञापारमितामा प्रायः स्वयं प्रज्ञापारमितादेवी, बुद्धको जीवनका आठवटा आश्चर्यजनक दृश्यहरू, ध्यानीबुद्ध र बोधिसत्वका चित्रहरू लेखिएका हुन्छन् । गाताचित्रहरूमा बुद्धको जीवनी, पौराणिक कथाका दृश्यहरू, शिव, विष्णु र दशअवतार जस्ता विषय हुन्छन् ।

नेपाली ग्रन्थचित्र र गाताचित्रका नमुनाहरू नेपाल राष्ट्रीय अभिलेखालय, केशरपुस्तकालय, भक्तपुर संग्रहालय, राष्ट्रीय संग्रहालयको साथसाथ विदेशका विभिन्न ठाउँका पुस्तकालय र संग्रहालयमा संग्रहित छन् । भारतमा यी कोलकताका एशियाटिक सोसाइटी र आशुतोष संग्रहालय, दिल्लीको राष्ट्रीय संग्रहालय, वाराणसीको काशी हिन्दु विश्वविद्यालयको भारत कलाभवन, बेलाइतका क्याम्ब्रिज विश्वविद्यालयपुस्तकालय, इण्डिया अफिस लाइब्रेरी र ब्रिटीश संग्रहालय तथा संयुक्त राज्य अमेरिकाका न्यु योर्कको मेट्रोपोलिटन म्युजियम, लस एन्जेलेसको काउण्टी म्युजियमको साथसाथ अनेकौं नीजी संग्रहालयमा संग्रहित छन् । हालसम्म पाइएका ग्रन्थचित्रहरूका नमूनाहरूमध्ये १०१५ ई.मा नेपालमा लेखिएको प्रज्ञापारमिता ताडपत्र ग्रन्थ दक्षिण एशियामा पहिलो हुनआएको छ ।[१९]

अक्षर लेख्न नपर्ने काठको गातामा साना चित्र बनाउने बाध्यता हुँदैन । यसमा चित्रकारले ठुलो ठाउँको साथसाथ स्वतन्त्रता पनि बढी पाउँछ । तथापि पूर्ण अङ्गका चित्र विरलै हुन्छन् । गातामा लहरै कोठाहरू बनाइएका हुन्छन् जसमा प्रायः बुद्धको जीवनीका दृश्य, आफ्ना सहयोगी देवदेवी र भक्तहरूका साथ बसेकी देवी प्रज्ञापारमिता, विष्णुका दश अवतारका चित्रहरू लेखिएका हुन्छन् । १०२८ ई.को प्रज्ञापारमितामा लागेका गाता र १०५४ ई.को ग्रन्थका गाता नेपाली गाताचित्रका पुराना नमुना छन् । सम्बन्धित दुवै ग्रन्थहरूका पानामा चित्र बनेको छैन ।[२०] पालकालीन भारतीय ग्रन्थका गाताचित्र धेरै पाइँदैनन् ।

## इतिहास

ग्रन्थचित्रकलाको आरम्भ पूर्वी भारतका बौद्धहरूले गरेको मानिन्छ । वज्रयान जस्तो तान्त्रिक मतमा देवताको ध्यान र स्वरूपचिन्तनको ठुलो महत्त्व हुन्छ । बौद्ध ग्रन्थचित्रको लोकप्रियताको प्रमुख कारण यही रहेको देखिन्छ । तथापि पूर्वी भारतमा बौद्ध र पश्चिम भारतमा जैन ग्रन्थहरूमा एघारौं शताब्दीको उत्तरार्धदेखि मात्र ग्रन्थचित्र पाइन्छन् । तिथियुक्त ग्रन्थ नभेटिएकोले स्वयं बंगालमा ग्रन्थकलाको सुरुवातको इतिहास स्पष्ट छैन । रचनाकालको बारेमा यकीन गरी भन्नसकिने बंगालका सचित्र ग्रन्थहरू एघारौं शताब्दीको मध्यदेखि बाह्रौं शताब्दीको उत्तरार्धसम्मका पाइएका छन् ।[२१] नेपालमा ग्रन्थचित्रहरूका नमूना केही पहिल्यै अर्थात् एघारौं शताब्दीको पूर्वार्धदेखि अठारौं शताब्दीसम्मका पाइन्छन् । नेपालमा ग्रन्थचित्रनै चित्रकलाका प्राचीनतम उदाहरण हुनआएका

छन् । कतिपय ग्रन्थचित्र उण्डाइसौं शताब्दीमा समेत पुनःस्पर्श गरिएको (retouched ) पाइन्छ ।

ग्रन्थचित्रको अध्ययनमा अनेक समस्याहरू छन् । सबै ग्रन्थमा तिथिमिति हुँदैनन्, केहीमा अनेकौं हातको लेखावट पाइन्छ । पढ्ने र विहारमा दान दिने उद्देश्यले पुराना ग्रन्थहरू हुबहु सार्ने वा सार्नलगाउने प्रवृत्ति नेपालमा निकै पुरानो देखिन्छ र गाताचित्र अदलाबदली हुनसक्ने सम्भावना देखिएको छ। अतएव ग्रन्थचित्र र गाताचित्रको कालनिर्धारण सबै अवस्थामा ग्रन्थमा लेखिएको संवत्मा गर्नसकिँदैन । यस विषयमा गरिएका धेरैजसो अध्ययनमा समकालीन भारतीय कलापरम्परालाई यात बढी महत्त्व दिइएको छ या सर्वथा उपेक्षा गरिएको छ, तुलनात्मक अध्ययन भएको छैन र आफ्नोपनको पूर्वाग्रह बढी झल्कन्छ ।[२२]

आठौं शताब्दीदेखि बाह्रौं शताब्दीसम्मको पालवंशीराजाहरूको शासनकालमा पूर्वी भारतमा विकसित कलापरम्परालाई पालशैली भनिन्छ । ठुला चित्रको नमुनामा बनेका पालकालीन बंगाली ग्रन्थचित्रमा उभिएका बुद्धको चित्रपछ्यािडसमेत आसनको अडेस लगाउने भाग र बालिष्ट देखाउने चलन विकसित भएको देखिन्छ । पछिल्ला कालका पालग्रन्थकलामा मूर्तिविज्ञानको पुरा अनुसरण गरिएको छैन । असाधारण भङ्गिमा र समृद्ध अलङ्करण पालकलाका मुख्य विशेषता मानिन्छन् । कतिपय चित्रमा देवीदेवताका लागि निर्धारित पारम्परिक चिह्न र रंग पाइँदैनन् जसकारण ती चिन्न सकिँदैनन् । राजा रामपालको पालाको ग्रन्थचित्रमा हरियो रंगको सट्टा सर्वत्र नीलो रंगको संयोजन गरिएको छ । तथापि बुद्धको जीवनीसँग सम्बन्धित लघुचित्रहरू पालकालीन चित्रकलाका सुन्दर उदाहरण बनेका छन् । यिनमा गौरवमय आसनमा बसेका प्रभामण्डलसहितका बोधिसत्वका भव्य चित्र बनेका छन् । १०३५ को ग्रन्थचित्रमा देखिने अपूर्णता र भद्दापन अब देखिँदैन । अधिकांश ग्रन्थचित्रमा रंगको छनोट संयमित किसिमको छ । बाह्रौं शताब्दीका प्रज्ञापारमिता र कारण्डव्यूहसूत्र बंगालका अन्तिम ग्रन्थचित्र प्रतीत हुन्छन् । पछिल्लो ग्रन्थमा धेरै चित्र बनेका छन् । दुवै ग्रन्थमा सरलीकृत पालशैली पाइन्छ ।[२३]

अघिदेखिनै पालकालीन बंगाल र नेपालका बीच घनिष्ठ सांस्कृतिक सम्बन्ध कायम रहेको पाइन्छ ।[२४] बंगाल र विहारमा विकसित योगाचार र वज्रयानको परम्परा नेपालमा पनि स्थापित भएको देखिन्छ । १२०० ताकाको मुसलमानहरूको आक्रमणमा बंगाल र विहारका धार्मिक र शैक्षिक केन्द्रहरूको विनाश भएतापनि नेपालमा त्यस परम्पराका धेरथोर अवशेष पाइन्छ । सो आक्रमणबाट बच्न भाग्दै नेपाल आइपुगेका भिक्षुहरू पनि केही मात्रामा सो परम्पराका संवाहक रहेहोलान् । बाह्रौं शताब्दीदेखिका नेपाली ग्रन्थहरूमा पहिलोपल्ट हिन्दु देवदेवीका तस्वीर लेखिएका छन् । भारतमा यति पुराना हिन्दु ग्रन्थचित्रकलाको नमुना पाइँदैन ।[२५] यद्यपि बौद्धग्रन्थहरूको तुलनामा हिन्दु सचित्रग्रन्थ कम छन् र तिनमा शैलीगत भिन्नता पाइँदैन । यिनमा आरम्भिक हिन्दु देवदेवीका अनुहार मूर्तिविज्ञानबमोजिम बनाइएका भएतापनि बोधिसत्वको भन्दा फरक छैन ।[२६]

कतिपय लेखकले नेपाली ग्रन्थचित्रमा आरम्भदेखिनै पालशैलीका विशेषता हेर्नखोजेका छन्। तर कम्तीमा आरम्भिक नेपाली ग्रन्थचित्रकलामा पालशैलीको व्याख्या गर्न सकिँदैन। यसका धेरै कारण छन्। एक त, नेपाली कलाको परम्परा यति वेला नौलो थिएन। लिच्छविशासनको आरम्भदेखि नै काठमाडौं उपत्यकामा विकसित मूर्तिकलाको सुव्यवस्थित र मान्य परम्परा थियो। यद्यपि माध्यम, उपकरण र प्रविधिको साथसाथै कालमा फरक भएकोले एघारौं शताब्दीका ग्रन्थचित्र र पाँचौं-सातौं शताब्दीको मूर्तिकलाका विशेषताहरूको तुलना गर्न सकिँदैन। दुई, एघारौं शताब्दीको पूर्वार्धदेखिको नेपाली ग्रन्थचित्रभन्दा पुरानो ग्रन्थचित्र पूर्वी भारतमा पाइएको छैन। तीन, १०१५ को नेपाली ग्रन्थचित्र त्यसै शताब्दीको उत्तरार्धको बंगाल र नेपालको ग्रन्थचित्रभन्दा भद्दा र आरम्भिक किसिमको छ। यति हुँदाहुँदैपनि ग्रन्थचित्रको विचार, देवताको स्वरूप, रंग र त्यससम्बन्धी दर्शन भारतमै विकसित भएका हुन् र दुवैका साझा सम्पत्ति हुन् भन्ने कुरा बिर्सनु हुँदैन। यसै गरी पछिल्लो कालका नेपाली ग्रन्थचित्रमा देखिने कतिपय विशेषताहरू पालशैलीबाट प्रभावित भएका हुन् भन्न संकोच गर्नहुँदैन।

१०१५ ई.मा लेखिएको पहिलो नेपाली सचित्र ग्रन्थ बेलाइतको क्याम्ब्रिज विश्वविद्यालय पुस्तकालयमा राखिएको प्रज्ञापारमिता हो भन्ने कुरा माथि पाएको छ। यो ताडपत्र ग्रन्थ ५.२५ सेन्टीमिटर अग्लो र ५४ सेन्टीमीटर लामो छ। यसै शीर्षकको अर्को प्रसिद्ध नेपाली सचित्र ग्रन्थ नेपालसंवत् १९१/१०७१ ई.मा लेखिएको पाइएको छ, जो हाल कोलकाताको एशियाटिक सोसाइटीमा सुरक्षित छ। यी ग्रन्थचित्रहरूको तुलना गरी नेपाली ग्रन्थचित्रकलाको मूल्याङ्कन गर्नु चाखलाग्दो हुनेछ। जे.पी. लोष्टीको विचारमा यी दुवै पालकालीन भारतीय ग्रन्थजस्तै लागेतापनि शैलीगत दृष्टिले हेर्दा भने दुवै भिन्न छन्। पहिलो अर्थात् १०१५ को उदाहरण यस्तो प्रान्तीय शैलीको हो जो सबल तर भद्दा वा अपरिष्कृत छ तथा दोस्रो अर्थात् १०७१को ग्रन्थचित्र आफ्ना रेखा, रूपात्मकता, रंगसंयोजन र बनावटमा त्यस कालमा पाइने चित्रहरूमध्ये पूर्ण छ। १०१५ को ग्रन्थमा बलिष्ट शैलीका भद्दा चित्रमा १०७१को ग्रन्थचित्रमा झैं शास्त्रीय संगति पाइँदैन।[२६] पछिल्लो ग्रन्थचित्रमा सानो ठाउँ भएतापनि कलाकारले धेरै कुरा देखाएको छ। यसका कतिपय चित्रहरू साधनामा बयान गरिएको स्वरूपसँग मेल खाँदैनन्। यस ग्रन्थको सबभन्दा असाधारण चित्र लोकेश्वर र शक्तिको युगनद्ध चित्र हो। यसपछि नेपाली ग्रन्थचित्रमा यो धेरै लोकप्रिय भएको छ र शायद यहीँबाट तिब्बतमा पुगी यबयुमका नाममा ठुलो चित्रको विषय बनेको मानिन्छ।[२७] दुवै नेपाली भएता पनि यिनमा बाह्रौं शताब्दीको वास्तविक नेपालीशैलीका विशेषता पाइँदैनन्। जे.पी.लोष्टीले यी ग्रन्थहरूको चित्रकलालाई भारतमा लुप्त भएको कलाको नजिक रहेको ठान्दै यसबाट नेपाली र पालशैली विकसित भएको मानेका छन्। उनले उक्त नेपाली ग्रन्थचित्रहरूलाई बंगाल र बिहारसहित यसभेगको ग्रन्थचित्रकलाको प्रारम्भविन्दु मानेका छन्।[२८] दुवैमा पालशैलीमा झैं चित्रपछाडि आसनको अडेस लगाउने भाग र बालिष्ट बनाइएको छैन र एक चित्रमा एकभन्दा बढी देवता बनाइएको छैन। लोष्टीको विचारमा ग्रन्थचित्रपरम्पराको सुरुवात पूर्वी भारत र नेपालबाट भयो तथा पश्चिम र दक्षिण भारतमा फैलियो।[२९]

एघारौं शताब्दीका अन्य उदाहरणमा १०२८ ई.को प्रज्ञापारमिताका काठका गाताचित्र[३०] र क्याम्ब्रिज विश्वविद्यालयको १०५७ को पञ्चरक्षाको ग्रन्थचित्र प्रसिद्ध छन्।[३१] पहिलोमा उन्न बनाइएका दुइवटा प्वालहरू छलेर बुद्धजन्मको दृश्य, प्रज्ञापारमिता, हरिततारा र वसुधाराका चित्र बनाइएका छन्। एउटा गातामा बीचमा बालक बुद्धलाई अग्लो कमलमाथि उभिएको देखाइएको छ। बुद्धका देब्रेतिर पारदर्शी सारी लगाएर एक हातले रुखको हाँगा समातेकी र अर्को हात अर्की महिलाको काँधमा अडचाउँदै भंगिमाको साथ उभिएकी बुद्धकी आमा र बुद्धको दाहिनेतिर ब्रह्मा, इन्द्र र महादेव उभिएका छन्। अर्कोमा बीचमा कमलको आसनमा बसेकी चार हातकी प्रज्ञापारमिता र दायाँबायाँ दुई हातकी हरिततारा र वसुधारा देखाइएका छन्। यसमा अधिकतर रातो रंगको उपयोग गरिएको छ। पृष्ठभूमिमा हरियो रंगमा केराको थाम र पातको चित्रांकन गरिएको छ। चित्रमा सुनौलो-पहेँलो, सेतो, गाजलु-कालो, सिन्दुरेरातो, रातो र हरियो पानी रंगहरूको प्रयोग गरिएको छ। १०५७ को पञ्चरक्षाको ग्रन्थचित्रमा सुनको रंगको प्रयोग भएको छ। ताडपत्रमा सुनको उपयोग गर्ने यो आरम्भिक प्रयास देखिन्छ।

नेपाली ग्रन्थचित्रको विकासको लागि बाह्रौं शताब्दी महत्त्वको काल थियो। संयुक्तराज्यको क्लिभल्याण्ड म्युजियमको प्रज्ञापारमिता,[३२] लस एञ्जिलेस काउण्टी म्युजियममा रहेको गण्डव्यूह शीर्षकको ग्रन्थचित्र,[३३] कोलकाताको आशुतोष संग्रहालयमा रहेका ११०५ र १११९का दुई प्रति पञ्चरक्षा र कोलकाताकै एशियाटिक सोसाइटीमा रहेको ११४८को अष्टसाहस्रिकाप्रज्ञापारमिता, राष्ट्रिय संग्रहालयको संवत् २९४/११७४ ई.को तान्त्रिक ग्रन्थ पिङ्गलामतको गाता,[३४] र ब्रिटीशपुस्तकालयमा रहेका ११८५का नीलपत्रका वसुधाराधारिणी र नामसङ्गीति[३५] बाह्रौं शताब्दी ई.का ग्रन्थचित्रका प्रतिनिधित्व गर्दछन्। यी ग्रन्थहरूमा सामान्यतया १०७१कै शैली पाइन्छ, सुन्दरताको दृष्टिले यिनमा त्यो ऊँचाई देखिँदैन। यद्यपि केही ग्रन्थचित्र र गाताचित्र बढी मनोहर बनेका छन्। ११४८को अष्टसाहस्रिकाप्रज्ञापारमितामा धेरै चित्र छैनन् तर ती वास्तविक नेपाली शैलीको प्रतिनिधित्व गर्छन्। ग्रन्थचित्रमा हिन्दु देवदेवी देखाउने चलन पनि यसै शताब्दीमा आरम्भ भएको छ। संवत् २९४/११७४ ई.को तान्त्रिक ग्रन्थ पिङ्गलामतको गातामा ब्रह्मा, विष्णु, महादेव, शिवलिङ्ग, गणेश र कार्त्तिकेयका लघुचित्र बनाइएका छन्। ग्रन्थचित्रका विषयमा शिवलिङ्ग अन्यत्र विरलै पाइन्छ। यसमा भक्तहरूद्वारा घेरिएको शिवलिङ्गमा आँखा बनेका छन् जो विशुद्ध नेपाली विचार प्रतीत हुन्छ। क्लिभल्याण्डको प्रज्ञापारमितामा प्रत्येक पानामा ६ स्तम्भ (कलम), दुइवटा धागो छिराउने प्वाल र तीनवटा लघुचित्र छन्। लस एञ्जिलेस काउण्टी म्युजियममा रहेको गण्डव्यूह शीर्षकको ग्रन्थचित्रमा सादा पृष्ठभूमिमा देवीहरूको आकृति ज्यादै आकर्षक बनेका छन्। यी देवीहरू कतै स्तूपको र कतै केराको बोटको नजिकै र कतै जंगलमा मृगका साथ उभिएका वा बसेका देखाइएका छन्। ब्रिटीश पुस्तकालयका नीलपत्रका वसुधाराधारिणी र नामसङ्गीतिमा मझौला आकारका चित्र छन्। यिनमा प्रविधि उच्च छ, तर त्यत्ति

असरदार छैन। तथापि यी चित्रहरू सूक्ष्म नापमा पनि स्पष्ट विवरण देखाउन सफल देखिन्छन्।

तेह्रौं शताब्दीको ग्रन्थचित्रकलामा नौला विशेषताहरू देखापर्छन्। यसकालका केही गाताचित्रमा कतिपय लेखकहरूले नेपाली र अजन्ताकलाशैलीको समन्वय देखेका छन्।[३६] यतिखेर भारतमा ग्रन्थपरम्परा लुप्त भइसकेको थियो र नेपाल यस भेगका बौद्धहरूको प्रेरणाको एक्लो स्रोत बनेको थियो। राष्ट्रिय अभिलेखालयमा रहेको 'शिवधर्म' ग्रन्थको गाताचित्रको बीचमा शिव र पार्वती बनेका छन् र दाहिने गणेश र देब्रेतिर कार्तिकेय बसेका छन्।[३७] शिवको शिरमाथि पानी खन्याइरहेकी गंगा देखाइएको छ। पृष्ठभूमिमा कैलाशपर्वत बनाइएको छ। शिवका चार हातमध्ये एउटाले त्रिशूल र अर्कोले रुद्राक्षमाला समातेको छ, तेस्रोले पार्वतीको आलिङ्गन गरेको छ र चौथो व्याख्यानमुद्रामा छ। दायाँ बायाँ लहरै शिवपार्वतीको पूजा गरिरहेका देवदेवी बनाइएका छन्। यो ग्रन्थचित्र नेपाली चित्रकलाको विशेषता रहेको कोमलता र तरलताको राम्रो उदाहरण बनेको छ। राष्ट्रीय अभिलेखालयको १२४७को ताडपत्रको ३३ सेंटीमीटर लामो पञ्चरक्षाको प्रत्येक पानामा एकवटा लघुचित्र बनाइएको छ।[३८] जे.पी.लोष्टीले चर्चेको गाताको जोडी यसै कालको प्रतीत हुन्छ, जसको भित्री भागमा विष्णुका दश अवतार बनाइएका छन्।[३९]

नेपाली कलाले तिब्बत र चीनमा नेपाली कलाकार अनिकोद्वारा आफ्नो परिचय दिएको कारण र पूर्वी भारतमा ग्रन्थकला परम्परा नष्ट भएको एक शताब्दी बितिसकेको कारण चौधौं शताब्दी महत्त्वको थियो। स्वभावत: तिब्बतमा नेपाली ग्रन्थहरूको मांग बढ्नगयो। नेपाली ग्रन्थचित्रमा नेपाली कलाका विशेषताको साथसाथ पूर्वी भारतको परम्परा र केही हदसम्म तिब्बती रुचिको प्रतिनिधित्व रहेको पाइन्छ। काशी हिन्दु विश्वविद्यालयको भारत कलाभवनका यसै कालका प्रतीत हुने कतिपय ग्रन्थका चार पानाहरूका चित्र[४०] आफ्ना विषयवस्तु, विवरणात्मक चित्रकारिता र कडा रंगको उपयोगका कारण नेपाली कम र तिब्बती बढी प्रतीत हुन्छन्। यिनमा दश हात भएका गणेश, तीन शिर र छ हात भएकी पर्णशवरी (बिफरकी देवी), धर्मचक्रमुद्रामा बुद्ध, छ हातका मञ्जुश्री बोधिसत्व र दश हात भएका गणेश बनाइएका छन्। तिनका शिर र हातको संख्या, हातमा लिइएको आयुध र मुद्रा तथा देवदेवीको रंग साधनामा बयान गरिएबमोजिम बनाइएका छन्। यिनमध्ये कतिपय चित्र र अक्षरहरूको बीच रातो चौडा रेखा खिचिएको छ। यस कालमा यस्ता नीलो कागतका ग्रन्थहरू बन्न लागे जो ताडपत्रका समान साँधुरो आकारका छन्। नीलपत्रको पृष्ठभूमिमा चम्किलो र ताजा रंगहरूबाट लेखिएका रञ्जनालिपिका वर्ण र चित्रहरूका कारण ग्रन्थ निकै आकर्षक र कलापूर्ण हुन्छन्। चम्किलो र कडा रंग मनपराउने तिब्बतीहरूका बीच सुन र चाँदीका वर्ण र चित्रहरू भएका रञ्जनाका नीलपत्र ग्रन्थ निकै लोकप्रिय भयो, जसमध्ये केही तिब्बतबाट चीनमा पनि पुगेका छन्। नीलोकालो पृष्ठभूमिमा वर्ण र चित्र लेख्दा यस किसिमका हलुका रंगहरूको चुनाव स्वभाविक थियो। नीलपत्र स्वयं नेपालको हो जसमाथिको लेखाई र

चित्रकलामा नेपाली कलाकारको हात स्पष्ट रूपमा देख्न सकिन्छ। नीलपत्रग्रन्थमा तान्त्रिक बौद्ध र हिन्दु दुवै विषय पाइन्छन्। यी चित्रहरूमा साधना अर्थात् प्रतिमाविज्ञानमा बयान गरिएका सूक्ष्मभन्दा सूक्ष्म विवरणलाई समेत ध्यानमा राखिएको पाइन्छ। यिनमा देवदेवीको गहना बनाउँदा उदारतापूर्वक सुनको उपयोग गरिएको छ। राष्ट्रीय अभिलेखालयको १३९५ को नित्याह्नितिलकम्मा दायाँबायाँ गरुड र लक्ष्मीका बीच सम्पूर्ण आयुधसहित विष्णु र सरस्वती देखाइएका छन्।[४१]

पन्ध्रौं शताब्दीदेखि नेपाली चित्रकलामा मुखाकृतिमा एकापट्टि फर्केको लाम्चो मोहडा, लाम्चा आँखा, सादा प्रभामण्डलको ठाउँमा ज्वालाबुट्टे प्रभामण्डल जस्ता विशेषताहरू विकसित भए। सत्रौं शताब्दीको चित्रकलामा उज्जड रंगको उपयोग गरी डरलाग्दा तान्त्रिक देवदेवीहरूका चित्र बनाइए। यी विशेषताहरूलाई कलासमीक्षकहरू चीनियाँ-तिब्बती प्रभाव भन्ने गर्छन्। अठारौं शताब्दीको नेपाली चित्रकलामा राजपूतशैली र पहाडी शैलीको छाप बढ्दैगयो।[४२] यी सबका पछाडि राजनीतिक र सांस्कृतिक कारण थिए। चित्रकलामा आएका यस्ता परिवर्तनको प्रभाव ग्रन्थचित्रमा पर्नु स्वाभाविक थियो। परवर्ती कालका चित्रकलाका थुप्रै उदाहरणहरू राष्ट्रीय अभिलेखालय, भारत कलाभवन र अन्यत्र पाइन्छन्। भारत कलाभवनका देवीमाहात्म्यका दश चित्रहरू र १७६४को तान्त्रिक ग्रन्थ उल्लेखनीय छन्।[४३] देवीमाहात्म्यमा असुरहरूको संहार गरिरहेकी देवीलाई भिन्नभिन्न स्वरूपमा देखाइएको छ। यिनलाई मूर्ति झैं भव्य बनाइएको छ। धूम्रलोचनवधको दृश्यमा सिंहमा बसेर अगाडि झुक्दै वाण चलाइरहेकी देवीको चित्रण ज्यादै सशक्त र गतिशील रूपमा भएको छ। रक्तबीजवधको दृश्यमा सेतो बाघमा बसेकी देवीको नजिकै आगोको ज्वाला जस्तो कपाल भएकी लामो जिभ्रो निकालेकी चामुण्डा हिंसाकी साक्षात् प्रतिमूर्ति देखिन्छे। तथापि यसमा बाह्रौं शताब्दीको सादगी, स्वाभाविकता र गरिमा पाइँदैन। राजा जयप्रकाश मल्लको पालाको संवत् ८८५/१७६४को तान्त्रिक ठ्यासफु भारत कलाभवनमा रहेको छ। यसमा खैरो रंगको छालाको गाता छ। यस ग्रन्थमा शीर्षकसहित तान्त्रिक देवदेवी र यन्त्रहरू बनाइएका छन्।[४४] यसपछि त एक हजार वर्ष पुरानो नेपाली लघु चित्रकलाको सशक्त माध्यम ग्रन्थलेखनको परम्परा लुप्त हुँदैगयो।

## पुष्पिकावाक्य

पुष्पिकाको अर्थ सानो फूल भन्ने हुन्छ। नेपाली ग्रन्थको पुछारमा ग्रन्थको अन्त भएको बताउन फूलबुट्टा बनाइएको हुन्छ। फूलबुट्टापछिको लेखोटलाई पुष्पिकावाक्य भनिएको हो। यसमा ग्रन्थ सार्ने लेखकले आफ्नु तरफबाट टिप्पणी लेखेको हुन्छ। यसमा फलाना राजाको शासनकालमा, फलानो तिथिमा, फलानो ठाउँमा बस्ने फलानो नाम भएको व्यक्तिले, फलानो ठाउँमा ग्रन्थ लेखेको भन्ने सूचना हुन्छ। कुनैकुनै पुष्पिकावाक्यमा त्यस समयमा घटेको घटना वा दुर्घटना जस्तै राजकुमारको जन्म, विवाह, मृत्यु, भइँचालो, आगलागी आदिको सूचना र

त्यसमाथि टिप्पणी समेत गरिएको हुन्छ। नवौं शताब्दीपछिको इतिहास निर्माण गर्न पुष्पिकावाक्यको ठुलो भूमिका रहेको छ।

## टिप्पणी

१. लेखनसामग्रीको प्रसंगमा यी कुरा विस्तारसँग भएका छन्। हेर्नुस् अध्याय ३।

२. आजभोलि पुस्तक छापेर तयार गर्ने पूरै काम यन्त्रले गरिन्छ र एकैनासका हजारौं प्रति पुस्तकहरू एकै प्रक्रियामा तयार गरिन्छन्। तर प्रेस र आधुनिक प्रविधिहरूको प्रवेश हुनुभन्दा पहिले लेखन र ग्रन्थको तयारी गर्नु कलाकारको काम थियो।

३. जर्ज बूलर, **भारतीय पुरालिपिशास्त्र** (मोतीलाल बनारसीदास, १९६६) पृष्ठ १९१। राजस्थानमा रेशममा लेखिएको जैनसूत्रहरूको सूची पाइएको छ। माड दलेर घोटिएको सुती कपडा र रेशमको टुक्रामा लेखिएका चौधौं शताब्दीताकाका केही नमूना राजस्थानमा र गुजरातमा पाइएका छन्। हेर्नुस् अध्याय ३।

४. **उही**, पृष्ठ १९५। बूलर लेख्छन् : धार्मिक दृष्टिले छाला चोखो मानिँदैन। यसकारण यस्तो अनुमान खतरनाक होला।

५. कश्मीरमा भोजपत्रमा ग्रन्थ लेख्ने चलन लोकप्रिय थियो। उडीसामा समेत केही ग्रन्थ भोजपत्रका पाइएका छन्। खोटानबाट पाइएका खरोष्ठीमा लेखिएको धम्मपद ग्रन्थका केही पृष्ठ र बावरले पाएका ग्रन्थ भोजपत्रग्रन्थका पुराना नमुना हुन्। बावरको उदाहरण अद्वितीय छ, यसका पाना ताडपत्रको आकारमा छन् र त्यस्तै गरी धागो उन्न बीचमा प्वाल पारिएको छ। हेर्नुस् बूलर **उही**, पृष्ठ १९०-९१ र माथि अध्याय ३।

६. यसको प्रत्यक्ष कारण शायद नेपालीसमाजको भारतसँगको व्यापारिक सम्बन्ध थियो जसले सांस्कृतिक सम्बन्ध प्रगाढ बनाउन मदत गर्‍यो। हेर्नुस् माथि अध्याय तीन।

७. यसरी अक्षर कुँदेपछि पूरै पानामा गोल, गाजल वा मसी दलिन्थ्यो, र पछि कपडाले पुछ्दा वर्णहरूका कुँदिएका प्वालमा मसी भरिन्थ्यो र पानाको चिप्लो सतहको मसी पुछिन्थ्यो। यसरी कुँदिएको एक ग्रन्थको परिचय शङ्करमान राजवंशीले दिएका छन्। हेर्नुस् उनको "नेपाली लिपिविकास", **कैलाश**,२.१-२ (१९७४), पृष्ठ ३० र पादटिप्पणी १।

८. गौरीशंकर हीराचन्द ओझा, **भारतीय प्राचीन लिपिमाला** (दिल्ली, १९५९) पृष्ठ २ (पादटिप्पणी ३), १४३। रा.ब.पाण्डेय **भारतीय पुरालिपि** पृष्ठ ६३।

९. गौ.ही.ओझा, पृष्ठ १४३, रा.ब.पाण्डेय **उही**, बूलर (**टिप्पणी** ३), पृष्ठ १९४।

१०. Har Prasad Shastri, ed. **A Catalogue of Palm-leaf and Selected Paper Manuscripts Belonging to the Durbar Library Nepal,** to Which Has Been Added a Historical Introduction by Prof. Cecil Bendall (Calcutta : Baptist Mission Press, 1905-15,2 Vols.) 1, 52 and Plate. पहिलेको दरबार पुस्तकालयका ग्रन्थहरू हाल नेपाल राष्ट्रीय अभिलेखालयमा राखिएका छन्।

११. Cecil Bendall, **Catalogue of the Buddhist Sanskrit Manuscripts in the University Library, Cambridge.** (Cambridge, 1883) pp.

xxix ff (Introduction). यसलाई सेसिल बेण्डालले तिथियुक्त पहिलो नेपाली ताडपत्र ग्रन्थ मानेका छन् ।

१२. यस ग्रन्थको पुष्पिकावाक्य डि.र.रेग्मीले छापेका छन्। हेर्नुस् उनको **Inscriptions ofAncient Nepal** ( New Delhi, 1983), Plate CLXI.

१३. शङ्करमान राजवंशी, **पूर्वोक्त** टिप्पणी ६,लिपिचित्र १८ ।

१४. गौ.ही.ओझा, पृष्ठ २ को पादटिप्पणी ४ र पृष्ठ १४५ ।

१५. गौ.ही.ओझा, पृष्ठ १४५; जर्ज बूलर, **(टिप्पणी ३)** पृष्ठ १९९ । मालवामा एघारौं शताब्दीमा कागतको उल्लेख भएको बताइन्छ तर त्यतिखेरको कागत पाइएको छैन ।

१६. कोलकातास्थित आशुतोष म्युजियममा रहेको ११०५ को ग्रन्थ फुस्रो रंगको छ र ब्रिटीश पुस्तकालयको ११८५ को ग्रन्थ गाढा नीलो रंगको छ जसमा सुन र चाँदीको मसीको उपयोग भएको छ । हेर्नुस् : J.P.Losty, **The Art of Book In India** (London, 1982), P. 11.

१७. शङ्करमान राजवंशी, **पूर्वोक्त टिप्पणी** ६, पृष्ठ ३१-३२ ।

१८. राष्ट्रीय अभिलेखालयमा रहेको १२४७को ३३X६.५से.मी. आकारको पञ्चरक्षा ग्रन्थका पाँच पाना प्रकाशित छन्। हेर्नुस् Department of Archaeology, HMG, **Nepalese Art** ( A Catalogue of the art objects exhibited in Paris in 1966) (Kathmandu, 1966) P.84, Plate XXXVI, A.

१९. J.P.Losty, *note* 16, pp.25-26 . बेलाइतको क्याम्ब्रिज विश्वविद्यालयको पुस्तकालयमा रहेको प्रज्ञापारमिता शीर्षकको ५.२५ सेन्टीमीटर अग्लो र ५४ सेन्टीमीटर लामो तालीपातको यस ग्रन्थमा अनेक चित्रहरू छन्। लैनसिंह वाङ्देल, **प्राचीन नेपाली चित्रकला** (काठमाडौं : नेपाल राजकीय प्रज्ञाप्रतिष्ठान, २०३४) पृष्ठ १९ ।

२०. J.P.Losty, ibid. P. 21. एस.के. सरस्वतीको संग्रहमा रहेको १०२८को प्रज्ञापारमिताको एक जोडी गाताचित्रको बयान लैनसिंह वाङ्देलले गरेका छन्। हेर्नुस् **उही** ।

२१. **उही,** पृष्ठ २४ । तिनमा अनेकौं शैली पाइने कुरा जे.पी. लोस्टीले उठाएका छन् ।

२२. अधिकांश भारतीय लेखकहरू भारतीय उदाहरण पाइनुअगिदेखिनै नेपालीग्रन्थचित्रमा पालकलाशैलीको प्रभाव देख्छन्। लैनसिंह वाङ्देलले (**टिप्पणी** १९ पृष्ठ २३) पूर्वीय हिन्दुस्तानी र आरम्भिक नेपाली ग्रन्थचित्रकलाको तुलना गर्दै भनेका छन् : पहिलो चित्रकलामा भडकीलो रंग र बाह्यरेखाको उपयोग बढी गरिएको हुन्छ, तर "नेपालीले उज्जड र उत्ताउला रंगभन्दा मधुर र कोमल रंग, बाह्यरेखा पनि ठीक चाहिएको जति मात्र हालेर तस्वीरलाई जीवित र आकर्षक पारेको हुन्छ।" वास्तवमा यी दुवै सोचाई पूर्वाग्रहग्रस्त देखिन्छन् ।

२३. जे.पी.लोष्टी, **पूर्वोक्त** पृष्ठ २८ ।

२४. हेर्नुस् माथि अध्याय १६ ।

२५. जे.पी.लोष्टी, **उही** पृष्ठ २४ ।

२६. **उही,** पृष्ठ २६ ।

२७. Rajatananda Das Gupta, **Nepalese Miniatuures** (Varanasi : Bharatiya Vidya Prakashan, 1968) P. 13.

२८. जे.पी.लोष्टी, उही पृष्ठ २६ ।

२९. उही पृष्ठ १९ ।

३०. यो गाता प्राध्यापक एस.के. सरस्वतीको नीजी संग्रहमा रहेको छ। दास गुप्त **टिप्पणी** २७ पृष्ठ ९- १०, लैनसिंह वाङ्गदेल टिप्पणी १९, पृष्ठ १९-२३, S. Kramrisch, **The Art of Nepal** ( Orient.Art,XI :2.1965) P.44. यसबारे उनी लेख्छिन् These book covers "bear elegant specimens of miniature paintings in the style and tradition of the period."

३१. जे.पी.लोष्टी, पृष्ठ १८ ।

३२. लैनसिंह वाङ्गदेल **टिप्पणी** १९, फलक दोस्रो ।

३३. उही पृष्ठ ३० ।

३४ दास गुप्त **टिप्पणी** २७ पृष्ठ १४ ।

३५. जे.पी.लोष्टी, नम्बर ११ । वसुधाराधारिणी र नामसङ्गीति क्रमशः ९.१X२६ सें.मी. र ८.९X२६ सें.मी.आकारका छन् ।

३६. दास गुप्त **टिप्पणी** २७ पृष्ठ १९ ।

३७. लैनसिंह वाङ्गदेल, पृष्ठ ३१ ।

३८. Department of Archaeology, HMG, ***op.cit.*** note 18.

३९. जे.पी.लोष्टी, **पूर्वोक्त** नम्बर १३ । यी गाताहरू ४.६X ५६ सें.मी.का छन् ।

४०. दास गुप्त **टिप्पणी** २७ पृष्ठ २१ ।

४१. **उही** पृष्ठ २० ।

४२. **उही** पृष्ठ २४-२५ ।

४३. **उही** पृष्ठ २३-२४ ।

४४. **उही** पृष्ठ २४-२५ ।



# पारिभाषिक शब्दावली

**अक्षर/अक्षरात्मकलेखन** : अक्षरात्मकलेखन (syllabic writing) यस्तो लेखन हो जसमा सामान्यतया कुनै एउटा चिह्न भाषाको एक वा बढी अक्षर (अर्थात् syllabary)को लागि निर्धारित गरिएको हुन्छ। जस्तै सुमेरियाईमा एक चिह्नको अक्षरमूल्य **ब**, अर्कोको **रि** अथवा **दल्**, अर्कोको **बल्** हुन्छ। हेर्नुस्: **शब्दलेखन, शब्दाक्षरलेखन** र **वर्णमालात्मक लेखन**।

**अक्षराङ्कपद्धति वा अक्षरपल्ली** : अक्षरको माध्यमले संख्या जनाउने पद्धति जो गणित र ज्यौतिष विषयका ग्रन्थहरूमा उपयोग गरिएको हुन्छ र दशमलवपद्धतिबाट प्रभावित छ। कसैले प्राचीन अङ्कपद्धतिलाई पनि यही नाम दिएका छन्।

**अक्षयनीवी** : यस शब्दको अर्थ कहिल्यै नाश नहुने खजाना भन्ने हुन्छ जो अभिलेखहरूमा भूमिदान वा गुठीको सिलसिलामा आएको छ।

**अग्रहार** शब्दको अर्थ लगान वा मालपोत नलाग्ने स्वतन्त्र स्वामित्व भएको जग्गा भन्ने हुन्छ जो भूमिदानको प्रसङ्गमा अभिलेखहरूमा आएको छ।

**अङ्क/अङ्कपद्धति** : संख्या बताउने गणितीय चिह्न अङ्क हो। संख्या व्यक्त गर्ने अनेकौं पद्धतिहरू पाइन्छन्। हेर्नुस् **प्राचीन अङ्कपद्धति, अक्षराङ्कपद्धति र शब्दाङ्कपद्धति**।

**अङ्कुश, अङ्कुशे** : तलमाथि वा दायाँबायाँ अङ्कुशको आकारमा मोडिने अर्धवृत्त वा वृत्तखण्डलाई यसो भनिएको हो। देवनागरीको उकारको मात्रा, सातको अङ्क चिह्नमा माथि फर्केको अङ्कुश हुन्छ भने लिच्छविलिपिमा ईकारको मात्रा र भुजिँमोःको डीकोमा देब्रेतिरबाट उठी दाहिनेतिर घोप्टिएको अङ्कुश हुन्छ।

**अभिलेख/अभिलेखअध्ययन** : ढुंगा र धातु जस्ता कडा वस्तुमा तीखो उपकरणले कपेर वा कुँदेर अक्षर लेखिएको लेखोटलाई अभिलेख भनिन्छ जो धेरैसम्म रहने भएकोले लेखनका सर्वप्राचीन नमुना हुनआएका छन्। अभिलेख अध्ययन अन्तर्गत अभिलेख पढ्ने, त्यसको व्याख्या गर्ने र वर्गीकरण गर्ने विषय पर्दछन्। अंग्रेजीको एपिग्राफी शब्द अभिलेख, अभिलेखहरूको समष्टि र अभिलेखअध्ययनको अर्थमा प्रयोग हुन्छ। हेर्नुस् **पाण्डुलिपि**।

**आदिबाङ्ला** : बंगालमा एघारौं शताब्दीताका विकसित नागरीलाई आदिबाङ्ला भनिन्छ, जसमा स्थानीय विशेषताहरू पर्याप्त मात्रामा पाइन्छन्।

**आशयलेखन** : पूर्णलेखनको विकास हुनुभन्दा पहिले सङ्केतचित्र र चिह्नहरूको माध्यमले भाषाको उपयोग नगरी आशय व्यक्त गर्ने अन्तःसञ्चारको प्रयासलाई आशयलेखन वा सिमासियोग्राफी (semasiography) भनिन्छ। चित्र वा चित्रहरूको श्रृङ्खलाको माध्यमले आशयको विवरण दिने वा कुनै आशय वा अर्थको प्रतिनिधित्व गर्ने प्रयासलाई **विवरणात्मक-प्रतिनिधिमूलक** र, कुनै घटना, नाम, उखान कथा वा गीतसँग कुनै चिह्न वा प्रतीकको पहिचान गर्ने र तिनको अभिलेखन गर्ने प्रयासलाई **समीकरण-स्मरणात्मक** भनिएको छ।

**इथियोपियाई लिपि** : खरोष्ठीको समान स्वरपद्धति भएको इथियोपियाको लेखन। हेर्नुस् **खरोष्ठी, ब्राह्मी**।

**कर्सिभलेखन** : cursive/writing/hand : दैनिक र व्यावहारिक उद्देश्यले शीघ्रताले धस्काएर लेखिएको लेखनको सतही स्वरूपलाई यसो भनिएको हो। यसलाई **शीघ्रलेखन** वा **धस्काएर लेख्नु** पनि भनिएको छ।

**कागत** : वनस्पतिको कमलो मसिनो रेशाबाट बनाइएको दोब्र्याउन मिल्ने पातलो लेखनसामग्री कागत हो। अनेक तह टाँसेर मोटो र दह्रो तुल्याई हरिताल र

नीलोतुथो दलेर पहेँलो र नीलो बनाइएको नेपाली पाको कागत ग्रन्थलेखनमा उपयोग हुन्थ्यो ।

**कीलाक्षर वा क्यूनिफर्म** : मेसोपोटामियामा शब्दाक्षरात्मक लेखनको चरणमा कीला जस्ता आकारका फेसो वा त्रिकोणात्मक चिह्नहरूको लेखनलाई कीलाक्षर वा क्यूनिफर्म (cuneiform) भनिन्छ ।

**कुटिल, कुटिललिपि** : गुप्तकालीन लिपिपछि उत्तर भारतमा विकसित दाहिने ऊर्ध्वरेखा तरङ्गवत् वा वक्र (बाङ्गो) हुने वर्णहरूको निम्ति प्रयोग गरिने शब्द । जर्ज बूलरले यसो नभनी न्यून कोणीय वर्ण (acute angled letter ) भनेका छन् ।

**कोट्टमर्यादा/कोट्टमर्यादासम्पन्न** : सुरक्षाको लागि बनाइएको किल्लालाई लिच्छविकालका अभिलेखहरूमा **कोट्ट** र त्यसलाई दिइने सुविधालाई कोट्टमर्यादा वा कोटको दर्जा भनिएको छ, जहाँ मालपोत र अरु कर उठाउने कर्मचारीहरूको प्रवेश वर्जित गरिएको पाइन्छ। "कोट्टमर्यादासम्पन्न" धोषित गरिनु राजाको ठूलो निगाह मानिएको छ ।

**कौशाम्बीशैली/लिपि** : उत्तर भारतको प्राचीन कौशाम्बी शहरमा दोस्रो तेस्रो शताब्दीका मघ शासकहरूको लेखोटमा पाइने स्थानीयलेखनलाई यसो भनिएको हो, जसमा पूर्वी भारत र मथुराका विशेषताहरूको साथसाथ शीघ्रताले धस्काएर लेख्दा कायम हुनआएका **ण न म ल स ह** सर्वथा बेग्लै स्वरूपका छन् । यो शैली चौथो शताब्दीको समुद्रगुप्तको इलाहाबादस्तम्भलेख लगायत पाँचौं शताब्दीसम्म गंगाउपत्यकाक्षेत्रमा प्रचलित रह्यो ।

**खरोष्ठीलिपि** : स्वर र व्यञ्जन, मात्रा र संयुक्ताक्षरको व्यवस्था भएको दाहिनेबाट देब्रे लेखिनेपढिने लिपि खरोष्ठी हो जसमा स्वरवर्ण अमै अगाडिपछाडि धर्सा जोडेर अन्य स्वरवर्ण बनाइन्छन् ।

**गुप्तलिपि/गुप्तकालीन लिपि** : भारतीय इतिहासको चौथो शताब्दीदेखि छैटौं शताब्दी ई.सम्मको गुप्तकालमा प्रचलित लेखनलाई गुप्तलिपि भनिन्छ जसका अनेकौं क्षेत्रीय भेद छन् । हेर्नुस् **लिच्छविलिपि, कौशाम्बीलिपि** ।

**ग्रन्थलिपि** : दक्षिण भारतको तमिल लिपिमा संस्कृत लेख्न नसकिने भएकोले त्यहाँ संस्कृत भाषालेखनको लागि यस नामको नौलो लेखनको विकास भयो ।

**जनलेखन/डेमोटिक लेखन** : मिश्रका जनसाधारणले आफ्नो लागि विकसित गरेको धस्काएर लेखिने कर्सिभ लेखन जसलाई जनलेखन वा डेमोटिक (demotic writing) भनिन्छ ।

**डीको /शिरोरेखा (head marks)** : इसवीका आरम्भिक शताब्दीहरूमा ब्राह्मीलिपिका विभिन्न शैलीका वर्णहरूका शिरोभागमा अनेक प्रकारका डीकाको विकास भएको छ । लिच्छविलिपिमा ठोस त्रिकोणात्मक डीको हुन्छ । डीकोका प्रकारका आधारमा नेवारीलिपिका अनेकौं शैलीहरूको नाम रहनगएको छ। आरम्भिक नेवारीको कोणात्मक डीको, भुजिंमोःको अंकुशे डीको, रञ्जनाको विशिष्ट त्रिकोणात्मक डीको र प्रचलित नेवारी वा पाचुमोःको पातलो तेर्सो डीको विशिष्ट लक्षण बनेका छन् ।

**तमिललिपि** : दक्षिण भारतमा सातौं शताब्दीताकाको ब्राह्मीका वर्णमालाको आधारमा तमिल भाषा लेख्न तयार गरिएको वर्णमाला ।

**ताडपत्र** : नरिवलको रूख जस्तो अग्लो हुने ताड (पामीरा, लालीपात) को ठूला र चौडा पातबाट बनाइने लेखनसामग्री ताडपत्र वा तालपत्र भनिन्छ, जसको उपयोग ग्रन्थलेखन र फुटकर लेखोटमा धेरै भएको छ ।

**ताम्रपत्र** : लेख्न तयार पारिएको लाम्चो चारकुने आकारमा काटिएको तामाको पातलो पाता ताम्रपत्र भनिन्छ ।

**दानशासन** : भूमिदान र अन्यदानको विवरण दिने अभिलेखलाई दानपत्र र राजाले नियम बनाई दिएको भूमिदान सम्बन्धी अभिलेखलाई दानशासन भनिन्छ ।

**ध्वन्यात्मकलेखन** : ध्वनि सुनिने चिह्न हो जो उच्चारण वा बोलीसँग अर्थात् भाषासँग सम्बन्धित हुन्छ । लेखिने चिह्नहरूले भाषाको ध्वनि अर्थात् पदार्थको निर्धारित शब्द अक्षर वा वर्ण उच्चारण गर्दछन् । चित्रात्मक चिह्न, प्रतीक, अक्षर वा वर्णहरूको माध्यमले भाषातत्त्वलाई अभिलेखन गरिने हुनाले ध्वन्यात्मकलेखन (phonography) भनिएको हो । यस्तो लेखनलाई **पूर्णलेखन** पनि भनिन्छ ।

**नन्दीनागरी** : दक्षिण भारतको विजयानगरम् राज्यमा संस्कृत लेख्न विकसित लेखन नन्दीनागरी भनिन्छ ।

**नागरी** : कुटिलालिपि वा अन्य गुप्तकालीन लेखनशैलीबाट विभिन्न प्रान्तमा आठौं शताब्दीदेखि दशौं शताब्दी ई.सम्म विकसित लामा र पुच्छरदार वर्ण भएको लेखनलाई नागरी वा प्राचीन देवनागरी भनिन्छ । विभिन्न ठाउंमा विकसित नागरीमा वर्तमान देवनागरीमा झैं एकरूपता पाइदैन । नेपालको नेवारीलिपिमा नागरीका कतिपय लक्षणहरू पाइन्छन् ।

**नेवारीलिपि** : यो पारम्परिक नाम नेपालको त्यस लिपिलाई दिइएको हो जसका कतिपय लक्षणहरू नागरीसँग मिल्दाजुल्दा भएर पनि मूल विशेषता स्थानीय लेखनपरम्परामा आधारित र मौलिक छन् ।

**पाचुँमो** : सम्म परेको वा सोझो डीकोको लेखनको लागि नेवारी भाषामा पाचुँमोः शब्दको व्यवहार हुन्छ, हेर्नुस् : **प्रचलित नेवारी** ।

**पाण्डुलिपि** : ताडपत्र, भोजपत्र, पेपिरस, छाला र कागत जस्ता नरम वस्तुमा मसीको उपयोग गरी हातले लेखिएको लेखोटलाई पाण्डुलिपि (manuscript) भनिन्छ । प्राचीन लेखनको अध्ययनमा अभिलेखको समान पाण्डुलिपिको महत्त्व हुन्छ । हेर्नुस् **अभिलेख / अभिलेखअध्ययन** ।

**पुरालेखन** : **पुरा** अर्थात् पुरानो र **लेखन** गरी दुई शब्दहरूको मेलबाट बनाइएको पुरालेखन अंग्रेजी भाषाको प्यालियोग्राफी (Palaeography) को रूपान्तर हो । अंग्रेजीको यो शब्द यूनानी भाषाको प्यालियोस (palaios) र ग्राफिएन (graphein) गरी दुइवटा शब्दहरूको मेलबाट बनाइएको छ, जसको अर्थ क्रमशः पुरानो र लेखन भन्ने हुन्छ ।

**पुष्पिकावाक्य** : ग्रन्थको पुछारमा ग्रन्थको अन्त भएको बताउन बनाइएको फूलबुट्टापछिको लेखोटलाई पुष्पिकावाक्य भनिएको हो । यसमा ग्रन्थ सार्ने लेखकले आफ्नु तरफबाट टिप्पणी लेखेको हुन्छ जसमा राजाको नाम, तिथि, लेखकको नाम, परिचय, ग्रन्थ लेखिएको ठाउँ, र त्यस समयमा घटेको घटनाबारे सूचना हुन्छ ।

**पूर्णलेखन** हेर्नुस् **ध्वन्यात्मकलेखन** ।

**पेपिरस** : मिश्रको नाइल नदीको छिपछिपे किनारामा उम्रने नरकट जस्तो वनस्पतिको डाँठको बोक्राका पातला टुक्राहरूलाई गुँदले टाँसी बनाइएको लेखनसामग्री पेपिरस हो । यसै शब्दबाट अंग्रेजी भाषाको 'पेपर' शब्द बनेको हो ।

**प्रचलित नेवारी** : सादा डीकोमा पारम्परिक किसिमले लेखिएका विकसित वर्ण र मात्राचिह्नको सरल र व्यावहारिक लेखन प्रचलित नेवारी हो, जसमा

नेवारीलिपिका प्रायः सबै विशेषताहरूको साथसाथ नागरीका कतिपय विशेषताहरू हुन्छन् ।

**प्रशस्ति** : राजाको तारीफमा लेखिएको अभिलेखलाई प्रशस्ति भनिन्छ जो राजाको विजयको मौकामा वा खास राजकीय वा धार्मिक अवसरमा कुँदिएका हुन्छन् । यिनमा सुन्दर पदावली र प्रौढ अभिव्यक्ति भएका काव्यमय पद्य हुन्छन् ।

**प्रशासकीय /प्रसादशासन** : राजाका आदेश, घोषणा वा थितिबन्देज जस्ता विषय भएका राजकीय अभिलेख जो **शिलापट्टकशासन, ताम्रशासन** (सनदपत्र) भनिएका छन् ।

**प्राक्लेखन चरणः** हेर्नुस् **आशयलेखन** ।

**प्रान्तीय लिपि** : कतिपय भारतीय प्रान्तका नागरीमा क्षेत्रीयलेखनका विशेषताहरू प्रबल भएका कारण भिन्न स्वरूपमा विकसित हुँदैगए जसलाई प्रान्तीय लिपि भनिन्छ ।

**ब्राह्मीलिपि** : पर्याप्त स्वर, व्यञ्जन, मात्राचिह्न र अनेक व्यञ्जनहरूको संयुक्त उच्चारणको व्यवस्था भएको, देब्रेबाट दाहिने लेखिनेपढिने दक्षिणएशियामा बहु-प्रचलित लेखन **ब्राह्मी**लिपि हो जसबाट देवनागरीसहित अनेकौं प्रान्तीय लिपिहरू विकसित भए । ब्राह्मी प्राचीन अक्षरात्मक लेखनभन्दा विकसित छ, तथापि यसमा वर्णमालात्मक लेखनका सबै लक्षण पाइँदैनन् ।

**भुजिँमोः** डीकोको बनावटको आधारमा रहनगएको अङ्कुशे डीको भएको लेखनशैलीको नेवारी नाम, जसको अर्थ झिँगाको टाउको भन्ने हुन्छ । देब्रेतिर कोण बनाउँदै दायाँतिर सीधा जाने डीकोरेखाबाट शीघ्रलेखनको अभ्यासको कारण यसको विकास भएको हो ।

**भूमिच्छिद्रन्याय** : यो प्राचीन दानशासन अभिलेखमा चलेको संस्कृत न्याय वा आहान हो । छिद्रको अर्थ प्वाल हो: भूमिमा प्वाल पार्नु भनेको पर्तीजग्गामा पहिलो पल्ट खेती गर्नु (कमाउनु) हो र यसरी दिइएको जग्गामा कुनै किसिमको राजकीय कर लाग्दैनथ्यो ।

**भोजपत्र** : हिमालय क्षेत्रमा हुने भुर्जवृक्षको भित्री बोक्राबाट खास उपचार गरी बनाइएको लेखनसामग्री भोजपत्र हो ।

**रञ्जना** : ठोस, गोल त्रिकोणात्मक मोटो डीकोमा मोटा चौडा अक्षर र पातलो रेखाको रेखान्तको नेवारीलिपिको यस सुलेखनले जनभाषामा 'रञ्ज' वा 'लाञ्जा' भन्ने नाम पाएको छ ।

**रेखान्त** : यो शब्द यहाँ विशेष गरी 'ठाडो रेखाको तल्लो अन्त' लाई जोड दिन मोटो बनाइएको, देब्रेतिर फर्काई कलम उठाइएको वा छोटो तेर्सो रेखा तानिएको (foot mark) भन्ने अर्थमा प्रयोग गरिएको छ ।

**लिच्छविलिपि** : कौशाम्बीशैलीको लेखनको निकट सम्पर्कमा रही व्युत्पन्न भएर नेपालमा १००० ई.सम्मका लेखोटहरूमा उपयोग भएको गुप्तकालीन लिपिको दीर्घजीवी प्रकारलाई लिच्छविलिपि भनिन्छ, जसमा अनेकौं थप विशेषताहरू स्वतन्त्र रूपमा विकसित हुँदैगएका छन् ।

**लेखन** : दृश्यमान (देखापर्ने) पारम्परिक चिह्नहरूको माध्यमले व्यक्त गरिने मानिसको अन्तर्सञ्चारको पद्धति लेखन हो जो सञ्चारको माध्यम रहेको भाषाको अभिलेखन (रेकर्डिङ) गर्छ ।

**वर्णात्मक /वार्णिक / वर्णमालात्मक लेखन** : भाषाको एक वा बढी समान ध्वनिको लागि कुनै चिह्न निर्धारित गरिएको लेखन वर्णात्मक, वार्णिक वा वर्णमालात्मक (alphabetic writing) भनिन्छ ।

**विवरणात्मक-प्रतिनिधिमूलक** हेर्नुस् **आशयलेखन** ।

**शब्दलेखन /शब्दाक्षरलेखन** :कुनै भाषाको एक वा धेरै शब्दको निम्ति कुनै चिह्न निर्धारित गरिएको लेखनलाई शब्दलेखन (word writing वा logography) भनिन्छ। शब्दचिह्नमात्र भएको लेखन विरलै पाइन्छ। सुमेरियाई र मिश्री जस्ता आरम्भिक लेखनमा शब्द बुझाउने चिह्नहरूको साथसाथ अक्षरचिह्नहरूको पनि उपयोग भएको पाइन्छ जसलाई **शब्दाक्षरलेखन** भनिन्छ। ध्वन्यात्मकलेखनको पहिलो चरणमा शब्दचिह्नहरूको साथसाथ धेरथोर उपयोगमा आएका अक्षरात्मक चिह्नहरूले लेखनलाई बढी शुद्ध र सजिलो बनाउन सघाएको छ। **अक्षरलेखन** र **वर्णमालात्मकलेखन** पनि हेर्नुस्।

**शब्दाङ्कपद्धति** : शब्दको माध्यमले संख्या (अङ्क) लेख्ने पद्धतिलाई यो नाम दिइएको हो। (word numerals)। यसमा लौकिक वा साहित्यिक जगत्मा निश्चित संख्या भएका पदार्थ, वस्तु वा देवताको अर्थमा उपयोग हुने शब्दहरूको प्रयोग हुन्थ्यो। उदाहरणार्थ, एक संख्याको लागि पृथ्वी, चन्द्रमा वा ब्रह्मा (जो एउटै हुन्छन्), भने दुई संख्या बताउन आँखा, हात, जस्ता शब्द र तीन बताउन गुण (सत्व, रज र तम-त्रिगुण), राम (दशरथका छोरा, बलराम र परशुराम) जस्ता शब्दहरूको उपयोग हुन्छ। यो पद्धति विशेष गरी लामो संख्या लेख्नु पर्ने गणित, ज्योतिष जस्ता विषयका पद्यात्मक लेखोटमा बढी उपयुक्त थियो जसलाई कण्ठ गर्न सजिलो हुन्थ्यो।

**शिलापत्र** : पातलो चारपाटे ढुंगाको पाटीमा लेखिएको अभिलेखलाई **शिलापत्र** वा **शिलाफलक** भनिन्छ। नेपालको प्राचीन अभिलेखहरूमा राजकीय शिलापत्रलाई **शिलापट्टक** वा **शिलापट्टकशासन** भनिएको छ।

**समीकरण-स्मरणात्मक** हेर्नुस् **आशयलेखन**।

**सिद्धमात्रिका** : यस शब्दको अर्थ मात्राहरू सिद्ध भएको अर्थात् स्पष्ट रूपमा विकसित मात्राचिह्न भएको लेखन भन्ने हुन्छ। एघारौं शताब्दीका एकजना लेखकले काशी र कश्मीरमा प्रचलित नागरी लेखनलाई यही नाम दिएका छन्।

**सिन्धुलिपि** : सिन्धुघाटी सभ्यताका केन्द्रहरूमा प्राप्त ससाना छाप वा सीलहरूमा कुँदिएको लेखनलाई सिन्धुलिपि भनिन्छ जो अझै पढ्नसकिएको छैन। यो शायद उभयगतिको लेखन हो।

**सेमिटिकलेखन** : वर्तमान ईराक, लेबनान, इस्राइल र अरबको अफ्रिकी एशियाई जाति, भाषा र संस्कृतिलाई सेमिटिक भनिन्छ। सेमिटिक भाषापरिवार पूर्वी (अक्काडियन), उत्तरपश्चिमी (फिनिशियाई, अरेमिक, हिब्रू), र दक्षिणपश्चिमी (अरबी र इथियोपियाई) मा विभाजित छ। ईसापूर्व दोस्रो सहस्राब्दीमा सिनाइ प्रायद्वीपदेखि उत्तरी सिरियासम्म फैलिएको सेमिटिक क्षेत्रहरूमा ईसापूर्व दोस्रो सहस्राब्दीमा विकसित लेखनलाई यही नाम दिइएको छ। सेमिटिकलेखन दायाँबाट बायाँ लेखिएको छ।

**सुलेखन** : विभिन्न लेखनपद्धतिहरूमा पाइने सिंगारिएको कलापूर्ण लेखाईलाई सुलेखन वा क्यालिग्राफी (calligraphy) भनिएको हो। वर्णहरूका धर्सा, अंकुश, गाँठो, कोण र गोलोपनलाई खास ढंगले अनुपात मिलाई लेखिएका वर्णहरू, तिनको खास किसिमको डीको, मात्रा-चिह्न र पंक्तिबद्धता, र खास किसिमले तानिएका मोटा र पातला धर्साको संयोजनका कारण मध्यकालीन नेपाली लेखनका भुजिंमोः र रञ्जना सुलेखनका राम्रा उदाहरण हुन्।

**हिट्टाईट /हिट्टी हियरोग्लिफिक** : ई.पू.२००० ताका मध्य एशिया माइनरमा सैनिकसाम्राज्य स्थापना गर्ने आर्यभाषा बोल्ने समुदाय हिट्टाइट वा हिट्टी हुन्

जसले खास किसिमको अक्षरात्मक हियरोग्लिफिक (पवित्र वा धार्मिक) लेखनको विकास गरे ।

**हियरेटिक लेखन** : मिश्रमा पुरोहितहरूले चित्रात्मक चिह्नहरूबाट विकसित गरेको शीघ्रताले धस्काएर लेखिने **खास लेखन**लाई हियरेटिक (hieratic) भनिन्छ । **हियरोग्लिफिक** र **डेमोटिक** पनि हेर्नुस् ।

**हियरोग्लिफिक लेखन/पवित्रलेखन** : चित्रमय चिह्नहरूको माध्यमले मिश्र देशमा र हिट्टी वा हिट्टाइट जातिमा लेखिने पवित्र वा धार्मिक लेखनलाई हियरोग्लिफ वा हियरोग्लिफिक (hieroglyphic) लेखन भनिन्छ । **हियरेटिक** र **डेमोटिक** पनि हेर्नुस् ।



# Bibliography/ ग्रन्थसूची


Ballinger, T.O. "Five Unpublished Nepalese Inscriptions" **J. Amer. Orient. Soc.** LXXVII: 4, 1958, pp.277-79.

Bhattacharyya, Benoytosh. **The Indian Buddhist Iconography Mainly Based on the Sadhanamala and Cognate Tanrtrik texts of Rituals.** Calcutta: Firma K.L. Mukhopadhyay, 1968.

Basak, R.G. **History of North Eastern India.** Calcutta: Sambodhi Publications, 1967.

Beal, S. Trans. **Si-yu-ki: Buddhist Records of the Western, 2 vols.** London, 1884. (reprint, New Delhi: Oriental Books Reprint Corporation, 1969).

Bendall, Cecil. **Catalogue of Buddhist Sanskrit Manuscripts in the University Library.** Cambridge, 1883.

- - -, **A Journey of Literary and Archaeological Research in Nepal and Northern India During the Winter of 1884-85,** Cambridge,1885.

- - -, "Manuscripts and Inscriptions from Nepal", **Proceeding of the Asiatic Scciety of Bengal,** 1899.

- - -, "The History of Nepal and Surrounding Kingdoms (1000-1600 A.D.) Compiled Chiefly from MSS Lately Discovered. Written As an Historical Introduction to Pandit Haraprasad Sastri's Catalogue of the Nepal Durbar Library" **Journal of Asiatic Society of Bengal**, LXXII: 1. 1-2 (1903).

Brown, Percy. **Indian Architecture (Buddhist and Hindu Periods).** Bombay : D.B. Taraporevala Sons & Co. 1965.

Bühler, J. George. "Indian Palaeography" (Trans.from German, **Indische Palaeographie** (1896) by J. F .Fleet. **Indian Antiquary,** xxxiii, (1904). Trans.into Hindi भारतीय पुरालिपिशास्त्र by मंगलनाथ सिंह Motilal Banarasidas, 1966.

- - -, **On the Origin of the Brahma Alphabet.** Strassburg, 1898 reprint. Varanasi: Chowkamba Vidyabhavan, 1963.

- - -, "On the Origin of The Indian Alphabet and Numerals" **Indian Antiquary,** Vol.11 (1882).

Burnell, A.C. **Elements of South Indian Palaeolithic (from the 4th Century to the 4th Century A.D.), being an introduction to the study of South Indian inscriptions and manuscripts.** London, 1878.

Burkitt, M. C. **The Old Stone Age, A Study of Palaeoithic Times.** 4th ed. New Delhi: Rupa & Co,,1985.

Cunningham, Alexander, ed. **Inscriptions of Asoka**. London, 1877.

Cust, R. N. "The Origin of Phoenician and Indian Alphabets", **JRAS** (1897). 49-80.

Dani, Ahmad Hasan. **Indian Palaeography,** Oxford: The Clarendon Press, 1963.

Das Gupta, Rajatananda. **Nepalese Miniatures.** Varanasi :Bharatiya Vidya Prakashan, 1968.

Datta, B. B. and A.N. Singh. **History of Hindu Mathematics,** Part 1.Asia Publishing House, 1962 Trans. into Hindi, **हिन्दू गणितशास्त्रका इतिहास**, **भाग** १. by कृपाशंकर शुक्ल. लखनऊ : हिन्दी समिति, १९७४.

Di Castro, Andrea Angelo, and Garbini, Reccardo. "An Inscribed Statue of Year 207 from Maligaon, Kathmandu", **East and West,** Vol.46. Nos. 3-4(December 1996). pp.299-315

Diringer, David, **The Alphabet, A Key to the History of the Mankind,** London, 1949, Second Ed., London, 1953.

Fleet, J. F. ed. **Corpus Inscriptionum Indicarum, Vol. III, Inscriptions of The Early Gupta Kings.** Calcutta, 1888. reprint. Varanasi: Indological Book House, !963.

Führer, A. **Antiquities of the Buddha's Birth Place in the Nepalese Terai.** 1897 reprint. Delhi: Indological Book House, 1972.

Gelb, I. J. **A Study of Writing,** Chicago: The University of Chicago Press. Second impression, 1965.

Gnoli, R. ed. **Nepalese Inscriptions In Gupta Characters,** Parts I & 2.(with 85 plates). Roma : ISMEO,1956.

Gupta, S.P. and K.S.Ramachandran. ed. **The Origin of Brahmi Script.** Delhi: D.K. Publications, 1979.

- - -, "Two New Nepalese Inscriptions in Gupta Characters." **East and West,** VIII : 2 (1957): 192-93

HMG of Nepal, Department of Archaeology. **Nepalese Art** ( A Catalogue of the art objects exhibited in Paris in 1966). Kathmandu, 1966.

Indraji, Bhagwanlal. "On Ancient Nagari Numeration From An Inscription At Nanaghat." **Journal Of the Bombay Branch of the Royal Asiatic Society,** vol XII (1876).

- - -, **Twenty-Three Inscriptions from Nepal Together with Some Considerations on the Chronology of Nepal"** (Trans.from Gujarati by G. Buhler). Bombay, 1885.

Indraji, Bhagwanlal and J.G.Buhler. "Inscriptions from Nepal" **Indian Antiquary,** 9 (June-August 1880). 163-94.

- - -, "Some Considerations on the History of Nepal." **Indian Antiquary,** Vol. XII.

Jayaswal, K.P. **Chronology and History of Nepal.** Patna : M.N. Burman and Co., 1937.

Jha, H. N. **The Licchavis (of Vaishali).** Varanasi: Chowkhamba Sanskrit Series, 1970.

Khan, Quasim Ali, "Lakheen-jo-Daro, A Harappan Site in Sukkur." **Journal of Pakistan Historical Society,** Vol. 38, Part II (9April 1990): 163-170.

Kirkpatrick, W. J. **An Account of the Kingdom of Nepaul, Being the Substance of Observations Made During a Mission to That Country in the Year 1793.** London: William Miller, 1811. reprint. New Delhi: Manjusri Publications, 1969.

Kramrisch, S. **The Art of Nepal.** Orient. Art, XI : 2.1965.

Kroeber. **Anthropology.** Oxford & IBH Publishing Co.,1967.

Levi, Sylvain. **Le Nepal: Etude Historique d' un Royaume Hindou,** 3vols. Paris : 1905 and 1908.

Losty, J. P. **The Art of Book In India.** London, 1982.

Majumdar, R.C. "Chronology of Early Kings of Nepal." **B.C. Law Vol. I,** (Calcutta: Indian Research Institute).

Malla, Kamal P. **Classical Newari Literature: A Sketch.** Kathmandu: Educational Enterprise, 1982.

Marshall, J. **Mohenjodaro and the Indus Civilization.** London, 1931.

Mitra, Rajendralala. **The Sanskrit Buddhist Literature of Nepal** ( A Descriptive Catalogue of the Collection of MSS Presented by B.H, Hodgson, Preceded by a Memoir of the Donor). 1882. reprint. Calcutta, 1971.

Mukherji, P.C. **A Report of Tour of Exploration of the Antiquities in the Terai, Nepal, the Region of Kapilavastu, During February and March 1899.** Delhi: Indological Book House, 1969 ( reprint of Archaeological Survey of India publication of 1901).

Pandey, R. B. **Indian Palaeography, Part 1.** Varanasi, 1952.Trans. into Hindi, भारतीय पुरालिपि, इलाहाबाद, १९७८ ।

Panta, Mahesh Raj, and Aishwarya Dhar Sharma, "The two Earliest Copper Plate Inscriptions from Nepal." **Nepal Research Centre, Miscellaneous Paper, No. 12.** (July 1977) pp. 7-28 (with plates.)

Petech, L. **Medieval History of Nepal.** Rome. 1958.

Regmi, D.C. **Some Aspects of Nepali Culture.** Kathmandu: Mrs Sushila Regmi, 2001.

Regmi, D.R. **Medieval Nepal Part 1.** Calcutta : Firma K.L. Mukhopadhyay, 1961.

- - -, **Inscriptions of Ancient Nepal.** New Delhi: Abhinav Publications, 1983.

Rhodes, N.G., Gabrish, K. and Valdettaro, C. **The coinage of Nepal.** London: Royal Numismatics society, 1989.

Sachau, E.C. trans. **Alberuni's India** Vol 1. London, 1910.

Shankar, K. G. "The Early Chronology of Nepal", **Indian Historical Quarterly,** XI.(1935) : 304-12.

Shastri, H.P. **Report on the Search of Manuscripts (1895 to 1900),** Calcutta: Asiatic Society of Bengal, n.d.

- - - , **A Catalogue of Palm-leaf and Selected Paper Manuscripts Belonging to the Durbar Library Nepal, to Which Has Been Added a Historical Introduction by Prof. Cecil Bendall.** Calcutta: Baptist Mission Press, 1905-1915.

- - - , **A Descriptive Catalogue of the Sanskrit Manuscripts in the Government Collection of the Asiatic Society of Bengal.** Calcutta, vol. I, 1917; vol. II, 1955; vol. III, 1957.

Shastri, K.A. Nilakanta, and G. Srinivasachari. **Advanced History of India.** Allied Publishers, 1982.

Sircar, D.C. **Select Inscriptions, bearing on Indian History and Civilization,Vol. I.** University of Calcutta, 1965.

- - - , **Indian Epigraphy.** New Delhi : Motilal Banarasidas, 1965.

Tucci, Giuseppe. **Preliminary Report on Two Scientific Expeditions in Nepal.** Roma : ISMEO, 1956.

Vajracharya, D.V., and K.P. Malla . ed. **The Gopalarajavamsavali,** Kathmandu: Nepal Research Centre and National Archives, 1985.

Verma, T. P. **The Palaeography of Brahmi Script in North India (from c. 236 B.C. to c. 200 A. D.).** Varanasi : Siddharth Prakashan, 1971.

Walsh, E.H. **The coinage of Nepal.** reprint. Delhi: Indological Book House, 1973.

Wright, D. **History of Nepal.** Trans.from Parbatiya by Munshi Shew Shunkar Singh and Pandit Sri Gunanand, with an Introductory Sketch of the Country and People by the Editor Daniel Wright. Cambridge, 1877, reprint. Calcutta, 1958.

आचार्य, बाबुराम. "नेपाल, नेवार र नेवारी भाषा." **नवकुञ्ज** (नेपाली मासिक,काठमाडौं), वर्ष ५, अङ्क १ (ज्येष्ठ २०२६) ।

ओझा, गौरीशंकर हीराचन्द. **भारतीय प्राचीन लिपिमाला**. (प्रथम प्रकाशित १८९४). दिल्ली : मुन्शीराम मनोहरलाल, १९५९ ।

गोयल, श्रीराम. **प्राचीन नेपाल का राजनीतिक और सांस्कृतिक इतिहास**. वाराणसी : भारतीय-विद्या-प्रकाशन, १९७३ ।

जोशी, सत्यमोहन **नेपाली राष्ट्रिय मुद्रा**, काठमाडौं : साझा प्रकाशन, २०४२ ।

जोशी, हरिराम. सम्पादित **नेपालको प्राचीन अभिलेख**. काठमाडौं : नेपाल राजकीय प्रज्ञाप्रतिष्ठान, २०३० ।

- - -, उत्तर प्राचीनकालीन मुद्रा. काठमाडौं: साझा प्रकाशन, २०३३ ।

ज्ञवाली, सूर्यविक्रम. **नेपाल उपत्यकाको मध्यकालीन इतिहास**. काठमाडौं : रायल नेपाल एकेडेमी, २०१९ ।

